# संविधानसभा दर्पण प्रकाशन समितिका पदाधिकारीहरू



श्री मनोहरप्रसाद भट्टराई
व्यवस्थापिका–संसदको महासचिव



श्री ठाकुरप्रसाद बराल
सचिवालय सचिव



श्री मुकुन्दप्रसाद शर्मा
सहसचिव



श्री लवप्रसाद गौतम
सहसचिव



श्री टेकप्रसाद ढुंगाना
सहसचिव (कानून)



# संविधानसभा दर्पण
# २०६५–२०६९

सम्पादन समूह
**श्री ठाकुरप्रसाद बराल**
**श्री टेकप्रसाद ढुङ्गाना**
**श्री जीवराज बुढाथोकी**

**व्यवस्थापिका संसद सचिवालय**
संसद भवन, सिंहदरवार

# प्रकाशकीय

नेपाली जनताले आफ्ना लागि आफैले संविधान निर्माण गर्ने उद्देश्यका साथ सम्वत् २०६४ साल चैत्र २८ गतेको निर्वाचनमार्फत गठन गरेको संविधानसभाले संविधान निर्माणको कार्य सम्पन्न नगरी स्वतः विघटन हुन पुगेको सर्वविदितै छ । संविधानसभा मार्फत संविधान निर्माण गर्ने कार्य नेपालको लागि पहिलो अवसर भएको र संविधानसभाले चार वर्षसम्म सम्पादन गरेका काम कारवाहीको विवरणलाई ऐतिहासिक दस्तावेजको रूपमा सुरक्षित राख्न र सोको भावी पुस्ताले अध्ययन गर्न पाउनु उनीहरूको नैसर्गिक अधिकार समेत हो भन्ने यथार्थतालाई आत्मसात एवं मनन गरेर यो पुस्तक प्रकाशन गर्न लागिएको हो । संविधानसभा दर्पण नामक यो प्रकाशन सार्वजनिक गर्न पाउदा व्यवस्थापिका-संसद सचिवालयलाई सन्तोषको अनुभूति हुनु स्वभाविक नै छ । संविधानसभामा भए गरेका काम कारवाहीहरू जस्ताको त्यस्तै सरोकारवालालाई जानकारी दिई सूचनाको हकको प्रत्याभूति गराउनु नैतिक र कानूनी उत्तरदायित्व समेत सचिवालयमा थपिएको संविधानसभाको महासचिवको हैसियतले आत्मबोध गर्दै यो पुस्तक प्रकाशन गर्ने निर्णय गरिएको हो ।

तत्कालीन संविधानसभाले संविधान निर्माणको कामको अतिरिक्त व्यवस्थापिका-संसदको हैसियतले समेत काम गर्नु पर्ने दोहोरो जिम्मेवारी भएको र सचिवालयले पनि दोहोरो जिम्मेवारीमा नै संलग्न हुनु परेको कारण तत्कालीन अवस्थामा संविधानसभाबाट भए गरेका कामहरूको सम्पूर्ण विवरण तत्काल प्रकाशन गर्न नसकिएतापनि विषयगत समितिका प्रतिवेदनहरू र नागरिक सम्बन्ध समितिको तर्फबाट मुख्य मुख्य कामहरूको विवरणयुक्त तीनवटा बुलेटीन प्रकाशन भई सार्वजनिक भएकै अवस्था हो ।

संविधानसभाको गठन भई पहिलो बैठक बसेपछि यसले सम्पन्न गरेका सम्पूर्ण कार्यहरू र तयार भएका महत्वपूर्ण दस्तावेजहरू समेतलाई नौ भाग र १६ वटा अनुसूचीमा समेटेर तयार भएको यो संविधानसभा दर्पण नामक प्रकाशनले सम्पूर्ण राजनीतिक दलहरू र सर्वसाधारण आम जनतालाई संविधानसभाले चारवर्षसम्म के कस्तो काम गरेको रहेछ भन्ने विषयमा जानकारी हाशिल गर्नको लागि संक्षिप्त रूपमा भएपनि दपर्णको रूपमा काम गर्नेछ र नेपालका राजनीतिक दलहरू, नागरिक समाज र संविधान निर्माणको कार्यमा चासो राख्ने सबै स्वदेशी तथा विदेशी मित्रहरूलाई उपयोगी सन्दर्भ सामग्री बन्नेछ भन्ने विश्वास सचिवालयले लिएको छ ।

प्रस्तुत पुस्तक प्रकाशनको लागि मेरै संयोजकत्वमा गठित उच्चस्तरीय प्रकाशन समितिका सबै सदस्यहरूले अथक मेहनत गर्नु भएको छ भने सचिवालय सचिव श्री ठाकुरप्रसाद बराल, कानून तथा न्याय मन्त्रालयका सहसचिव श्री टेकप्रसाद ढुङ्गाना र उपसचिव श्री जीवराज बुढाथोकीले सम्पादनको जिम्मेवारी निर्वाह

गर्नु भएको छ । यस सचिवालयबाट कानून तथा न्याय मन्त्रालयमा सरूवा भई अर्को जिम्मेवारीमा रहेको अवस्थामा अत्यन्त व्यस्तताको बाबजुद प्रस्तुत पुस्तकको लेखन, सम्पादन र संयोजनमा सचिवालयलाई निरन्तर साथ दिनु हुने तत्कालीन संवैधानिक समितिका सचिव श्री टेकप्रसाद ढुङ्गानालाई विशेष धन्यवाद दिन चाहन्छु । यस क्रममा प्रकाशन समितिमा रही अथक योगदान पुऱ्याउनु हुने सहसचिव एवं प्रवक्ता श्री मुकुन्द प्रसाद शर्मा र सहसचिव श्री लवप्रसाद गौतमलाई समेत धन्यवाद दिन चाहन्छु ।

यसैगरी पुस्तक प्रकाशनको कार्यमा प्रारम्भ देखी नै सहयोगीको भुमिका निर्वाह गर्नु हुने यस सचिवालयका उपसचिव श्री जीवराज बुढाथोकी, उपसचिव श्री मुरारी महत, शाखा अधिकृत श्री राजन घिमिरे, कम्प्युटरमा सेटीङ्ग गर्ने कार्यमा सहयोग गर्ने कम्प्युटर अपरेटर श्री सुरेश राज सेढाई, पुस्तकको बाहिरी आवरणको डिजाईन गर्ने खरिदार श्री रविन अधिकारी र व्याकरणको दृष्टिकोणले सुद्धासुद्धी जस्तो गहन कार्यमा सहयोग गर्नु हुने तत्कालिन राष्ट्रिय सभाका पूर्व सचिव श्री राधेश्याम भट्टराईज्यू प्रति हार्दिक धन्यवाद प्रकट गर्दछु । पुस्तकको छपाई र वितरणको कार्यमा सहयोग गर्ने नेपाल कानून समाज, International IDEA, Royal Norwegian Embassy र Government of Finland लाई व्यवस्थापिका संसद सचिवालयको तर्फबाट धन्यवाद दिन चाहन्छु ।

प्रस्तुत पुस्तक प्रकाशनको उद्देश्य, आवश्यकता र पुस्तकमा समावेश गर्न प्रस्तावित विषयवस्तुहरूको सम्बन्धमा सचिवालयले यही २०७० साल ज्येष्ठ ८ गते लाजिम्पाटस्थित होटल सांग्रीलामा एक परामर्श कार्यक्रम आयोजना गरेको थियो । उक्त कार्यक्रममा उपस्थित भई तत्कालीन संविधानसभाका पूर्व अध्यक्ष, संविधानसभामा प्रतिनिधित्व रहेका राजनीतिक दलका प्रमुख सचेतकहरू, सचेतकहरू, विषयगत तथा प्रक्रियागत समितिका सभापतिहरू, विभिन्न दलका सदस्यहरू र सचिवालयका बरिष्ठ अधिकृतहरूले दिनु भएको अमुल्य सुझावकोलागि उहाँहरूप्रति हार्दिक आभार प्रकट गर्न चाहन्छु । पुस्तकलाई सकेसम्म त्रुटी रहित बनाउने भरपुर प्रयासको बाबजुद केही सानातिना त्रुटीहरू अझैपनि विद्यमान रहन सक्ने कुरालाई अस्वीकार गर्न सकिदैन । त्यस्ता त्रुटीहरू आदरणीय पाठकहरूले औंल्याइदिनु भएमा अर्को संस्करणमा सच्याइने प्रतिबद्धता पनि प्रकट गर्न चाहन्छु ।

अन्त्यमा, नेपालमा शुरू भएको शान्ति प्रक्रिया र संविधान निर्माण प्रक्रियालाई सार्थक निष्कर्षमा पुऱ्याउनको लागि अर्को संविधानसभाको निर्वाचन भई संविधानसभा गठन भएपछि निर्वाचित संविधानसभाका सदस्यहरूलाई संविधान निर्माण गर्ने कार्यमा यो प्रकाशनले केही रूपमा भएपनि मद्दत गर्न सकेमा हाम्रो यो प्रयास सार्थक भएको ठान्नेछौं ।

**मनोहरप्रसाद भट्टराई**
*व्यवस्थापिका-संसदको महासचिव*
असार, २०७०

# दुई शब्द

व्यवस्थापिका संसद सचिवालयले **संविधानसभा दर्पण २०६५–२०६९** सम्बन्धी पुस्तक प्रकाशन गर्न लागेकोमा ज्यादै खुसी लागेको छ । नेपालमा संविधानसभाको माध्यमबाट संविधान निर्माण गर्न संविधानसभाको गठन भई २०६५ जेष्ठ १५ गतेदेखि औपचारिक रूपमा कार्य प्रारम्भ भएको थियो । दुई वर्षको निर्धारित समयभित्र संविधान निर्माण गर्नुपर्नेमा पटक–पटक म्याद थप गरी चारवर्ष कार्यकाल पुऱ्याउँदा समेत निर्धारित समयमा संविधान निर्माण हुन नसकी २०६९ ज्येष्ठ १४ गते संविधानसभाको स्वतः अवसान हुन पुगेको सर्वविदितै छ । संविधानसभाले आफ्नो कामलाई व्यवस्थित रूपमा संचालन गर्नका लागि कार्यविधि, नियमावली, समय सीमा सहितको कार्यतालिका बनाएर कार्य संचालन गरेको थियो । संविधानसभाले आफ्नो कामलाई छिटोछरितो र व्यवस्थित गर्न एक संवैधानिक समिति, दशवटा विषयगत समिति र तीनवटा प्रक्रियागत समिति गठन गरी स्पष्ट कार्यक्षेत्र तोकेर जिम्मेवारी दिएको थियो । समितिहरूले आ–आफ्नो अवधारणापत्र सहितको मस्यौदा प्रतिवेदन सभामा पेश भई छलफल गरी निर्देशन सहित मस्यौदा तयार गर्न संवैधानिक समितिमा पठाइएको थियो । प्रत्येक समितिका मस्यौदामा उल्लेख भएको विचार, धारणा र सभामा सदस्यले दिनुभएका महत्वपूर्ण अभिव्यक्तिहरूलाई संक्षिप्तमा पुस्तकमा समावेश गरिएको छ ।

संविधानमा समावेश गर्ने विषयवस्तुमा संविधानसभामा प्रतिनिधित्व गर्ने विभिन्न राजनैतिक दल, संसदीय दल र सदस्यका बीचमा कुनै विषयमा सर्वसम्मत, कतिपय विषयमा बहुमत र केही विषयमा समितिको स्पष्ट धारणा आउन नसकी संविधानसभामा प्रतिनिधित्व गर्ने राजनैतिक दलहरूबीच सहमति हुन नसक्दा विवादका विषयहरू बन्न पुगेका थिए । प्रतिवेदन अध्ययन समितिले कुनकुन समितिको के के विषयमा विवाद रहेको छ त्यसको अध्ययन र छलफल गरी सभामा प्रतिवेदन पेश गरेको थियो । जसले विवादित विषयको विवरण समेत तयार गरेको थियो । विवादित विषयहरूलाई औपचारिक तथा अनौपचारिक विधिबाट समाधान गर्नका लागि प्रमुख दलका शीर्ष नेताहरू समावेश भएको राजनैतिक संयन्त्रको निर्माण गरिएको थियो भने संविधान निर्माणमा रहेका विवाद समाधान गर्न संवैधानिक समिति अर्न्तगत विवाद समाधान उपसमिति र कार्यदल समेत गठन गरिएका थिए । राजनैतिक तहमा भएका कतिपय सहमति औपचारिक विधिबाट अनुमोदन हुन सकेन जसले गर्दा विवादहरू यथास्थितिमा रहन पुगे । सहमति निर्माण गर्नका लागि कुनकुन विषयमा केकस्तो सहमति भएको थियो कुन–कुन विषयमा सहमति जुट्न सकेन सो सम्बन्धी विवरण समेत प्रस्तुत पुस्तकमा समावेश गरिएको छ ।

२०६५ ज्येष्ठ १५ गते संविधानसभाको पहिलो बैठकमा नेपालको अन्तरिम संविधान, २०६३ को धारा १५९(२) बमोजिम गणतन्त्र कार्यान्वयन सम्वन्धी ५ बुंदे प्रस्ताव पेश भई उक्त प्रस्ताव अत्यधिक वहुमतबाट

पारित भएपछि नेपाल एक संघीय लोकतान्त्रिक गणतन्त्र राज्यमा विधिवत रूपमा प्रवेश गरी संविधान निर्माणको कार्य प्रारम्भ गरेको थियो । संविधानसभाका ६०१ जना सदस्यहरू २४० निर्वाचन क्षेत्रमा स्वयम् जनतासंग प्रत्यक्ष राय सुझाव संकलन तथा परामर्शका लागि जांदा जनताबाट प्राप्त भएका सुझावहरूका सारसंक्षेप समेत समावेश गरिएको छ । सो प्रतिवेदनको आधारमा अवधारणापत्र बनाइएको थियो । जनताले संविधान निर्माण प्रक्रियामा सहभागी भई स्वामित्व लिन सकुन् भनेर नै संविधानको प्रारम्भिक एकीकृत मस्यौदा लेखेपछि जनताको राय सुझाव लिने कार्यतालिका प्रस्तावित रहे पनि विवादित विषयमा सहमति हुन नसक्दा संविधानको लेखन प्रक्रिया अगाडि बढ्न सकेन । संविधानसभाले आफ्नो कार्यावधिमा केकस्ता कामहरू सम्पन्न गरेको थियो त्यसको सार संक्षेप पुस्तकमा समावेश गरिएको छ । संविधानसभा र यसका समिति, उपसमिति तथा कार्यदल समेतका महत्वपूर्ण काम एवम् गतिविधिलाई समेटेर यो पुस्तक प्रकाशित गरिएको छ । संविधानसभाले चार वर्ष कार्यकालमा केकस्ता कामहरू कसरी सम्पन्न गरेका रहेछन्, त्यसको यथार्थ जानकारी जनतालाई सुसूचित गराउनु सचिवालयले आफ्नो दायित्व सम्झेर नै यो पुस्तक प्रकाशन गरिएको हो । समयसमयमा सभा र समितिको काम कारवाहीको बारेमा संचारमाध्यमले प्रचार प्रशार गरेको भए पनि ती सवै महत्वपूर्ण कामहरूलाई एउटै पुस्तकमा समावेश गरी प्रकाशन गरिएको छ । यस पुस्तकमा सभा र समितिमा भए गरेका कामहरू संक्षिप्त रूपमा जस्ताको तस्तै राख्ने प्रयास गरिएको छ र यस विषयमा सचिवालयले आफ्नो दृष्टिकोण समावेश गरेको छैन ।

पुस्तक प्रकाशनले तत्कालिन संविधानसभाका सदस्यहरूलाई संविधान निर्माणमा आफ्नो योगदान, भूमिका, उपलब्धिका बारेमा स्मरण हुने र भोलीका दिनमा निर्वाचित भै आउने संविधानसभाका सदस्यहरूलाई संविधान लेखन कार्यमा आधार तयार गर्न सहयोग पुग्ने छ । सरोकारवालाहरूको अलावा यस विषयमा अध्ययन अनुसन्धान गर्ने सबैलाई संविधान निर्माण कार्य र यसले गरेका काम कारवाहीको बारेमा संविधान निर्माण प्रक्रिया, कार्यविधि र अन्तर्राष्ट्रिय क्षेत्रले समेत संविधान निमार्ण गर्दा नेपालले भोगेका विषयबाट पाठ सिक्न सक्ने भएकाले यो पुस्तक सबैका लागि उपयोगी हुन सक्नेछ । यस पुस्तकको अध्ययनपछि सभा, समितिका बैठकमा बसेर, हेरेर र सुनेर सहभागी भए जस्तो अनुभूति गर्न सकियोस् भनेर संविधानसभा दर्पण नामक शीर्षक अनुरूपकै जानकारी यो पुस्तकले दिने प्रयास गरेको छ । संविधान निर्माण कार्यमा के-कति सफलता मिल्यो ? कुन-कुन विषयहरूमा बाधा अवरोध आए ? बाधा अवरोध हटाउनका लागि के-कस्ता कामहरू गरिए ? के-कस्ता कार्यविधि र प्रक्रिया अबलम्बन गरिएका थिए ? अब कुन-कुन विषयमा सचेतता र सावधानी अपनाउनु पर्ने हो, त्यो तत्कालिन र अब निर्वाचित भएर आउने संविधानसभाका सदस्य, विभिन्न राजनैतिक दल, नागरिक समाज, अध्ययन अनुसन्धानकर्ता, मतदाता र सरोकारवाला सबैलाई प्रस्तुत पुस्तकले संविधानसभाले गरेको कार्यहरूको समीक्षा गर्नुका साथै मूल्यांकन गर्न मद्दत पुऱ्याउनेछ भन्ने आशा राखेको छु ।

पुस्तक प्रकाशनका लागि सहयोग गर्नुहुने संविधानसभा सचिवालयका सम्पूर्ण कर्मचारी मित्रहरू, सम्पादन मण्डलका साथीहरू, पुस्तक प्रकाशन समितिका सदस्यहरू तथा यस पुस्तकका भाषा र व्याकरणका शुद्धासुद्धी जस्तो गहन कार्यमा सहयोग गर्नु हुने तत्कालिन राष्ट्रियसभाका सचिव श्री राधेश्याम भट्टराईलाई हृदयदेखि नै धन्यवाद दिन चाहन्छु । तत्कालिन संविधानसभाका सम्माननीय अध्यक्षज्यू, माननीय उपाध्यक्षज्यू, संसदीय दलका नेताहरू, मुख्य सचेतकहरू, सचेतकहरू, समितिका सभापतिहरू र सदस्यहरूले पुस्तक प्रकाशन सन्दर्भमा दिनुभएको मार्ग निर्देशन एवम् महत्वपूर्ण सुझावहरूका लागि आभार प्रकट गर्दछु । साथै अब निर्वाचित भएर आउने संविधानसभाका सदस्यहरूलाई संविधान निर्माण गर्ने कार्यमा यो पुस्तक सहयोगी र उपयोगी हुनेछ भन्ने विश्वास लिएको छु ।

**ठाकुरप्रसाद बराल**
*सचिव, व्यवस्थापिका-संसद सचिवालय*
असार, २०७०

# विषय सूची

भाग-३ अवधारणागत पक्षमा जनताको सुझाव सङ्कलन, विषयगत समितिहरूबाट अवधारणापत्रसहितको प्रारम्भिक मस्यौदाको निर्माण



भाग-४ विषयगत समितिहरूका प्रतिवेदनहरूमा विद्यमान आधारभूत विशेषताहरू

# भाग १

# सामान्य परिचय

## १.१. पृष्ठभूमि

संविधानसभा संविधान निर्माण गर्ने र त्यसलाई वैधानिकता प्रदान गर्ने जनताबाट निर्वाचित जनप्रतिनिधिमूलक संस्था हो । जनताद्वारा निर्वाचित प्रतिनिधिहरु रहेको संविधानसभाबाट संविधान निर्माण गर्ने प्रक्रियालाई संविधान निर्माणको सर्वाधिक लोकतान्त्रिक विधिको रूपमा लिइने गरेको छ । संविधानसभामा जनताका प्रतिनिधिहरु रहने, जनताका इच्छा र आकांक्षाहरु ती प्रतिनिधिमार्फत् अभिव्यक्त हुने साथै संविधान निर्माणको विधि पारदर्शी भई आमजनता आफैँ पनि संविधान निर्माणको प्रक्रियामा सहभागी हुन पाउने भएकोले यो प्रक्रियाले निर्माण हुने संविधानमा जनताको स्वामित्व स्थापित गर्न सहयोग पुग्ने विश्वास गरिन्छ । नेपालमा संविधानसभाको माध्यमबाट संविधान निर्माण हुनुपर्छ भनेर २००७ सालदेखि नै जनताको इच्छा-आकांक्षा अभिव्यक्त भएको हो । २०५२ सालदेखि तत्कालीन ने.क.पा. माओवादीको नेतृत्वमा शुरू भएको १० वर्षे सशस्त्र सङ्घर्ष एवं सात राजनीतिक दलहरूको आव्हान र नेतृत्वमा सञ्चालन भएको २०६२/०६३ को जनआन्दोलनको सफलतापछि जारी भएको वर्तमान अन्तरिम संविधानमा नेपाली जनता आफैँले नयाँ संविधानको निर्माण गर्न संविधानसभाको गठन गरिने व्यवस्था भयो । नेपालको अन्तरिम संविधान जारी भएपछि शान्तिप्रक्रियालाई पूर्णता प्रदान गर्दै संविधानसभाबाट संविधान निर्माण गर्ने कुरा नेपालको तत्कालको राष्ट्रिय लक्ष्य बन्यो ।

विगत करिब ६० वर्ष देखिको जनताको चाहनाले साकार रूप पाई गठन भएको संविधानसभाले २०६५ साल ज्येष्ठ १५ गतेदेखि औपचारिक रूपमा कार्यप्रारम्भ गरेको थियो । ज्येष्ठ १५ गते मध्यरातमा ऐतिहासिक संविधानसभाले नेपालमा राजतन्त्रको विधिवत् अन्त्य गरी गणतन्त्रको घोषणा गर्दा सबै नेपाली जनताले नयाँ युगको शुरूवात भएको अनुभूति गरेका थिए । नेपालको इतिहासमा पहिलो पटक गठन भएको संविधानसभाले देशको विविधताको प्रतिनिधित्व गरेको, महिलाको ३३ प्रतिशत प्रतिनिधित्व रहेको, त्यसमा विभिन्न जात जाति, वर्ग, समुदाय र क्षेत्रका जनताको प्रतिनिधित्व गर्ने सदस्यहरूको सहभागिता रहेको हुनाले विश्वकै समावेशीताको नमूना सभाको रूपमा चित्रण गरियो । नेपालले यस्तो नमूना संविधानसभाको माध्यमद्वारा नयाँ संविधान निर्माण गर्ने ऐतिहासिक अवसर पाएको थियो । संविधानसभाले पनि जनताको सहभागितालाई केन्द्रविन्दुमा राखेर संविधान निर्माणको बृहत् कार्यविधि बनाउनुको साथै संविधान निर्माण गर्दा गरिने गतिविधि र सोको समयसीमा सहितको कार्यतालिका पनि निर्माण गरेर राम्रो शुरूवात गरेको थियो । नेपालको संवैधानिक इतिहासमा पहिलो पटक नेपाली जनताले आफ्नो भाग्य आफैँ निर्माण गर्ने ऐतिहासिक अवसर पाएको महसूस गरिरहेका थिए । संविधानसभा र यसका

विभिन्न समितिहरूले विभिन्न माध्यमबाट राय सुझाव दिई संविधान निर्माणमा सहभागी हुन जनतालाई आव्हानमात्र गरेनन् कि संविधानसभाका ६०१ जना सदस्यहरु, सचिवालयका कर्मचारीहरु एवं नेपाल सरकारका सम्बन्धित जिल्लास्थित कर्मचारीहरु ४० वटा विभिन्न टोलीमा समूहिकृत भई जनताको राय सुझाव र प्रतिक्रिया लिनका लागि जनताको घरदैलोमा पुग्ने काम पनि भयो । संविधानसभाका सबै विषयगत समितिहरूले आ–आफ्नो जिम्मेवारीको क्षेत्रमा केन्द्रित भई संविधानमा रहने विषयको अवधारणापत्र र प्रारम्भिक मस्यौदा निर्माण गरेर संविधानसभामा पेश गर्ने चुनौतीपूर्ण कार्यसम्पन्न गरे । राज्यले चार वर्ष भन्दा बढी अवधिसम्म स्रोत-साधन लगानी गर्‍यो । विदेशी मित्रराष्ट्र र विभिन्न दातृ निकायले यस प्रक्रियालाई सफल बनाउनका लागि हर तरहले सहयोगका हात बढाए । संविधानसभाबाट जनआकांक्षा अनुरूपको संविधान निर्माण गर्ने कुरामा संविधानसभामा प्रतिनिधित्व गर्ने सबै दलको पूर्ण प्रतिबद्धता रहिआएको थियो ।

यी सम्पूर्ण प्रयासका बाबजुद दुई वर्षको कार्यकाल निश्चित गरिएको संविधानसभाको अवधि थप गरेर चार वर्ष कायम भयो र चारवर्षसम्म संविधानसभाले काम गर्दा समेत संविधान निर्माणको कार्यलाई पूर्णता दिन नसकी २०६९ ज्येष्ठ १४ गतेदेखि संविधानसभाको स्वतः विघटन हुन गई दुःखद स्थितिको सृजना भयो । जनचाहना बमोजिमको संविधान निर्माण गर्ने नेपाली जनतालाई प्राप्त अपूर्व मौकालाई वास्तवमै अवसरका रूपमा सदुपयोग गर्ने कार्यमा सफलता हासिल गर्न सकिएन । यसलाई नेपालको राजनीतिक इतिहासको अहिलेसम्मको सर्वाधिक दुःखद घटनाको रूपमा लिन सकिन्छ । अहिले हामी सबै नेपालीहरूको शिर निहुरिएको छ, राष्ट्रको अमूल्य स्रोत, साधन र समय खेर गएको छ । लगानीको सदुपयोग हुन नसकेको महसूस गरिएको छ । विगत लामो अवधिदेखिको नेपाली जनताको त्याग, बलिदान र सङ्घर्षबाट प्राप्त उपलब्धिहरूलाई संस्थागत गर्ने कार्य हालसम्म अधुरै रहेको छ ।

त्यसरी संविधानसभाको अवसान भई देशमा जनप्रतिनिधिमूलक संस्थाको रिक्तता भएको पनि करिब एक वर्ष व्यतीत भइसकेको छ । जनप्रतिनिधिमूलक संस्थाको शून्यता र संविधान निर्माणको मार्गमा विद्यमान अन्यौलका कारण देशमा बहुआयामिक राजनीतिक र संवैधानिक सङ्कटहरु थपिंदै गएका छन् । सङ्कट समाधानका लागि यस बीचमा भएका राजनीतिक वहस र छलफलबाट देशमा रहेका प्रायः सबै राजनीतिक शक्तिहरु संविधानसभाको माध्यमबाट नै संविधान निर्माण गर्ने र त्यसको लागि पुनः संविधानसभाको निर्वाचन गर्ने कुरामा सहमत भएका छन् । संविधान निर्माण गर्ने कार्य मूलतः राजनीतिक कार्य भएकोले तत्कालीन संविधानसभामा भएका राजनीतिक छलफल र सहमतिहरूले अब प्रारम्भ हुने संविधान निर्माणको नयाँ प्रक्रियालाई राजनीतिक रूपमा धेरै नै टेवा दिन सक्दछन् । साथै जनताका प्रतिनिधिहरूले गरेको कामको जानकारी पाउने र अध्ययन गर्ने भावी पुस्ताको वैध अधिकारको पनि सम्मान हुनुपर्छ । यी दुबै प्रयोजनको लागि विगत संविधानसभाको कार्यकालमा भएका महत्वपूर्ण कामकारवाही र अभिलेखको वैज्ञानिक व्यवस्थापन र त्यसमाथि सबै नागरिकको सहज पहुँचको सुनिश्चितता हुनुपर्ने आवश्यकता देखिन्छ ।

## १.२. प्रकाशनको उद्देश्य

संविधानसभाको आफ्नो चारवर्षे कार्यकालमा संविधानसभा र त्यस अन्तर्गतका समितिहरूबाट भए गरेका कामहरूको मितिको क्रमानुसार त्यसको सारसंक्षेपको रूपमा एउटा पुस्तक प्रकाशन गर्ने, संविधानसभा र त्यस अन्तर्गतका गठित समितिमा कुन-कुन मितिमा के कस्ता कामहरु सम्पन्न भए तिनको अभिलेख समावेश गर्ने र समितिद्वारा एउटै विषयमा फरक-फरक निर्णय गरेकोमा ती विषयलाई समितिको कार्यक्षेत्र अनुसार कुनै एक ठाउँमा राख्ने र सहमति भएका एवं सहमति हुन नसकेका विषयहरूमात्र समावेश गर्ने गरी उच्चस्तरीय समितिको कार्यादेश निर्धारण गरिएको थियो ।

व्यवस्थापिका-संसद सचिवालय सम्बन्धी ऐनद्वारा स्थापित व्यवस्थापिका-संसद सचिवालयले नै चारवर्षसम्म संविधानसभा सचिवालयको रूपमा काम गर्ने ऐतिहासिक अवसर पाएको थियो । एउटै सचिवालय र पदाधिकारीहरूले एकै समयमा व्यवस्थापिका-संसद र संविधानसभाको दोहोरो दायित्व निर्वाह गर्नु परेकोले संविधान निर्माण सम्बन्धी अभिलेख व्यवस्थापन र सार्वजनिक उपयोगिताको दृष्टिले उपयुक्त सामग्रीको प्रकाशन गर्ने कार्यलाई संविधान निर्माण भई जारी भएपछि सम्पादन गर्ने गरी दोस्रो प्राथमिकतामा राख्नुपर्ने बाध्यता सचिवालयलाई परेको थियो । संविधानसभाका विषयगत समितिका प्रतिवेदनहरु र पछिल्लो समयमा नागरिक सम्बन्ध समितिले संविधानसभा गतिविधि नामक बुलेटिनका तीनवटा अङ्कहरु सार्वजनिक गरेको भए पनि संविधानसभाको चारवर्षको कार्यकालमा सम्पादन भएका कामकारवाहीहरूको सिलसिलाबद्ध अभिलेख व्यवस्थापन भई समग्र रूपरेखा जनसमक्ष सार्वजनिक हुन सकेको थिएन । सो कार्य पूरा गर्नु नै यो प्रकाशनको मुख्य उद्देश्य हो । साथै प्रस्तुत प्रकाशनको माध्यमबाट व्यवस्थापिका-संसद सचिवालयले हासिल गर्न खोजेका अन्य उद्देश्य देहाय बमोजिम रहेका छन् :

- संविधानसभाले चारवर्षसम्म गरेका महत्वपूर्ण काम, प्राप्त युगान्तकारी उपलब्धि र संविधानका अन्तर्वस्तुमा भएको छलफलबाट निकालेका निष्कर्ष बारे यथार्थ जानकारी सार्वजनिक गर्ने ।
- संविधानका विषयवस्तुमा समिति तहदेखि प्रस्तुत भएका दलीय मतभिन्नता र त्यस्ता मतभिन्नतामा सहमति निर्माण गर्न भएको प्रयासको विश्लेषण गर्दै कुन-कुन विषयमा के कस्तो सहमति भएको थियो र कुन-कुन विषयको विवाद समाधान हुन सकेको थिएन भन्ने विषयमा सरोकार राख्ने सबैलाई यथार्थ जानकारी उपलब्ध गराउने ।
- जनप्रतिनिधिहरूले संविधानसभामा निर्वाह गर्नुभएको भूमिका, क्रियाशीलता र संविधानका विभिन्न विषयमा राख्नु भएको दृष्टिकोण सार्वजनिक गर्ने ।
- गणतन्त्रको घोषणा, प्रतिस्पर्धात्मक बहुदलीय लोकतन्त्र, समावेशीकरण र मानवअधिकारमैत्री संविधानको लागि आवश्यक अवधारणा तयारी लगायतका विषयमा संविधानसभाले गरेका महत्वपूर्ण निर्णयहरु, सकारात्मक सहमति र प्राप्त उपलब्धिको संरक्षण गर्दै अधुरो रहेको संविधान निर्माणको यात्रा सम्पन्न गर्न राजनीतिक दलहरूलाई सहयोग होस् भनी संविधानसभाले अन्तिम समयसम्म गरेको कामको अद्यावधिक विवरण उपलब्ध गराउने ।
- विभिन्न औपचारिक तथा अनौपचारिक संयन्त्र मार्फत् तयार भई विभिन्न तहमा छलफलमा रहेका, राजनीतिक तहमा निर्णय भएका तर औपचारिक विधिबाट अनुमोदन नभएका सहमतिका दस्तावेजहरूलाई समेत संरक्षण गरी सबैको जानकारीमा ल्याउने ।
- विगतमा संविधानसभाबाट सहमति भईसकेका विषय र संविधानसभाबाट प्राप्त उपलब्धिको रक्षा र उपयोग कसरी गर्न सकिन्छ भनी राजनीतिक दलका नेताहरूले छलफल गरिरहेको सन्दर्भमा संविधानसभाका उपलब्धिहरूलाई व्यवस्थित र सिलसिलाबद्ध रूपमा एउटै पुस्तकमा समेटेर सबैलाई सरल र सहज ढङ्गले जानकारी गराउने ।

## १.३. प्रकाशन गर्दा अपनाइएका कार्यविधि

प्रस्तुत पुस्तक कसैको व्यक्तिगत सिर्जनाको रूपमा नभई जनप्रतिनिधिहरूले गरेका काम र तयार गरेका दस्तावेजहरूको संस्थागत स्मरण राख्ने व्यवस्थापिका-संसद सचिवालयद्वारा औपचारिक रूपले सङ्कलित र सम्पादित प्रकाशनको रूपमा सार्वजनिक गर्ने दृष्टिकोण सचिवालयले लिएको छ । यसका लागि आधिकारिक, यथार्थ र निर्विवाद अभिलेख, सूचना र स्मरणको पहुँच भएका जिम्मेवार र उच्च पदस्थ अधिकृतहरूको क्रियाशीलता आवश्यक देखिनु स्वाभाविक हो । यसै आवश्यकतालाई मध्यनजर गरेर

व्यवस्थापिका-संसदका महासचिवस्तरको मिति २०६९ ।०६ ।०९ को निर्णयबाट महासचिव श्री मनोहरप्रसाद भट्टराई कै संयोजकत्वमा सचिवालय सचिव श्री ठाकुरप्रसाद बराल, सचिवालयका प्रवक्ता श्री मुकुन्दप्रसाद शर्मा, कार्यव्यवस्था महाशाखाका प्रमुख श्री लवप्रसाद गौतम र तत्कालीन संवैधानिक समितिका सचिव श्री टेकप्रसाद ढुङ्गाना रहेको एक उच्चस्तरीय प्रकाशन समिति गठन गरी कार्यप्रारम्भ गरिएको हो । उच्चस्तरीय प्रकाशन समितिले उपसचिव श्री जीवराज बुढाथोकी, उपसचिव श्री मुरारि महत, शाखा अधिकृत श्री राजन घिमिरे र कम्प्युटर अपरेटर श्री सुरेश राज सेढाईको सहयोग लिएर यो प्रकाशनको कार्यलाई सम्पन्न गरेको छ ।

प्रकाशनको कार्यमा संलग्न सदस्यहरु आफैँले आफूसँग प्रत्यक्षतः सम्बन्धित अभिलेख, सूचना र स्मरणसँग सम्बन्धित विषयमा सचिवालयका सम्बन्धित कर्मचारीहरुको सहयोग लिई पुस्तकको पाण्डुलिपि तयार गर्ने कार्यसम्पन्न गरिएको र त्यसपछि संविधानसभा, विभिन्न समिति, उपसमिति, कार्यदलबाट भएका निर्णयहरुसँग पाण्डुलिपिमा समावेश तथ्यहरुलाई भिडाई प्रकाशन समितिले सामूहिक रुपमा अध्ययन, विश्लेषण र सम्पादन गरी प्रकाशन हुने विषयलाई अन्तिम रुप प्रदान गरिएको छ । प्रकाशनको उद्देश्य पुस्तकको संरचना र त्यसमा समावेश हुने विषयहरूको सम्बन्धमा २०७० ज्येष्ठ ८ गते बुधबार तत्कालीन संविधानसभाका अध्यक्ष लगायत संविधानसभामा प्रतिनिधित्व गर्नुहुने सबै दलका प्रमुख सचेतक, सचेतक, प्रतिनिधिहरू तथा समितिका सभापतिहरू र सचिवालयका वरिष्ठ अधिकृतहरूलाई आमन्त्रण गरी परामर्श लिइएको थियो ।

## १.४. प्रकाशनका सीमा

नेपालको अन्तरिम संविधान, २०६३ को धारा ८३ मा संविधानसभा कायम रहेको अवधिभर सो सभाले व्यवस्थापिका-संसदको काम समेत गर्नेछ र नियमित विधायन सम्बन्धी आवश्यक कार्यसम्पादन गर्ने संविधानसभाले छुट्टै समिति गठन गर्न सक्नेछ भन्ने व्यवस्था भए बमोजिम संविधानसभाले व्यवस्थापिका-संसदको हैसियतले प्रधानमन्त्री चयन गर्ने, संविधान संशोधन गर्ने, कानून निर्माण गर्ने, वार्षिक नीति तथा कार्यक्रम र राजस्व र व्ययको अनुमान पारित गर्ने लगायतका यावत व्यवस्थापिकीय कार्यसम्पादन समेत गरेको थियो । यस क्रममा व्यवस्थापिका-संसदको चौथो देखि एघारौं अधिवेशनसम्म गरी जम्मा आठवटा अधिवेशन समेत सम्पन्न भएका थिए । व्यवस्थापिका-संसद अन्तर्गत एउटा विधायन समिति, सातवटा विषयगत समिति, दुईवटा विशेष समिति र विभिन्न समयमा आवधिक विशेष समिति समेत गठन भएका थिए । यसरी व्यवस्थापिका-संसदको रूपमा संविधानसभाले सम्पादन गरेका काम कारवाहीहरू प्रस्तुत प्रकाशनमा समावेश गर्न सकिएको छैन । साथै विभिन्न प्रशासकीय काम कारवाहीहरू र संविधानसभाका सदस्यहरूबाट हुन पुगेका कतिपय आलोच्य गतिविधिहरूलाई पनि यसमा समेटिएको छैन । यी विषयहरू प्रस्तुत प्रकाशनको उद्देश्यसँग प्रत्यक्षतः सम्बन्धित नरहेकोले प्रकाशनको सीमाको रूपमा ग्रहण गर्नुपर्ने अवस्था छ ।

## १.५. सन्दर्भ सामग्री

प्रस्तुत पुस्तक प्रकाशन गर्नको लागि प्राथमिक र गौण गरी दुबै प्रकारका सन्दर्भ सामग्रीको सहारा लिइएको छ । नेपालको अन्तरिम संविधान, २०६३, संविधानसभा नियमावली, २०६५, संविधानसभाको कार्यतालिका, संविधानसभाका बैठकको कारवाहीको विवरण, विषयगत समितिका प्रतिवेदनहरु, अवधारणापत्र तथा प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्ययन समितिको प्रतिवेदन, संविधानसभाले संवैधानिक समितिलाई दिएका सुझाव र निर्देशन तथा संवैधानिक समिति अन्तर्गत गठित विवाद समाधान उपसमितिले

संवैधानिक समितिको बैठकमा समय–समयमा पेश गरेका प्रतिवेदनहरूलाई यस प्रकाशनको लागि प्राथमिक सामग्रीको रूपमा प्रयोग गरिएको छ ।

यसैगरी नागरिक सम्बन्ध समितिबाट प्रकाशित बुलेटिनहरु, संविधानसभामा प्रतिनिधित्व गर्ने सबै दलका नेताको बैठकबाट गठित कार्यदलका प्रतिवेदनहरु, संवैधानिक समिति अन्तर्गत गठित विवाद समाधान उपसमितिले समय–समयमा निर्माण गरेका कार्यदलले अध्ययन र गृहकार्य गरी दिएका प्रतिवेदनहरु र संविधानसभाका अध्यक्षले संविधानसभाका बैठकमा दिएका महत्वपूर्ण निर्देश र वक्तव्य समेतलाई यस प्रकाशनको प्रयोजनको लागि सामग्रीको रूपमा ग्रहण गरिएको छ ।

साथै संविधानसभाका सदस्यहरु विभिन्न समूहमा समूहीकृत भई देशका विभिन्न भागको भ्रमण गरी जनताको सुझाव र राय सङ्कलन गरी सो सम्बन्धमा संविधानसभाका अध्यक्षलाई दिएका प्रतिवेदनहरु, नेपाल सरकारबाट गठित राज्यको पुनर्संरचना सुझाव उच्चस्तरीय आयोगले पेश गरेको प्रतिवेदन, ने.क.पा. एमालेले संविधानसभाको गठनदेखि विघटनसम्मका घटनाको राजनीतिक दृष्टिकोणबाट अध्ययन गरी जारी गरेको स्वेतपत्र, नेपाल कानून समाज र संवैधानिक संवाद केन्द्रबाट विषयगत समितिका प्रतिवेदनमाथि विशेषज्ञबाट अध्ययन गराई प्रकाशन गरेका टिप्पणीहरूलाई समेत यस प्रकाशनको लागि सहायक सामग्रीको रूपमा उपयोग गरिएको छ ।

## १.६. पुस्तकको संरचना

प्रस्तुत पुस्तकलाई विभिन्न नौवटा भागमा विभाजन गरी विषयवस्तु व्यवस्थित रूपमा प्रस्तुत गर्ने प्रयास गरिएको छ । पहिलो भागमा प्रकाशनको पृष्ठभूमि, उद्देश्य, पुस्तक तयार गर्न अपनाइएका कार्यविधि, प्रकाशनका सीमा, आधार लिइएका सामग्रीहरूको बारेमा संक्षिप्त जानकारी समेटिएको छ । यसले पाठकहरूलाई प्रकाशनको उद्देश्य र प्रयोजन बुझ्न सजिलो हुने विश्वास लिइएको छ ।

पुस्तकको दोस्रो भागमा संविधानसभाको पहिलो बैठकले गरेका निर्णयहरु, संविधान निर्माणको लागि आवश्यक कार्यविधि र कार्यतालिकाको निर्माण, राष्ट्रपति, उपराष्ट्रपति, संविधानसभाका अध्यक्ष र उपाध्यक्षको निर्वाचन र संविधान निर्माणको लागि आवश्यक समिति लगायतका आन्तरिक संरचना र पूर्वाधारको निर्माण कसरी गरियो भन्ने विषयहरु उल्लेख गरिएको छ ।

त्यसैगरी तेस्रो भागमा संविधान निर्माणमा सहभागी हुन संविधानसभाको तर्फबाट आमजनतालाई गरिएको आव्हान, संविधानसभा सदस्यहरूले विभिन्न समूहमा सहभागी भई देशभरबाट प्रश्नावली मार्फत् जनताको सुझाव सङ्कलन गरेको प्रसंग र ती सुझावको सदस्यहरूले अध्ययन र विश्लेषण गरी विषयगत समितिद्वारा अवधारणापत्र र व्याख्यात्मक टिप्पणी सहितको प्रारम्भिक मस्यौदा निर्माण भएको चरणका गतिविधिहरूलाई समावेश गरिएको छ ।

पुस्तकको चौथो भागमा संवैधानिक समिति र दशवटा विषयगत समितिहरूले कुन अवधिमा कतिवटा बैठक सम्पन्न गरी के कसरी आफ्नो कार्यक्षेत्रभित्रका विषयमा अवधारणापत्र र प्रारम्भिक मस्यौदा तयार गरेका थिए, हरेक समितिका प्रतिवेदनमा के कस्ता विशेषता विद्यमान रहेका छन् भन्ने कुराको संक्षेपीकरण प्रस्तुत गरिएको छ । यसले पहिले नै प्रकाशित भई सकेका विषयगत समितिका प्रतिवेदनहरु अध्ययन गर्न र बुझ्न पाठकहरूलाई थप उत्प्रेरित गर्ने एवं सघाउ पुऱ्याउने अपेक्षा गरिएको छ ।

पुस्तकको भाग पाँचमा कुन विषयगत समितिको प्रतिवेदनमाथि संविधानसभामा कहिले छलफल भयो, छलफलमा कति जना सदस्यहरूले भाग लिए, छलफलमा कस्ता–कस्ता विषयहरु उठे भन्ने विषयको

संक्षिप्त जानकारी दिनुको साथै हरेक समितिको प्रतिवेदनमा रहेका विवादको पहिचान गरी सहमतिको सिफारिश गर्न गठित अवधारणापत्र र प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्ययन समिति र त्यसले पेश गरेको प्रतिवेदनका विशेषतालाई केलाउने प्रयास गरिएको छ ।

पुस्तकको छैठौं भागमा अवधारणापत्र र प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्ययन समितिले सूचीकृत गरेका विभिन्न समितिका प्रतिवेदनमा रहेका दलीय मतभिन्नताहरूमा सहमति कायम गर्न गरिएको औपचारिक र अनौपचारिक सबै प्रयासका सम्बन्धमा चर्चा गरिएको छ । यस अन्तर्गत संविधानसभामा प्रतिनिधित्व गर्ने सबै दलका नेताहरूको संयुक्त बैठक, त्यसले निर्माण गरेको अनौपचारिक कार्यदल तथा संवैधानिक समिति र त्यस अन्तर्गत गठित विवाद समाधान उपसमितिबाट भएको सहमति कायम गर्ने प्रयासको झलक प्रस्तुत गरिएको छ ।

पुस्तकको भाग सातमा राज्यको पुनर्संरचना सुझाव उच्चस्तरीय आयोग गठनको पृष्ठभूमि, राज्यको पुनर्संरचना सुझाव उच्चस्तरीय आयोगको प्रतिवेदन संविधानसभामा पेश गर्ने प्रक्रिया निर्धारण र राज्यको पुनर्संरचना सुझाव उच्चस्तरीय आयोगको प्रतिवेदनमाथि सविधानसभामा छलफल र त्यसमा उठेका मुख्य विषयहरूको सारांश समावेश गरिएको छ ।

पुस्तकको भाग आठमा संविधानसभामा सहमति भएका संविधानका अन्तर्वस्तुहरु के-के थिए, सहमतिका विषयलाई मस्यौदा गरी संविधानको प्रारम्भिक खाकामा राखिएकोमा त्यसको यथार्थ अवस्था के कस्तो रहेको थियो, सहमति हुन नसकेका भनी सूचीकृत विषयहरु र ती विषयमा राजनीतिक तहमा भएको भनिएको सहमतिको खाकालाई जस्ताको तस्तै राख्ने प्रयास गरिएको छ । संविधानसभाको कार्यकालको अन्तिम अवधिमा मुख्य संवैधानिक मुद्दाहरूमा राजनीतिक सहमति भई त्यसका आधारमा सबै विवादित विषयलाई संबोधन गरी संविधानको मस्यौदा बनाउने प्रयास समेत भएकोमा त्यसरी भएको गृहकार्यको यथार्थ जानकारी समेत यो भागमा दिइएको छ ।

अन्त्यमा भाग नौ मा निष्कर्ष प्रस्तुत गर्दै अनुसूची खण्डमा संविधानसभाले पारित गरेको गणतन्त्र कार्यान्वयनको प्रस्ताव, संविधानसभाका सम्पूर्ण बैठक र छलफलका विषयहरू, महत्वपूर्ण विषयमा भएका सहमति र सोको मस्यौदा, विवादित अवस्थामा नै रहेका विषयहरूको विवरण, संविधानसभा सदस्यहरूको बैठकमा उपस्थितिको विवरण, सदस्यहरु आफू सदस्य भएको समितिको बैठकमा उपस्थितिको विवरण र संविधानसभाको कार्यकालमा भएको कूल खर्चको विवरण जस्ता अति महत्वपूर्ण र सबैको सरोकार रहेका विषयलाई समेटिएको छ ।

# भाग २

# संविधानसभाको कार्यप्रारम्भ, कार्यविधि र आन्तरिक संरचनाको निर्माण

## २.१. संविधानसभाको गठन

नेपालको अन्तरिम संविधान, २०६३ जारी भएपछि अन्तरिम संविधानले व्यवस्था गरे अनुरूप २०६४ चैत्र २८ गते ऐतिहासिक संविधानसभाको निर्वाचन सफलतापूर्वक सम्पन्न भयो । यस निर्वाचनमा पहिलो हुने निर्वाचित हुने प्रणालीबाट निर्वाचित २४० जना, समानुपातिक निर्वाचनप्रणालीबाट निर्वाचित ३३५ जना र मन्त्रिपरिषद्बाट मनोनित २६ जना सहित ६०१ जना सदस्य सहितको संविधानसभा गठन भएको थियो ।

## २.२. संविधानसभाको पहिलो बैठक आव्हान

निर्वाचन आयोगले २०६५ वैशाख २५ गते संविधानसभाका सदस्यहरूको निर्वाचन परिणाम सार्वजनिक गरेको र संविधानको धारा ६९ मा निर्वाचन परिणाम सार्वजनिक भएको २१ दिनभित्र प्रधानमन्त्रीले संविधानसभाको पहिलो बैठक आव्हान गर्नुपर्ने व्यवस्था भए अनुरूप सम्माननीय प्रधानमन्त्री श्री गिरीजाप्रसाद कोइरालाले मिति २०६५ वैशाख ३० गते नेपालको अन्तरिम संविधान, २०६३ को धारा ६९ अनुसार सम्वत् २०६५ साल ज्येष्ठ १५ गते बिहान ११:०० बजे संविधानसभाको पहिलो बैठक बस्नेगरी दिन र समय तोकी संविधानसभाको बैठक आव्हान गर्नु भएको थियो ।

## २.३. संविधानसभाका सदस्यहरुको शपथ

संविधानसभाका प्रत्येक सदस्यले संविधानसभाको पहिलो बैठकमा भाग लिनु अघि अन्तरिम संविधानको धारा ६८ मा व्यवस्था भए अनुसार शपथ गर्नुपर्ने संवैधानिक प्रावधान बमोजिम ज्येष्ठ सदस्यका रूपमा अध्यक्षता गर्ने मा० श्री कूलबहादर गुरूङ्ले २०६५ ज्येष्ठ १४ गते संविधानसभा सचिवालयले अन्तर्राष्ट्रिय सम्मेलन केन्द्र, नयाँ बानेश्वरस्थित संविधानसभाको सभाकक्षमा आयोजना गरेको विशेष कार्यक्रममा उपस्थित मा० सदस्यहरूका बीच पहिले आफूले शपथ लिनु भएको थियो । त्यसपछि उहाँले संविधानसभाका सदस्यहरूलाई सामूहिक रूपमा शपथ ग्रहण गराउनु भएको थियो । संविधानसभामा महिला, आदिवासी जनजाति, मधेसी, दलित, पिछडिएको क्षेत्र, मुस्लिम लगायत अल्पसंख्यक विविध भाषिक समुदायको प्रतिनिधित्व रहेको तथा संविधानसभा सदस्य निर्वाचन ऐन, २०६४ मा भएको कानूनी

व्यवस्था समेतको आधारमा निर्वाचित संविधानसभाका सदस्यहरूले आ-आफ्नो मातृभाषामा शपथ लिनु भएको थियो ।

शपथ लिने क्रममा देवनागरि नेपाली भाषामा शपथ गर्ने सदस्य संख्या ३१३ जना, हिन्दी भाषामा शपथ गर्ने सदस्य संख्या ६४ जना, मैथिली भाषामा शपथ गर्ने ४८ जना, भोजपुरी भाषामा १६ जना, मगर भाषामा १६ जना, गुरूङ्ग (तमु) भाषामा १६ जना, पश्चिमी थारू भाषामा १४ जना, नेवारी भाषामा १३ जना, लिम्बु भाषामा १२ जना, तामाङ भाषामा ९ जना, पूर्वी थारू भाषामा ७ जना, उर्दू भाषामा ६ जना, राजवंशी भाषामा ६ जना, राई भाषामा ५ जना, थकाली (शेरचन) भाषामा ३ जना, शेर्पा भाषामा ३ जना, रानाथारू भाषामा २ जना, धिमाल भाषामा २ जना, कुमाल भाषामा २ जना, दार्चुला (पश्चिमी भाषामा) १ जना, थामी भाषामा १ जना, अवधी भाषामा १ जना, माडवारी भाषामा १ जना, जिरेल भाषामा १ जना, चेपाङ्ग भाषामा १ जना, बाँतर भाषामा १ जना, माझी भाषामा १ जना र सुनुवार भाषामा १ जना गरी विभिन्न मातृभाषामा शपथ लिने मा० सदस्यहरूको कूल संख्या ५६९ जना रहेको थियो । नेपालको अन्तरिम संविधान, २०६३ को धारा ६३ को उपधारा (३) को खण्ड (ग) बमोजिम मन्त्रिपरिषद्बाट मनोनयन हुने २६ जना संविधानसभाका सदस्यहरु ज्येष्ठ १४ गतेसम्म पनि मनोनयन नहुनु भएकोले उक्त दिनको शपथग्रहण समारोहमा सहभागी हुन सक्ने अवस्था रहेन ।

ज्येष्ठ १४ गते शपथ लिन छुट मा० सदस्यहरु र मन्त्रिपरिषद्बाट मनोनित मा० सदस्यहरूमध्ये २०६५ असार २३ गते देखि २०६८ कार्तिक ३० गते सम्मका विभिन्न मितिमा देवनागरि नेपाली भाषामा शपथ गर्ने मा० सदस्यहरूको संख्या ३४ रहेको छ भने हिन्दी भाषामा २ जना, मैथिली भाषामा २ जना, थारू भाषामा २ जना, बराम भाषामा १ जना र राजवंशी भाषामा १ जना गरी जम्मा ४२ जना थप मा० सदस्यहरूले संविधानसभाका अध्यक्ष समक्ष उहाँकै कार्यकक्षमा शपथ ग्रहण गर्नु भएको थियो ।

माननीय सदस्यहरूले गर्नु भएको शपथ ग्रहणको ढाँचा अनुसूची - १ मा संलग्न गरिएको छ ।

## २.४. संविधानसभाको पहिलो बैठक र सोको कार्यसूची

संविधानसभाको पहिलो बैठक २०६५ साल ज्येष्ठ १५ गते दिनको ११.०० बजे बस्ने गरी आव्हान भएको भए तापनि राष्ट्रपति र उपराष्ट्रपतिको संवैधानिक व्यवस्था लगायत अन्य समसामयिक सुधारको लागि संविधान संशोधन गरी तत्काल संविधानमा व्यवस्था गर्नु अत्यावश्यक भएको र गणतन्त्र कार्यान्वयनको प्रस्ताव कुन प्रक्रियाबाट अगाडि बढाउने भन्ने सम्बन्धमा संविधानसभामा प्रतिनिधित्व गर्ने दलहरू बीच आपसी समझदारी जुटाउनु पर्ने भएकोले सो विषयमा भएको छलफल लम्बिदै जाँदा समय लाग्न गएको कारणले संविधानसभाको बैठक निर्धारित समय भन्दा करिब १० घण्टा २० मिनेट ढिलो गरी ज्येष्ठ सदस्य मा० श्री कूलबहादुर गुरूङ्गको अध्यक्षतामा राती ९:२० बजे प्रारम्भ भएको थियो ।

संविधानसभाको पहिलो बैठकको कार्यसूचीमा मा० ज्येष्ठ सदस्य श्री कूलबहादुर गुरूङ्गले सम्माननीय प्रधानमन्त्रीको पत्र पढेर सुनाउनु हुने, मा० प्रधानमन्त्री श्री गिरिजाप्रसाद कोइरालाले संविधानसभाको बैठकलाई सम्बोधन गर्नु हुने, मा० ज्येष्ठ सदस्य श्री कूलबहादुर गुरूङ्गले मित्रराष्ट्र भारतको लोकसभाका सभामुख श्री सोमनाथ चटर्जीले भारतीय संसदको तर्फबाट पठाउनु भएको बधाई र शुभकामना सन्देश पढेर सुनाउनु हुने, संविधानसभा बैठकको अन्तरिम कार्यविधि, २०६५ लाई पारित गर्न बैठक समक्ष प्रस्ताव प्रस्तुत गर्नु हुने, संविधानसभा बैठकको अन्तरिम कार्यविधि, २०६५ को दफा ११ को उपदफा (२) बमोजिम अध्यक्षको अनुपस्थितिमा बैठकको अध्यक्षता गर्न मा० सदस्यहरूको मनोनयन गर्नु हुने, सम्माननीय प्रधानमन्त्री

श्री गिरिजाप्रसाद कोइरालाले नेपालको अन्तरिम संविधान, २०६३ को धारा १५९ बमोजिम गणतन्त्र कार्यान्वयन सम्बन्धी प्रस्ताव प्रस्तुत गर्नु हुने र सम्माननीय प्रधानमन्त्री श्री गिरिजाप्रसाद कोइरालाले नेपालको अन्तरिम संविधान, २०६३ को धारा १५९ बमोजिम गणतन्त्र कार्यान्वयन सम्बन्धी प्रस्तावलाई पारित गरियोस् भनी प्रस्ताव प्रस्तुत गर्नु हुने कार्यक्रम रहेको थियो ।

उल्लिखित कार्यसूचीका आधारमा बैठक प्रारम्भ हुनासाथ देश र जनताको अधिकारको लागि जीवन उत्सर्ग गर्ने ज्ञातअज्ञात शहीदहरूप्रति श्रद्धाञ्जलि अर्पण गरिएको थियो र सोही बैठकमा संविधानसभाका अध्यक्षले सबै दलका मा० सदस्यहरूलाई संविधानसभामार्फत् संविधान निर्माणको लागि ऐतिहासिक जिम्मेवारी निर्वाह गर्ने अवसर पाएकोमा बधाई ज्ञापन गर्दै उक्त कार्यमा हामी सबैलाई सफलता प्राप्त होस् भनी शुभकामना समेत व्यक्त गर्नु भएको थियो ।

## २.५. अध्यक्षको अनुपस्थितिमा बैठकको अध्यक्षता गर्ने सदस्यहरु मनोनयन

संविधानसभा बैठकको अन्तरिम कार्यविधि २०६५ को दफा ५ मा अध्यक्षले आफू तथा उपाध्यक्षको अनुपस्थितिमा बैठकको अध्यक्षता गर्न बढीमा ११ जना सदस्यलाई मनोनयन गर्न सक्ने प्रावधान राखिएको थियो । संविधानसभाको अध्यक्ष र उपाध्यक्षको निर्वाचन नभएको र बैठकको अध्यक्षता गर्ने ज्येष्ठ सदस्यको अनुपस्थितिमा बैठकको अध्यक्षता गर्ने सदस्यहरूको मनोनयन तत्काल गर्नुपर्ने अवस्था रहेकोले संविधानसभाको पहिलो बैठकबाट मा० श्री दानबहादुर कुर्मी (चौधरी), मा० श्री नीलम वर्मा, मा० श्री मीना पाण्डे, मा० श्री राधा ज्ञवाली र मा० श्री शिवराज गौतमको नाम मनोनयन गरिएको थियो । त्यसैगरी मिति २०६५ असार ४ गते मा० श्री कल्पना राणा, मा० श्री खोभारी राय, मा० श्री नीलम के.सी. (खड्का), मा० श्री भीमप्रसाद गौतम, मा० श्री रामनारायण सिंह र मा० श्री सूर्यबहादुर के.सी.लाई थप मनोनयन गरिएको थियो ।

## २.६. गणतन्त्रको कार्यान्वयन सम्बन्धी प्रस्ताव

२०६५ ज्येष्ठ १५ गते बसेको संविधानसभाको पहिलो बैठकमा नेपाली जनताले २००७ साल पहिलेदेखि पटकपटक गर्दै आएको सङ्घर्ष, क्रान्ति र जनआन्दोलनमार्फत् अभिव्यक्त जनादेशको सम्मान गर्दै, प्राप्त उपलब्धिलाई संस्थागत गर्न, राजनीतिक दलहरूका बीच भएको सहमति तथा नेपालको अन्तरिम संविधान, २०६३ को धारा १५९ (२) अनुरूप इतिहासले सुम्पेको अभिभारालाई आत्मसात् गर्दै नेपाल सरकार, मन्त्रिपरिषद्बाट पारित गरी गणतन्त्रको कार्यान्वयनका लागि संविधानसभाको पहिलो बैठकमा ५ बुँदे प्रस्ताव राखिएको थियो । जसअनुसार दफा १ मा सार्वभौमसत्ता र राजकीयसत्ता नेपाली जनतामा निहित रही स्वतन्त्र, अविभाज्य, सार्वभौमसत्तासम्पन्न, धर्मनिरपेक्ष, समावेशी नेपाल आजैका मितिदेखि एक सङ्घीय लोकतान्त्रिक गणतन्त्रमा विधिवत परिणत भएको संविधानसभाको यो पहिलो बैठक घोषणा गर्दछ भन्ने व्यहोरा थियो । गणतन्त्र कार्यान्वयन सम्बन्धी प्रस्ताव पारित गरियोस् भन्ने प्रस्ताव प्रस्तुत हुनु पूर्व उठेर बोल्नु हुँदै मा० श्री हृदयेश त्रिपाठीले प्रस्तुत गणतन्त्र कार्यान्वयन सम्बन्धी प्रस्तावको क्रमसंख्या २ मा "विधिवत" शब्द पछि "सङ्घीय" शब्द नियत वश नै हटाइएकोले उक्त "सङ्घीय" शब्द प्रस्ताव पारित गर्नु पूर्व नै समावेश गरिनुपर्ने तर्फ सरकारको ध्यानाकर्षण गराउनु भयो । उक्त दफा १ घोषणा हुनासाथ बैठकमा उपस्थित संविधानसभाका सदस्यहरूद्वारा करिब २ मिनेटसम्म गरिएको कर्तलध्वनि सहितको हर्षोल्लासले सभाहल गुञ्जाएमान भएको थियो । उक्त ऐतिहासिक घोषणाले नेपाली जनता वास्तविक रूपमा सार्वभौमसत्तासम्पन्न भएको महसूस हुन्थ्यो । सम्माननीय प्रधानमन्त्री श्री गिरिजाप्रसाद कोइरालाको तर्फबाट मा० गृहमन्त्री श्री कृष्णप्रसाद सिटौलाले राख्नुभएको नेपालको अन्तरिम संविधान, २०६३ को धारा १५९ (२) बमोजिम गणतन्त्र कार्यान्वयन सम्बन्धी प्रस्तावलाई

संविधानसभा बैठकको अन्तरिम कार्यविधि र नेपालको अन्तरिम संविधान, २०६३ को धारा १५९ को उपधारा (२) बमोजिम निर्णयार्थ प्रस्तुत गरिएकोमा प्रस्तावको पक्षमा अर्थात् हुन्छ भन्ने पक्षमा जम्मा ५६० (पाँचसय साठी) मत र यस प्रस्तावको विपक्षमा अर्थात् हुन्न भन्ने पक्षमा जम्मा ४ (चार) मत परेकोले मा० अध्यक्षले नेपालको अन्तरिम संविधान, २०६३ को धारा १५९ को उपधारा (२) बमोजिम गणतन्त्रको कार्यान्वयन सम्बन्धी प्रस्ताव अत्यधिक बहुमतबाट पारित भएको घोषणा गर्नु भएको थियो । गणतन्त्र कार्यान्वयन सम्बन्धी प्रस्ताव अनुसूची -२ मा समावेश गरिएको छ ।

२०६५ ज्येष्ठ १५ गते गणतन्त्र कार्यान्वयन सम्बन्धी प्रस्ताव निर्णयार्थ प्रस्तुत भई नतीजा घोषणा भए लगत्तै निम्न लिखित मा० सदस्यहरूले बोल्नको लागि समय माग गरी देहाय बमोजिमको आ-आफ्नो धारणा प्रस्तुत गर्नु भएको थियो :-

मा० श्री प्रतिभा राणाले गणतन्त्रको पक्षमा नेपाली जनताको अभिमत प्रष्ट भएजस्तै धर्म निरपेक्षताको अभिमत प्रष्ट नभएको अवस्थामा बहुसंख्यक नेपालीले स्वीकार गरेको धर्म र संस्कृतिलाई मिच्ने कार्य रा.प्र.पा.लाई स्वीकार्य हुन सक्दैन भन्नुभयो ।

त्यस्तै मा० श्री चन्द्रबहादुर गुरूङ्ले २००७ साल देखि जनतासँग हातेमालो गर्दै प्रजातन्त्र स्थापनामा सङ्घर्ष गर्ने, विदेशी हस्तक्षेपको विरूद्ध राष्ट्रियताको संरक्षण र सम्वर्द्धनमा आवाज उठाउने, विश्व रंगमंचमा नेपालको स्वतन्त्र र स्वाभिमान पहिचान निर्माण गर्न साहसिक योगदान दिने राजसंस्थाको हठात र अमर्यादित तरिकाले अन्त्य गराउने तर्फ नलागि संविधान निर्माण सम्पन्न नभएसम्मको लागि सोचियोस् भन्ने माग गर्नुभयो ।

यसैगरी मा० श्री चित्रबहादुर के.सी.ले लोकतान्त्रिक गणतन्त्र स्थापना भएकोमा स्वागत गर्दै नेपाल जस्तो सानो राष्ट्रलाई सङ्घीय राज्यमा रूपान्तरण गर्ने सवालमा आफ्नो पार्टी असहमत रहेको छ भन्नुभयो ।

त्यस्तै मा० श्री प्रकाशचन्द्र लोहनीले गणतन्त्र साध्य होइन साधन मात्रै हो । साध्य भनेको नेपालको राष्ट्रिय एकता, अखण्डता र सार्वभौमिकताको संरक्षण, सम्वर्द्धन र प्रवर्द्धन हो । हाम्रो घोषणापत्रको प्रतिबद्धता अनुरूप गणतन्त्रलाई समर्थन गर्दछौं । साथै संविधान सभाले निर्माण गर्ने संविधानको अन्तिम अनुमोदन प्रत्यक्ष जनमत सङ्ग्रहबाट होस् भन्ने माग गर्दछु भन्नुभयो ।

## २.७. गणतन्त्र कार्यान्वयन गर्न नेपाल सरकारलाई निर्देश

ज्येष्ठ १५ गते राती बसेको संविधानसभाको पहिलो बैठकमा मा० अध्यक्षले नेपालमा लोकतान्त्रिक गणतन्त्र सम्बन्धी व्यवस्था कार्यान्वयन भइसकेको सन्दर्भमा नारायणहिटी दरबारमा रहेका राजा र निजसँग सम्बन्धित निजी सचिवालय संरचना यो प्रस्ताव पारित भएको मितिले पन्ध्र दिनभित्र हटाउन र नारायणहिटी दरबार परिसरको नियन्त्रण एवं सो दरबार परिसरमा रहेका सम्पूर्ण राष्ट्रिय सम्पत्तिको सुरक्षाको लागि तत्काल आवश्यक व्यवस्था मिलाउन समेत सभाको यो बैठक नेपाल सरकारलाई निर्देश गर्दछ भन्ने प्रस्ताव निर्णयार्थ प्रस्तुत गर्नुहुँदा सर्वसम्मतिले पारित भएको थियो ।

## २.८. संविधानसभा बैठकको अन्तरिम कार्यविधिको निर्माण

संविधान निर्माण गर्ने सर्वोच्च निकायको पहिलो बैठकदेखिका सबै कामकारवाहीहरु विधिसम्मत, व्यवस्थित हुन सकुन् भन्ने उद्देश्यले नेपालको अन्तरिम संविधान, २०६३ को धारा ७८ बमोजिम संविधानसभाको

कार्यसञ्चालन गर्न, बैठकको सुव्यवस्था कायम राख्न र अन्य कुरा नियमित गर्नको लागि नियमावली निर्माण नभएसम्मको लागि बैठकको कार्यसञ्चालन गर्न अन्तरिम कार्यविधिको आवश्यकता पर्न गएकोले सचिवालयले प्रमुख दलहरूको परामर्शमा तयार गरेको संविधानसभा बैठकको अन्तरिम कार्यविधि, २०६५ मा० अध्यक्षले बैठक समक्ष प्रस्तुत गर्नुहुँदा सर्वसम्मतिबाट स्वीकृत भएको थियो । उक्त अन्तरिम कार्यविधि अनुसूची -३ मा रहेको छ ।

अन्तरिम कार्यविधिमा परिभाषा सम्बन्धी व्यवस्था, संविधानसभाको बैठक बस्ने सूचना सम्बन्धी व्यवस्था, मा० सदस्यहरूको उपस्थिति, बस्नेक्रम, अपाङ्गता भएका मा० सदस्यहरूको लागि सहयोगीको व्यवस्था, संविधानसभा सदस्य नरहेका मन्त्रिपरिषद्का सदस्यहरूलाई बस्ने स्थान तोक्न सक्ने व्यवस्था, अध्यक्ष/उपाध्यक्षको निर्वाचन नभएसम्मको लागि बैठकको अध्यक्षता ज्येष्ठ सदस्यले गर्नसक्ने व्यवस्था, अध्यक्ष/उपाध्यक्षको अनुपस्थितिमा बैठकमा अध्यक्षता गर्ने सदस्य मनोनयनको व्यवस्था, रिक्त रहेको अध्यक्ष पदको निर्वाचनको कार्यविधिको व्यवस्था, अध्यक्ष/उपाध्यक्षले शपथ ग्रहण गर्नुपर्ने प्रावधान, बैठकमा सदस्यहरूले पालना गर्नुपर्ने कुराहरू, छलफलमा भाग लिने सदस्यले पालना गर्नुपर्ने कुराहरू, अध्यक्षलाई बैठकमा सुव्यवस्था कायम राख्न मा० सदस्यलाई बैठक कक्षबाट निष्कासन गर्न समेत सकिने खालका अधिकार प्रदान गर्ने कुराहरू, बैठकमा छलफलको लागि पेश गरिने प्रस्ताव प्रस्तुत गर्ने कार्यविधि, निर्णयमा लैजाने र निर्णयार्थ पेश गर्ने कार्यविधि आदि व्यवस्था रहेका थिए ।

कार्यविधिमा मा० सदस्यले नियमापत्ति उठाउन सक्ने व्यवस्था, संविधानसभाले व्यवस्थापिका-संसदको हैसियतमा बैठक बसेर प्रधानमन्त्रीको नियुक्ति गर्ने व्यवस्था, नेपाल सरकारको नीति तथा कार्यक्रम पारित गर्ने, राजस्व र व्ययको अनुमान पारित गर्ने, विधेयक पारित गर्ने लगायतका सम्पूर्ण कार्यसम्पादन गर्न सक्ने व्यवस्था, संविधानसभाको बैठकमा पेश हुने विषयहरूको प्राथमिकता तथा समयावधिको निर्धारण लगायत अध्यक्षले आवश्यक ठहऱ्याएको अन्य विषयमा परामर्श दिन संविधानसभाका अध्यक्षको अध्यक्षतामा संविधानसभामा प्रतिनिधित्व गर्ने सम्पूर्ण राजनीतिक दलका सदस्यहरू समावेश हुने गरी कार्यव्यवस्था परामर्श समिति गठन गर्न सक्ने व्यवस्था, विद्यमान व्यवस्थापिका-संसद सचिवालयले नै संविधानसभा सचिवालयको रूपमा कार्य गर्ने व्यवस्था, सचिवालयमा कार्यरत पदाधिकारी र कर्मचारीहरू, विशेषज्ञको सहयोग लिन सकिने व्यवस्था, संविधानसभा दलको कार्यालय सम्बन्धी व्यवस्था, बैठकको कार्यसूची र कारवाहीको विवरण सम्बन्धी व्यवस्था, बाधा अड्काउ फुकाउने अधिकारको व्यवस्था समेत समावेश गरिएका थिए ।

## २.९. राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन

गणतन्त्र कार्यान्वयन सम्बन्धी प्रस्ताव संविधानसभाबाट पारित भएपछि ज्येष्ठ १५ गते राती नै नेपालको अन्तरिम संविधान, २०६३ माथि चौथो संशोधन गरी राष्ट्रपति र उपराष्ट्रपति सम्बन्धी व्यवस्था गर्नको लागि व्यवस्थापिका-संसदको हैसियतमा संविधानसभाको बैठक बसेको थियो । उक्त चौथो संशोधनले राष्ट्रपति र उपराष्ट्रपतिको संवैधानिक व्यवस्था गरेको भए पनि निर्वाचन विधि भने तय हुन सकेको थिएन । २०६५।३।२९ गते भएको अन्तरिम संविधानको पाँचौ संशोधनले त्यसको स्पष्ट व्यवस्था गर्दै धारा ३६ख. मा राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन राजनीतिक सहमतिमा संविधानसभाले गर्ने, राजनीतिक सहमति हुन नसकेमा संविधानसभामा तत्काल कायम सम्पूर्ण सदस्य संख्याको बहुमतबाट निर्वाचित हुने व्यवस्था गऱ्यो । साथै राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन सम्बन्धी अन्य कार्यविधि संविधानसभाले निर्धारण गर्ने व्यवस्था पनि गरिएको थियो । स्वाभाविक रूपमा गणतन्त्र नेपालको प्रथम राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन गर्नु संविधानसभाको पहिलो प्राथमिकताको विषय भएकोले सोको लागि कार्यविधि तयार गर्नुपर्ने हुँदा कार्यव्यवस्था परामर्श समितिको बैठकमा छलफल

भई तयार भएको राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन कार्यविधि सम्बन्धी प्रस्तावका प्रस्तावक मा० श्री दिनानाथ शर्मा, समर्थक मा० श्री लक्ष्मणप्रसाद घिमिरे र मा० श्री रामचन्द्र झा रहनुभएको प्रस्ताव मिति २०६५ असार ३१ गतेको बैठकमा प्रस्तुत हुँदा सर्वसम्मतिबाट स्वीकृत भएको थियो ।

सोही दिन बसेको बैठकमा उक्त कार्यविधिको दफा १ को उपदफा (१) र दफा १३ को उपदफा (१) बमोजिम राष्ट्रपति र उपराष्ट्रपति दुबै पदको निर्वाचन सम्पन्न गर्न २०६५ साल साउन ४ गते दिनको ११:०० बजेको समय निर्धारण गरियो । सोही प्रयोजनको लागि उक्त कार्यविधिको दफा १ को उपदफा (२) बमोजिम राष्ट्रपति र उपराष्ट्रपति पदको निर्वाचन सम्पन्न गरी संविधानसभाका अध्यक्ष समक्ष निर्वाचन परिणाम पेश गर्न संविधानसभाका तत्कालीन कार्यवाहक महासचिव श्री मनोहरप्रसाद भट्टराईलाई निर्वाचन अधिकृत तोकिएको थियो ।

राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचनको कार्यक्रम अनुसार उम्मेदवारी दर्ता गर्ने निर्धारित समयभित्र राष्ट्रपति पदमा श्री रामप्रीत पासवान, श्री रामराजाप्रसाद सिंह र श्री रामवरण यादवले उम्मेदवारी दर्ता गराउनुभएको थियो भने उपराष्ट्रपति पदमा श्री अष्टलक्ष्मी शाक्य बोहरा, श्री परमानन्द झा, श्री मानबहादुर विश्वकर्मा र सुश्री शान्ता श्रेष्ठले उम्मेदवारी दर्ता गराउनु भएको थियो । नयाँ बानेश्वर स्थित संविधानसभा भवनको लोत्से हलमा मिति २०६५ साउन ४ गते भएको राष्ट्रपति पदको निर्वाचनको परिणाम अनुसार कूल मतदाता संख्या ५९४ थियो जसमा ५७८ मत खसेको थियो । खसेको मतमध्ये २५ मत बदर भएको थियो भने ५५३ मत सदर भएको थियो । उक्त सदर मतमध्ये श्री रामप्रीत पासवानले शून्य मत, श्री रामराजाप्रसाद सिंहले २७० मत र श्री रामवरण यादवले २८३ मत प्राप्त गर्नु भएको थियो । उक्त राष्ट्रपति पदको निर्वाचनमा राष्ट्रपति पदका उम्मेदवारहरु मध्ये कसैले पनि नेपालको अन्तरिम संविधान, २०६३ को धारा ३६ख. को उपधारा (२) बमोजिम प्राप्त गर्नुपर्ने संविधानसभामा तत्काल कायम रहेका सदस्य संख्या ५९४ को बहुमत अर्थात् २९८ मत वा सोभन्दा बढी मत प्राप्त गरेको नदेखिएकोले राष्ट्रपति पदको लागि कुनै पनि उम्मेदवार विजयी हुन नसकेकोले राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन कार्यविधि, २०६५ बमोजिम सबैभन्दा बढी मत प्राप्त गर्ने राष्ट्रपति पदका दुई उम्मेदवारहरु श्री रामवरण यादव (२८३ मत) श्री रामराजाप्रसाद सिंह (२७० मत) बीच पुनः मतदान गराउनु पर्ने प्रावधान बमोजिम पुनः मतदान कार्यको लागि २०६५ साल साउन ६ गते सोमवार बिहान ८:०० बजेको समय तोकिएको थियो ।

त्यसैगरी साउन ४ गते भएको उपराष्ट्रपति पदको निर्वाचनको परिणाम अनुसार कूल मतदाता संख्या ५९४ मध्ये कूल खसेको मतसंख्या ५७८ मा कूल वदर मत २४ थियो भने कूल सदर मत ५५४ थियो । उक्त सदर मत परिणाममध्ये श्री अष्टलक्ष्मी शाक्य बोहराले ४ मत, श्री परमानन्द झाले ३०५ मत, श्री मानबहादुर विश्वकर्माले २ मत र सुश्री शान्ता श्रेष्ठले २४३ मत प्राप्त गर्नु भएको थियो । उक्त निर्वाचनको परिणाम अनुसार उपराष्ट्रपति पदको निर्वाचनमा उपराष्ट्रपति पदका उम्मेदवारहरुमध्ये श्री परमानन्द झाले नेपालको अन्तरिम संविधान, २०६३ को धारा ३६ख. को उपधारा (२) बमोजिम प्राप्त गर्नुपर्ने संविधानसभामा तत्काल कायम रहेका सदस्य संख्या ५९४ को बहुमत अर्थात् २९८ मतभन्दा बढी मत अर्थात् ३०५ मत प्राप्त गर्नु भई उपराष्ट्रपति पदमा श्री परमानन्द झा विजयी हुनुभएकोले राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन कार्यविधि, २०६५ को दफा १२ को उपदफा (२) बमोजिम श्री परमानन्द झा नेपालको उपराष्ट्रपति पदमा बहुमतले निर्वाचित हुनुभएको घोषणा साउन ४ गते बसेको संविधानसभाको बैठकमा गरिएको थियो ।

२०६५ साल साउन ६ गते सोमवार भएको राष्ट्रपति पदको पुनः मतदानको परिणाम अनुसार कूल मतदाता संख्या ५९४ रहेको थियो जसमा खसेको कूल सदर मत संख्या ५९० थियो जसमध्ये श्री रामराजाप्रसाद सिंहले २८२ मत प्राप्त गर्नु भएको थियो भने श्री रामवरण यादवले ३०८ मत प्राप्त गर्नु भएको थियो । राष्ट्रपति पदको

पुनः मतदानको परिणामबाट राष्ट्रपति पदका उम्मेदवारहरूमध्ये श्री रामवरण यादवले नेपालको अन्तरिम संविधान, २०६३ को धारा ३६ख. को उपधारा (२) बमोजिम प्राप्त गर्नुपर्ने संविधानसभामा तत्काल कायम रहेका सदस्य संख्या ५९४ को बहुमत अर्थात् २९८ मतभन्दा बढी मत अर्थात् ३०८ मत प्राप्त गरी राष्ट्रपति पदमा श्री रामवरण यादव बहुमतले निर्वाचित हुनुभएकोले राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन कार्यविधि, २०६५ को दफा १२ को उपदफा (५) बमोजिम श्री रामवरण यादव नेपालको राष्ट्रपति पदमा बहुमतले निर्वाचित हुनुभएको घोषणा सोही दिन बसेको संविधानसभाको बैठकमा गरिएको थियो ।

## २.१०. संविधानसभाका अध्यक्ष र उपाध्यक्षको निर्वाचन

संविधानसभा बैठकको अन्तरिम कार्यविधि, २०६५ को दफा ६ मा संविधानसभाको अध्यक्षको निर्वाचन तोकिएको दिन हुनेछ भन्ने प्रावधान रहेकोले २०६५ साउन ६ गतेको बैठकबाट संविधानसभा बैठकको अन्तरिम कार्यविधि, २०६५ को नियम ६ को उपनियम (१) बमोजिम संविधानसभाका अध्यक्ष पदको निर्वाचन सम्वत् २०६५ साल साउन ९ गते बिहान ११:०० बजे बस्ने संविधानसभाको बैठकमा सम्पन्न गर्ने गरी निर्धारण गरिएको थियो । निर्वाचन सम्बन्धी विस्तृत कार्यक्रम प्रकाशित गरी प्रक्रिया प्रारम्भ गर्न संविधानसभाका तत्कालीन कार्यवाहक महासचिव श्री मनोहरप्रसाद भट्टराईलाई मिति २०६५ साउन ६ गते बसेको बैठकले निर्देशन दिएको थियो । मिति २०६५ साउन ८ गतेको बैठकबाट अध्यक्ष पदको निर्वाचनमा राजनीतिक सहमति कायम भई एक मात्र उम्मेदवारी परेको अवस्थामा हुने निर्वाचन कार्यविधि निर्धारण गरी बैठकको कार्यविधिमा संशोधन समेत गरिएको थियो ।

सोही निर्वाचन कार्यक्रम अनुसार २०६५ साउन ९ गते बसेको बैठकमा संविधानसभाको अध्यक्ष पदमा मा० सदस्य श्री सुवासचन्द्र नेम्वाङ्लाई निर्वाचित गरियोस् भनी नेकपा एमालेका मा० सदस्य श्री विष्णुप्रसाद पौडेलले प्रस्ताव गर्नु भएको थियो भने उक्त प्रस्तावलाई नेपाली कांग्रेसका मा० सदस्य श्री विमलेन्द्र निधिले समर्थन गर्नु भएको थियो । बैठकको अध्यक्षता गरिरहनु भएका ज्येष्ठ सदस्यले संविधानसभाका अध्यक्षको निर्वाचनको लागि एक मात्र प्रस्तावको सूचना प्राप्त हुन आएकोले संविधानसभा बैठकको अन्तरिम कार्यविधि, २०६५ को दफा ६ को उपदफा (३) बमोजिम माननीय श्री सुवासचन्द्र नेम्वाङ् संविधानसभाको अध्यक्ष पदमा निर्विरोध निर्वाचित हुनु भएको घोषणा गर्नु भयो ।

संविधानसभाका अध्यक्षको निर्वाचन २०६५ साउन ९ गतेका दिन भए पनि संविधानसभाका उपाध्यक्षको निर्वाचन भने विविध कारणले करिब चार महिना पछिमात्र सम्पन्न भएको थियो । संविधानसभाले नियमावली निर्माण गरिसकेपछि २०६५ मार्ग १ गते संविधानसभा नियमावली, २०६५ को नियम ९ को उपनियम (१) बमोजिम संविधानसभाका उपाध्यक्ष पदको निर्वाचन सम्वत् २०६५ साल मार्ग १३ गते शुक्रवार बिहान ११:०० बजे बस्ने संविधानसभाको बैठकमा सम्पन्न गर्ने गरी निर्धारण गरिएको र निर्वाचन सम्बन्धी विस्तृत कार्यक्रम प्रकाशित गरी प्रक्रिया प्रारम्भ गर्न संविधानसभाका तत्कालीन कार्यवाहक महासचिव श्री मनोहरप्रसाद भट्टराईलाई निर्देशन दिइएको थियो ।

संविधानसभाका उपाध्यक्षको निर्वाचन कार्यक्रम अनुसार उम्मेदवारी सम्बन्धी प्रस्ताव दर्ता गर्न निर्धारित समयभित्र मा० श्री प्रतिभा राणा, मा० श्री खोभारी राय, मा० श्री लीला न्याईच्याइँ, मा० श्री पूर्णकुमारी सुवेदी, मा० श्री रमणी राम र मा० श्री नीलम के.सी. (खड्का) लाई निर्वाचित गरियोस् भन्ने छ वटा उम्मेदवारी सम्बन्धी प्रस्ताव दर्ता भएका थिए । मिति २०६५ मार्ग १३ गतेको संविधानसभा बैठकमा सबै प्रस्तावहरु क्रमशः प्रस्तुत भए । त्यसपछि दर्ताक्रमानुसार मतविभाजन गरी मतसङ्कलन गर्दा उपाध्यक्ष पदका देहाय बमोजिमका उम्मेदवारहरूले देहाय बमोजिमको मत परिणाम प्राप्त गर्नु भएको थियो ।

पहिलो प्रस्तावका प्रस्तावक मा० श्री प्रेमबहादुर सिंह र समर्थक मा० श्री मालवरसिंह थापा रहनु भई संविधानसभाको उपाध्यक्ष पदमा मा० श्री प्रतिभा राणालाई निर्वाचित गरियोस् भन्ने प्रस्तावलाई निर्णयार्थ प्रस्तुत गर्दा उक्त निर्वाचनमा मा० सदस्यहरूको उपस्थिति संख्या ५२८ रहेको थियो जसमध्ये प्रस्तावको पक्षमा ११४ मत परेको थियो भने प्रस्तावको विपक्षमा २३१ मत र मत दिन्न भन्ने पक्षमा १८३ मत परेको थियो । त्यस्तै दोस्रो प्रस्तावका प्रस्तावक मा० श्री रामनरेश राय र समर्थक मा० श्री मालामती देवी राना रहनु भई संविधानसभाको उपाध्यक्ष पदमा मा० श्री खोभारी रायलाई निर्वाचित गरियोस् भन्ने प्रस्तावलाई निर्णयार्थ प्रस्तुत गर्दा उक्त निर्वाचनमा मा० सदस्यहरूको उपस्थिति संख्या ५१६ रहेको थियो जसमध्ये प्रस्तावको पक्षमा ८ मत परेको थियो भने प्रस्तावको विपक्षमा २३१ मत र मत दिन्न भन्ने पक्षमा २७७ मत परेको थियो । त्यसैगरी तेस्रो प्रस्तावका प्रस्तावक मा० श्री सुनील प्रजापति र समर्थक मा० श्री नवराज कोइराला रहनु भई संविधानसभाको उपाध्यक्ष पदमा मा० श्री लीला न्याइँच्याइँलाई निर्वाचित गरियोस् भन्ने प्रस्तावलाई निर्णयार्थ प्रस्तुत गर्दा उक्त निर्वाचनमा मा० सदस्यहरूको उपस्थिति संख्या ५०७ रहेको थियो जसमध्ये प्रस्तावको पक्षमा ११५ मत परेको थियो भने प्रस्तावको विपक्षमा २१७ मत र मत दिन्न भन्ने पक्षमा १७५ मत परेको थियो । त्यस्तै चौथो प्रस्तावका प्रस्तावक मा० श्री दिनानाथ शर्मा र समर्थक मा० श्री भीमप्रसाद गौतम रहनु भई संविधानसभाको उपाध्यक्ष पदमा मा० श्री पूर्णकुमारी सुवेदीलाई निर्वाचित गरियोस् भन्ने प्रस्तावलाई निर्णयार्थ प्रस्तुत गर्दा उक्त निर्वाचनमा मा० सदस्यहरूको उपस्थिति संख्या ५०५ रहेको थियो जसमध्ये प्रस्तावको पक्षमा ३४६ मत परेको थियो भने प्रस्तावको विपक्षमा ६९ मत र मत दिन्न भन्ने पक्षमा ९० मत परेको थियो ।

मत परिणाम अनुसार संविधानसभाका सदस्य मा० श्री पूर्णकुमारी सुवेदीलाई संविधानसभाको उपाध्यक्ष पदमा निर्वाचित गरियोस् भन्ने प्रस्ताव संविधानसभामा तत्काल कायम रहेका सम्पूर्ण सदस्य संख्या ५९३ (पाँचसय त्रियानब्बे) को बहुमत अर्थात् २९७ (दुईसय सन्तान्नब्बे) मत भन्दा बढी ३४६ (तीनसय छयालीस) मत प्राप्त भएकोले मा० श्री पूर्णकुमारी सुवेदी संविधानसभाको उपाध्यक्ष पदमा नेपालको अन्तरिम संविधान, २०६३ को धारा ७१ को उपधारा (१क) एवं संविधानसभा नियमावली, २०६५ को नियम ७ को उपनियम (१०) बमोजिम बहुमतबाट निर्वाचित हुनु भएको घोषणा गरिएको थियो । उपाध्यक्ष पदमा बहुमतबाट मा० श्री पूर्णकुमारी सुवेदी निर्वाचित भईसकेको परिस्थितिमा मा० श्री हृदयेश त्रिपाठी र मा० श्री जनककुमारी चालिसेले प्रस्तुत गर्नु भएका प्रस्तावहरूलाई निर्णयार्थ प्रस्तुत गरिरहनु नपर्ने व्यहोरा जानकारी गराइएको थियो ।

## २.११. संविधानसभा नियमावलीको निर्माण

नेपालको अन्तरिम संविधान, २०६३ को धारा ७८ मा कार्य सञ्चालन विधि सम्बन्धी व्यवस्था रहेको छ जसमा यस संविधानको अधीनमा रही संविधानसभाले आफ्नो कार्य सञ्चालन गर्न, बैठकको सुव्यवस्था कायम राख्न र समितिहरूको गठन, कामकारवाही र अन्य कुरा नियमित गर्नको लागि नियमावली बनाउने छ भनिएको सन्दर्भमा संविधानको व्यवस्था बमोजिम पहिलो बैठकले नै विस्तृत नियमावली पारित गर्न व्यावहारिक र सम्भव नभएकोले तत्कालका लागि अन्तरिम कार्यविधि निर्माण गरी बैठक सञ्चालन गरिएको भए पनि संविधानसभा विस्तृत नियमावली निर्माणमा अग्रसर हुन जरूरी थियो । सो आवश्यकता पूर्तिका लागि नियमावली निर्माणको प्रयोजनका लागि प्रस्तावक मा० श्री दिनानाथ शर्माले २०६५।२।२३ गते बसेको संविधानसभाको दोस्रो बैठकमा संविधानसभामा प्रतिनिधित्व गर्ने सबै दलका मा० सदस्यहरूको प्रतिनिधित्व रहेको नामावली सहितको ४४ सदस्यीय संविधानसभा (कार्यविधि) नियमावली मस्यौदा समिति गठनको प्रस्ताव प्रस्तुत गर्नु भएको थियो । सो प्रस्तावको मा० श्री लक्ष्मणप्रसाद घिमिरे र मा० श्री रामचन्द्र झाले समर्थन गर्नु भएको थियो । २०६५ साउन १२ गतेको

बैठकले संविधानसभा (कार्यविधि) नियमावली मस्यौदा समितिमा ६ जना मा० सदस्यहरूको नाम थप गरेको थियो । मस्यौदा समितिको सभापतिमा मा० श्री नारायणमान विजुक्छेलाई मिति २०६५ ।३ ।५ मा सर्वसम्मतिले चयन गरिएको थियो । २०६५ कार्तिक २५ गतेको संविधानसभाको बैठकमा उक्त मस्यौदा समितिका सभापति मा० श्री नारायणमान विजुक्छेले पेश गर्नु भएको संविधानसभा नियमावली २०६५ र संविधानसभा (व्यवस्थापिका-संसदको कार्यसञ्चालन) नियमावली २०६५ को मस्यौदा प्रतिवेदन माथि २०६५ कार्तिक २६ गतेको बैठकमा सामान्य छलफल भई २०६५ कार्तिक २९ गते बसेको बैठकले सर्वसम्मतिबाट पारित गरेको थियो ।

संविधानसभा नियमावली, २०६५ लाई समग्रमा अध्ययन गर्दा यसमा देहायका विशेषताहरु अन्तरनिहित रहेको पाइन्छ ।

- संविधानसभाको सर्वोच्चता र स्वायत्तताको संरक्षण,
- जनसहभागिता र जनताको राय सुझावलाई केन्द्र विन्दुमा राखिएको,
- संविधान निर्माणसँग सम्बन्धित विषय बाहेक अन्य कुनै पनि विषयले प्रवेश नपाउने सुनिश्चितता गरिएको,
- अवधारणापत्र सहित प्रारम्भिक मस्यौदा तयार गर्ने १० वटा विषयगत समिति, जनताको पहुँच स्थापित गर्ने, राय सुझाव सङ्कलन गर्ने, सूचना सम्प्रेषण गर्ने लगायतका प्रशासनिक कार्य गर्न ३ वटा प्रक्रियागत समिति र मस्यौदाको तर्जुमा, परिमार्जन, संविधानको विधेयक सभामा प्रस्तुति र प्रतिरक्षा गर्न एक संवैधानिक समितिको व्यवस्था गरिएको,
- सहमतीयुक्त कार्यशैलीमा विशेष जोड दिइएको,
- Logical र Rational Order मा आधारित संविधान निर्माणको मार्गचित्र,
- Bottom up approach मा आधारित मस्यौदा विधि आत्मसात्,
- भावी संविधानमा रहने सबै विषयको टुङ्गो संविधानसभाबाट लगाइने, समस्या परे कुनै पनि विषयमा कुनै पनि समयमा जनमतसङ्ग्रहमा जाने प्रस्ताव पारित गर्न सकिने व्यवस्था,
- जनमतसङ्ग्रहको निर्णय संविधानसभालाई बाध्यकारी हुने सुनिश्चितता,
- संविधानसभाका सदस्यको आधारभूत आचरण परिभाषित,
- मातृभाषामा बोल्ने सदस्यको अधिकारको सम्मान,
- समिति गठनमा दलीय, जातीय, भाषिक, लैङ्गिक, क्षेत्रीय लगायत सभामा रहेका सबै पक्षको समानुपातिक समावेशीकरणको सुनिश्चितता,
- संविधानसभा र यसका सबै समितिहरूको लागि साधन-स्रोतसम्पन्न व्यवस्थित सचिवालयको व्यवस्था,
- संविधान निर्माणमा विशेषज्ञ र सल्लाहकारको सहयोग लिन सकिने व्यवस्था,
- संविधानसभा र यसका समितिहरूले सम्पादन गर्ने कार्य, सोको समयसीमा र गतिविधिको कार्यतालिका निर्माण गर्ने व्यवस्था ।

संविधानसभा नियमावली, २०६५ को परिच्छेद ११ र १२ मा उल्लिखित कार्यविधिलाई अध्ययन गर्दा संविधान निर्माणको मार्गचित्रलाई देहाय बमोजिम प्रस्तुत गरिएको छ :-

### अवधारणापत्र र प्रारम्भिक मस्यौदाको चरण

- विषयगत समितिहरूले आफ्नो कार्यक्षेत्रभित्रको विषयमा अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा तयार गर्ने,

- विषय समितिको कार्यक्षेत्रमा नपरेका विषयमा संवैधानिक समितिले अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा तयार गर्ने,
- संविधानको अवधारणा र विषयवस्तुको बारेमा सबै समितिले विशेषज्ञ लगायत आमजनताको राय सुझाव सङ्कलन गर्ने,
- संविधानसभामा सबै अवधारणापत्र र प्रारम्भिक मस्यौदा माथि छलफल गरी सुझाव सहित संवैधानिक समितिमा पठाउने,
- संवैधानिक समितिले सभाको सुझाव र विषयगत समितिका प्रतिवेदनमा आधारित भएर संविधानको एकीकृत मस्यौदा तयार गरी संविधानसभामा पेश गर्ने,
- पूर्ण बैठकमा उक्त मस्यौदामाथि व्यापक छलफल गर्ने । कुनै परिमार्जन गर्नुपर्ने भए निर्देशन सहित संवैधानिक समितिमा फिर्ता पठाउने,
- संवैधानिक समितिका सभापतिले परिमार्जनपछि तयार गरिएको संविधानको विधेयकको पहिलो मस्यौदा अध्यक्षको अनुमति लिएर सभामा पेश गर्ने,
- सभामा पेश गर्नुभन्दा दुई दिन अगावै सबै सदस्यहरूलाई संविधानको विधेयकको पहिलो मस्यौदाको प्रति उपलब्ध गराउनु पर्ने,
- सभामा सैद्धान्तिक छलफल गरी संविधानको विधेयकको पहिलो मस्यौदा पारित गर्ने ।

**मस्यौदामाथि जनताबाट सुझाव सलन र परिमार्जनको चरण**

- सभाबाट पारित संविधानको पहिलो मस्यौदा नेपाल राजपत्रमा प्रकाशन गर्ने,
- जनमत सङ्कलन तथा समन्वय समितिले उक्त मस्यौदा माथि व्यापक सार्वजनिक प्रतिक्रिया, सुझाव र जनमतको लागि रेडियो, टेलिभिजन, इन्टरनेट लगायतका सार्वजनिक सञ्चारका माध्यमबाट सार्वजनिक गर्ने,
- प्रारम्भिक मस्यौदामाथि जनताको प्रतिक्रिया, सुझाव र पृष्ठपोषण सङ्कलन गर्न सदस्यहरूद्वारा आ-आफ्नो निर्वाचनक्षेत्र र जिल्लाको भ्रमण गर्ने,
- चिठीपत्र, ईमेल र निवेदन मार्फत् जनताको सुझाव र सल्लाह सङ्कलन गरी जनमत सङ्कलन तथा समन्वय समितिले सुझाव सम्बन्धी बृहत् प्रतिवेदन तयार पार्ने,
- जनमत सङ्कलन तथा समन्वय समितिका सभापतिले सुझाव सम्बन्धी बृहत् प्रतिवेदन सभामा पेश गर्ने,
- प्रतिवेदनमाथि पूर्ण बैठकमा छलफल गरी मस्यौदामा समावेश गर्न उपयुक्त विषय समावेश गर्न र संविधानको मस्यौदालाई परिमार्जन गरी पूर्णता दिन संवैधानिक समितिलाई पूर्ण बैठकले सुझाव सहित निर्देशन दिने,
- संवैधानिक समितिबाट मस्यौदाको परिमार्जन र हेरफेर गरी संविधानको परिमार्जित मस्यौदा तयार पार्ने ।

**परिमार्जित विधेयक सभामा पेश गर्ने, संशोधन, छलफल र पारित गर्ने चरण**

- अध्यक्षको अनुमति लिएर संवैधानिक समितिका सभापतिले संविधानको परिमार्जित विधेयकमाथि विचार गरियोस् भन्ने प्रस्ताव पेश गर्ने,
- चार दिन अगावै सबै सदस्यलाई परिमार्जित विधेयकको प्रति वितरण गर्ने,
- विधेयकमाथि सभामा सामान्य छलफल गर्ने,

- सामान्य छलफल समाप्त भएको मितिले ७ दिनसम्म सदस्यहरूलाई संशोधन पेश गर्नको लागि समय दिने,
- संशोधन सहित सभामा दफावार छलफल गर्ने र संविधानसभाको तत्काल कायम सम्पूर्ण सदस्य संख्याको दुईतिहाई सदस्य उपस्थित बैठकको सर्वसम्मतिले संविधानको प्रत्येक धारा सहित प्रस्तावना पारित गर्ने,
- कुनै विषयमा सर्वसम्मति हुन नसकेमा सबै दलका नेताहरूले १५ दिनभित्र सर्वसम्मति कायम गर्न प्रयास गर्ने र सात दिनभित्र पुनः निर्णयार्थ सभामा पेश गर्ने,
- पुनः पेश गर्दा पनि सहमति कायम नभएमा संविधानसभाको तत्काल कायम सम्पूर्ण सदस्य संख्याको दुईतिहाई सदस्य उपस्थित बैठकको दुईतिहाई बहुमतबाट पारित भएमा संविधान पारित भएको मानिने,
- पारित विधेयकको अन्तमा सबै सदस्यले हस्ताक्षर गरेपछि अध्यक्षबाट प्रमाणीकरण हुने र त्यसले संविधानको रूप धारण गर्ने,
- यसरी प्रमाणीकरण भएको संविधान औपचारिक राष्ट्रिय समारोहमा अध्यक्षले राष्ट्रपतिसमक्ष पेश गरी राष्ट्रपतिले जारी भएको घोषणा गर्ने ।

संविधान निर्माणको प्रक्रिया नियमावलीले निर्देशित गरेबमोजिमको उल्लिखित मार्गचित्र अनुरूप सुचारू रूपमा अघि बढ्न सकेन । विषयगत समितिहरूले सहमतिमा निर्णायक प्रतिवेदन दिन सकेनन् । समितिबाट आएका दलीय मतभिन्नताहरूलाई संविधानसभाले समयमा टुङ्गो लगाउन नसकेको कारण सबै समितिका प्रतिवेदनहरू एकै पटक पारित गरेर संवैधानिक समितिमा पठाउन सकिएन । राजनीतिक सहमतिमा पनि टुङ्गो लगाउन नसकिएका विवादहरूलाई संविधानसभाले कसरी निर्णय गरेर टुङ्गो लगाउने भन्ने विषयमा पनि अन्यौलता रह्यो । यी तमाम कारणहरूले गर्दा समसामयिक र समयानुकूल परिवर्तनको लागि संविधानसभा नियमावली, २०६५ माथि चारपटक संशोधन भएको थियो । उक्त संशोधन सम्बन्धी विवरण देहाय बमोजिम रहेका छन् :

क) संविधानसभा नियमावली, २०६५ मा मिति २०६५ पुस १४ गते भएको पहिलो संशोधनमा संवैधानिक समितिको सदस्यसंख्या एकसठ्ठीबाट बढाएर त्रिसठ्ठी जना पुऱ्याएको थियो ।

ख) त्यस्तै २०६६ माघ १० गते दोस्रो संशोधन गरेर संवैधानिक समिति र विषयगत समितिहरूले पेश गरेको संविधानको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदनमाथि सभामा छलफल समाप्त भएपछि सभाको कुनै सुझाव र निर्देशन भए सो सहित सबै प्रतिवेदन सभाले पारित गरी संवैधानिक समितिमा पठाउनसक्ने प्रावधान रहेकोमा सबै प्रतिवेदन सभाले भन्ने शब्दहरु पछि एकै पटक वा अलग-अलग रूपमा भन्ने शब्दहरु थप गरी विषयगत समितिका प्रतिवेदनहरु अलग-अलग रूपमा सभाले पारित गरी संवैधानिक समितिमा पठाउन सक्ने व्यवस्था गरेको थियो ।

ग) त्यस्तै २०६७ माघ ४ गते तेस्रो संशोधन गरी नियमावलीको नियम ६५ को उपनियम (३) पछि (३क) थप गर्दै संवैधानिक समिति वा नियम ६६ बमोजिम गठित कुनै विषयगत समितिको प्रतिवेदनमा कुनै विषयमा समितिमा नै टुङ्गो लाग्न नसकेको वा सभामा छलफल हुँदा फरक विचार प्रस्तुत भएको कारणले विवादित बन्न पुगेको अवस्थामा सभाबाट त्यस्तो विवादित विषयको स्पष्ट किटान गरी संवैधानिक समितिले नै थप छलफल गरी टुङ्गो लगाउने भनी सुझाव र निर्देशन सहित सम्बन्धित प्रतिवेदन प्राप्त भएमा त्यस्तो विषयमा छलफल गरी टुङ्गो लगाउने र टुङ्गो लाग्न नसकी बाँकी रहेका कुनै विषय भए निर्णयार्थ संविधानसभामा पेश गर्ने अधिकार समेत संवैधानिक समितिलाई हुनेछ भन्ने व्यवस्था थप गरिएको थियो । साथै सोही

संशोधनले नियमावलीको नियम ८२ को उपनियम (९) पछि देहायका उपनियम (१०) र (११) थपी संवैधानिक समितिले थपिएको जिम्मेवारी पूरा गर्ने विधिमा थप प्रष्ट पारिएको थियो :-

१०) उपनियम (९) मा जुनसुकै कुरा लेखिएको भए तापनि संवैधानिक समिति वा नियम ६६ बमोजिम गठित कुनै विषयगत समितिको प्रतिवेदनमा कुनै विषयमा समितिमा नै टुङ्गो लाग्न नसकेको वा सभामा छलफल हुँदा फरक विचार प्रस्तुत भएको कारणले विवादित बन्न पुगेको अवस्थामा सभाले त्यस्तो विवादित विषयको स्पष्ट किटान गरी संवैधानिक समितिले नै थप छलफल गरी टुङ्गो लगाउने भनी सुझाव र निर्देशन सहित सम्बन्धित प्रतिवेदन संवैधानिक समितिमा पठाउन सक्नेछ ।

११) उपनियम (१०) बमोजिम कुनै समितिको प्रतिवेदन प्राप्त भएमा संवैधानिक समितिले टुङ्गो लाग्न नसकेको विवादित विषयमा थप छलफल गरी टुङ्गो लगाउने र टुङ्गो लाग्न नसकी बाँकी रहेका कुनै विषय भए निर्णयार्थ संविधानसभामा पेश गरी भएको निर्णय बमोजिम उक्त विषयको मस्यौदा तयार पारी संविधानको पहिलो मस्यौदामा समावेश गर्नेछ ।

घ) त्यसैगरी २०६९ वैशाख १९ गते नियमावलीमा चौथो संशोधन गर्दै नियम ८२ पछि ८२क. थप गरी संवैधानिक समितिले पेश गरेका विषयमा सभाले निर्णय गर्ने प्रक्रिया संविधानसभामा पेश हुने अन्य प्रस्तावहरु निर्णयमा लैजाने प्रक्रिया जस्तै नियमावलीको परिच्छेद ७ मा उल्लेख भएबमोजिम हुने र उक्त प्रक्रिया बमोजिम सभामा निर्णयार्थ पेश भएका विषयमध्ये जुन विषय सभामा उपस्थित भई मतदान गर्ने सदस्यहरूको बहुमतबाट पारित हुन्छ सो विषयको मस्यौदा तयार गरी संविधानको पहिलो मस्यौदामा समावेश गर्न सभाले संवैधानिक समितिलाई निर्देशन दिने साथै उक्त प्रक्रिया बमोजिम निर्णयार्थ पेश भएको कुनै विषय सभामा उपस्थित भई मतदान गर्ने सदस्यहरूको बहुमतबाट पारित हुन नसकेमा त्यस्तो विषयमा सहमति कायम गर्न सभाले संवैधानिक समितिलाई निर्देशन दिने व्यवस्था थप गरिएको थियो ।

## २.१२. संविधानसभाको कार्यतालिका निर्माण

संविधानसभा नियमावली, २०६५ को नियम १४९ ले संविधानसभाको कार्यतालिका निर्धारणको व्यवस्था गरेको थियो, जसमा संविधानसभाले यो नियमावली पारित भएको मितिले १५ दिनभित्र संविधानसभा र यसका समितिहरूले सम्पादन गर्ने कार्य, सोको समयसीमा र सो सम्बन्धी गतिविधिको कार्यतालिकाबारे छलफल गर्ने व्यवस्था रहेको थियो । उक्त कार्यतालिका कार्य व्यवस्था परामर्श समितिको परामर्शमा तयार गरी अध्यक्षले सभामा प्रस्ताव गर्ने व्यवस्था रहेको छ । सभाबाट स्वीकृत कार्यतालिका नियमावलीको अङ्ग मानिने व्यवस्था गरिएको थियो र पारित कार्यतालिकामा कुनै हेरफेर गर्नु परेमा यस सम्बन्धी प्रस्ताव प्रस्तुत गरी सभाको निर्णय बमोजिम गर्नु पर्ने व्यवस्था थियो । २०६५ मार्ग १ गतेको कार्यव्यवस्था परामर्श समितिको बैठकद्वारा स्वीकृत संविधानसभाको कार्यतालिकालाई सोही दिन बसेको संविधानसभाको १४औं बैठकमा पेश गर्दा सर्वसम्मतिबाट स्वीकृत भएको थियो ।

उक्त कार्यतालिकाले संविधानसभाको पहिलो बैठक भएको मितिदेखि साढे ५ महिनाको समयावधिलाई कट्टा गरी २०६५ मार्ग १ गतेबाट बाँकी रहेको १ वर्ष ६ महिना पन्ध्र दिनको अवधिभित्र मुख्य गतिविधि, कार्यावधि, पूर्ण बैठकले सम्पन्न गर्ने, सम्बन्धित समितिले सम्पन्न गर्ने, समानान्तर गतिविधि सम्बन्धी कार्यसम्पन्न गर्ने कामहरु प्रस्ताव गरिएको थियो । संविधानसभाको उपाध्यक्षको निर्वाचनलाई २०६५ मार्ग १ गतेबाट २ हप्ताभित्र अर्थात् २०६५ मार्ग १५ गतेभित्र गरिसक्ने, संविधानसभाका समितिहरूको गठन, समितिका सभापतिहरूको निर्वाचन र संविधान निर्माणकार्यमा आवश्यक विशेषज्ञ सेवाको क्षेत्रपहिचान

गरी सोको विस्तृत विवरण (TOR) बनाउनलाई २०६५ मार्ग मसान्तसम्म १५ दिन, प्रत्येक समितिले आफ्नो कार्यक्षेत्रभित्र पर्ने विषय र सो अन्तर्गत सञ्चालन हुने गतिविधि सहितको कार्यतालिका निर्माण गर्ने र सबै समितिको कार्यतालिकालाई अन्तिम रूप दिने समय २०६५ पुस १ गतेदेखि पुस १५ गतेसम्म २ हप्ता, नयाँ संविधानको अवधारणाको सम्बन्धमा व्यापक छलफल, विचार विमर्श गर्ने, नागरिक समाज, विशेषज्ञ र आमनागरिकबाट राय सुझाव लिने र नागरिक शिक्षा, तालिम तथा अभिमुखीकरण कार्यक्रमको शुरूवात गर्नको लागि ९ हप्ता अर्थात् २०६५ पुस १५ गतेदेखि २०६५ फागुन १५ गतेसम्म, अवधारणापत्रको आधारमा विषयगत समितिहरूले संविधानको प्रारम्भिक मस्यौदा तयार गर्ने कार्यको लागि ८ हप्ता, अर्थात् २०६५ फागुन १५ गतेदेखि २०६६ वैशाख १० गतेसम्म, विषयगत समितिहरूले तयार पारेको अवधारणापत्र र प्रारम्भिक मस्यौदा संविधानसभामा पेश गरी छलफल गर्न ८ हप्ता अर्थात् २०६६ वैशाख ११ गतेदेखि २०६६ ज्येष्ठ मसान्तसम्म, संवैधानिक समितिले सभाले दिएको सुझाव र विषयगत समितिबाट पेश भएका मस्यौदालाई एकीकृत गरी नयाँ संविधानको पहिलो मस्यौदा तयार गर्ने कार्यको लागि ८ हप्ता अर्थात् २०६६ असार १ गतेदेखि २०६६ साउन २५ गतेसम्म, संवैधानिक समितिले तयार गरेको संविधानको पहिलो मस्यौदा पूर्ण बैठकमा पेश गर्ने र सैद्धान्तिक छलफल गर्ने कार्यको लागि ४ हप्ता अर्थात् २०६६ साउन २६ गतेदेखि २०६६ भाद्र २५ गतेसम्म, संविधानको पहिलो मस्यौदालाई अन्तिम रूप दिई जनताको राय प्रतिक्रियाको लागि नेपाल राजपत्रमा प्रकाशन गर्ने र जनमत सङ्कलन र समन्वय समितिले संविधानको पहिलो मस्यौदामाथि जनताको राय सुझाव लिने कार्ययोजना तयार गर्ने कार्यको लागि १ हप्ता अर्थात् २०६६ भाद्र २६ गतेदेखि २०६६ भाद्र मसान्तसम्म, संविधानको पहिलो मस्यौदामाथि व्यापक सुनुवाइ, गोष्ठी, अन्तरक्रिया गराउन, जुनसुकै माध्यमबाट आएका सुझाव ग्रहण गर्न, मा० सदस्यहरु आ–आफ्नो जिल्ला, क्षेत्र र मुलुकका विभिन्न भागमा जाने र जनताका राय सुझाव लिने कार्यको लागि १२ हप्ता अर्थात् २०६६ आश्विन १ गतेदेखि २०६६ मार्ग २५ गतेसम्म, जनताको राय सुझाव सम्बन्धी विस्तृत प्रतिवेदन तयार गरी सभामा पेश गर्न ४ हप्ता अर्थात् २०६६ मार्ग २६ गतेदेखि २०६६ पुस २२ गतेसम्म, जनताको सुझाव सम्बन्धी प्रतिवेदनमाथि पूर्ण बैठकमा छलफल गर्न २ हप्ता अर्थात् २०६६ पुस २३ गतेदेखि २०६६ माघ ७ गतेसम्म, संविधानको पहिलो मस्यौदा जनताको राय बमोजिम परिमार्जन गरी संविधानको विधेयक सभामा पेश गर्न र संविधानको विधेयकको प्रति सबै सदस्यलाई वितरण गर्ने कार्यावधि ५ हप्ता अर्थात् २०६६ माघ ८ गतेदेखि २०६६ फागुन १० गतेसम्म, अन्तरिम संविधान र संविधानसभा नियमावली बमोजिम संविधानको विधेयकमाथि सभामा सामान्य छलफल गर्न १ हप्ता अर्थात् २०६६ फागुन ११ गतेदेखि २०६६ फागुन १७ गतेसम्म, विधेयकमाथि माननीय सदस्यहरूलाई संशोधन राख्ने म्याद १ हप्ता अर्थात् २०६६ फागुन १८ गतेदेखि २०६६ फागुन २४ गतेसम्म, संशोधन सहित विधेयकमाथिको दफावार छलफल सभामा गर्न, प्रत्येक धारा उपधारामा निर्णय गर्दै लैजान र नयाँ संविधानको प्रस्तावना सहित सम्पूर्ण भाग सभाबाट पारित गर्नको लागि ८ हप्ता अर्थात् २०६६ फागुन २५ गतेदेखि २०६७ वैशाख १५ गतेसम्म र पारित संविधानको प्रमाणीकरण प्रति तयार गरी सदस्यहरूले हस्ताक्षर गर्ने, अध्यक्षले प्रमाणीकरण गर्ने र संविधानसभाले औपचारिक राष्ट्रिय समारोहको आयोजना गरी पारित संविधान अध्यक्षले राष्ट्रपतिसमक्ष पेश गर्ने र राष्ट्रपतिले सोही समारोहबाट नेपाली जनतासमक्ष संविधान सार्वजनिक गरी संविधान लागू भएको घोषणा गर्ने कार्यको लागि ४ हप्ता अर्थात् संविधान निर्माणको लागि नेपालको अन्तरिम संविधान, २०६३ को धारा ६४ बमोजिम २ वर्ष पूरा हुन जाने अवधि २०६७ ज्येष्ठ १४ गतेसम्म राखी कार्यतालिका निर्माण गरिएको थियो ।

संविधानसभाद्वारा पारित कार्यतालिका बमोजिम कार्यसम्पादन गर्न विभिन्न कारणहरूले कठिनाई उत्पन्न भएकोले २०६५ पुस १४ गते पहिलो पटक, २०६५ चैत्र ३१ गते दोस्रो पटक, २०६६ ज्येष्ठ १६ गते तेस्रो पटक, २०६६ साउन १ गते चौथो पटक, २०६६ भदौ २४ गते पाँचौ पटक, २०६६ मार्ग ३ गते छैठौं पटक, २०६६ पुस ८ गते सातौं पटक, २०६६ माघ १० गते आठौं पटक, २०६६ फागुन २५ गते नवौं पटक, २०६७ साउन २ गते दशौं पटक कार्यतालिकामा हेरफेर गर्दै मिति २०६७ ज्येष्ठ १४ गते थप

भएको १ वर्षको अवधि समेत समावेश गरी २०६८ ज्येष्ठ १४ गतेको अवधिभित्र कार्यसम्पन्न गर्ने गरी कायम गरिएको थियो । उक्त समयावधिभित्र पनि संविधान निर्माणको कार्यसम्पन्न हुन नसकी २०६८ ज्येष्ठ १४ गते संविधान संशोधन गरी ३ महिना र पुनः २०६८ भाद्र १२ गते संविधान संशोधन गरी ३ महिना संविधानसभाको कार्यकाल थप भयो तर कार्यतालिकालाई भने अद्यावधिक गरिएन ।

२०६८ मार्ग २० गते समय-समयमा हेरफेर गरिएको संविधानसभाको उक्त कार्यतालिका खारेज गरी २०६८ मार्ग २० गतेबाट संविधानसभाले सम्पन्न गर्न बाँकी सबै काम ६ महिनाभित्र सम्पन्न गर्ने गरी नयाँ कार्यतालिका निर्माण गरिएको थियो । संवैधानिक समितिले सभाले दिएको सुझाव र विषयगत समितिबाट पेश भएका मस्यौदालाई एकीकृत गरी नयाँ संविधानको पहिलो मस्यौदा तयार गर्ने कार्यको लागि राज्यको पुनर्संरचनासँग सम्बन्धित विषय बाहेकका अन्य टुङ्गो लाग्न बाँकी सबै विषयमा सहमति कायम गर्ने कार्य २०६८ पुस १५ गतेसम्म सम्पन्न गर्ने र कार्यतालिकामा उल्लिखित अन्य कार्यहरु सम्पन्न गर्दै नेपाल सरकारद्वारा गठित राज्यको पुनर्संरचना सुझाव उच्चस्तरीय आयोगलाई दुई महिनाको कार्यावधि पूर्व निर्धारित गरिएकोले सो आयोगले नेपाल सरकारसमक्ष पेश गर्ने प्रतिवेदन नेपाल सरकारले संविधानसभाका अध्यक्षसमक्ष पेश गर्ने, त्यसमाथि संविधानसभामा छलफल गर्ने, सबै विषय समेटेर संविधानको पहिलो मस्यौदा तयार गर्ने, जनताको राय सुझाव लिने र संविधानको विधेयक तयार गरी सभामा धारागत छलफल गरी पारित संविधानको प्रमाणीकरण प्रति तयार गरी संविधानसभाका सबै माननीय सदस्यहरूले हस्ताक्षर गरेर अध्यक्षले प्रमाणीकरण गर्ने र पारित संविधान राष्ट्रपतिसमक्ष पेश गर्ने कार्य २०६९ ज्येष्ठ १४ गतेभित्र सम्पन्न गर्ने गतिविधि सहितको समयसीमा निर्धारण गरिएको थियो ।

उक्त कार्यतालिका समेत संविधान पारित गर्ने अन्तिम समयसीमा २०६९ ज्येष्ठ १४ गते ननाघ्नेगरी २०६८ पुस २२ गते पहिलो पटक, २०६८ माघ १९ गते दोस्रो पटक र २०६८ फागुन १ मा तेस्रो पटक हेरफेर गरिएको थियो । कार्यतालिका हेरफेरको क्रममा २०६८ साल फागुन १ गते संविधानसभाका बाँकी रहेका विभिन्न कार्य कार्यव्यवस्था परामर्श समितिले निर्धारण गरेको अवधिभित्र सम्पन्न गर्नेगरी हेरफेर गरिएको थियो ।

## २.१३. संविधानसभामा समितिहरुको गठन

सम्वत् २०६५ साल मार्ग ३० गतेको बैठकमा संविधानसभा नियमावली, २०६५ को नियम ६४ बमोजिम संविधानसभाको संविधान निर्माणकार्य र सोसँग सम्बद्ध अन्य प्रक्रियागत कार्यमा सहयोग पुऱ्याउन संविधानसभा अन्तर्गतका संवैधानिक समिति, १० वटा विषयगत समितिहरु र ३ वटा प्रक्रियागत समितिहरूमा रहनुहुने मा० सदस्यहरूको नाम क्रमशः सहमतिको लागि प्रस्तुत गर्दा सभाले सर्वसम्मति जनाएको थियो । संवैधानिक समितिमा बढीमा ६३ जना सदस्य रहने व्यवस्था गरिएको थियो भने १० वटा विषयगत समिति र ३ वटा प्रक्रियागत समितिमा बढीमा ४३ जना मा० सदस्यहरु रहने व्यवस्था थियो । संवैधानिक समितिको हकमा सदस्यहरु मनोनयन गर्दा संविधानसभामा प्रतिनिधित्व गर्ने सबै राजनीतिक दलहरूको प्रतिनिधित्व समेत हुने गरी तथा संवैधानिक समिति लगायत अन्य सबै समितिहरूमा संविधानसभामा रहेको दलीय संरचना, महिला, आदिवासी जनजाति, मधेसी, दलित, पिछडिएको क्षेत्र, मुस्लिम लगायत अल्पसंख्यक सबै पक्षको सभामा उपस्थितिको आधारमा समानुपातिक समावेशीकरण गर्ने व्यवस्था गरिएको थियो ।

पछि निर्वाचित भई आउनु हुने माननीय सदस्यलाई समावेश गर्न, सदस्यहरूको रूचि, अनुकूलता लगायत अन्य विविध कारणले २०६५ पुस २६ गते, माघ ६ गते, माघ १६ गते, २०६६ ज्येष्ठ ११ गते, ज्येष्ठ

२० गते, ज्येष्ठ २१ गते, भदौ २४ गते, फागुन २० गते, २०६७ फागुन १६ गते र २०६८ पुस २२ गते संविधानसभाका विभिन्न समितिहरूमा सदस्यहरूको हेरफेर तथा थपघट गरिएको थियो ।

## कार्यव्यवस्था परामर्श समितिको गठन

संविधानसभा बैठकको अन्तरिम कार्यविधि, २०६५ को दफा १५ बमोजिम मिति २०६५/०२/२९ मा ४४ सदस्यीय कार्यव्यवस्था परामर्श समितिको गठन भयो । संविधानसभा नियमावली, २०६५ जारी भएपछि सोही नियमावलीको नियम २७ मा बढीमा ४९ सदस्यीय कार्यव्यवस्था परामर्श समिति हुने व्यवस्था भएपछि मिति २०६५/१२/३१ मा पुनर्गठन भई मा० श्री अग्निप्रसाद खरेल, मा० श्री अनिलकुमार झा, मा० श्री अमिक शेरचन, मा० श्री अमृता थापा, मा० श्री आत्माराम प्रसाद शाह, मा० श्री उषाकला राई, मा० श्री एकनाथ ढकाल, मा० श्री कल्पना राणा, मा० श्री केशवप्रसाद मैनाली, मा० श्री खिमलाल देवकोटा, मा० श्री गणेश तिवारी नेपाली, मा० श्री गणेशबहादुर खड्का, मा० श्री गायत्री शाह, मा० श्री चन्द्रप्रसाद गजुरेल, मा० श्री चन्द्रबहादुर गुरूङ्, मा० श्री चन्द्रिकाप्रसाद यादव, मा० श्री छियामा राई, मा० श्री जयपुरी घर्ती, मा० श्री टोपबहादुर रायमाझी, मा० श्री दीनानाथ शर्मा, मा० श्री नारायणकाजी श्रेष्ठ, मा० श्री परी थापा, मा० श्री पोष्टबहादुर बोगटी, मा० श्री प्रकाश चन्द्र लोहनी, मा० श्री प्रकाशशरण महत, मा० श्री प्रतिभा राणा, मा० श्री प्रदीपकुमार ज्ञवाली, मा० श्री प्रेमबहादुर सिंह, मा० श्री बुद्धरत्न मानन्धर, मा० श्री मिनेन्द्रप्रसाद रिजाल, मा० श्री यदुवंश झा, मा० श्री यामलाल कंडेल, मा० श्री रामजनम चौधरी, मा० श्री रूकमिणी चौधरी, मा० श्री लक्ष्मणप्रसाद घिमिरे, मा० श्री लक्ष्मीलाल चौधरी, मा० श्री वर्षमान पुन, मा० श्री विश्वेन्द्र पासवान, मा० श्री विष्णुप्रसाद रिमाल, मा० श्री वृजेश कुमार गुप्त, मा० श्री सन्तबहादुर नेपाली, मा० श्री सरिता गिरी, मा० श्री सुनिल प्रजापति र मा० श्री सुप्रभा घिमिरे गरी ४४ सदस्यीय कार्यव्यवस्था परामर्श समिति गठन गरियो । साथै मिति २०६६/०३/११, २०६६/१२/०३ र २०६८/०९/२२ मा कार्यव्यवस्था परामर्श समितिका सदस्यहरू हेरफेर तथा थपघट समेत गरिएको थियो । संविधानसभाका अध्यक्षको अध्यक्षतामा गठित उक्त समितिको मुख्य कार्य संविधानसभाको बैठकमा पेश हुने विषयहरूको प्राथमिकता तथा समयावधिको निर्धारण लगायत बैठकलाई सुव्यवस्थित ढङ्गले सञ्चालन गर्ने सम्बन्धमा र अध्यक्षले आवश्यक ठहऱ्याएको अन्य विषयमा परामर्श दिनु रहेको थियो । संविधानसभाको कार्यकालमा जम्मा १११ वटा बैठक बसेको उक्त समितिबाट संविधान निर्माणसँग सम्बन्धित विषयहरूमा भएका मुख्य निर्णयहरू यस प्रकार रहेका छन् :-

- २०६५ असार १० गतेको बैठकमा संविधानसभाको पहिलो बैठकबाट गणतन्त्र घोषणा भएपछि उक्त प्रस्ताव पूर्ण रूपमा कार्यान्वयन गर्न नेपालको अन्तरिम संविधान एकै दिनभित्र संशोधन गरी लागू गर्नुपर्ने अवस्था भएकोले राष्ट्रपतिबाट बाधा अड्काउ फुकाउने आदेश जारी गरिएकोमा उक्त आदेश बमोजिम संविधान संशोधन विधेयक त्यसै दिन पारित गर्ने सहमति भएको ।
- २०६५ साउन ६ गते संविधानसभाको अध्यक्षको निर्वाचनको मिति तोक्न परामर्श दिने निर्णय भएको,
- २०६५ साउन ८ गते प्रस्तावित संविधानसभा बैठकको अन्तरिम कार्यविधि (पहिलो संशोधन) लाई संविधानसभाको आजैको बैठकमा पेश गर्ने निर्णय भएको,
- २०६५ साउन २७ गतेको बैठकमा मा० सदस्यहरूको पहिचानको लागि मा० सदस्यहरूले लगाउने लोगो र पि.भि.सि. परिचयपत्र एक पटकलाई निशुल्क र विविध कारणले अर्को पटक उपलब्ध गराउनु परेमा परल मुल्य लिई उपलब्ध गराउने निर्णय भएको, साथै अवका संविधानसभाका बैठकहरूमा मा० सदस्यहरू संविधानसभाका औपचारिक बैठकहरूमा उपस्थित हुंदा ध्यू रंगको कोट लगाइ उपस्थित हुनु पर्ने निर्णय भएको,

- ०६५ भदौ ८ गते कोशी तटबन्ध भत्किई आएको बाढीबाट पिडितहरूको राहतका लागि संविधानसभाका अध्यक्षले १० दिन र अन्य सदस्यहरूले ३ दिनको पारिश्रमिक उपलब्ध गराउने सहमति भएको, साथै जातिय र क्षेत्रीय आधारमा लगाइने पोशाकसँग उपयुक्त हुने गरी गाढा निलो रंगको कोट वा जवाहरकोट लगाउने गरी पोशाक परिवर्तन गर्ने सहमति भएको,
- ०६५ कार्तिक २९ गतेको बैठकमा संविधानसभाको कार्यतालिकामा छलफल गर्दै परिमार्जन सहित स्वीकृत गरेको,
- ०६५ मंसीर १ गतेको बैठकले स्वीकृत कार्यतालिका ०६५ मंसीर १ गतेको संविधानसभाको बैठकमा पेश गर्ने निर्णय गरेको,
- २०६५ मंसीर २२ गते को बैठकमा समितिहरूको बैठक कक्षको अभावले गर्दा संविधानसभा र व्यवस्थापिका-संसदका समितिहरू विहान ८ बजेबाट १ बजेसम्म र १ बजेबाट बेलुकि सम्म समन्वय गरि बस्ने क्रम मिलाउन सहमति भएको, साथै समितिहरूलाई आवश्यक भौतिक श्रोत साधन संयुक्त राष्ट्र सङ्घबाट प्राप्त हुने विषय जानकारी गराइएको,
- सोही दिन संविधानसभाका समितिहरूमा रहनुहुने मा० सदस्यहरूको नामावली दलहरूले २०६५ मंसीर २४ गतेभित्र सचिवालयलाई उपलब्ध गराउन अनुरोध गर्ने निर्णय भएको, साथै संविधान निर्माण प्रकृया अगाडि बढाउन नयां संविधानमा समेटिनुपर्ने विषय पठाइ सहयोग पुऱ्याउन आम नागरिकलाई मंसीर १ गतेबाटै सूचना प्रशारित भईरहेको जानकारी गराइएको,
- २०६५ मंसीर ३० गतेको बैठकमा संविधानसभाका समितिहरूका सदस्यहरूको नाम सहमतिको लागि सभामा प्रस्तुत गर्ने निर्णय भएको,
- २०६५ पुष १४ गतेको बैठकमा संविधानसभा नियमावली संशोधन मस्यौदा समिति गठन गरी आजैको बैठकमा संशोधन गर्दै पारित गर्ने निर्णय भएको, साथै संविधानसभाको कार्यतालिकामा समसामयिक संशोधन गर्ने निर्णय भएको,
- २०६५ पुष २१ गतेको बैठकमा विभिन्न समितिका सभापतिको निर्वाचन सम्बन्धी सूचना ०६५ साल पुष २३ गते प्रकाशन गर्ने, एक भन्दा बढी समितिमा रहनु हुने मा० सदस्यहरूले आफ्नो मताधिकार प्रयोग गर्ने समितिको जानकारी सचिवालयलाई उपलब्ध गराउनु पर्ने, नेपाली जनता दलबाट सो दलबाट प्रतिनिधित्व गर्ने विश्वनाथ प्रसाद अग्रवाललाई संविधानसभा सदस्य पदबाट हटाइयोस् भनी परेको उजुरी सम्बन्धमा जांचबुझ गर्न ७ सदस्यीय जांचबुझ समिति गठन गर्ने निर्णय भएको,
- २०६५ पुष २२ गतेको बैठकमा संविधानसभा र व्यवस्थापिका संसद अन्तर्गतका विभिन्न समितिका सभापतिको निर्वाचन मितिमा हेरफेर गर्नेगरी कार्यतालिका हेरफेर गर्न परामर्श दिने निर्णय भएको ।
- २०६५ चैत्र ३१ को बैठकमा कार्यतालिकामा संशोधन गर्ने सम्बन्धमा र तत्कालीन सदस्य श्री बोधनारायण सरदारको एक स्थान रिक्तताको जानकारी गराउने सम्बन्धमा निर्णय भयो,
- २०६६ वैशाख १५ को बैठकले संविधानसभाको कार्यतालिका संशोधन गर्न सिफारिश गर्ने निर्णय गऱ्यो । साथै संविधानसभाका समिति र व्यवस्थापिका संसदका समितिमा उपनिर्वाचनबाट निर्वाचित मा० सदस्यहरूलाइ थप मनोनयन र हेरफेर गर्न सिफारिश गऱ्यो ।
- २०६६ ज्येष्ठ १३ को बैठकमा विषयगत र संवैधानिक समितिको अवधारणा पत्र र प्रारम्भिक मस्यौदाको अध्ययन गरी प्रतिवेदन पेश गर्न १५ सदस्यीय समिति गठन गर्न प्रस्ताव पेश गर्न सिफारिश गर्ने निर्णय भयो,
- २०६६ असार २४ को बैठकमा मा० श्री विश्वनाथ प्रसाद अग्रवाललाई संविधानसभा सदस्य पदबाट हटाइयोस् भन्ने सम्बन्धमा प्राप्त पत्रहरूको सम्बन्धमा जांचबुझ गर्न गठित समितिमा

हेरफेर गर्ने, म.ज. फोरमका मा० श्री विजयकुमार गच्छदार, मा० श्री शरतसिंह भण्डारी र मा० श्री रामजनम चौधरीलाई समेत संविधानसभा सदस्यबाट निष्काशित गरियोस् भन्ने सम्बन्धमा, सं.लो.रा.मन्चका मा० श्री राजकुमार लिम्बु नाल्वोलाई पनि सं.सभा सदस्य पदबाट निष्कासित गरिपाउं भनि प्राप्त पत्रका सम्बन्धमा र मा० श्री केशवप्रसाद मैनालीलाई संविधानसभा सदस्य पदबाट निष्काशित गरियोस् भनी प्राप्त पत्रका सम्बन्धमा छानविन गर्न समेत सोही जांचबुझ गर्न गठित समितिलाई दिने निर्णय गरियो,

- ०६६ श्रावण १ को बैठकले संविधानसभाको कार्यतालिकामा हेरफेर गर्ने निर्णय गर्‍यो,
- ०६६ श्रावण २२ को बैठकमा मधेशी जन अधिकार फोरम लोकतान्त्रिक लाई निर्वाचन आयोगले मान्यता दिने गरी गरेको निर्णयको जानकारी गराइयो ।
- ०६६ श्रावण ३२ को बैठकले संवैधानिक समितिका सभापतिको निर्वाचनको मिति ०६६।५।१२ गते गर्ने गरि सार्न परामर्श दिने निर्णय भएको,
- ०६६ भाद्र २४ को बैठकमा संविधानसभाको कार्यतालिकामा छैठौं पटक संशोधन गर्ने निणय भएको,
- ०६६ भाद्र २९ को बैठकमा एकीकृत नेकपा माओवादीका तर्फबाट निर्वाचित मा० श्री मातृकाप्रसाद यादव र जगतप्रसाद यादवलाई संविधानसभा सदस्य पदबाट हटाइयोस् भनी पार्टी बाट प्राप्त पत्रको सम्बन्धमा जांचबुझ गर्न ५ सदस्यीय जांचबुझ उप समिति गठन गर्ने निर्णय भएको,
- ०६६ आश्विन १ को बैठकमा उप समितिले पेश गरेको प्रतिवेदनको आधारमा मा० श्री विश्वनाथ प्रसाद अग्रवाललाई हालको अवस्थामा पदमुक्त गर्न नसकिने निर्णय गर्‍यो,
- ०६६ मंसिर २ को बैठकमा संविधानसभा बैठकको कार्यतालिकामा सातौं पटक संशोधन गर्ने निर्णय भयो,
- ०६६ पौष ८ को बैठकले मा० श्री मातृकाप्रसाद यादव र जगतप्रसाद यादवलाई संविधानसभा सदस्य पदबाट हटाइयोस् भन्ने सम्बन्धमा जांचबुझ गर्न गठित कार्यदलले बुझाएको प्रतिवेदन वितरण भयो, साथै कार्यतालिकामा आठौं पटक संशोधन गर्ने निर्णय भयो,
- ०६६ पौष १२ को बैठकले मा० श्री मातृकाप्रसाद यादव र जगतप्रसाद यादवलाई संविधानसभा सदस्य पदबाट हटाइयोस् भन्ने सम्बन्धमा जांचबुझ गर्न गठित कार्यदलले बुझाएको प्रतिवेदनको आधारमा निजहरू नेकपा माओवादीका सदस्य नरहनु भएकोले संविधानसभामा २ स्थान रिक्त रहन गएको जानकारी गराइयो,
- ०६६ माघ ७ को बैठकमा संविधानसभाको कार्यतालिका संशोधन गर्न परामर्श लिन ०६६ माघ १० गते बैठक बस्ने जानकारी गराइयो, साथै संविधानसभामा राज्यको पुनसंरचना र राज्यशक्ति बांडफांड समितिको प्रतिवेदन संविधानसभाका अध्यक्ष समक्ष बुझाउने जानकारी गराइयो, साथै संविधानसभा कार्य सञ्चालन नियमावलीमा समसामयिक संशोधन गरी समितिमा प्रतिवेदन पेश गर्न ५ सदस्यीय उप समिति गठन गर्ने निर्णय भयो,
- ०६६ माघ १० को बैठकमा संविधानसभा कार्य सञ्चालन नियमावली संशोधन मस्यौदा समितिको प्रतिवेदन पेश भयो, साथै संधिवानसभाको कार्यतालिकामा पुनः संशोधन गर्ने निर्णय भयो,
- ०६६ माघ २१ गतेको बैठकमा मा० श्री राजकुमार लिम्बु नाल्वो र मा० श्री केशवप्रसाद मैनालीलाई संविधानसभा सदस्य पदबाट हटाइयोस भनी प्राप्त कागजात सम्बन्धमा जांचबुझ गरी प्रतिवेदन पेश गर्न पुरानै जांचबुझ समितिलाई जिम्मेवारी दिने निर्णय भएको,

- ०६६ फाल्गुण २५ गतेको बैठकमा संविधानसभाको कार्यतालिकामा १० औं पटक संशोधन गर्न परामर्श दिने निर्णय भयो,
- ०६६ चैत्र २० को बैठकमा अल्पसंख्यक तथा सिमान्तकृत समुदायको हक अधिकार संरक्षण समितिको प्रतिवेदनमा सभाले संवैधानिक समितिलाई दिने सुझाव र निर्देशन सम्बन्धी प्रतिवेदनमा परिमार्जन गरि सभामा पेश गर्न परामर्श दिने निर्णय भयो,
- ०६७ श्रावण २ को बैठकमा संविधानसभा कार्यतालिकामा संशोधन गर्दै उच्चस्तरीय राज्य पुुनसंरसचना आयोगको गठन र कार्यावधि ०६७ श्रावण १५ देखि २ महिनाको कार्यावधि दिने, राज्य पुनसंरचना बाहेक अन्य ७ वटा समितिका प्रतिवेदनमा रहेका मत भिन्नतामा सहमति कायम गर्न श्रावण महिना भर दिने, सहमति कायम हुन नसकेका विषयमा संविधानसभा नियमावलीको प्रकृया बमोजिमनै टुङ्गो लगाउने निर्णय भएको,
- ०६७ पौष २५ को बैठकमा त.म.लो.पा. बाट ९ जना संविधानसभा सदस्य छुट्टिएर छुट्टै त.म.लो.पा.नेपाल गठन गरेको भनी प्राप्त कागजात वितरण गरियो, त.म.लो.पाबाट पार्टीका ४ जना सदस्यलाई संविधानसभा सदस्य पदबाट हटाइयोस् भनी कागजात प्राप्त भएको जानकारी गराइयो, साथै मा० श्री केशवप्रसाद मैनाली र मा० श्री राजकुमार लिम्वु नाल्बो लाई संवधानसभा सदस्यपदबाट हटाइयोस् भनी प्राप्त कागजात सम्बन्धमा जांचबुझ गरी प्रतिवेदन पेश गर्न गठित कार्यदलले दुईवटा प्रतिवेदन पेश गरेको जानकारी गराइयो ।
- ०६७ पौष २७ को बैठकले मा० श्री डम्बरबहादुर खड्काको निधनले संविधानसभा सदस्य पद १ रिक्त भएको जानकारी गराइयो, साथै संवैधानिक समिति र विषयगत समितिको प्रतिवेदनमा टुङ्गो लाग्न बांकी रहेका विषयलाई थप छलफल गरी टूंगो लगाउन संवैधानिक समितिलाई अधिकार दिने गरी नियमावली संशोधन गर्न ५ सदस्यीय नियमावली संशोधन मस्यौदा समिति गठन गर्न सभामुखलाई परामर्श दिने निर्णय गर्‍यो,
- ०६७ माघ ३ गतेको बैठकमा नियमावली सशोधन मस्यौदा समितिको प्रतिवेदन आजै सभामा पेश गरी माघ ४ गतेको बैठकमा पारित गर्न प्रस्तुत गर्ने निर्णय भयो,
- ०६७ माघ ११ गते संविधानसभाका संवैधानिक लगायत ६ वटा विषयगत समितिका प्रतिवेदनहरू वितरण गर्ने र माघ १२ गते बस्ने संविधानसभाको बैठकबाट सुझाव र निर्देशन सहित संवैधानिक समितिमा पठाउने व्यवस्था गर्न परामर्श दिने निर्णय भयो,
- ०६७ चैत्र ३ गतेको बैठकमा राज्यको पुनः संरचना र राज्यशक्तिको वांडफांड समितिको प्रतिवेदनमाथि दिइने सुझाव र निर्देशनहरू विवादित प्रश्नावली सहित संवैधानिक समितिमा पठाउन परामर्श दिने निर्णय भयो,
- ०६८ असार १९ को बैठकमा सद्भावना पार्टीको तर्फबाट प्रतिनिधित्व गर्नुभएका मा० श्री अनिलकुमार झालाई संविधानसभा सदस्य पदबाट हटाइयोस् भनी सम्बन्धित दलबाट कागजात प्राप्त भएको जानकारी गराइयो,
- ०६८ श्रावण १२ को बैठकमा मा० श्री अनिलकुमार झालाई संविधानसभा सदस्य पदबाट हटाइयोस् भनी प्राप्त कागजात सम्बन्धमा जांचबुझ गरी प्रतिवेदन पेश गर्न ५ सदस्यीय उप समिति गठन गर्ने निर्णय भयो, साथै मा० श्री केशवप्रसाद मैनाली र मा० श्री राजकुमार लिम्वु नाल्वोलाई संसिवधानसभा सदस्य पदबाट हटाइयोस् भनी प्राप्त कागजातको सम्बन्धमा जांचबुझ गरी समितिले प्रतिवेदन पेश गरेकोमा उक्त प्रतिवेदन र विद्यमान कानूनको आधारमा अध्यक्षलले नै उपयुक्त निर्णय गर्न परामर्श दिने निर्णय भयो ।
- ०६८ मंसिर १० गतेको बैठकमा संविधानसभाको थप गरिएको ६ महिनाको कार्यकाल भित्र संविधानसभाले सम्पन्न गर्न बांकी रहेका कार्य सम्पन्न गर्नेगरी कार्यतालिका संशोधन गर्न बैठकमा पेश गर्न परामर्श दियो ।

- ०६८ पौष २२ गतेको बैठकमा दलित जनजाति पार्टीका मा० श्री विश्वेन्द्र पासवानले विपक्षीहरूले झुठा उपस्थिति विवरण देखाई आफुलाई संविधानसभा सदस्य पदबाट हटाइयोस् भनी सचिवालयमा कागजात पेश गरेको भनी के.स. का सदस्यको उपस्थितिमा गरेको निर्णयको फोटोकपी वितरण गरियो । साथै संविधानसधभाको कार्यतालिकामा संशोधन गर्न संविधानसभा नियमावलीको समेत संशोधन आवश्यक भएकोले उक्त समितिमा ५ जना सदस्य मनोनयन गर्न परामर्श दियो,
- ०६८ माघ १९ गतेको बैठकले संविधानसभा नियमावली संशोधन मस्यौदा समितिमा संयोजक परिवर्तन गर्न परामर्श दिने, साथै संवैधानिक समितिमा टुङ्गो लाग्न बांकी विषय लगायत राज्य पुनसंरचना आयोगको प्रतिवेदनमाथि छलफल गर्ने समयसिमा बढाई कार्यतालिका संशोधन गर्न बैठकमा लैजाने परामर्श दियो,
- ०६८ फाल्गुण १ को बैठकमा कार्यतालिकामा हेरफेर गर्न परामर्श दिने निर्णय भयो,
- ०६८ फाल्गुण ११ को बैठकमा कार्यतालिकामा हेरफेर गर्न परामर्श दिने निर्णय भयो, साथै मा० श्री जयप्रकाश प्रसाद गुप्ताको सदस्यता पद एक स्थान रिक्त रहन गएको सूचना प्रकाशन गर्न लगाउन परामर्श दिने निर्णय भयो ।
- ०६८ फाल्गुण २१ को बैठकमा राज्यको पुनसंरचना लगायत टुङ्गो लगाउन बांकी सबै विषयमा सहमति कायम गर्ने कार्यको लागि कार्यावधि वढाउन कार्यतालिका संशोधन गर्न परामर्श दिने निर्णय भयो ।
- ०६८ चैत्र १ को बैठकमा राज्यको पुनसंरचना लगायत टुङ्गो लगाउन बांकी सबै विषयमा सहमति कायम गर्ने कार्यको लागि कार्यावधि वढाउन कार्यतालिका संशोधन गर्न परामर्श दिने निर्णय भयो ।
- ०६८ चैत्र १२ को बैठकमा राज्यको पुनसंरचाना उच्चस्तरीय आयोगको प्रतिवेदन र उक्त प्रतिवेदनमाथि राज्यको पुनः संरचना समितिमा भएको छलफलको आधारमा प्राप्त सुझाव सहितको प्रतिवेदनमा ४ दिन छलफल गर्न मिति निर्धारण गर्न परामर्श दियो, साथै संवैधानिक समिति अन्तर्गत गठित विवाद समाधान उप समितिलाई विवादहरू समाधान गर्न समय थप गर्न कार्यतालिकामा संशोधन गर्ने निर्णय भयो ।
- ०६८ चैत्र २२ को बैठकमा राज्यको पुनसंरचना लगायत टुङ्गो लगाउन बांकी सबै विषयमा सहमति कायम गर्ने कार्यकोलागि पटक पटक समय उपलब्ध गराउंदा पनि विवादहरू बांकी रहन गएकोले समय थपको आवश्यकता र औचित्य प्रकाश पार्न शीर्ष ४ दलका नेताहरूलाई कार्यव्यवस्था परामर्श समितिमा आमन्त्रण गर्ने निर्णय भयो,
- ०६८ चैत्र २३ को बैठकमा ४ दलका शीर्ष नेताहरूले संविधान निर्माणका सम्बन्धमा भएका प्रगतिहरूको वारेमा जानकारी गराउनु भयो, सम्माननीय अध्यक्षले संविधान निर्माण कार्य अन्तर्गत तत्काल गनुपर्ने कार्य र सो को समय सिमा वारेको आधार पत्र प्रस्तुत गर्नुभयो, सो को आधारमा विवाद टुङ्गो लगाउन ०६९ वैशाख ५ गते सम्म समय दिने निर्णय भयो,
- ०६९ वैशाख ६ को बैठकमा संविधान निर्माणमा टुङ्गो लाग्न बांकी विषयमा राजनीतिक सहमति कायम गर्न संवैधानिक समितिलाई समय थप गर्न परामर्श दिने, निर्धारित समयभित्र सहमति कायम हुन नसकेमा संविधानसभा नियमावलीको प्रकृया बमोजिम टुङ्गो लगाउन बैठकमा पेश गर्न परामर्श दिने निर्णय भएको,
- ०६९ वैशाख ११ को बैठकमा शिर्ष नेताहरूलाई समय थप बारे पुनः प्रष्ट गर्न आमन्त्रण गरिएकोमा संविधान निर्माणमा टुङ्गो लाग्न बांकी विषयमा राजनीतिक सहमति कायम गर्न

भएका प्रयासका वारेमा मा० श्री पुष्पकमल दाहालबाट जानकारी गराइयो, सविधान निर्माणमा टुङ्गो लाग्न बांकी विषयमा राजनीतिक सहमति कायम गर्न वैशाख १४ गतेसम्म समय थप गर्न परामर्श दिने निर्णय भएको,

- ०६९ वैशाख १४ को बैठकमा संविधान निर्माणमा टुङ्गो लाग्न बांकी विषयमा निरन्तर राजनीतिक सहमति कायम भईरहेकोले थप २ दिन सहमति कायम गर्न समय उपलब्ध गराउन परामर्श दिने र संविधानसभाको आजको बैठक सूचना पत्र प्रकाशन गरी वैशाख १७ गतेको लागि सार्न परामर्श दिने निर्णय भयो ।
- ०६९ वैशाख १७ गतेको बैठकमा संवैधानिक समितिले विषयगत समितिका प्रतिवेदनका आधारमा दलहरू बीच सहमति भईसकेका विषयलाई एकीकृत गरी मस्यौदा तयार गर्न विज्ञहरू समेत आमन्त्रण गरि गृहकार्य गरिरहेको जानकारी गराइयो, संविधानसभा द्वारा संविधान निर्माणमा टुङ्गो लाग्न बांकी विषयमा निरन्तर राजनीतिक सहमति कायम भईरहेको र केही विषय अझै सहमति कायम हुन वांकी रहेकोले थप एक दिन अर्थात् २०६९ वैशाख १९ गते सम्म समय उपलब्ध गराउन परामर्श दिने निर्णय भयो ।

## २.१४. समितिका सचिवालयहरुको स्थापना र जनशक्ति व्यवस्थापन

संविधानसभा नियमावली, २०६५ को नियम ६४ बमोजिम संविधानसभाको संविधान निर्माणकार्य र सोसँग सम्बद्ध अन्य प्रक्रियागत कार्यमा सहयोग पुऱ्याउन संविधानसभा अन्तर्गतका संवैधानिक समिति, १० वटा विषयगत समितिहरु र ३ वटा प्रक्रियागत समितिहरूको गठन पश्चात् समितिहरूको कामकारवाहीलाई प्रभावकारी रूपमा अगाडि बढाउन, आवश्यक विशेषज्ञ सेवा उपलब्धि गराउन र आर्थिक, भौतिक र कानूनी सुविधा उपलब्ध गराउन समिति सचिवालयको स्थापना गरिएको थियो ।

समिति सचिवालयमा आवश्यक पर्ने जनशक्तिको व्यवस्थापन संविधानसभा सचिवालयले गरेको थियो । तत्कालीन व्यवस्थापिका-संसद सचिवालयको कूल दरबन्दी ३३४ रहे पनि तत्काल कार्यरत प्राविधिक र प्रशासनिक कर्मचारी २५४ जनामात्र रहेको कारणले गर्दा संविधानसभा र व्यवस्थापिका-संसदको कामकारवाहीमा सहयोग पुऱ्याउन र संविधानसभाका समितिको अवधारणापत्र र प्रारम्भिक मस्यौदा तयार गर्ने कार्यमा सहयोग गर्नको लागि सचिवालयमा मौजुदा जनशक्ति पर्याप्त नभएकोले उक्त कार्यको लागि संविधानसभा नियमावली, २०६५ को नियम १६५ को उपनियम ३ र ४ ले दिएको अधिकार प्रयोग गरी कानून तथा न्याय मन्त्रालयमार्फत् नेपाल न्यायसेवाका २६ जना उपसचिव स्तरका कर्मचारीहरु र अन्य निकायहरूबाट शाखा अधिकृत १४ जना, ना.सु. १० जना, कम्प्यूटर अपरेटर ५ जना खरिदार ९ जना गरी जम्मा ३८ जना प्रशासनिक कर्मचारीहरु काजमा ल्याई प्रारम्भिक मस्यौदा निर्माण गर्ने काम सम्पन्न गरिएको थियो ।

सचिवालयले संविधानसभाका १४ वटा समितिहरूमध्ये संवैधानिक समिति सचिवालयमा सचिवालयका सहसचिव एवं कानूनी सल्लाहकार श्री टेकप्रसाद ढुङ्गानालाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव ३ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत १ जना ना.सु. २ जना, कम्प्यूटर अपरेटर ३ जना, ओभरसियर १ जना, प्राविधिक सहायक १ जना, ना.टे.स. १ जना, खरिदार १ जना, ना.मा.स. १ जना, प्राविधिक सहायक १ जना, बैठके १ जना र कार्यालय सहयोगी ३ जना गरी कूल २१ जनशक्ति कार्यरत रहने व्यवस्था मिलाइएको थियो ।

यसैगरी विषयगत समितिहरूमध्ये मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समिति सचिवालयमा तत्कालीन सहसचिव श्री तोयनाथ भट्टराईलाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव

२ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत ३ जना, ना.सु. १ जना कम्प्यूटर अपरेटर १ जना, टा.ना.सु १ जना, खरिदार २ जना र कार्यालय सहयोगी ३ जना गरी कूल १५ जनशक्ति कार्यरत रहेको थियो ।

यसैगरी अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समिति सचिवालयमा सहसचिव श्री सोमबहादुर थापालाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव २ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत २ जना, ना.सु. १ जना, कम्प्यूटर अपरेटर १ जना, खरिदार २ जना र कार्यालय सहयोगी २ जना गरी कूल १२ जनशक्ति कार्यरत रहेको थियो ।

यसैगरी राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समिति सचिवालयमा तत्कालीन सहसचिव श्री ठाकुरप्रसाद बराललाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव २ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत २ जना, ना.सु. १ जना, ले.प.अ. १ जना, कम्प्यूटर अपरेटर २ जना, टा.ना.सु. १ जना, टेलिफोन सञ्चालक १ जना, खरिदार १ जना र कार्यालय सहयोगी २ जना गरी कूल १५ जनशक्ति कार्यरत रहेको थियो ।

यसैगरी व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समिति सचिवालयमा सहसचिव श्री वलदेव खड्कालाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव २ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत २ जना, कम्प्यूटर अधिकृत १ जना, खरिदार २ जना र कार्यालय सहयोगी २ जना गरी कूल ११ जनशक्ति कार्यरत रहेको थियो ।

यसैगरी राज्यको शासकीय स्वरूप निर्धारण समिति सचिवालयमा सहसचिव (प्रवक्ता) श्री मुकुन्दप्रसाद शर्मालाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव २ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत २ जना, ना.सु. १ जना, कम्प्यूटर अपरेटर १ जना, खरिदार १ जना र कार्यालय सहयोगी २ जना गरी कूल ११ जनशक्ति कार्यरत रहेको थियो ।

यसैगरी न्यायप्रणाली सम्बन्धी समिति सचिवालयमा सहसचिव श्री हिमलाल सुवेदीलाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव २ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत २ जना, ना.सु. २ जना, टा.ना.सु. १ जना, कम्प्यूटर अधिकृत १ जना र कार्यालय सहयोगी २ जना गरी कूल १२ जनशक्ति कार्यरत रहेको थियो ।

यसैगरी संवैधानिक निकायको संरचना निर्धारण समिति सचिवालयमा सहसचिव श्री लवप्रसाद गौतमलाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव २ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत ३ जना, ना.सु. १ जना, टा.ना.सु १ जना, खरिदार १ जना, कम्प्यूटर अपरेटर १ जना र कार्यालय सहयोगी २ जना गरी कूल १३ जनशक्ति कार्यरत रहेको थियो ।

यसैगरी प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समिति सचिवालयमा सहसचिव श्री रामशरण घिमिरेलाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव २ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत २ जना, ना.सु. २ जना, कम्प्यूटर अपरेटर १ जना, टेलिफोन अपरेटर १ जना, कम्प्यूटर सहायक १ जना, टा.ना.सु. १ जना, खरिदार २ जना, बैठके १ जना र कार्यालय सहयोगी १ जना गरी कूल १६ जनशक्ति कार्यरत रहेको थियो ।

यसैगरी सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समिति सचिवालयमा सहसचिव श्री विनोदकुमार अधिकारीलाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव २ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत २ जना, ना.सु. २ जना, कम्प्यूटर अपरेटर २ जना र कार्यालय सहयोगी २ जना गरी कूल १२ जनशक्ति कार्यरत रहेको थियो ।

यसैगरी राष्ट्रिय हितको संरक्षण समिति सचिवालयमा तत्कालीन उपसचिव श्री कृष्णहरि खड्कालाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव २ जना, सचिवालयका उपसचिव १ जना, शाखा अधिकृत १ जना, मुद्रण अधिकृत १ जना, ना.सु. १ जना, कम्प्यूटर अपरेटर १ जना, टेप सञ्चालक १ जना, खरिदार २ जना र कार्यालय सहयोगी २ जना गरी कूल १३ जनशक्ति कार्यरत रहेको थियो ।

प्रक्रियागत समितिहरूतर्फ नागरिक सम्बन्ध समिति सचिवालयमा सहसचिव श्री धनबहादुर श्रेष्ठलाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव १ जना, शाखा अधिकृत २ जना, कम्प्यूटर अपरेटर १ जना, ना.सु. १ जना र कार्यालय सहयोगी २ जना गरी कूल ९ जनशक्ति कार्यरत रहेको थियो ।

यस्तै जनमत सङ्कलन तथा समन्वय समिति सचिवालयमा सचिवालयका तत्कालीन सहसचिव श्री जयनारायण नेपाललाई समिति सचिवको जिम्मेवारी दिइएकोमा उहाँको अनिवार्य अवकाश भएपछि सचिवालयका सहसचिव श्री विनोदकुमार अधिकारीले समिति सचिवको जिम्मेवारी लिनु भएको थियो । साथै उक्त समिति सचिवालयमा नेपाल न्यायसेवाका उपसचिव २ जना, सचिवालयमा उपसचिव एक जना, शाखा अधिकृत १ जना, कम्प्यूटर अपरेटर १ जना, ना.सु. १ जना, खरिदार २ जना र कार्यालय सहयोगी १ जना गरी कूल १० जनशक्ति कार्यरत रहेको थियो ।

यस्तै क्षमता अभिवृद्धि तथा स्रोत परिचालन समिति सचिवालयमा सचिवालयका सहसचिव श्री वीरेन्द्रबहादुर कार्कीलाई समिति सचिवको जिम्मेवारी दिनुका साथै नेपाल न्यायसेवाका उपसचिव १ जना, सचिवालयका उपसचिव १, शाखा अधिकृत १ जना, कम्प्यूटर अपरेटर १ जना, ना.सु. १ जना, खरिदार १ जना, बैठके १ जना र कार्यालय सहयोगी १ जना गरी कूल ९ जनशक्ति कार्यरत रहेको थियो ।

संविधानसभाका उक्त १४ वटा समितिहरूको बैठक र समिति सचिवालय कक्षको लागि तत्कालीन व्यवस्थापिका-संसदका विषयगत समितिहरूले प्रयोग गर्दै आइरहेका बैठककक्ष, कार्यकक्ष र नपुग भएका बैठक कक्षहरूका लागि संसदीय दलका बैठककक्षहरूसमेत प्रयोग गर्ने गरी व्यवस्थापन गरिएको थियो । व्यवस्थापिका-संसदका विषयगत समितिहरु र संविधानसभाका समिति सचिवालय र त्यसमा कार्यरत कर्मचारीहरु समेत उही रहेको कारण एकै दिन दुबै सभाका समितिहरूको बैठक सञ्चालन हुने भएमा बिहान बेलुकीको समय मिलाई समितिको बैठक सञ्चालन गर्ने गरी व्यवस्थापन गरिएको थियो ।

## २.१५. समितिका सभापतिको निर्वाचन

संविधानसभाले मिति २०६५ मार्ग १ गते पारित गरेको संविधानसभाको कार्यतालिका बमोजिम २०६५ साल मार्ग मसान्तसम्ममा संविधानसभाका समितिहरूको गठन र समितिका सभापतिहरूको निर्वाचन समेत सम्पन्न गरिसक्नु पर्ने प्रावधान रहेकोमा संविधानसभाका विभिन्न समितिहरूको गठन गर्ने काम सम्पन्न भएको र उक्त समितिका सभापतिहरूको निर्वाचन गर्न र प्रत्येक समितिले आफ्नो कार्यक्षेत्रभित्र पर्ने विषय र सो अन्तर्गत सञ्चालन हुने गतिविधि सहितको कार्यतालिका निर्माण गर्न तोकिएको अवधि अर्थात् २०६५ पुस १५ गतेभित्रै संविधानसभाका विभिन्न समितिहरूको सभापतिको निर्वाचन सम्पन्न गर्ने कार्यक्रम रहेको थियो तर निर्धारित समयावधिभित्र सभापतिहरूको निर्वाचन सम्पन्न हुन नसकी कार्यतालिका संशोधन गरियो ।

संविधानसभा नियमावली, २०६५ को नियम ७० को उपनियम (१) बमोजिम संविधानसभा अन्तर्गतका सम्पूर्ण समितिहरूको सभापतिको निर्वाचन कार्यक्रम अन्तर्गत २०६५ पुस २८ गते संविधानसभाको सम्बन्धित समितिको कुनै सदस्यलाई सभापतिमा निर्वाचित गरियोस् भनी कुनै अर्को एक सदस्यको समर्थन सहित संविधानसभा नियमावली, २०६५ को नियम ७० को उपनियम (२) बमोजिम संविधानसभाका महासचिवसमक्ष प्रस्ताव दर्ता गर्ने र निर्धारित समयभित्र दर्ता भएका प्रस्तावको दर्ता क्रम अनुसार सूची प्रकाशन गर्ने तथा मिति २०६५ पुस २९ गते सम्बन्धित समितिको बिहान ८:०० बजे बस्ने बैठकमा प्रस्तावकले प्रस्ताव प्रस्तुत गर्ने, समर्थकले सम्बन्धित प्रस्तावको समर्थन गर्ने र उक्त प्रस्तावहरु निर्णयार्थ प्रस्तुत गर्ने गरी निर्वाचनको कार्यक्रम प्रकाशन गरिएको थियो । मतदानको लागि एकभन्दा बढी समितिमा सदस्य रहनु भएका माननीय सदस्यहरूले आफू कुन समितिको मतदानमा सहभागी हुने हो सोको लिखित जानकारी अग्रिम रूपमा सम्बन्धित समिति सचिवालयलाई दिनुपर्ने व्यवस्था गरिएको थियो । संविधानसभाका १४ वटा समितिको सभापति पदको निर्वाचन हुँदा १२ वटामा निर्विरोध र २ वटामा मतदान भई बहुमतबाट निर्वाचित भएको घोषणा गरिएको थियो ।

जसअनुसार संविधानसभा अन्तर्गतका विभिन्न समितिहरूमा सभापति पदको लागि प्राप्त भएका उम्मेदवार हरूको सूची अनुसार संवैधानिक समितिमा मा० श्री सुरेन्द्र पाण्डे प्रस्तावक र मा० श्री रामचन्द्र पौडेल, मा० श्री उपेन्द्र यादव र मा० श्री देवप्रसाद गुरूङ समर्थक भई मा० श्री माधवकुमार नेपालको उम्मेदवारीको प्रस्ताव दर्ता भएको र मा० श्री चन्द्रबहादुर गुरूङ (स्याङ्जा) प्रस्तावक र मा० श्री सरिता गिरी समर्थक भई मा० श्री विश्वेन्द्र पासवानको उम्मेदवारीको प्रस्ताव दर्ता भएकोमा मिति २०६५ पुस २९ गते समितिको बैठकमा दुबै प्रस्तावहरु प्रस्तुत भई सामूहिक छलफल भयो । छलफल पश्चात् संवैधानिक समितिको सभापतित्व गरिरहनु भएका मा० ज्येष्ठ सदस्यले मा० श्री माधवकुमार नेपाललाई संवैधानिक समितिको सभापति पदमा निर्वाचित गरियोस् भन्ने प्रस्तावलाई निर्णयार्थ राख्नु हुँदा बहुमतबाट पारित भएकोले उहाँ संवैधानिक समितिको सभापति पदमा बहुमतले निर्वाचित हुनु भएको घोषणा गरिएको थियो । पहिलो प्रस्ताव बहुमतले पारित भई सकेकोले अर्को प्रस्तावलाई निर्णयमा राख्नु परेन ।

१० वटा विषयगत समिति र २ वटा प्रक्रियागत समिति गरी १२ वटा समितिमा सभापतिको निर्वाचन सहमतिको वातावरणमा सम्पन्न भएको थियो, जस अन्तर्गत अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समितिको सभापति पदमा मा० श्री विभाकुमारी कार्की प्रस्तावक, मा० श्री पुरनसिंह दयाल समर्थक भई मा० श्री लालबाबु पण्डितको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिमा मा० श्री प्रदीपकुमार ज्ञवाली प्रस्तावक, मा० श्री धीरेन्द्रबहादुर श्रेष्ठ समर्थक भई मा० श्री विन्दा पाण्डेको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समितिमा मा० श्री भरतप्रसाद शाह प्रस्तावक, मा० श्री इन्द्रजीत थारू समर्थक भई मा० श्री लोकेन्द्र विष्ट मगरको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, राष्ट्रिय हितको संरक्षण समितिमा मा० श्री सूर्यबहादुर सेन ओली प्रस्तावक, मा० श्री पूर्णबहादुर राना र मा० श्री रेणुका चौलागाई समर्थक भई मा० श्री अमिक शेरचनको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, नागरिक सम्बन्ध समितिमा मा० श्री टीकाराम सुब्बा लेप्चा प्रस्तावक, मा० श्री देवराज जोशी समर्थक भई मा० श्री मीना पाण्डेको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समितिमा मा० श्री रामसरोज यादव प्रस्तावक, मा० श्री रामेश्वरप्रसाद रौनियार समर्थक भई मा० श्री रमेश रिजालको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिमा मा० श्री बोधनारायण सरदार प्रस्तावक, मा० श्री चन्द्रिराम टमटा समर्थक भई मा० श्री नवोदिता चौधरीको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, संवैधानिक निकायको संरचना निर्धारण समितिमा मा० श्री काशीदेवी झा प्रस्तावक, मा० श्री महालक्ष्मी श्रेष्ठ समर्थक भई मा० श्री गोविन्द चौधरीको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, न्यायप्रणाली सम्बन्धी समितिमा मा० श्री एकराज भण्डारी

प्रस्तावक, मा० श्री शिवराम यादव समर्थक भई मा० श्री प्रभु साह तेलीको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिमा मा० श्री हरि रोका प्रस्तावक, मा० श्री हेमराज तातेड समर्थक भई मा० श्री अमृता थापा मगरको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, क्षमता अभिवृद्धि तथा स्रोत व्यवस्थापन समितिमा मा० श्री रम्भादेवी प्रस्तावक, मा० श्री सेवकीदेवी दास तत्मा समर्थक भई मा० श्री मृगेन्द्रकुमार सिंह यादवको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएको, राज्यको शासकीय स्वरूप निर्धारण समितिमा मा० श्री अजयकुमार द्विवेदी प्रस्तावक, मा० श्री जिपछिरिङ लामा शेर्पा समर्थक भई मा० श्री शम्भुहजरा दुसाधको एकमात्र उम्मेदवारीको प्रस्ताव दर्ता भएकोले उक्त १२ वटा समितिहरूको सभापति पदमा प्रस्तावित नामहरु निर्विरोध निर्वाचित भएको घोषणा भएको थियो ।

त्यस्तै प्रक्रियागत समितिहरूमध्ये जनमत सङ्कलन तथा समन्वय समितिमा मा० श्री हर्षजित लामा प्रस्तावक र मा० श्री शारदादेवी कुमाल समर्थक भई मा० श्री जनककुमारी चालिसेको र मा० श्री कौशलकुमार राय यादव प्रस्तावक र मा० श्री शत्रुघनप्रसाद सिंह कोइरी समर्थक भई मा० श्री प्रमोदप्रसाद गुप्ताको उम्मेदवारीको प्रस्ताव दर्ता भएकोमा मिति २०६५ पुस २९ गते भएको सभापतिको निर्वाचनमा मा० श्री प्रमोदप्रसाद गुप्ता बहुमतले सभापति पदमा निर्वाचित हुनु भएको थियो ।

क्षमता अभिवृद्धि तथा स्रोतव्यवस्थापन समितिका सभापति श्री मृगेन्द्रकुमार सिंह यादव मिति २०६६।३।१० मा कृषि तथा सहकारी मन्त्रीमा नियुक्त भई समितिको सभापति पद रिक्त भएकोमा उक्त पदमा पछिसम्म पनि पुनः निर्वाचन हुन सकेन । त्यस पछिका समितिका सबै बैठक समितिका ज्येष्ठ सदस्यले सञ्चालन गर्नुपर्ने बाध्यात्मक अवस्था परेको थियो ।

मिति २०६६।२।११ मा मा० श्री माधवकुमार नेपाल प्रधानमन्त्री पदमा निर्वाचित हुनुभई संवैधानिक समितिको सभापति पदबाट राजीनामा दिनुभएकोले उक्त रिक्त रहेको सभापति पदको निर्वाचनको लागि मिति २०६६ साउन २८ गते संविधानसभा नियमावली, २०६५ को नियम ७० को उपनियम (१) बमोजिम मिति २०६६।०५।१२ गतेका दिन बिहान ८ः०० बजेको समय निर्धारण गरी २०६५ पुस २९ गते भएको सबै समिति सभापतिको निर्वाचन कार्यक्रम अनुसारकै व्यहोराको निर्वाचनको कार्यक्रम प्रकाशन गरिएको थियो । उक्त निर्वाचन कार्यक्रम अनुसार संवैधानिक समितिको सभापति पदको निर्वाचनको लागि मिति २०६६।०५।२ मा प्रकाशित निर्वाचन कार्यक्रममा निर्धारित समयभित्र समितिको सभापति पदमा निर्वाचित गरियोस् भनी मा० श्री बाबुराम भट्टराई प्रस्तावक, मा० श्री देवप्रसाद गुरूङ्ग समर्थक भई मा० श्री नारायणकाजी श्रेष्ठको र मा० श्री सुप्रभा घिमिरे प्रस्तावक, मा० श्री रत्न शेरचन समर्थक भई मा० श्री नीलाम्बर आचार्यको उम्मेदवारी प्रस्तावहरु दर्ता हुन आएकोमा समितिमा निर्णयार्थ पेश हुँदा मा० श्री नीलाम्बर आचार्यको पक्षमा २९ मत परेको र उक्त मत समितिको बैठकमा उपस्थित कूल ५६ जना सदस्यको बहुमत भएकोले बहुमतबाट उहाँ सभापतिमा निर्वाचित हुनुभएको घोषणा गरिएको थियो ।

भाग
३

# अवधारणागतपक्षमा जनताको सुझाव सङ्कलन, विषयगत समितिहरूबाट अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदाको निर्माण

२०६५ साल जेठ १५ गते संविधानसभाको पहिलो बैठक बसे पनि संविधान निर्माणको प्रक्रिया निर्धारण गर्ने लगायतका विषय स्पष्ट पार्ने संविधानसभा नियमावली २०६५।७।२९ मा मात्र पारित भयो । नियमावली अनुसार मिति २०६५ मंसिर ३० का दिन विभिन्न १४ वटा समितिहरु गठन गरी समितिहरूमार्फत् संविधान निर्माणको कार्यप्रारम्भ भयो । संवैधानिक समिति र १० वटा विषयगत समितिहरूले आफ्नो कार्यक्षेत्रभित्रका विषयमा संविधानको प्रारम्भिक मस्यौदामात्र होइन सम्बन्धित विषयको अवधारणापत्र पनि तयार गर्नुपर्ने कर्तव्य नियमावलीले निर्धारण गरेको हुनाले यस विषयमा सर्वप्रथम जनताको सुझाव लिएर अघि बढ्ने प्रयास संविधानसभा तथा यसका समितिहरूले गरेको देखिन्छ ।

## ३.१. संविधानको अवधारणागतपक्षमा सुझाव दिन आमजनतालाई आव्हान

संविधानसभा नियमावली, २०६५ पारित भई समितिहरु गठन गर्नासाथ संविधानसभा सचिवालय र सबै समितिका सचिवालयहरूबाट विद्युतीय तथा अन्य सञ्चारमाध्यममार्फत् स्वदेश तथा विदेशमा रहेका सबै नेपाली नागरिकहरूसँग संविधानको अवधारणागतपक्षमा राय सुझाव दिन आव्हान गरी सार्वजनिक सूचना प्रकाशित गरियो । साथै सम्बन्धित समितिको कार्यक्षेत्रभित्रका विषयवस्तुका बारेमा संवैधानिक निकाय, नेपाल सरकार र नेपाल सरकारका विभिन्न मन्त्रालय लगायतका सङ्घ, संस्थासँगसमेत राय सुझाव उपलब्ध गराई संविधान निर्माणको कार्यमा सहभागी हुन अनुरोध गर्दै पत्राचारसमेत गरिएको थियो । यसरी प्रकाशन गरिएको एउटा सूचनाको नमूना अनुसूची ४ मा दिइएको छ । उक्त अनुरोध बमोजिम संस्थागत र व्यक्तिगत रूपमा संविधानसभाले ठूलो संख्यामा सुझावहरू प्राप्त गरेको थियो ।

संविधानसभा नियमावलीले संविधानमा रहनु पर्ने आधारभूत विषयहरूलाई विभिन्न समितिको कार्यक्षेत्रमा विभाजन गरेको भए पनि एक विषयसँग अर्को विषय अन्तरसम्बन्धित हुने भएकोले कार्यक्षेत्रमा बारम्बार अन्यौल सृजना हुन पनि सक्ने सम्भावनालाई दृष्टिगत गर्दै विषयगत समितिको कार्यक्षेत्रमा देखिएका अस्पष्टता हटाउन, कार्यक्षेत्रलाई थप विस्तृतीकरण गर्न, विभिन्न समितिहरु बीच समन्वय र सहकार्यलाई सहज बनाउनका लागि संविधानसभाका अध्यक्षले संविधानसभा नियमावली, २०६५ को नियम ८६ बमोजिम सबै समितिका सभापति, सबै दलका प्रमुख सचेतकहरु र समितिका सचिवहरूको संयुक्त बैठक २०६५।१०।०४ र २०६५।१०।०९ गते आव्हान गरी कार्यक्षेत्रमा हुन सक्ने दोहोरो पनलाई हटाउने र अन्यौललाई स्पष्ट पार्ने प्रयास गरिएको थियो । संविधानसभा नियमावली अनुरूप संविधान तर्जुमा

गर्ने कार्यमा समितिहरु बीचको समन्वय र सहकार्यलाई थप प्रभावकारी बनाउने र कामको सिलसिलामा देखिएका समस्या समाधानका लागि संविधासभाका अध्यक्षको अध्यक्षतामा विभिन्न समयमा सबै समितिका सचिवहरु सहित सभापतिहरूको संयुक्त बैठक बसी यस विषयमा सहजीकरणको भूमिका समेत निर्वाह गरिएको थियो ।

यसै क्रममा संविधान निर्माण प्रक्रियामा सिङ्गो मुलुकलाई नै संविधानसभामय बनाउन, जनतालाई संविधान निर्माणमा उत्सुक र जागरूक बनाई निर्माण हुने संविधानमा जनस्वामित्व समेत स्थापित गर्न सजिलो होस् भनी राय सुझाव सङ्कलन गर्नको लागि संविधानसभाका मा० सदस्यहरु, संविधानसभा सचिवालयका कर्मचारीहरु तथा स्थानीयतहका कर्मचारीहरु समेत सम्मिलित विभिन्न ४० वटा टोली निर्माण गरियो । संविधानसभा सचिवालयले यस प्रयोजनको लागि विभिन्न समितिहरूले बनाएका प्रश्नावलीहरूको लाखौं प्रतिहरु छपाएर जिल्ला जिल्ला पठाएको थियो । उल्लिखित टोलीहरूले २०६५/११/१६ देखि २०६५/१२/९ सम्म देशका सबै २४० वटै निर्वाचनक्षेत्रमा पुगी प्रत्यक्ष रूपमा संविधानसभाका विभिन्न समितिहरूले आ-आफ्ना कार्यक्षेत्रभित्रका विषयमा आधारित भई तयार गरेको प्रश्नावलीमार्फत् आमनेपालीको राय सुझाव सङ्कलन गरिएको थियो । उक्त सुझाव संकलनको समयावधिमा नै थरूहट आन्दोलन लगायतका मुलुकका विभिन्न भागमा आव्हान गरिएका आन्दोलहरूले टोलीको काम समेत प्रभावित भई केही बढी समय खर्च गर्नु परेको थियो । यस सम्बन्धी तथ्याङ्कगत विवरण अनुसूची ५ मा समावेश गरिएकोछ ।

## ३.२. प्राप्त राय, सुझाव सम्बन्धित समितिका सदस्यहरुबाट अध्ययन र विश्लेषणबाट प्राप्त संक्षिप्त विवरण

संविधानसभाका चालिसवटा टोलीहरु जिल्ला भ्रमणबाट फर्केपछि जनताले दिएका सुझावलाई समेटेर आ-आफ्ना प्रतिवेदन संविधानसभाका अध्यक्षलाई बुझाएका थिए । हरेक टोलीले बुझाएका प्रतिवेदनमा सबै विषयगत समितिका कार्यक्षेत्रका विषयमा सुझाव रहेकोले ती सुझावका सारसंक्षेप यहाँ प्रस्तुत गरिएको छ :-

### ३.२.१. संवैधानिक समितिका कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १ | संविधानमा सबैको भावना समेट्नु पर्ने, संविधान निर्माण अघि आन्दोलन होइन सबै नेपाली संविधान निर्माणको प्रक्रियामा जुट्नु पर्ने, मुलुकलाई अग्रगमनमा लैजान नदिने र बिथोल्नेहरूदेखि सावधान हुनुपर्ने, जनयुद्ध र जनआन्दोलनका योद्धा र घाइतेहरूलाई सम्बोधन गर्नुपर्ने, सहमति जुट्न नसक्ने जटिल विषयहरूको समाधान जनमत सङ्ग्रहबाट गर्नुपर्ने, सबैको अपनत्व हुने संविधान निर्माण हुनुपर्ने, नयाँ संविधानले राष्ट्रिय भावनाको जागरण गर्ने वातावरण सृजना गर्नुपर्ने, विज्ञहरु र दक्ष प्राविधिकहरूको सहयोगमा संविधान निर्माण हुनु पर्दछ । |
| टोली नं. २ | भावी संविधानको प्रस्तावनामा विगतमा भएका सबै आन्दोलनहरूको उल्लेख हुनुपर्ने, जनतामा निहित सार्वभौमसत्ता र राजकीयशक्तिको प्रयोग जनताद्धारा छानिएका नेताले इमान्दारीपूर्वक जनताको सेवा गर्नुपर्ने, संविधान संशोधनको लागि सङ्घीय तथा प्रान्तीय विधायिकाको दुई तिहाई बहुमत हुनुपर्ने, सङ्कटकालीन व्यवस्था कायम गर्दा संसदबाट सामान्य बहुमतको आधारमा अनुमोदन गर्नुपर्ने, भावी नेपालको संविधानको नाम "सङ्घीय गणतन्त्र नेपालको संविधान" हुनुपर्ने, बाधा अड्काउ फुकाउने तथा सङ्कटकालीन अधिकार राष्ट्रपतिमा निहित राख्नुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ३ | लोकतान्त्रिक पद्धति र मान्यतालाई आत्मसात् गर्दै राष्ट्रिय एकता र अक्षुण्णतालाई कायम राख्न सक्ने जनहितकारी संविधान बन्नुपर्ने । |
| टोली नं. ४ | दलले निश्चित प्रतिशत मत ल्याएपछि मात्र राष्ट्रिय दलको मान्यता दिनु पर्ने, राजनीतिमा अवकाशको व्यवस्था हुनुपर्ने, समाजवाद उन्मुख संविधान बन्नु पर्छ । |
| टोली नं. ६ | विधिको शासन, सार्वभौमसत्ता जनतामा निहित, राष्ट्रिय एकता र राष्ट्रिय अखण्डतालाई टिकाइ राख्ने लोकतान्त्रिक पद्धति र मान्यतालाई आत्मसात् गर्दै जनहितकारी संविधान निर्माण हुनुपर्ने, वालिग मताधिकार, आवधिक निर्वाचन, मानव अधिकार, बहुदलीय प्रतिस्पर्धा, पूर्ण प्रेस स्वतन्त्रता एवं कानूनी राज्यको अवधारणा, स्वतन्त्र न्यायपालिका सहितको प्रतिस्पर्धात्मक बहुदलीय लोकतान्त्रिक पद्धति अपनाउन नयाँ निर्माण हुने संविधानमा सो विषयहरु समेट्नु पर्ने । |
| टोली नं. ७ | राजनीतिक दल, पारदर्शी र लोकतान्त्रिक हुनुपर्ने, संविधानका आधारभूत संरचना संविधानको प्रस्तावनामा उल्लेख गर्नुपर्ने । |
| टोली नं. ८ | प्रस्तावनामा "जनयुद्ध, जनआन्दोलन र मधेस आन्दोलनको उपलब्धि ...... " भनेर लेखिनु पर्ने, संविधानको प्रस्तावना अपरिवर्तनीय हुनु पर्ने, संविधानका आधारभूत संरचना, शाश्वत तत्वहरु संविधानको प्रस्तावनामा उल्लेख गर्नुपर्ने, सर्वहारावर्गको हितलाई हेरेर संविधान बनाइनु पर्ने, राष्ट्रिय जनावर गाईको सट्टा अन्य वन्यजन्तु मध्येबाट घोषणा गरिनुपर्ने, वर्तमान राष्ट्रिय गानको सट्टा जनआन्दोलन र जनयुद्धको भाव अनुसारको हुनुपर्ने, वर्तमान निशानाछापमा उल्लिखित संस्कृत शब्दलाई नेपाली भाषामा लेखिनुपर्ने, सबै धर्महरूलाई राज्यले समान रूपमा व्यवहार गर्नुपर्ने, राजनीतिक दलहरूको हरेकतहको आर्थिक आय व्ययको लेखापरीक्षण गर्ने संवैधानिक व्यवस्था हुनुपर्ने, राजनीतिक दल पारदर्शी र लोकतान्त्रिक हुनुपर्ने व्यवस्था संविधानमा नै उल्लेख गर्नुपर्ने । |
| टोली नं. ९ | नेपाली भाषाका अलावा स्थानीय सबैले बुझ्ने भाषालाई पनि सम्बन्धित प्रदेशमा सरकारी कामकाजको भाषाको रूपमा मान्यता दिइनुपर्ने, राष्ट्रिय सहमति कायम गरी समयमै संविधान निर्माण हुनुपर्ने, बाधा अड्काउ फुकाउने अधिकारको प्रयोग गर्दा दुरूपयोग नहुने गरी संविधानमा प्रष्ट व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ११ | नेपाल राष्ट्रको नाम र राष्ट्रिय झण्डामा पुनरावलोकन हुनुपर्ने, राज्य, लोकतान्त्रिक सङ्घीय गणतान्त्रिक हुनुपर्ने, राजनीतिक दलको पदहरूमा समानुपातिक प्रतिनिधित्व हुनुपर्ने, प्रेस स्वतन्त्रताको प्रत्याभूति संविधानको प्रस्तावनामा नै उल्लेख हुनुपर्ने, विवादास्पद विषयहरूको छिनोफानो गर्न जनमतसङ्ग्रहको व्यवस्था हुनुपर्ने । |
| टोली नं. १२ | सङ्घीय लोकतान्त्रिक गणतन्त्र, सार्वभौमसत्ता जनतामा निहित हुनुपर्ने, भयमुक्त समाजको स्थापना, सङ्कटकालीन अवस्थाको घोषणालाई व्यवस्थापिकाबाट अनुमोदन गर्ने व्यवस्था राख्नुपर्ने, राजनीतिक दलहरूको आयव्ययको पारदर्शिता र जनताप्रतिको उत्तरदायित्वको सुनिश्चितताका लागि संविधानमा नै व्यवस्था हुनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १३ | भावी संविधानको प्रस्तावनामा गुणको कदर, शान्तिकायम, पिछडिएको वर्गको समुन्नति हुनुपर्ने, जनतामा निहित सार्वभौमसत्ता, राजकीयशक्तिको प्रयोग जनताद्वारा छानिएका नेताले इमान्दारिपूर्वक जनताको सेवा गर्नुपर्ने, संविधान संशोधनको लागि सङ्घीय एकाइका विधायिकाहरूमा सामान्य बहुमतबाट हुनुपर्ने, सङ्घीय विधायिकामा दुई तिहाई बहुमत हुनुपर्ने, सङ्कटकालीन व्यवस्था कायम गर्दा संसदबाट सामान्य बहुमतको आधारमा अनुमोदन गर्नुपर्ने, भावी नेपालको संविधानको नाम "सङ्घीय गणतन्त्र नेपालको संविधान" हुनुपर्ने, सङ्कटकालीन अवस्थामा पनि बाँच्न पाउने, सम्पत्ति राख्न र स्वास्थ्य र शिक्षा सम्बन्धी अधिकारलाई रोक लगाउन नपाउने । |
| टोली नं. १५ | संविधानका धाराहरू एक आपसमा नबाझिने हुनुपर्ने, तर भन्ने प्रतिबन्धात्मक शब्द राखेर जसरी संविधानको व्याख्या गरे पनि हुने गरी संविधान नवनाउने, संविधान संशोधन किन र के का लागि गरिने हो भन्ने विषयमा संविधानमा स्पष्ट व्यवस्था हुनुपर्ने,संविधान स्पष्ट र सरल भाषामा लेखिनु पर्ने, जनताले नवुझ्ने भाषामा घुमाउरो किसिमले संविधान लेख्न नहुने । |
| टोली नं. १६ | १० वर्षे जनयुद्ध, निरङ्कुशताको विरोधमा पटक-पटकका शान्तिपूर्ण आन्दोलन र २०६२/०६३ को जनआन्दोलनको बलिदानलाई प्रस्तावनामा समेटिनु पर्ने । |
| टोली नं. १७ | प्रस्तावनामा नेपाली जनताको साम्राज्यवाद, विस्तारवाद तथा सामन्तवादविरूद्धको जनयुद्ध र जनआन्दोलनको उपलब्धि भनेर लेखिनु पर्ने, संविधानमा राष्ट्रिय स्वतन्त्रता, सार्वभौमिकता, अखण्डता र स्वाधीनताका सम्बन्धमा स्पष्ट उल्लेख गरिनुपर्ने, संविधान स्पष्ट तथा दोहोरो अर्थ नलाग्ने खालको निर्माण गर्नुपर्ने, व्यवहारतः कार्यान्वयन हुने संविधान लेखिनु पर्ने । |
| टोली नं. १८ | समानुपातिक निर्वाचन पद्धति अवलम्बन गर्नुपर्ने । मतदाताको निश्चित प्रतिशत ल्याएका राजनीतिक पार्टीमात्र राष्ट्रिय पार्टी हुन पाउने । प्रस्तावनामा छुवाछूत र भेदभावरहित समाज राख्ने । एक धारा अर्को धारासँग बाझिने र दोहोरो अर्थ लाग्ने गरी मस्यौदा तयार नगर्ने । मानव अधिकार बहुदलीय प्रतिस्पर्धा, स्वतन्त्र न्यायपालिका, आवधिक निर्वाचन, प्रेस स्वतन्त्रता, मौलिक हक, शक्तिपृथकीकरण, शक्तिसन्तुलन र नियन्त्रण, संवैधानिक निकायका काम, कर्तव्य, अधिकार, कार्यपालिका, न्यायपालिका, व्यवस्थापिकाको अधिकार बाँडफाँड, लोकतान्त्रिक पद्धति, मूल्य मान्यताहरू जस्ता विषय संविधानमा समावेश हुनुपर्ने । सङ्कटकाल घोषणाको अनुमोदन व्यवस्थापिकाबाट निश्चित समयभित्र गराउनु पर्ने प्रावधान राख्ने । संविधान संशोधन प्रक्रिया र कार्यविधि सरल बनाउने । |
| टोली नं. १९ | देशमा विद्यमान वर्गीय, जातीय, क्षेत्रीय, लैङ्गिक असमानताहरूलाई समाधान गर्दै लोकतान्त्रिक पद्धति र मान्यतामा आधारित भएर जनपक्षीय संविधान बन्नुपर्ने, विधिको शासन, लोकतान्त्रिक शासन व्यवस्था, समावेशी सहभागिता, सीमान्तकृत वर्गको विशेष संरक्षण, राज्यको स्रोत र साधनमा समान पहुँच, मावनअधिकारको प्रत्याभूति राजनीतिक स्वतन्त्रता र व्यक्तिको मर्यादाको सम्मानजस्ता कुराहरू समेटिनु पर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. २० | प्रस्तावनामा ......राष्ट्रको स्वतन्त्रता, सार्वभौमसत्ता, अखण्डता र राष्ट्रिय एकता अक्षुण्ण राख्न, नागरिकको जीवन (Life), स्वतन्त्रता (Liberty) र सम्पत्ति (Property) को रक्षा गर्न, सामाजिक सद्भाव, सहिष्णुता, सदाचार र नैतिकता अभिवृद्धि गर्न, नियन्त्रण तथा सन्तुलनको सिद्धान्तमा आधारित संरचनालाई सबल बनाउने.... विषय समेटिनु । |
| टोली नं. २१ | **भावी संविधानको प्रस्तावनामा राख्नुपर्ने विषयहरू**<br>सार्वभौमसत्ता नेपाली जनतामा हुनुपर्ने । राज्यशक्तिको स्रोत नेपाली जनता हुनुपर्ने । नेपाल एक सङ्घीय, लोकतान्त्रिक, समावेशी, धर्मनिरपेक्ष, र गणतन्त्रात्मक राज्य हुनुपर्ने । नेपाल हिन्दु राष्ट्र हुनुपर्ने । (केही ठाउँका यस्तो सुझाव प्राप्त) संविधानको सर्वोच्चता र कानूनको शासन । बहुदलीय प्रतिस्पर्धात्मक शासन व्यवस्था । संविधान संशोधन सङ्घीय संसद र सङ्घीय एकाइको व्यवस्थापिका-संसदको दुई तिहाई बहुमतले गर्नुपर्ने । राष्ट्रिय महत्वका मुख्य-मुख्य विषयहरूमा संविधान संशोधन गर्दा जनमतसङ्ग्रह हुनुपर्ने । राजकीय सत्ता प्रधानमन्त्री मार्फत् प्रयोग हुनुपर्ने । नेपाल एक स्वतन्त्र, सार्वभौम राष्ट्रको रूपमा रहेको कुरा उल्लेख गर्नुपर्ने । सबै जातजाति, लिङ्ग, वर्ग, धर्म र क्षेत्रका मानिस समान रहनु पर्ने । सबैमा सद्भाव र सहिष्णुताको भावना राखेर काम गर्नुपर्ने, बहुलवादको मान्यतालाई अङ्गीकार गर्ने । जनमुखी, गरीबमुखी र ग्रामीणमुखी संविधान हुनुपर्ने । संविधान परिवर्तनीय हुनुपर्ने ।<br><br>**राजनीतिक दल सम्बन्धी व्यवस्था**<br>राजनीतिक दलको प्रस्तावनामा संविधान तथा कानूनी शासनको सर्वोच्चता तथा समावेशी लोकतान्त्रिक गणतन्त्रात्मक र पारदर्शी शासन व्यवस्थाको पूर्ण परिपालना गर्ने कुरा राख्नुपर्ने । अपराधीलाई राजनीतिक संरक्षण नदिने व्यवस्था गर्नुपर्ने । पदाधिकारीहरूलाई दुई कार्यकाल भन्दा बढी कार्य गर्न नपाउने व्यवस्था गर्ने । राजनीति गर्नेको उमेरको हद तोक्ने र योग्यता तोक्ने व्यवस्था गर्ने । सङ्कटकाल सम्बन्धी व्यवस्था कम्तिमा ६ महिना र बढीमा १ वर्षसम्म सङ्कटकाल घोषणा गरी लागू गर्न सकिने व्यवस्था हुनुपर्ने । सङ्कटकालमा वन्देज लगाउन नसकिने अधिकारहरु सम्बन्धी व्यक्तिको जीवन सुरक्षाको हक, सूचनाको हक, शिक्षा प्राप्त गर्ने र उपचार गर्न पाउने हक, सम्पत्ति उपयोगको हक, सङ्कटकालमा वन्देज लगाउने घोषणा गर्ने अधिकार सम्बन्धी व्यवस्था केन्द्रीय व्यवस्थापिका-संसदको दुईतिहाई बहुमतबाट हुनुपर्ने, भावी संविधानको नाम जनताको/सङ्घीय लोकतान्त्रिक गणतन्त्र नेपालको संविधान, २०६६ हुनुपर्ने । |
| टोली नं. २२ | महत्वपूर्ण विषयमा जनमतसङ्ग्रहबाट निर्णय गरिनुपर्ने । |
| टोली नं. २३ | राजनीतिक दल पारदर्शी र लोकतान्त्रिक हुनुपर्ने, संविधानका मूलभूत विशेषता, मूल्य, मान्यताहरु प्रस्तावनामा उल्लेख गर्नुपर्ने । |
| टोली नं. २४ | राजनीतिक दल पारदर्शी र लोकतान्त्रिक हुनुपर्ने, संविधानका आधारभूत संरचना शाश्वत तत्वहरु संविधानको प्रस्तावनामा उल्लेख गर्नुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. २५ | राज्यको सार्वभौमसत्ता, अखण्डता, राष्ट्रियताप्रति सजग र सुरक्षा प्रदान गर्न सक्षम सरकार हुनुपर्ने, अन्तर्राष्ट्रिय सम्झौता, पञ्चशीलको सिद्धान्त, संयुक्त राष्ट्रसङ्घको वडापत्र, सेना तथा मुद्रा केन्द्रीय सरकारको मातहतमा हुनुपर्ने, गाईलाई राष्ट्रिय जनावर बनाइनु पर्छ भन्ने मतका साथै केही जनताको बनाउन नहुने मतसमेत रहेको । |
| टोली नं. २७ | राष्ट्रिय एकता र अक्षुण्णतालाई कायम राख्न सक्ने लोकतान्त्रिक पद्धति र मान्यतालाई आत्मसात् गर्दै सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक संविधान बन्नुपर्ने । |
| टोली नं. २९ | राष्ट्रिय जनावर हात्ती हुनुपर्ने, राजनीतिक दलको आय व्ययको लेखापढी छुट्टै निकायबाट हुनुपर्ने, देशलाई विखण्डन गर्ने खालको संविधान बन्न नहुने । |
| टोली नं. ३० | भेदभावरहित संविधान निर्माण हुनुपर्ने । सरकार जनतामुखी हुनुपर्ने । संविधानले अहिले व्याप्त रहेको अशान्तिलाई शान्तिमा रूपान्तरण गर्नुपर्ने । पारिवारिक, प्रतिगमनकारी तथा साम्प्रदायिक दल खोल्न प्रतिबन्ध हुनुपर्ने । देशमा पार्टी गठन गर्दा निश्चित मापदण्ड हुनुपर्ने । संविधानका शब्दावलीहरु दोहोरो अर्थ नलाग्ने गरी स्पष्ट हुने गरी लेखिनु पर्ने । नेपाली भाषालाई राष्ट्रभाषा र मातृभाषालाई सम्पर्क भाषाको मान्यता हुनुपर्ने । |
| टोली नं. ३२ | **प्रस्तावनामा निम्न कुराहरू उल्लेख हुनुपर्नेः** उत्पीडित जाति, आदिवासी जनजाति, वर्ग, क्षेत्र, लिङ्ग र समुदायका समस्या, सार्वभौमिकता, भौगोलिक अखण्डता, स्थानीय स्वतन्त्रता र राष्ट्रिय एकता अक्षुण्ण राख्ने, जनसंख्याको आधारमा समानुपातिक सहभागिता अनुरूपको न्यायमूलक समाजको प्रत्याभूति दिने, सम्पूर्ण नेपाली जनता शान्तिपूर्ण बाँच्न पाउने अधिकारको ग्यारेण्टी गर्नुपर्ने, नेपाल एक सार्वभौमसत्तासम्पन्न, स्वतन्त्र र अविभाज्य धर्मनिरपेक्ष सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक राज्य हुनुपर्ने ।<br><br>**प्रस्तावनाका आधारभूत मूल्य मान्यताहरूमा निम्न कुराहरू उल्लेख हुनुपर्नेः** हिमाल, पहाड र तराईका विभिन्न उत्पीडित जाति जनजातिहरूको आत्मनिर्णयको अधिकारको स्वायत्तताको आधारमा राज्यको पुनर्संरचना अनुरूप सङ्घात्मक राज्यप्रणली अङ्गीकार गर्दै बहुदलीय लोकतान्त्रिक व्यवस्था, नागरिक अधिकार, मानव अधिकार, बालिग मताधिकार, आवधिक निर्वाचन, प्रेस स्वतन्त्रता, स्वतन्त्र न्यायपालिका तथा कानूनी राज्यको अवधारणा लगायत लोकतान्त्रिक मूल्यमान्यताप्रति पूर्ण प्रतिबद्धता हुनुपर्ने, राज्यको सम्पूर्ण शक्तिको स्रोत नेपाली जनतामात्र हुन् । छुवाछूत मुक्त राज्य र जनसंख्याको आधारमा समान सहभागिताको अधिकार ग्यारेण्टी हुन पर्ने ।<br><br>**जनतामा नीहित सार्वभौमसत्ता र राजकीयशक्तिको प्रयोग सम्बन्धमाः** नेपालको सार्वभौमसत्ता र राजकीयसत्ता नेपाली जनतामा नीहित रहनेछ, जसको प्रयोग नेपाली जनताले नै गर्नेछन्, उत्पीडित जाति र क्षेत्रको आत्मनिर्णयको अधिकार र स्वायत्त शासनको नीतिका आधारमा राज्यको पुनर्संरचनामार्फत् सङ्घात्मक राज्यप्रणाली अङ्गीकार गर्ने । जनतामा नीहित सार्वभौमसत्ता र राजकीय शक्तिको |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | प्रयोग जननिर्वाचित संस्था (जस्तै व्यवस्थापिका) को सल्लाह र परामर्श बमोजिम मन्त्रिपरिषद्बाट हुनुपर्ने र सोको राष्ट्रपतिबाट स्वीकृतिपश्चात् लागू गर्न सकिने व्यवस्था हुनुपर्ने ।<br><br>**राष्ट्रको परिभाषा सम्बन्धमाः** नेपाल सार्वभौमसत्ता र राजकीयसत्ता सम्पन्न बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक विविधतायुक्त विशेषता रहेको राष्ट्रिय स्वतन्त्रता र अखण्डता, राष्ट्रियहित र सम्वृद्धिप्रति एकताको सूत्रमा आबद्ध सबै नेपाली समग्रमा राष्ट्र हो ।<br><br>**राज्यको विशेषता सम्बन्धमाः** विविधतामा एकता भएको, धर्मनिरपेक्ष र पूर्ण लोकतान्त्रिक सङ्घीय राज्य ।<br><br>**राष्ट्रिय फूल र चिन्ह सम्बन्धमाः** धेरैले हालकै हुनुपर्ने भनेको, केहीले शान्तिको प्रतीक नीलो रंगलाई राष्ट्रिय चिन्ह मान्नु पर्ने मत प्रकट भएको ।<br><br>**संविधान संशोधन सम्बन्धमाः** संविधान संशोधन केन्द्रीय (सङ्घीय) व्यवस्थापिकाको सम्पूर्ण सदस्य संख्याको दुईतिहाई बहुमतबाट मात्र हुने तथा प्रस्तावना विपरीत संविधान संशोधन नहुने । समयसापेक्ष अनुसार राष्ट्रिय महत्वका तथा सङ्घीय व्यवस्थापिकाले निर्णय गर्न नसकेका जटिल विषयहरूमा संशोधन गर्नु परेमा जनमतसङ्ग्रहमा जानुपर्ने ।<br><br>**सङ्कटकाल घोषणा सम्बन्धमाः** सङ्कटकालीन अवस्था घोषणाको अनुमोदन वा स्वीकृति सङ्घीय व्यवस्थापिका वा जनप्रतिनिधिमूलक संस्थाबाट १ वा ३ वा ६ महिनाभित्र गराउनु पर्ने ।<br><br>**नयाँ संविधानको नाम सम्बन्धमाः** गणतन्त्र नेपालको पहिलो जनसंविधान, नेपालको संविधान, २०६७, नयाँ नेपालको संविधान, नेपालको नयाँ जनसंविधान, जनताको पहिलो संविधान, २०६७ आदि सुझाव आएको । |
| टोली नं. ३३ | सर्वहारा वर्गको हितलाई हेरेर संविधान बनाइनु पर्ने, महिलामैत्री संविधान निर्माण गरिनुपर्ने, कुनै पनि किसिमको दमन, शोषण र उत्पीडनविरूद्ध विद्रोह गर्न पाउने अधिकारलाई प्रस्तावनामा उल्लेख गर्नुपर्ने, प्रस्तावनामा सामन्तवाद साम्राज्यवाद विरोधी जनयुद्ध र जनआन्दोलनको उपलब्धि भनेर लेखिनु पर्ने, नेपाल राष्ट्रको परिभाषामा विभिन्न भाषा, लिपि, धर्म-संस्कृति भएका जाति र क्षेत्रको सम्बोधन गर्ने आधार बनेका जातीय क्षेत्रीय स्वायत्तता रहेका प्रदेशहरु समग्रमा नेपाल राष्ट्र हो भन्ने कुरा उल्लेख हुनुपर्ने, राष्ट्रिय जनावर गाई नभई अन्य तोकिनु पर्ने । |
| टोली नं. ३४ | संविधानमा अन्य आयोगजस्तै शिक्षा आयोगको व्यवस्था गरिनुपर्ने । लोकसेवा आयोग पारदर्शी हुनुपर्ने । मानव अधिकारको नाममा विभेद गर्न नहुने । प्रत्येक जिल्लामा लोकसेवा आयोग स्थापना हुनु पर्ने । स्थानीय व्यक्तिलाई परीक्षामा प्राथमिकता दिइनु पर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ३५ | देशमा पुनः द्वन्द्व हुने अवस्थाको सिर्जना नहुने गरी संविधान निर्माण गरिनुपर्ने, लामा/भोटे जातिहरूले आफ्नो संस्कृति अनुसार गाईको मासु खाने हुनाले गाईलाई राष्ट्रिय जनावरका रूपमा नराखियोस् भन्ने माग राखेकाले सो सम्बन्धमा संविधानमा उचित व्यवस्था गर्न आवश्यक देखिन्छ, हुम्लाका केही उत्तरीक्षेत्रमा पर्ने गा.वि.स. लगायत नेपालको उत्तरी क्षेत्रमा हालसम्म पनि बहुपति प्रथा कायमै रहेको पाइयो त्यसैले यो प्रथाका साथै बहुपत्नी प्रथा समेतलाई संवैधानिक बन्देज लगाउन आवश्यक देखिन्छ । |
| टोली नं. ३६ | भावी नेपालको संविधानको नाम "नेपालको लोकतान्त्रिक संविधान, २०६६" राख्नुपर्ने, राष्ट्रको तर्फबाट उपाधि, सम्मान र विभूषण सङ्घीय सरकारको सिफारिशमा केन्द्र सरकारले दिनुपर्ने, भावी नेपालको संविधानमा अधिकतम ६ महिनामात्र सङ्कटकाल घोषणा गर्न पाउने व्यवस्था हुनुपर्ने, बाधा अड्काउ फुकाउने अधिकार मन्त्रिपरिषद्को निर्णयमा प्रधानमन्त्रीले सिफारिश गरेपछि राष्ट्रपतिले गर्नुपर्ने, राजनीतिक दलहरूको आय-व्ययको पारदर्शिता सम्बन्धमा संविधानमा नै स्पष्ट उल्लेख गरिनुपर्ने, राजनीतिक दल खोल्नलाई कुनै एक निर्वाचनसम्म परीक्षणमा राखी भएको निर्वाचनको जम्मा मतसंख्याको १० प्रतिशत मत ल्याउनेलाई मात्र राजनीतिक दलको रूपमा मान्यता दिनुपर्ने, राजनीतिक दलहरूले आफ्नो घोषणापत्र एवं सम्पूर्ण समितिहरूमा स्पष्ट रूपले महिला, आदिवासी, अपाङ्ग एवं अरू विभिन्न जातजातिको समानुपातिक प्रतिनिधित्व गराउनुपर्ने । |
| टोली नं. ३८ | विधिको शासन, राष्ट्रिय एकता र अक्षुणतालाई कायम राख्न सक्ने लोकतान्त्रिक पद्धति र मान्यतालाई आत्मसात् गर्दै जनहितकारी संविधान बन्नुपर्ने । |
| टोली नं. ३९ | सन् १९५० देखिका निःशस्त्र तथा सशस्त्र लोकतान्त्रिक आन्दोलन हुँदै सन् १९९६ देखिको जनयुद्ध तथा माओवादी र ७ राजनीतिक दल बीच १२ बुँदे समझदारीपछि २०६२/६३ को जनआन्दोलनमार्फत् जनताको लोकतान्त्रिक सङ्घीय गणतन्त्र स्थापना संभव भएको विषय संविधानको प्रस्तावनामा उल्लेख गरिनुपर्ने, नेपाल एक स्वतन्त्र, अविभाज्य, सार्वभौम, धर्मनिरपेक्ष, छुवाछूतमुक्त समानतामा आधारित समावेशी सङ्घीय लोकतान्त्रिक गणतन्त्र नेपाल भन्ने कुरा प्रस्तावनामा उल्लेख गरिनुपर्ने, क्षेत्रीय सन्तुलनको व्यवस्थापन अवधारणामा उल्लेख हुनुपर्ने । |

## ३.२.२. संवैधानिक निकायको संरचना निर्धारण समितिको कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १ | महिला, दलित, जनजाति, श्रमिक, मुस्लिम लगायतका आयोग थप्नुपर्ने । शिक्षा सेवा आयोगलाई संवैधानिक आयोगका रूपमा विकास गरिनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. २ | विवाद समाधान आयोग बनाइनु पर्ने । लोकसेवा आयोग, निर्वाचन आयोग, अख्तियार दुरूपयोग अनुसन्धान आयोग, राष्ट्रिय मानव अधिकार आयोग, महालेखापरीक्षक र महान्यायाधिवक्तालाई निरन्तरता दिई नियुक्ति र वर्खासी प्रक्रिया एउटै बनाइनु पर्ने । महिला आयोग, दलित आयोग, जनजाति आयोगलाई संवैधानिक आयोग बनाउनु पर्दछ । राज्यका सबै निकायहरूमा महिला, दलित, जनजाति आदिवासीको समानुपातिक नियुक्ति हुनुपर्दछ । |
| टोली नं. ३ | सुशासन तथा लोककल्याणकारी राज्यको अवधारणालाई साकार पार्ने गरी संवैधानिक निकायको संरचना निर्धारण गरिनुपर्ने । |
| टोली नं. ६ | हाल भईरहेका संरचनाहरूलाई जनउत्तरदायी, पारदर्शी, वैज्ञानिक, स्वतन्त्र र धाँधलीरहित हुनेगरी व्यवस्था गरिनुपर्ने । हालको संवैधानिक निकायको अलावा राष्ट्रिय महिला आयोग, राष्ट्रिय दलित आयोग, राष्ट्रिय मुस्लिम आयोग, राष्ट्रिय जनजाति आयोगजस्ता आयोगहरु गठन गरिनुपर्छ भन्ने मागहरु आएकाले ती निकायहरूको पनि संविधानमा उचित तवरले सम्बोधन हुनुपर्ने । |
| टोली नं. ७ | जनताहरूले यस विषयमा अनभिज्ञ भएको जानकारी दिएको विभिन्न आयोगको संविधानमा उल्लेख गर्नुपर्ने । संवैधानिक निकायमा गरिने नियुक्ति राजनीतिक भागबण्डा नभई राजनीतिक दलबाट प्रभावित नभएको स्वतन्त्र व्यक्तिलाई प्राथमिकता दिनु पर्ने । |
| टोली नं. ८ | शिक्षकहरूको निष्पक्ष र प्रतिस्पर्धात्मक आधारमा चयन गर्नको लागि छुट्टै संवैधानिक आयोगको व्यवस्था गरिनुपर्ने, शिक्षण पेशालाई मर्यादित बनाइनु पर्ने र निजामती कर्मचारीसरहको सुविधाको व्यवस्था हुनुपर्ने, प्राकृतिक स्रोत व्यवस्थापन आयोग संविधानमा थप गर्नुपर्ने, संवैधानिक निकायमा गरिने नियुक्तिमा राजनीतिक भागबण्डा नभई स्वच्छ रूपमा उचित र सक्षम व्यक्तिमात्र नियुक्ति हुनसक्ने संयन्त्रको निर्माण हुनुपर्ने । महिला आयोगलाई संवैधानिक आयोग बनाउनु पर्ने । |
| टोली नं. ९ | हाल रहेका संवैधानिक निकायहरूमध्ये लोकसेवा आयोगलाई जिल्लास्तरसम्म विस्तार गरिनुपर्छ । अख्तियार दुरूपयोग अनुसन्धान आयोगलाई अधिकारसम्पन्न गरी स्थानीयस्तरसम्म विस्तार गरिनुपर्छ । |
| टोली नं. १२ | संवैधानिक निकायको संरचना केन्द्रीय र प्रान्तीय हुनुपर्ने । पदाधिकारी नियुक्ति गर्दा राजनीतिक भागबण्डाभन्दा योग्य र सक्षम व्यक्तिलाई नियुक्ति गर्नुपर्ने । |
| टोली नं. १३ | विशेष अदालत, महिला सेवा आयोग, सीमा अनुसन्धान आयोग, न्यायिक आयोग थप गर्नुपर्ने संवैधानिक निकाय, लोकसेवा आयोग, निर्वाचन आयोग, अख्तियार दुरूपयोग अनुसन्धान आयोग, राष्ट्रिय मानव अधिकार आयोग, महालेखापरीक्षक केन्द्र र प्रान्तमा रहनु पर्दछ । उक्त संरचनामा नियुक्त गर्दा महिला, दलित, जनजाति आदिवासीको समानुपातिक नियुक्ति हुनुपर्दछ । |
| टोली नं. १७ | शिक्षा, अपाङ्ग, महिला, दलित आयोग संवैधानिक आयोगको रूपमा राख्नु पर्छ । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १८ | संवैधानिक पदमा नियुक्ति गर्दा पार्टीको भागबण्डा लगाएर गर्ने पद्धतिको अन्त्य गर्नुपर्ने । योग्य, सक्षम, स्वतन्त्र व्यक्तिलाई नियुक्ति गर्ने प्रावधान राख्ने । संसदीय सुनुवाइमा नागरिक समाजको प्रतिनिधित्व राख्ने । संवैधानिक आयोगले दिएका सुझाव सरकारले कार्यान्वयन गर्नुपर्ने प्रावधान राख्ने । संसदीय सुनुवाइ समितिले सिफारिश अनुमोदन नगरेकालाई नियुक्ति गर्न नमिल्ने प्रावधान राख्ने । संवैधानिक निकायका प्रतिवेदन व्यवस्थापिकामा पेश गर्ने र ती प्रतिवेदनमाथि छलफल गरी व्यवस्थापिकाले दिएका निर्देशन सरकार र ती निकायले कार्यान्वयन गर्नुपर्ने । सार्वजनिक पदमा बस्ने व्यक्तिको सम्पति सार्वजनिक हुनुपर्ने । |
| टोली नं. १९ | औचित्य र आवश्यकताको आधारमा मात्र संवैधानिक अङ्गको पहिचान र स्वरूप निर्धारण गरिनुपर्ने, लोक कल्याणकारी राज्य र सुशासनको अनुभूति हुने गरी संवैधानिक निकायको संरचना निर्धारण गरिनुपर्ने । |
| टोली नं. २० | अल्पसंख्यक तथा सीमान्तकृत आयोग, मुस्लिम आयोग, दलित आयोग र राष्ट्रिय महिला आयोग गठन हुनुपर्ने । |
| टोली नं. २१ | **भावी संवैधानिक आयोग एवं निकायहरू**<br>लोकसेवा आयोग, निर्वाचन आयोग, अख्तियार दुरूपयोग अनुसन्धान आयोग, राष्ट्रिय मानव अधिकार आयोग, महालेखापरीक्षक, राष्ट्रिय महिला आयोग, शिक्षा सेवा आयोग, राष्ट्रिय दलित आयोग, राष्ट्रिय जनजाति आदिवासी आयोग, राष्ट्रिय मुस्लिम आयोग, मधेसी दलित र पिछडिएको वर्ग सम्बन्धी आयोग, अपाङ्ग, अशक्त, तेस्रो लिङ्गी सम्बन्धी आयोग, मजदुर आयोग, कृषक आयोग हुनुपर्ने । |
| टोली नं. २२ | महिला आयोग, शिक्षा सेवा आयोग, मुस्लिम आयोग र दलित आयोग बनाइनुपर्ने । |
| टोली नं. २३ | महिला आयोग र दलित आयोग थप गर्नुपर्ने, शिक्षा आयोगको व्यवस्था गरिनुपर्ने, संवैधानिक निकायमा गरिने नियुक्ति राजनीतिक भागबण्डाको विषय नवनाई पेशागत विशेषज्ञताको आधारमा गर्नुपर्ने । |
| टोली नं. २४ | महिला आयोग, दलित आयोग र मुस्लिम आयोग संविधानमा थप गर्नुपर्ने । संवैधानिक निकायमा गरिने नियुक्ति राजनीतिक भागबण्डा नभई राजनीतिक दलबाट प्रभावित नभएको स्वतन्त्र व्यक्तिमात्र हुनुपर्ने । |
| टोली नं. २५ | **निम्न सशक्त/शक्तिशाली थप संवैधानिक निकायहरूको व्यवस्था हुनुपर्ने**<br>श्रमिक आयोग, बाल आयोग, दलित आयोग, महिला आयोग, भूमिसुधार आयोग, जनजाति आयोग, मुस्लिम आयोग, शिक्षा आयोग, अख्तियार दुरूपयोग अनुसन्धान आयोगलाई अधिकारसम्पन्न बनाई राजनीति तथा न्यायकर्मी र सेना सम्बन्धी भ्रष्टाचारसमेत हेर्ने क्षेत्राधिकार तोकिनुपर्ने । |
| टोली नं. २७ | सुशासन तथा लोककल्याणकारी राज्यको अवधारणालाई साकार पार्ने गरी संवैधानिक निकायको संरचना निर्धारण गरिनुपर्ने । |
| टोली नं. ३० | मुस्लिम उत्थान राष्ट्रिय आयोगको गठन हुनुपर्ने । राष्ट्रिय महिला आयोग र राष्ट्रिय दलित आयोगलाई संवैधानिक आयोग बनाउनु पर्छ । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ३२ | अख्तियार दुरूपयोग अनुसन्धान आयोगलाई राजनीतिक पदहरु (मन्त्री र संसद सदस्य), न्यायकर्मी तथा सैनिक सबैको भ्रष्टाचार र अनियमितताको छानविन गर्ने अधिकार दिनुपर्छ । अन्तरिम संविधानले व्यवस्था गरेका निकायहरूका अतिरिक्त अधिकारसम्पन्न राष्ट्रिय महिला आयोग, राष्ट्रिय दलित आयोग, राष्ट्रिय जनजाति आयोग तथा उच्चस्तरीय राज्यको पुनर्संरचना आयोगलाई संवैधानिक निकायको रूपमा स्थापना गरिनु पर्दछ । |
| टोली नं. ३३ | लोकसेवा आयोगको कार्यालय प्रत्येक जिल्लामा हुनुपर्ने, राष्ट्रका अन्य भाषा र लिपिको माध्यमबाट पनि लोकसेवा आयोगको परीक्षा दिने व्यवस्था हुनुपर्ने । |
| टोली नं. ३४ | संविधानमा अन्य आयोग जस्तै शिक्षा आयोगको व्यवस्था गरिनुपर्ने । लोकसेवा आयोग पारदर्शी हुनुपर्ने । मानव अधिकारको नाममा विभेद गर्न नहुने । प्रत्येक जिल्लामा लोकसेवा आयोगको कार्यालय स्थापना हुनुपर्ने । स्थानीय व्यक्तिलाई परीक्षामा प्राथमिकता दिइनुपर्ने । |
| टोली नं. ३५ | संवैधानिक निकायहरूको संरचना तयार पार्दा नेपालका जनताको आर्थिक, सामाजिक, शैक्षिक विषयहरूको सूचकहरूको आधारमा वर्गीयतालाई सम्बोधन गर्ने गरी विविधता कायम गरिनु पर्दछ । |
| टोली नं. ३८ | सुशासन तथा लोककल्याणकारी राज्यको अवधारणालाई साकार पार्ने गरी संवैधानिक निकायको संरचना निर्धारण गरिनुपर्ने । |
| टोली नं. ३९ | राष्ट्रिय महिला आयोग, राष्ट्रिय दलित आयोग संवैधानिक हुनुपर्ने । राष्ट्रिय मानवअधिकार आयोगलाई विस्तार गरी महिला, दलित, जनजाति, लगायतका आयोगहरूलाई एउटै छाता आयोगको रूपमा विकास गर्नुपर्ने । उच्चशिक्षालाई स्थापना र व्यवस्थापनका निमित्त राष्ट्रिय उच्चशिक्षा आयोग गठन गरिनुपर्ने । शिक्षा सेवा आयोग हुनुपर्ने र शिक्षकको सेवा सुविधा र व्यवस्थापन निजामती कर्मचारीसरह हुनुपर्ने । राष्ट्रिय सुरक्षा सेवा आयोगमार्फत् सुरक्षानिकाय व्यवस्थापन गरिनुपर्ने । सेनालाई सम्वेदनशील निकायको रूपमा राखी दल वा अन्य कुनै पक्षको प्रभावबाट टाढै राखिनु पर्ने । राष्ट्रिय अनुसन्धान सेवालाई प्रभावकारी बनाइनुपर्ने । लोकसेवा आयोगजस्ता निकायलाई राज्य एवं स्थानीय निकायसम्म विस्तार गरिनुपर्ने । अख्तियार दुरूपयोग अनुसन्धान आयोगको संरचना स्थानीयतहसम्म व्यवस्थित गर्नु पर्ने । समावेशी आयोग बनाइनुपर्ने । कृषि तथा भूमिव्यवस्थापनका निमित्त संवैधानिक आयोग बनाइनु पर्ने । |

## ३.२.३. अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समितिको कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १ | अल्पसंख्यक समुदायलाई सकारात्मक विभेद गरी विशेष संरक्षण गरिनुपर्ने, सीमान्तकृत र लोपोन्मुख जातिको संरक्षण, सम्वर्द्धन र उत्थान हुनुपर्ने, वास्तविक सुकुम्बासी पहिचान गरी समस्याको समाधान गर्नुपर्ने, जनजाति, दलित, आदिवासी, अल्पसंख्यक, मुस्लिम, सीमान्तकृत, अतिसीमान्तकृत र लोपोन्मुख जातिहरूको लागि आरक्षणको व्यवस्था हुनुपर्ने, आदिवासी जनजाति सम्बन्धी अन्तर्राष्ट्रिय श्रम सङ्गठनको विधानको धारा १६९ मा व्यवस्थित अधिकारलाई संवैधानिक रूपमा सुनिश्चितता प्रदान गर्नुपर्ने, प्रत्येक जातिको जातीय पहिचानको व्यवस्था गर्नुपर्ने, एक जातिले अर्को जातिलाई सम्मान गर्ने, जातीय सहिष्णुताको संस्कृति निर्माण गर्नुपर्ने । |
| टोली नं. २ | आर्थिक, सामाजिक, शैक्षिक, धार्मिक, राजनीतिक रूपमा पिछडिएका वा पछाडि पारिएका समुदाय, अल्पसंख्यक रूपमा रहेका कुनै पनि क्षेत्रमा पहुँच नभएका र दलित समुदायका जनताहरूलाई आर्थिक, सामाजिक, राजनीतिक, प्रशासनिक तथा राज्यका स्रोत र साधनमा पहुंचयोग्य बनाउने, सो गर्नका लागि निश्चित अवधिका लागि सकारात्मक विभेदको नीति अवलम्बन गर्ने, सकारात्मक विभेदको नीति अन्तर्गतका कोटालाई ती वर्गका टाठा बाठाले मात्र प्राप्त गर्ने प्रवृत्ति रोक्ने विधि र संयन्त्र निर्माण गर्ने । |
| टोली नं. ३ | सकारात्मक विभेदको सिद्धान्तका आधारमा राजनीतिक तथा आर्थिक रूपमा कमजोर अल्पसंख्यक तथा सीमान्तकृत समुदायको विकासका लागि विशेष व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ५ | महिला, दलित, जनजाति, अल्पसंख्यक, मुसलमान र भूमि सम्बन्धी संवैधानिक आयोगको व्यवस्था हुनुपर्ने, सम्पूर्ण असमानता, जातीय भेदभाव र छुवाछूत तथा सबै खाले उत्पीडनको अन्त्य सहित समान अवसरको ग्यारेन्टीको संवैधानिक व्यवस्था हुनुपर्ने, एकल महिलाका लागि संविधानमा विशेष व्यवस्था हुनुपर्ने । |
| टोली नं. ६ | अल्पसंख्यक तथा सीमान्तकृत समुदायभित्र आर्थिक रूपले कमजोर रहेका विभिन्न जात, जाति लगायतका वर्ग र समुदायको विकासका लागि राज्यले विशेष व्यवस्था गर्नुपर्ने, सकारात्मक विभेदको सिद्धान्तका आधारमा यस्ता वर्गको लागि राज्यले विशेष अधिकार सृजना गरी समावेशीकरणलाई आधार मान्नु पर्ने । |
| टोली नं. ७ | राज्यका हरेकक्षेत्रमा वा अङ्गमा अल्पसंख्यक तथा सीमान्तकृत समुदायको उपस्थितिको सुनिश्चितता हुनुपर्ने, अन्यायमा परेका वर्ग र समुदायको हक हित समेतलाई ध्यानमा राखी व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ८ | अल्पसंख्यक तथा सीमान्तकृत समुदायको अग्राधिकार सहितको विशेषाधिकारको सुनिश्चितता हुनुपर्ने, आन्दोलनकारीको मात्र माग होइन कि वास्तविक रूपमा पछि परेका र पारिएका, अन्यायमा परेका वर्ग र समुदायका हक हितसमेतलाई ख्याल राख्न सक्ने संयन्त्रको व्यवस्था हुनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ११ | राष्ट्रिय एवं क्षेत्रीय मूलप्रवाहीकरणमा नपरेका समुदायलाई अल्पसंख्यक र सीमान्तकृत समुदाय मान्नु पर्ने, यस्ता समुदायको उत्थानको लागि राजनीतिक दल तथा राज्यका हरेक निकायमा समानुपातिक प्रतिनिधित्व हुनुपर्ने, यी समुदायको भाषा, संस्कृतिको संरक्षण हुनुपर्ने, अपाङ्गता भएका व्यक्ति र अन्तर्जातीय विवाह गर्ने व्यक्तिलाई विशेष संरक्षण गरिनुपर्ने, अपाङ्गता अनुकूलको शिक्षा र रोजगारीको व्यवस्था गरिनुपर्ने, यस्ता समुदायलाई आरक्षणको व्यवस्था हुनुपर्ने । |
| टोली नं. १२ | अल्पसंख्यक समुदायको हक, अधिकारलाई संविधानमा विशेष स्थान दिएर आरक्षणको व्यवस्था गर्नुपर्ने, राज्यको संसद, निजामती सेवा, सेना लगायतका विभिन्न क्षेत्रमा विशेष व्यवस्था हुनुपर्ने, तेश्रोलिङ्गीलाई पुरुष महिला सरहको पहिचान र मान्यता दिनु पर्ने । |
| टोली नं. १३ | दलित समुदायलाई पछाडि पारिएको वा पिछडिएको जात जातिमा राखिनु पर्ने, आदिवासी जनजाति, दलित, अपाङ्गलाई अल्पसंख्यक समुदायमा राखिनु पर्ने, अल्पसंख्यक जातिहरूलाई आरक्षणको व्यवस्था हुनुपर्ने, ब्राम्हणहरु बहुसंख्यक समुदायमा रहने, अल्पसंख्यक, सीमान्तकृत तथा वहिष्करणमा पारिएकाको समस्या आर्थिक, सामाजिक, शैक्षिक पछौटेपन हटाएर समाधान गरिनुपर्ने, वहिष्करणमा परेका समुदायभित्र आर्थिक, सामाजिक, शैक्षिक, राजनीतिक, रोजगारीमा पछाडि पारिएका महिला, दलित, आदिवासी, मधेसी, लैङ्गिक, यौनिक वर्ग र समुदाय समावेश हुनुपर्ने । |
| टोली नं. १५ | पहरी जातिका लागि संविधानमा विशेष व्यवस्था गरिनुपर्ने, संविधानमा अल्पसंख्यक पहरी जातिको हक, अधिकारको सुनिश्चितताका लागि शिक्षा, स्वास्थ्यमा निश्चित कोटा उपलब्ध गराइनु पर्ने, तेस्रो लिङ्गी आयोग बन्नु पर्ने, पहिचानका आधारमा नागरिकता दिनु पर्ने, तेश्रो लिङ्गीलाई पनि शिक्षा, स्वास्थ्य र रोजगारीको व्यवस्था गरी सम्पत्तिमा हक हुनुपर्ने, तेश्रो लिङ्गीलाई पनि अन्य नागरिकलाई जस्तै विवाहको अधिकार हुनुपर्ने । |
| टोली नं. १७ | महिला, दलित, पिछडिएका सीमान्तकृत जनजातिलाई विशेष अधिकारको व्यवस्था सुनिश्चित होस्, अल्पसंख्यक सीमान्तकृत जातिले आरक्षण पाउनु पर्ने, दलितलाई रोजगारीको व्यवस्था हुनुपर्ने, छुवाछूतको भेदभाव गर्नेलाई मानवता विरोधी अपराधका रूपमा दण्डको व्यवस्था हुनुपर्ने, अल्पसंख्यक जनताको लागि राज्यले छुट्टै कार्यक्रम ल्याएर जीवनस्तर उठाउने व्यवस्था गर्नुपर्ने, अल्पसंख्यक तथा सीमान्तकृत जनताले समाजमा सम्मानजनक स्थान पाउने कारण बन्नु पर्ने, अल्पसंख्यक जनतालाई राज्यले गाँस, बास र कपासको लागि विशेष सहुलियत प्रदान गर्ने खाले कानून बनोस्, तामाङ्ग, शेर्पा, ह्याल्मो र थामीहरूका लागि मातृभाषामा शिक्षाको व्यवस्था गर्नुपर्ने, अल्पसंख्यक तथा सीमान्तकृतहरूका लागि विशेषाधिकार सुरक्षित हुनुपर्ने, नेपालको जनसंख्याको ०.८ प्रतिशत रहेको र धर्म तथा संस्कृति फरक भएका सन्यासीहरूलाई पनि अल्पसंख्यक सूचीमा सूचीकृत गर्नुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १८ | अल्पसंख्यक, सीमान्तकृत, लोपोन्मुख जातिका लागि शिक्षा, स्वास्थ्य, रोजगारीका क्षेत्रमा आरक्षण र विशेषाधिकार दिइनु पर्ने र उनीहरूको हक, अधिकारको संरक्षण राज्यले गर्नुपर्ने, उनीहरूको भाषा, संस्कृतिको संरक्षण गर्न सरकारले राष्ट्रिय भाषा–संस्कृतिमञ्च गठन गरी कार्यसञ्चालनमा ल्याउनु पर्ने । |
| टोली नं. १९ | अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक, अधिकार संरक्षण गर्नका लागि सकारात्मक विभेदको नीति अख्तियार गर्नुपर्ने । |
| टोली नं. २० | पहिचानको सम्मान, संस्कृतिको संरक्षण, राष्ट्रिय मर्यादा, पेसा व्यावसायमा प्रोत्साहन र प्राथमिकता तथा अधिकार र अवसरमा विशेष व्यवस्था हुनुपर्ने, अल्पसंख्यक तथा सीमान्तकृत समुदायलाई स्नातकतहसम्म निःशुल्क शिक्षाको व्यवस्था गरिनुपर्ने, मुस्लिम लगायतका अल्पसंख्यक तथा सीमान्तकृत समुदायका लागि आयोग बनाउनु पर्ने, छुवाछूत प्रथालाई मानवता विरोधी र राज्यविरूद्धको अपराधको रूपमा लिई कडा कारवाही गरी त्यसरी गरिएको कारवाही सार्वजनिक गरिनुपर्ने, चेपाङ्, दराई, बराम, माझी, कुमाल, मुस्लिम लगायतका अल्पसंख्यक समुदायलाई स्नातकोत्तरतहसम्म र महिला र अन्य आदिवासीलाई स्नातकतहसम्म निःशुल्क शिक्षा प्रदान गर्नुपर्ने, अल्पसंख्यक समुदायलाई प्राविधिक शिक्षामा विशेष सुविधा दिनु पर्ने, राजनीतिक दलहरूको हरेक तहको साङ्गठनिक संरचनामा अल्पसंख्यक तथा सीमान्तकृत समुदायको लागि समानुपातिक प्रतिनिधित्वको सुनिश्चितता हुनुपर्ने, सीमान्तकृत र आदिवासी जनजाति वर्गको लागि समानुपातिक प्रतिनिधित्व हुने मिश्रित निर्वाचनप्रणालीको व्यवस्था हुनुपर्ने । |
| टोली नं. २१ | आर्थिक, सामाजिक र शैक्षिक पछौटेपन एवं जातीय छुवाछूत र लैङ्गिक भेदभाव अल्पसंख्यक तथा सीमान्तकृत समुदाय पहिचानका आधार हुन् । यी समुदायको समस्या समाधानका आधारहरू निम्न हुन सक्दछन् :–<br><br>आर्थिक, सामाजिक र शैक्षिक पछौटेपन निवारण सम्बन्धी कार्ययोजना बनाएर, छुवाछूत, लैङ्गिक लगायतका असमानता हटाएर, मधेशी, जनजाति, आदिवासी, महिला, दलित, पिछडिएको वर्ग, समुदाय, मुस्लिम, बालक, वृद्धवृद्धा, अतिसीमान्तकृत र लोपोन्मुख वर्ग र समुदायको लागि विशेष अधिकार र आरक्षणको व्यवस्था गरेर, अल्पसंख्यक तथा सीमान्तकृत लगायत सबै विपन्न वर्गले राष्ट्रिय साधन र स्रोत तथा राज्यसत्तामा सहज पहुँच पाउने व्यवस्था गरेर, जातीय, धार्मिक, भाषिक, लैङ्गिक र वर्गीय आधारमा भेदभाव नहुने व्यवस्था गरेर, सकारात्मक विभेदको नीति ल्याएर, सीमान्तकृत समुदायको हक, हित संरक्षण सम्बन्धी नीति र कार्यक्रम ल्याएर, सबै पछाडि पारिएका जाति, वर्ग वा समुदायको हक, हित संरक्षण गर्न सकारात्मक विभेदको नीति ल्याई अन्य सरह अधिकार प्रदान गरेर, उनीहरूलाई राजनीतिक, प्रशासनिक लगायतका सबै तहमा आरक्षणकोव्यवस्था गरेर, उनीहरूलाई निःशुल्क शिक्षा, स्वास्थ्य, र रोजगारी उपलब्ध गराएर । |
| टोली नं. २२ | राज्यको पुर्नसंरचना पछि अल्पसंख्यक समुदायको पुनः परिभाषा गरिनुपर्ने, अल्पसंख्यक समुदायलाई सकारात्मक विभेद गरी विशेष संरक्षण प्रदान गर्नुपर्ने, लोपोन्मुख समुदायलाई विशेष संरक्षण गरिनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. २४ | विशेष अधिकार र राज्यका हरेकक्षेत्रमा वा अङ्गमा अल्पसंख्यक तथा सीमान्तकृत समुदायको उपस्थिति सुनिश्चितता हुनुपर्ने, आन्दोलनकारीको मात्र माग होइन कि वास्तविक रूपमा पछि परेका सबैको हक, हितलाई ध्यानमा राखिनु पर्ने । |
| टोली नं. २५ | सीमान्तकृत वर्गको लागि उत्तरदायी सरकार र समानुपातिक निर्वाचन हुनुपर्ने, जनजाति, दलित र विपन्न वर्गको बसोबास क्षेत्रमा भौतिक पूर्वाधार विकासको लागि विशेष प्राथमिकता दिनु पर्ने, दलितलाई विशेषाधिकार कार्ड र ३० प्रतिशत आरक्षणको व्यवस्था तथा केन्द्रदेखि स्थानीय तहसम्म दलित विकास कोषको व्यवस्था गर्नुपर्ने, मातृभाषामा विश्वविद्यालय खोल्नु पर्ने । |
| टोली नं. २६ | नयाँ बन्ने संविधानमा लैङ्गिक समानताका साथै आदिवासी, जनजाति, मधेसी, मुस्लिम, दलित र पिछडिएको महिलाको उत्थानका लागि विशेष अधिकार सहितको व्यवस्था हुनुपर्ने । |
| टोली नं. २७ | सकारात्मक विभेदको सिद्धान्तका आधारमा आर्थिक रूपमा कमजोर अल्पसंख्यक तथा सीमान्तकृत समुदायको विकासका लागि विशेष व्यवस्था गरिनुपर्ने । |
| टोली नं. २८ | पिछडिएका र सीमान्तकृत वर्गको उत्थानका लागि कटिबद्ध हुनुपर्ने, सबै जात जातिलाई समान अवसर दिइनु पर्ने, महिलालाई विशेष संरक्षण गर्नुपर्ने, दलितलाई सम्बोधन गर्नुपर्ने, गरीब पिछडिएका, सीमान्तकृत वर्गको सम्बन्धमा विशेष व्यवस्था हुनुपर्ने । |
| टोली नं. ३० | राज्य सञ्चालनका प्रत्येक अङ्गमा मुस्लिमवर्गका लागि आरक्षण अथवा विशेष व्यवस्था हुनुपर्ने, राज्यको प्रत्येक संरचनामा मुस्लिम महिलाको प्रतिनिधित्व हुनुपर्ने, बादी समुदायको पहिचान हुनुका साथै राज्यको विभिन्न अङ्गमा प्रतिनिधित्व हुनुपर्ने, सीमान्तकृत जाति कुशवाधियाको पहिचानका साथै शिक्षा, स्वास्थ्य र रोजगारीमा विशेष व्यवस्था हुनुपर्ने, अल्पसंख्यक शिख समुदायको परिचय सहित पहिचान हुनुपर्ने, लोपोन्मुख तथा सीमान्तकृत जातिको लागि राज्यले विशेष व्यवस्था गर्नुपर्ने, लोपोन्मुख घुमन्ते, फिरन्ते जातिको संरक्षण तथा राज्यको मूल प्रवाहमा ल्याउनु पर्ने । |
| टोली नं. ३१ | महिला र दलितहरूको समस्याका बारेमा नयाँ बन्ने संविधानमा विशेषाधिकारको व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ३२ | अल्पसंख्यक, सीमान्तकृत, लोपोन्मुख तथा अतिसीमान्तकृत समुदायले भोग्नु परेका आर्थिक, सामाजिक र शैक्षिक पछौटेपनजस्ता समस्याको समाधानको लागि भेदभाव र असमान व्यवहारको अन्त्य गरी सकारात्मक विभेद तथा आरक्षणको व्यवस्था गरिने कुरा संविधानमा हुनुपर्ने, उनीहरूको उपरोक्त बमोजिमका अधिकारलाई मौलिक अधिकारमै समावेश गरिनुपर्ने, राज्यले जनसंख्याको आधारमा सम्पूर्णक्षेत्रमा समानुपातिक सहभागिताको नीति लिनु पर्ने, विपन्न, पिछडिएका वर्ग तथा अल्पसंख्यक समुदायको लागि विशेष व्यवस्था गरिनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
| --- | --- |
| टोली नं. ३३ | बालविधवालाई भत्ताको व्यवस्था हुनुपर्ने, अपाङ्गको हितका लागि छुट्टै व्यवस्था हुनुपर्ने, कर्णालीका व्यासी, लामा लगायतका अल्पसंख्यक जातिको संरक्षण र विकासको लागि सङ्घीय सरकारले प्रादेशिक सरकारलाई पर्याप्त स्रोत-साधन उपलब्ध गराउने व्यवस्था हुनुपर्ने, बाबु आमा नभएका बालबालिकाको उचित पालन पोषण र शिक्षाको व्यवस्था राज्यले गर्नुपर्ने, राज्यका हरेक निकायमा कर्णालीको प्रतिनिधित्व सुनिश्चित गर्नुपर्ने, अल्पसंख्यक तथा सीमान्तकृत समुदायका लागि विशेष व्यवस्था हुनुपर्ने । |
| टोली नं. ३५ | पिछडिएका वर्ग, भाषा, क्षेत्र, जाति, लिङ्ग र सम्प्रदायलाई माथि उठाउन संविधानमा विशेष व्यवस्था गरिनु पर्दछ, जडान सम्प्रदायका मानिसहरु लामा (भोटे जाति) तथा व्यासीलाई आदिवासी, जनजातिको सूचीमा सूचीकृत गरिनु पर्दछ, कुनै पनि निकायमा समान व्यक्तिलाई दोस्रो पटक आरक्षण राखिनु हुंदैन । |
| टोली नं. ३६ | जातका आधारमा दलित नछुट्याई आर्थिक अवस्थाका आधारमा दलितको वर्गीकरण हुनुपर्ने, जातीय, लैङ्गिक भेदभावको अन्त्यका साथै दलित शब्द संविधानमा राख्न नहुने, महिला सम्बन्धी विद्यमान कानून यथावत् रहनु पर्ने, हलिया, दलित, देउकी, कमैया, सुकुम्बासी, हरूवा, चरूवा लगायतकाको पक्षमा कानून बन्नुपर्ने, विधवा, एकल तथा असहाय महिलाहरूलाई उमेरको हद नलगाई भत्ता लगायतका सुविधा उपलब्ध हुनुपर्ने, वृद्धवृद्धा, अनाथ, अपाङ्ग र दीर्घरोगीको संरक्षण र पालनपोषणको व्यवस्था राज्यले गर्नुपर्ने, दाइजो प्रथा, छुवाछूत, हलिया, कमलरी, बाल शोषण, घरेलु हिंसा, छाउपडी प्रथाको अन्त्य हुनुपर्ने, दलितलाई आरक्षणको व्यवस्था हुनुपर्ने, हरूवा, चरूवा, कमैयाको समस्या समाधान हुनुपर्ने, महिलाको शरीरमा महिलाको अधिकार हुनुपर्ने, लोपोन्मुख जातिका लागि रोजगारीको व्यवस्था हुनुपर्ने, दलितलाई आरक्षण होइन विशेष अधिकार हुनुपर्ने, पिछडिएका वर्गका लागि निःशुल्क रूपमा कानूनी सेवा तथा परामर्शको व्यवस्था हुनुपर्ने, आदिवासी जनजातिको हक, अधिकार, आफ्नो परम्परागत भौगोलिक बसोबास क्षेत्र, धर्म, संस्कृति, इतिहास, मातृभाषा, परम्परागत रीतिरिवाज, सांस्कृतिक पहिचान र सामाजिक संरचनालाई सुनिश्चित पारिनु पर्ने, राज्यका कुनै पनि निकायमा जाति, जनजाति, मधेसी, दलित, महिला तथा पिछडिएको क्षेत्र भनेर आरक्षणको व्यवस्था गरिनु हुंदैन । उनीहरूका लागि अन्य विशेष कार्यक्रमहरु सञ्चालन गरिनु पर्दछ । |
| टोली नं. ३८ | आर्थिक रूपमा कमजोर अल्पसंख्यक तथा सीमान्तकृत समुदायको विकासका लागि राज्यले विशेष व्यवस्था गर्नुपर्ने, सकारात्मक विभेदको सिद्धान्तका आधारमा अल्पसंख्यक तथा सीमान्तकृत वर्गको लागि विशेष अधिकारको व्यवस्था हुनुपर्ने । |
| टोली नं. ४० | छुवाछूत र छाउपडी प्रथाको अन्त्य हुनुपर्ने, राज्यद्वारा पछाडि पारिएका दुर्गम जिल्लाहरूलाई राज्यको मूल प्रवाहमा ल्याउन विशेष कार्यक्रम बनाई सञ्चालन गरिनुपर्ने, दलित, महिला आदि माथिको भेदभाव र सामाजिक पछौटेपनलाई अन्त्य गर्न सबै क्षेत्रमा विशेषाधिकारको व्यवस्थाका साथै भेदभाव विरूद्ध कडा कानूनी व्यवस्था हुनुपर्ने । |

## ३.२.४. सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधारनिर्धारण समितिको कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १ | देवनागरि लिपिमा नेपाली भाषा सरकारी कामकाजको भाषा बनाउनु पर्ने । सबै मातृभाषालाई राष्ट्रभाषाको मान्यता दिनुपर्ने । मातृभाषाहरूलाई राज्यमा सरकारी कामकाजको भाषा बनाइनु पर्ने । राज्य धर्मनिरपेक्ष हुनुपर्ने । जातीय, भाषा, साहित्य, संस्कृतिको उत्थान हुनुपर्ने । त्रिभाषिक नीति अवलम्बन गरिनुपर्ने । |
| टोली नं. २ | राज्यले त्रिभाषिक नीति अवलम्बन गर्नुपर्ने, बहुसंख्यक जनताले बोल्ने भाषा नै सरकारी कामकाजको भाषा हुनुपर्ने । लोपोन्मुख भाषाको संरक्षण र विकासका लागि विशेष व्यवस्था गर्नुपर्ने । अङ्ग्रेजी अन्तर्राष्ट्रिय भाषा हुनुपर्ने । विभिन्न समुदाय र जातजातिमा भएका परम्परागत ज्ञान, मौलिक सीप र कलाको संरक्षण र सम्वर्द्धनका लागि राज्यले विशेष नीति अवलम्बन गर्नुपर्ने । मानव अधिकार, सामाजिक न्याय, स्रोत-साधनमा सबैको पहुँच, सामाजिक विभेदको अन्त्य, सद्भाव, दलित, सीमान्तकृतको सबै क्षेत्रमा पहुँचको सुनिश्चितताका आधारमा सामाजिक ऐक्यबद्धता कायम गर्नुपर्ने । जातीय छुवाछूत र भेदभावलाई जघन्य सामाजिक अपराध मान्नु पर्ने । |
| टोली नं. ३ | सबै भाषा, संस्कृति र धर्मको सम्मान र संरक्षण गर्दै राष्ट्रिय एकतालाई प्रवर्द्धन गर्नुपर्ने । |
| टोली नं. ४ | सबै मातृभाषालाई नेपाली राष्ट्रिय भाषाको मान्यता दिनुपर्ने । लोपोन्मुख भाषाको संरक्षणका लागि राज्यले भाषा प्रतिष्ठानको व्यवस्था गर्नुपर्ने । आफ्नो मातृभाषामा शिक्षा लिन पाउनु पर्ने । छुवाछूत र विभेदकारी व्यवस्थाको अन्त्य गरिनुपर्ने । |
| टोली नं. ५ | १२ कक्षासम्म मातृभाषामा सरकारी तवरबाट पठनपाठन हुनुपर्ने । मातृभाषाको शिक्षालाई अनिवार्य बनाइनुपर्ने । विश्वविद्यालयसम्म विभिन्न जातजातिको भाषाबाट पठनपाठन हुनु पर्ने । त्रिभाषिक नीति लागू हुनुपर्ने (माध्यम–नेपाली, अङ्ग्रेजी–अन्तर्राष्ट्रिय, मातृभाषा–राष्ट्रिय भाषामा), गुठी जग्गा सम्बन्धी (देवता र विद्यालय आदि) को व्यवस्था हुनुपर्ने । |
| टोली नं. ६ | सबैका भाषा, संस्कृति धर्मको सम्मान तथा संरक्षण गर्दै सामाजिक ऐक्यबद्धतालाई प्रोत्साहित गरिनुपर्ने । |
| टोली नं. ७ | पुरातात्विक, धार्मिक सम्पदा र स्थलको संरक्षण गर्नुपर्ने । आफ्नो धर्म, परम्परा रीतिरिवाज अनुसार गर्नुपर्ने । पुराना मठ, मन्दिर, देवालय आदिको संरक्षण राज्यले गर्नुपर्ने । |
| टोली नं. ८ | मातृभाषामा शिक्षा आर्जन गर्न पाउने व्यवस्था हुनुपर्ने, सबै भाषा र संस्कृतिको समान संरक्षण हुनुपर्ने, पुरातात्विक वस्तुहरूको संरक्षणका लागि संवैधानिक व्यवस्था हुनुपर्ने । आ–आफ्ना धर्म परम्परा रीतिरिवाज अनुसारका कार्य गर्न सबै स्वतन्त्र हुने व्यवस्था गर्नु पर्ने । पुरातात्विक महत्वका मूर्तिहरु चोरी निकासी गर्नेहरूलाई कडा सजायको व्यवस्था हुनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ९ | स्थानीयस्तरमा रहेका पुरातात्विक महत्वका मन्दिरहरूको संरक्षण र सम्वर्द्धन गर्न राज्यले ध्यान दिनुपर्ने, चलिआएको र मानवीय मूल्य मान्यता भएका धर्म-परम्परा अनुसार काम गर्न सबैलाई स्वतन्त्रता हुने व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ११ | तराईमा हिन्दी माध्यम भाषा र स्थानीयस्तरमा स्थानीय भाषा (मैथिली, अवधी, भोजपुरी) सरकारी कामकाजको भाषा हुनुपर्ने । मातृभाषामा शिक्षा पाउनु पर्ने । सबै भाषालाई राष्ट्रभाषाका रूपमा अनुसूचीमा सूचीकृत गरिनुपर्ने । भाषा प्रज्ञा प्रतिष्ठानको व्यवस्था हुनुपर्ने । |
| टोली नं. १२ | प्रान्तमा स्थानीय भाषालाई सरकारी कामकाजको भाषा बनाउनु पर्ने । प्रान्तमा मातृभाषामा शिक्षा अनिवार्य गरिनुपर्ने । जातीय भेदभाव र छुवाछूतको अन्त्य हुनुपर्ने । दाइजो, बहुविवाह जस्ता सामाजिक कुरीतिलाई कानूनद्वारा दण्डनीय बनाउनु पर्ने । विभिन्न समुदायका जातजातिमा भएका कला, सीपको पहिचान गरी विशेष व्यवस्थाका साथ संरक्षण गर्नुपर्ने । |
| टोली नं. १३ | केन्द्रीय सरकारको सरकारी भाषा अधिकांश जनताले बुझ्ने भाषामा हुनुपर्ने । केन्द्रीय सरकारको कामकाजको एक भाषा तोक्न उपयुक्त हुने । प्रान्तको भाषा निर्धारण भाषिक जनसंख्याको आधारमा हुनुपर्ने । लोप हुन लागेको भाषाको संरक्षण र विकास गर्न साक्षरता शिक्षा सबै मातृभाषामा प्रयोग गर्ने ।<br><br>विभिन्न भाषा समुदाय, जात जातिमा भएका मौलिक कला सीप र परम्परागत ज्ञानलाई संरक्षण र विकासका लागि राज्यले त्यस सम्बन्धी शिक्षा प्रदान गर्नुपर्ने । हाल प्रचलित नेपाली भाषालाई राजकीय भाषा बनाउनु पर्ने । सामाजिक ऐक्यबद्धताका आधार निम्न छन् : मानव अधिकार, सामाजिक न्याय, राज्यको स्रोत-साधनमा सबैको पहुँच, सामाजिक विभेदको अन्त्य, सद्भाववृद्धि, शान्ति, सुरक्षा, महिला, दलित, सीमान्तकृतको प्राथमिकता । |
| टोली नं. १५ | दलितलाई रोजगारीको व्यवस्था गरिनुपर्ने । छुवाछूतलाई कानूनद्वारा दण्डनीय बनाइनु पर्ने । धर्म, संस्कृति तथा कलाहरूको संरक्षण, सम्वर्द्धन गर्नुपर्ने । नेपाली भाषालाई सरकारी भाषा बनाइनु पर्ने । |
| टोली नं. १६ | वृद्ध भत्ताको व्यवस्था हुनुपर्ने । मातृभाषामा शिक्षा हुनु पर्ने । जातीय छुवाछूतलाई संवैधानिक रूपमै दण्ड सजायको व्यवस्था गर्नुपर्ने । दाइजो प्रथालाई उन्मूलन गरिनुपर्ने । |
| टोली नं. १७ | मातृभाषामा शिक्षा र अदालतमा आफ्नो भाषामा पहुँचको सुनिश्चितता हुनुपर्ने । लोपोन्मुख संस्कृतिको संरक्षण गरिनुपर्ने । |
| टोली नं. १८ | लोपोन्मुख भाषाको संरक्षण गर्नुपर्ने । दाइजो लगायत सामाजिक कुप्रथा र भेदभावको अन्त्य हुनुपर्ने । जातीय छुवाछूतको अन्त्य गरिनुपर्ने । प्रदेशले नेपाली बाहेक अन्य भाषालाई पनि सरकारी कामकाजको भाषा बनाउन पाउनु पर्ने । |
| टोली नं. १९ | सबै भाषा, संस्कृतिको समान संरक्षण र सम्मान गर्नुपर्ने । राज्यको स्रोत, साधन र संयन्त्रमा समानुपातिक पहुँचको सुनिश्चितता हुनुपर्ने । सामाजिक न्याय, सहिष्णुता र सहमतिका आधारमा सामाजिक ऐक्यबद्धता कायम गरिनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. २० | केन्द्रमा नेपाली, अङ्ग्रेजी र सङ्घीय एकाईमा नेपाली र अङ्ग्रेजीका अतिरिक्त स्थानीयतहमा बोलिने र लिपि भएका बहुसंख्यकले प्रयोग गर्ने भाषाहरूलाई सरकारी कामकाजको भाषा बनाउनु पर्ने । मातृभाषालाई राष्ट्रभाषा बनाउनु पर्ने । मातृभाषामा शिक्षा दिनुपर्ने । आ-आफ्नो संस्कृतिको संरक्षण, प्रवर्द्धन र विकास सबैले गर्न पाउने व्यवस्था हुनुपर्ने । सामाजिक अन्तरघुलनलाई प्रोत्साहन हुनुपर्ने । अवसरमा समान पहुँच, सामाजिक ऐक्यबद्धताका लागि आपसी विश्वास र सद्भावमा अभिवृद्धि गरिनुपर्ने । |
| टोली नं. २१ | राष्ट्रभाषा नेपालमा बोलिने सबै भाषालाई राष्ट्रभाषाको मान्यता दिनुपर्ने । कामकाजको भाषा नेपाली, अङ्ग्रेजी, हिन्दी, उर्दू र भोजपुरी तथा स्थानीय भाषा नै हुनुपर्ने । भाषिक एकताको प्रतीक नेपाली भाषा हुनुपर्ने । शिक्षामा प्रयोग गरिने भाषा : नेपाली, अङ्ग्रेजी, सँस्कृत, हिन्दी, भोजपुरी, उर्दू र अन्य स्थानीय भाषामा शिक्षा दिनुपर्ने । मातृभाषामा पठनपाठनको व्यवस्था गर्ने । सांस्कृतिक ऐक्यबद्धताको लागि गर्नुपर्ने व्यवस्थाहरु जातीय, सांस्कृतिक र क्षेत्रीय विखण्डन गर्ने खालका भूमिका गर्न नहुने । धार्मिक, सांस्कृतिक र ऐतिहासिक संरचनाको संरक्षण र सम्बर्धनमा विशेष जोड दिनुपर्ने । मानव अधिकारको संरक्षण गर्नुपर्ने । सामाजिक न्यायको प्रत्याभूति गर्नुपर्ने । समतामूलक समाजको निर्माण गर्नुपर्ने । सामाजिक विभेदको अन्त्य गर्नुपर्ने । सबै साधन र स्रोतमा सबै वर्गको पहुँच हुनुपर्ने । धार्मिक सहिष्णुता, स्वतन्त्रता र निरपेक्षता हुनुपर्ने । |
| टोली नं. २२ | मातृभाषालाई सरकारी कामकाजको भाषा बनाइनु पर्ने । देशभित्र बोलिने भाषाहरूको विकासको लागि राज्यले विशेष ध्यान दिनुपर्ने । |
| टोली नं. २३ | पुरातात्विक वस्तुको संरक्षण गर्नुपर्ने । भाषा, संस्कृतिको संरक्षणको लागि राज्यको स्पष्ट नीति हुनुपर्ने । |
| टोली नं.२४ | पुरातात्विक वस्तुको संरक्षण गर्नुपर्ने । धर्म, कला र संस्कृतिको अभ्यास र अवलम्बन गर्न स्वतन्त्रता हुनुपर्ने । |
| टोली नं. २५ | केन्द्रीय सरकारको सरकारी कामकाजको भाषा निर्धारण गर्दा अधिकांश जनताले बोलचाल गर्ने भाषालाई आधार मान्नु पर्ने । राज्यभित्र बोलिने सबै मातृभाषा र संस्कृतिको जगेर्ना गर्न राज्यले विशेष ध्यान दिनुपर्ने । प्रान्तीय सरकारको कामकाजको भाषा निर्धारण गर्दा बहुभाषिकतालाई अवलम्बन गर्नुपर्ने । केन्द्र र प्रान्त तथा प्रान्त बीचको सम्पर्क भाषा केन्द्रीय सरकारको सरकारी कामकाजको भाषालाई मान्नु पर्ने । देशमा विद्यमान जातीय, वर्गीय, लिङ्गीय तथा क्षेत्रीय लगायत सबैखाले विभेदको अन्त्य हुनुपर्ने । |
| टोली नं. २६ | मुक्त कमैया, सुकुम्बासीको पुर्नस्थापना गर्नुपर्ने । सर्वसुलभ कृषि ऋण, व्यावहारिक शिक्षाको व्यवस्था हुनुपर्ने । वृद्ध, बालबालिका, अपाङ्ग, लगायत अशक्त व्यक्तिहरूको सामाजिक सुरक्षाको व्यवस्था हुनुपर्ने । आदिवासी, महिला, दलित, मुस्लिम, लगायत पिछडिएका समुदाय वा वर्गको संरक्षणको विशेष व्यवस्था गर्नुपर्ने । |
| टोली नं. २७ | सबै भाषा, संस्कृतिको सम्मान र संरक्षण गर्दै सबैलाई राष्ट्रिय मूलधारमा ल्याउने गरी संविधानमा व्यवस्था हुनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
| --- | --- |
| टोली नं. २८ | विविधतालाई सम्बोधन गर्नुपर्ने । स्रोतसाधनको न्यायोचित परिचालन हुनुपर्ने । सबै जनजातिलाई स्थान र अवसर दिनुपर्ने । महिलाको लागि विशेष व्यवस्था गर्नुपर्ने । |
| टोली नं. २९ | विभेदकारी कानूनको अन्त्य हुनुपर्ने । दलितहरूको विशेषाधिकार हुनुपर्ने । सँस्कृत भाषा अनिवार्य हुनुपर्ने । गरीबका लागि गाँस, बास, कपासको व्यवस्था हुनुपर्ने । क्रान्तिकारी भूमिसुधार गरिनुपर्ने । एकल महिलाको लागि विशेष व्यवस्था गर्नुपर्ने । रोजगारीको ग्यारेन्टी हुनुपर्ने । छुवाछूतको अन्त्य हुनुपर्ने । प्राकृतिक स्रोत र साधनको न्यायोचित वितरण गरिनुपर्ने । सुकुम्बासीलाई रोजगारी व्यवस्था गर्नुपर्ने । |
| टोली नं. ३० | हज कमिटीको गठन र मुस्लिम महिलाको प्रतिनिधित्वको व्यवस्था हुनुपर्ने । मातृभाषामा शिक्षाको व्यवस्था गर्नुपर्ने । मधेसी पहाडी भनी आपसमा विखण्डनको वातावरण बनाउन नहुने । हिन्दु धर्म भित्रको सामाजिक र सांस्कृतिक कुसंस्कारको अन्त्य हुनुपर्ने । |
| टोली नं. ३१ | कर्णाली प्रदेशको विकासका लागि विशेष व्यवस्था गर्नुपर्ने । महिला र दलितको विकासका लागि संविधानमा नै विशेष व्यवस्था गर्नुपर्ने । |
| टोली नं. ३२ | विविधतामा एकता कायम राखी सामाजिक ऐक्यबद्धता कायम गरिनुपर्ने । लोक साहित्य, मौलिक संस्कृति, लोपोन्मुख संस्कृति, परम्परागत ज्ञान, सीप, कलाको संरक्षण र सम्वर्द्धनका लागि राज्यले पहल गर्नुपर्ने । अधिकांश मानिसले बोल्ने आधारमा केन्द्रीय कामकाजको भाषा तोक्नुपर्ने र अन्य भाषाहरूको संरक्षण र प्रयोगलाई प्रोत्साहन गर्नुपर्ने । प्रान्तको भाषा त्यस भित्रका अधिकांश जनताले बोल्ने भाषालाई तोक्नु पर्ने, त्यस्तै स्थानीय भाषा पनि सोही आधारमा निर्धारण गर्नुपर्ने । प्रान्त-प्रान्त बीचको सम्पर्क भाषा केन्द्रीय सरकारको कामकाजको भाषा हुनुपर्ने । विद्यमान जातीय, वर्गीय, लिङ्गीय लगायत सबै प्रकारका भेदभावहरूको अन्त्य गरिनुपर्ने । |
| टोली नं. ३३ | खाम, काइके र डोल्पो भाषीहरूलाई ती भाषामा नै शिक्षा दिने व्यवस्था हुनुपर्ने । सबै धर्म, संस्कृति र भाषा एवं परम्पराको समान संरक्षण र सम्वर्द्धनको प्रत्याभूति हुनुपर्ने । गुम्बा शिक्षालाई पनि शैक्षिक मान्यता दिनुपर्ने । |
| टोली नं. ३५ | हुम्ला जिल्लामा विद्यमान जडान र खसान संप्रदायको सम्मान, संरक्षण र सम्वर्द्धन गर्नुपर्ने । स्थानीय कला, भाषा, संस्कृति, सँस्कार र परम्परागत ज्ञान एवं प्रविधिको राज्यले संरक्षण गर्नुपर्ने । |
| टोली नं. ३६ | स्थानीय भाषा, कला, संस्कृति, चाडपर्व तथा रीतिरिवाजको आधुनिकीकरण गर्दै तिनलाई अगाडि बढाउने र संरक्षणको व्यवस्था हुनुपर्ने । थारूसङ्ग्रहालय हुनुपर्ने । सुदूरपश्चिमाञ्चलमा रहेका कुरीति जस्तै देउकी, छाउपडीको अन्त्यका लागि संविधानमा आवश्यक व्यवस्था हुनुपर्ने । नेपाली भाषालाई सरकारी भाषाको रूपमा मान्यता दिने, अन्य भाषालाई पनि उपयुक्त ढङ्गले सम्मान गर्नुपर्ने । आरक्षणको व्यवस्था हुनुपर्ने । दलित जनजाति राष्ट्रिय परिषद्को स्थापना हुनुपर्ने । संस्कृत विषयमा पनि शिक्षा दिनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ३८ | सबै भाषा, धर्म, संस्कृतिको सम्मान र संरक्षण गर्दै सबैलाई मूलधारमा ल्याउने गरी संवैधानिक व्यवस्था हुनुपर्ने । |
| टोली नं. ३९ | प्राथमिक शिक्षा (१-८), स्थानीय, राष्ट्रिय, अन्तर्राष्ट्रिय र माध्यमिक (८-१२) र उच्चशिक्षामा राष्ट्रिय र अन्तर्राष्ट्रिय भाषामा हुनु पर्दछ । लोपोन्मुख संस्कृतिको संरक्षणको विशेष व्यवस्था हुनुपर्छ । सङ्घीय राज्यहरु बीचको अन्तरसम्बन्ध प्रतिस्पर्धी नभई सहयोगात्मक हुनुपर्छ । समस्या परेमा समाधान गर्न अन्तर प्रान्तीय आयोगको व्यवस्था गरिनु पर्दछ । सबै भाषा र संस्कृतिको समान संरक्षण र प्रवर्द्धन गरिनु पर्दछ । |
| टोली नं. ४० | दलित, महिला आदि माथिको भेदभाव अन्त्य हुनुपर्ने । सबै क्षेत्रको सामाजिक पछौटेपनको अन्त्यका लागि विशेषाधिकारको व्यवस्था लैङ्गिक समानताका लागि कानून निर्माण गर्नुपर्ने । |

## ३.२.५. राज्यको शासकीय स्वरुप निर्धारण समितिको कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| १ | **नयाँ संविधानमा राष्ट्रपति र प्रधानमन्त्री सम्बन्धी व्यवस्था कस्तो हुनुपर्छ ?**<br>राष्ट्रपति र प्रधानमन्त्री दुबैको पद हेरी कार्यविभाजन गर्ने, नेपालमा राष्ट्रपति नै योग्य हुन्छ, राष्ट्रपतिलाई धेरै अधिकार र दैनिक प्रशासन प्रधानमन्त्रीलाई, सीमान्तकृत, लोपोन्मुख र अल्पसंख्यक जातिको प्रतिनिधि मनोनित गरिनुपर्ने, सेरेमोनियल राजतन्त्र सहितको प्रजातन्त्र, भारतीय राष्ट्रपति र प्रधानमन्त्रीजस्तो व्यवस्था हुनुपर्ने, भारतीय राष्ट्रपति र बेलायती महारानीसरह हुनुपर्ने, समाजवादी गणतन्त्र नेपालको राष्ट्रपति हुने, प्रत्यक्ष प्रणाली चुनाव पद्धतिद्वारा चुनिएको, सेरेमोनियल राष्ट्रपति र अधिकार प्राप्त प्रधानमन्त्री, एकल व्यक्तिमात्र केही हुँदैन सबैको एक मत हुनुपर्छ । धेरै अधिकार भएको राष्ट्रपति र कम अधिकार भएको प्रधानमन्त्री, कार्यवाहक राष्ट्रपति हुनुपर्ने । राष्ट्रनायक, दुबै चुनाव प्रक्रियाबाट हुनुपर्ने, वेस्टमिनिष्टर मोडल बेलायतमा भएको, कम अधिकार भएको राष्ट्रपति, प्रधानमन्त्रीय प्रणाली, राष्ट्रपतीय प्रणाली, सबै अधिकार राष्ट्रपतिलाई प्रधानमन्त्री नराख्ने, कार्यकारी अधिकार प्रधानमन्त्रीलाई, प्रत्यक्ष निर्वाचनद्वारा प्रधानमन्त्री चयन, संवैधानिक अधिकार राष्ट्रपतिमा, जनताद्वारा प्रधानमन्त्रीको चयन गर्नुपर्ने, दुबैको अधिकारसमान रहने संसदीय प्रणाली, संसदीय प्रणाली हुनुपर्ने । |
| २ | **राष्ट्रप्रमुखलाई के नाम दिनु उपयुक्त हुन्छ ?**<br>नेपाल प्रमुख, राष्ट्रिय संरक्षक, देशको हरेक कुरालाई समेट्ने गरी नामाकरण गरेर, सम्पूर्ण अधिकार राष्ट्रपतिलाई, राष्ट्रको नोकर, राष्ट्रिय अभिभावक, जनपति, जेसुकै नाम राखेपनि देश र जनताको हित जोबाट हुन्छ त्यो नै सर्वश्रेष्ठ नाम हो, राष्ट्राध्यक्ष, राष्ट्रपति, राष्ट्रपिता, राष्ट्रसंरक्षक, राष्ट्रप्रमुख, अध्यक्ष, जनाध्यक्ष, श्री ५ महाराजाधिराज, जनप्रमुख । |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| ३ | **राष्ट्रपतिको निर्वाचन कसरी हुनु पर्दछ ?**<br>राष्ट्रपतिको निर्वाचन सम्पूर्ण नेपाली (प्रत्यक्ष मतदान) बाट गर्ने, जनताद्वारा निर्वाचित हुनु पर्दछ । संसदको दुईतिहाइले सङ्घीय व्यवस्थापिकाका सदस्यहरु भएको निर्वाचन मण्डलद्वारा, सदनबाट राष्ट्रपतिको चयन गरिनुपर्छ । |
| ४ | **प्रत्यक्ष निर्वाचन हुने भए कुन आधारमा निर्वाचित हुने व्यवस्था गर्ने ?**<br>बहुमतको आधारमा निर्वाचित गर्ने, जसरी भारतीय राष्ट्रपतिको निर्वाचन हुन्छ । ५० % भन्दा बढी मत ल्याउने, दुईतिहाई, समानुपातिकको आधारमा प्रत्यक्ष मतदान, धेरै मत ल्याउने, उपराष्ट्रपतिले गर्नुपर्ने काम नगरेमा, पहिलो हुने निर्वाचित हुने, ८०% भन्दा बढी मत ल्याउनु पर्ने, ५१% प्रतिशतभन्दा बढी मत ल्याउने, राष्ट्रपति र उपराष्ट्रपतिको चयन एउटै समयमा गर्नुपर्ने । |
| ५ | **उपराष्ट्रपतिको चयन कसरी गर्नु उपयुक्त हुन्छ ?**<br>प्रत्यक्ष निर्वाचनद्वारा उपराष्ट्रपतिको चयन गर्ने, सङ्घीय व्यवस्थापिका सदस्य भएको, निर्वाचनमा दलद्वारा, राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन सँगसँगै गर्ने, उपराष्ट्रपतिको आवश्यकता नपर्ने, संसदबाट चुनेको राष्ट्रपति, छुट्टै उपराष्ट्रपति नराख्ने, व्यवस्थापिकाको माथिल्लो सदनको अध्यक्ष कार्यवाहक बन्ने, तल्लो प्रतिनिधिसभाका विजयी सांसदद्वारा प्राप्त मतको आधारमा |
| ६ | **उपराष्ट्रपतिको सम्बन्धमा कस्तो अधिकार हुनु उपयुक्त हुन्छ ?**<br>राष्ट्रपतिको अनुपस्थितिमा राष्ट्रपतिको अधिकार प्रयोग गर्ने, उपराष्ट्र पनि नराख्ने, राष्ट्रपतिको अनुपस्थितिमा प्रधानमन्त्रीले कार्य गर्ने, छुट्टै उपराष्ट्रपति नराखी व्यवस्थापिकाको माथिल्लो सदनको अध्यक्षले नै राष्ट्रपतिको अनुपस्थितिमा राष्ट्रपतिको काम गर्ने । |
| ७ | **प्रत्यक्षरूपमा निर्वाचित राष्ट्रपति/उपराष्ट्रपतिलाई हटाउने सम्बन्धमा कस्तो व्यवस्था हुनु उपयुक्त हुन्छ?**<br>राम्रो देशभक्त हुनुपर्ने, ५ वर्ष पूरा गरेपछि मात्र सङ्घीय व्यवस्थापिकाको दुईतिहाई बहुमतले हटाउने, जनमतसङ्ग्रहबाट हटाउने, राष्ट्रपतिको अवधारणा नै नहुने भएकोले अन्यथा आवश्यकता छैन, दुबै सदनको दुईतिहाईबाट, राष्ट्रपतिले देशको अहित हुने काम गरेमा २०% जनताद्वारा हस्ताक्षर सङ्कलन गरी हटाउन सकिने, राष्ट्रपतिले नराम्रो काम गरेमा जनमतसङ्ग्रहको ८५% ले हटाउने, महाभियोग जनसभा र राष्ट्रियसभाको छुट्टा छुट्टै बैठकमा तत्काल कायम रहेको सम्पूर्ण सदस्य संख्याको दुईतिहाइबाट, महाभियोग २५% सदस्यले राख्न पाउने, देशद्रोही काम गर्ने वा जातीय आधारमा पक्षपाती आचरण देखिएमा सामान्य बहुमतले पनि हटाउन सक्ने, राष्ट्रियसभाका २५% सदस्यलाई लान पाउने । |
| ८ | **लैङ्गिक आधारमा राष्ट्रपति र उपराष्ट्रपतिको व्यवस्था कस्तो हुनुपर्छ ?**<br>जुनसुकै लिङ्गको भएमा पालैपाले निर्वाचनबाट आउने, राष्ट्रपति पुरुष भए उपराष्ट्रपति महिला र viceversa, राष्ट्रपति, उपराष्ट्रपति दलित पनि हुन पाउने, पिछडिएको समुदायबाट राष्ट्रपति र उपराष्ट्रपति हुन पाउनु पर्ने, तेस्रो लिङ्गी पनि हुनुपर्ने, एकजना महिला अनिवार्य, राष्ट्रपति पुरुष र उपराष्ट्रपति महिला हुनुपर्ने, कम्तीमा स्नातक गरेको जुनसुकै लिङ्गको पनि हुन सक्ने, संविधानमा केही पनि (लिङ्ग सम्बन्धी) उल्लेख नगर्ने, महिला पुरुष जातजाति र धर्म फरक-फरक हुनुपर्ने, फरक-फरक क्षमता र गुणका आधारमा जोसुकै पनि हुन सक्ने । |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| ९ | **संविधानमा नै स्पष्ट तोकिने भए कस्तो व्यवस्था गर्न उपयुक्त हुन्छ ?** जो भए पनि ठीक, संविधानमा केही उल्लेख नगर्ने, योग्यता र क्षमताको आधारमा तोकिनु पर्दछ । बाहुन, क्षेत्री राष्ट्रपति भए जनजाति उपराष्ट्रपति हुनुपर्ने, पहाडिया राष्ट्रपति भए मधेसी उपराष्ट्रपति हुने तर नपुंसक लिङ्गी हुन नहुने । निर्वाचनका आधारमा, सर्वसम्मतिले जो कोही पनि, स्नातकोत्तर व्यक्ति, योग्यताको आधारमा, लिङ्गको आधारमा, पुरुषमात्र हुनुपर्छ महिला हुनु हुँदैन, महिला अनिवार्य हुनुपर्ने, दुबैमा महिला कि दुबैमा पुरुष, दुई वर्ष पदावधि हुनुपर्ने । |
| १० | **राष्ट्रपति वा प्रत्यक्ष निर्वाचित प्रधानमन्त्रीको पदावधि कति राख्नु उपयुक्त हुन्छ ?** ६ महिना, १ वर्ष, २ वर्ष, ३ कार्यकाल, जतिपनि कार्यकाल, बढीमा ३ वर्ष, ८ वर्ष, १० वर्ष, संविधानमा उल्लेख नगर्ने, प्रधानमन्त्रीको पदावधि ५ वर्ष र राष्ट्रपतिको पदावधि ६ वर्ष, जनताको हितमा काम गरुञ्जेल । |
| ११ | **एकै व्यक्ति राष्ट्रपतिको पदमा कति कार्यकालसम्म निर्वाचित हुनसक्ने व्यवस्था गर्न उपयुक्त हुन्छ ?** ३ कार्यकाल, जनताले चाहेसम्म जतिपटक पनि, १ कार्यकाल, राष्ट्रविरोधी अपराध गरे तुरुन्त निष्कासन, २ कार्यकाल जनताले चाहेसम्म, ४५ वर्ष पूरा भएको, ७५ वर्ष ननाघेको, ४ कार्यकालभन्दा बढी नपाइने । |
| १२ | **राष्ट्रपति/उपराष्ट्रपति/प्रत्यक्ष निर्वाचित प्रधानमन्त्रीको उमेर सम्बन्धमा संविधानमा कस्तो व्यवस्था हुनु उपयुक्त हन्छ ?** २० देखि ५० वर्ष, ४७ वर्ष, उमेरको आधारमा हैन क्षमताको आधारमा, ५८ वर्ष पूरा भएको, ६० वर्ष भएको, राजनीतिमा पाको, ३० वर्ष पूरा भएको, ४५ वर्ष पूरा भएको, पि.एच.डि. गरेको, ४० वर्ष पूरा भई स्नातकोत्तर पूरा गरेको, उमेरको हदबन्दी नराख्ने । |
| १३ | **संसदीय शासनप्रणाली अवलम्बन गरिएको खण्डमा संवैधानिक राष्ट्रपतिलाई कस्तो अधिकार प्रदान गरिनु उपयुक्त हुन्छ ?** केही निश्चित स्वविवेकको अधिकार प्रयोग गर्ने, राष्ट्रपतिले देशको राष्ट्रिय सरकार वा प्रान्तीय सरकारलाई हटाउन सक्ने, स्वविवेकीय अधिकार राष्ट्रपतिलाई दिन नहुने, सदनको नेता र मन्त्रिमण्डलको प्रमुख, मिश्रित शासनप्रणाली अवलम्बन गर्नु हुँदैन । संसदीय प्रणालीमा स्पष्ट बहुमत नआएको खण्डमा सम्पूर्ण अधिकार सम्हाल्ने, मुलुकको राष्ट्रिय अखण्डता जोगाउन राष्ट्रपतिलाई सङ्कटकाल घोषणा गरी सेना परिचालन गर्ने अधिकार प्रदान गर्ने, नेपाली सेनाको परमाधिपति राष्ट्रपति हुनुपर्ने, विषम परिस्थितिमा राष्ट्रपतिले निर्णय गर्न सक्ने, राष्ट्रको विखण्डन हुनबाट बचाउने मन्त्रिपरिषद्को सिफारिशमा केही अधिकार राष्ट्रपतिलाई दिने |
| १४ | **मिश्रित शासनप्रणाली अवलम्बन गरिएको खण्डमा राष्ट्रपति र प्रधानमन्त्री बीच के कति अधिकार बाँडफाँड गरिनु उपयुक्त हुन्छ ?** संसदले मन्त्रिपरिषद्को सिफारिशमा कानून बनाउने राष्ट्रिय एकता तथा अखण्डता सम्बन्धी अधिकार, मन्त्रिपरिषद् मनोनयन गर्ने, व्यवस्थापिकालाई हेर्ने, राष्ट्रप्रमुखलाई सेनाको प्रमुख तोक्ने, देशको परिस्थिति नाजुक भएमा सम्पूर्ण अधिकार राष्ट्रपतिले प्रयोग गर्ने, प्रधानमन्त्रीले विकास योजना दिने अधिकार, राष्ट्रपतिले नै देशको शासन सञ्चालन गर्ने सम्पूर्ण अधिकार प्रधानमन्त्रीले प्रयोग गर्ने, न्यायालय र न्यायाधीश राष्ट्रपतिको |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| | मातहतमा तथा अन्य सबै अधिकार प्रधानमन्त्रीको मातहतमा राख्ने, राष्ट्रको सार्वभौमसत्ता एवं अखण्डता बचाइराख्ने, वैदेशिक हस्तक्षेप रोक्ने, सम्पूर्ण अधिकार राष्ट्रपतिलाई दिनु पर्ने, मन्त्रिपरिषद्ले गरेको निर्णय पारित गर्ने, दैनिक सरकार र प्रशासन सञ्चालनको जिम्मेवारी निर्वाह गर्ने, सेना प्रमुख र कार्यकारी प्रमुखको भूमिका निर्वाह गर्ने, आधा अधिकार राष्ट्रपतिलाई हुनुपर्ने साथै आधा प्रधानमन्त्रीलाई, देशको शासनप्रणालीमा कुनै गडबडी देखापर्न गएमा बाधा व्यवधान फुकाउने अधिकार राष्ट्रपतिलाई हुनुपर्ने, राष्ट्रपति सेना चलाउने, प्रधानमन्त्री जनता चलाउने, राष्ट्रपतिको अधिकार सीमित, राष्ट्रध्यक्षको अधिकार दिनुपर्ने, राष्ट्रपति लाई ९०% अधिकार बाँकी प्रधानमन्त्रीलाई, संविधानको संरक्षण र पालना गर्ने, केन्द्रीय मन्त्रिपरिषद्को गठन र कार्यक्रम सञ्चालन गर्ने, सेना प्रमुख, राजदूत, राज्यपाल, प्रधानन्यायाधीश, संवैधानिक अङ्गका प्रमुखहरु, विश्वविद्यालयका पदाधिकारीहरूको नियुक्ति गर्ने, प्रधानमन्त्रीको अधिकार हुनुपर्ने, राष्ट्रपतिको निर्देशनमा सरकार र प्रशासन सञ्चालन गर्नुपर्ने । |
| १५ | **(प्रधानमन्त्रीको व्यवस्था हुने भए) प्रधानमन्त्रीको चयन कसरी गर्नु उपयुक्त हुन्छ ?**<br>प्रधानमन्त्रीको निर्वाचन प्रत्यक्ष, प्रधानमन्त्रीको निर्वाचन संसदद्वारा सङ्घीय व्यवस्थापिकाको सिफारिशमा राष्ट्रपतिले गर्ने, राष्ट्रपतिले मनोनयन गर्ने, संसदको बहुमतको आधारमा । |
| १६ | **एकै व्यक्ति प्रधानमन्त्रीको पदमा कतिवटा कार्यकालसम्म निर्वाचित हुनसक्ने व्यवस्था गर्न उपयुक्त हुन्छ ?**<br>सक्षम र विकासप्रेमीलाई जतिपटक पनि निर्वाचन गर्न पाउन पर्ने, राजनीतिक दलको विजयको आधारमा, एक कार्यकालका लागि मात्र, ३ कार्यकालसम्म, २ कार्यकालसम्म, जनताले चाहेअनुरूप, प्रधानमन्त्रीको कार्य क्षमता अनुसार । |
| १७ | **सङ्घीय मन्त्रिमण्डलमा सदस्य संख्या तोक्ने सम्बन्धमा कस्तो व्यवस्था हुनु उपयुक्त ठान्नुहुन्छ ?**<br>प्रधानमन्त्रीको स्वविवेकमा छाड्ने, व्यवस्थापिका-संसदको १०% भन्दा बढी हुन नहुने, दुबै सदनको सहमतिको आधारमा । राष्ट्रपतिको स्वविवेकको आधारमा, २०४७ सालको संवैधानिक प्रावधान अनुसार बढीमा १० जना, बढीमा २० जना । व्यवस्थापिकाको कूल सदस्य संख्याको ६% भन्दा बढी हुन नहुने, राज्य सञ्चालनको लागि आवश्यक पर्ने न्यूनतम मन्त्रालयको किटान संविधानमै गर्ने साथै एक मन्त्रालयमा एउटामात्र मन्त्री रहने व्यवस्था गर्ने, राष्ट्रपतिको रोहवरमा सङ्घीय सरकारले, व्यवस्थापिकाको कूल सदस्य संख्याको ७% भन्दा बढी हुन नहुने । |
| १८ | **सङ्घीय सरकारको गठन कसरी गर्न उपयुक्त हुन्छ ?**<br>बहुमत ल्याउने दलको अधिकार, कुनै पनि दलले बहुमत नल्याएमा सबै दलको समानुपतिक सहभागितामा, जनजातिको आधारमा मन्त्रिपरिषद्को संख्या तोक्ने, नेपालमा सङ्घीयता नै आवश्यक छैन, बहुमत ल्याउने सरकारको नेतृत्व, बहुमत नभए मिलिजुली सरकार, सहमतीय प्रणाली प्रतिनिधित्वको आधारमा, दुई वा दुईभन्दा बढी दल मिलेर, राष्ट्रपतिले गठन गर्ने, पूर्ण समानुपातिक आधारमा, सङ्घीय व्यवस्थापिकामा बहुमत पाउने राजनीतिक दलमात्र सरकारमा सहभागी हुन पाउने, कूल सदर मतको ६०% भन्दा बढीको प्रतिनिधित्व गर्ने । |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| १९ | **यदि संसदीय पद्धति अपनाउने हो भने संसदले सरकारउपर अविश्वासको प्रस्ताव राख्ने सम्बन्धमा कस्तो व्यवस्था हुनु उपयुक्त ?**<br>सरकारमा रहेका व्यक्तिले स्वेच्छाचारीपूर्वक सरकार सञ्चालन गरेमा संसदको अविश्वासको प्रस्ताव ल्याई हटाउने, कम्तीमा ६ महिनाको अवधिपछिमात्र राख्न पाउने । |
| २० | **प्रत्यक्ष रूपमा प्रधानमन्त्री निर्वाचित हुने हो भने निजलाई हटाउने सम्बन्धमा कस्तो व्यवस्था हुनु उपयुक्त हुन्छ ?**<br>सङ्घीय प्रादेशिक व्यवस्थापिकाको सामान्य बहुमतले, व्यवस्थापिकाले हटाउन सक्ने, कूल सदस्य संख्याको २५% ले माग गर्ने र दुईतिहाईले निर्णय गर्ने, सामान्य बहुमतले, जनमत सङ्कलनद्वारा, राष्ट्रघाती काम गरेमा, कार्यावधिभित्र हटाउन पाइदैन, १० वर्षसम्म, सङ्घीय व्यवस्थापिकाको दुईतिहाई बहुमतले महाभियोगद्वारा । |
| २१ | **प्रदेश/प्रान्तमा सरकारको स्वरूप कस्तो हुनु उपयुक्त हुन्छ ?**<br>प्रत्यक्षद्वारा प्रान्तीय मुख्यमन्त्री, बहुमत प्राप्त व्यक्तिलाई राष्ट्रपतिद्वारा नियुक्त गर्ने, स्थानीय निकाय प्रतिनिधिहरूको निर्वाचक मण्डलद्वारा, प्रादेशिक व्यवस्थापिकाद्वारा निर्वाचित व्यक्ति कार्यकारी प्रमुख हुने, जनताको प्रत्यक्ष निर्वाचनद्वारा निर्वाचित व्यक्ति प्रमुख हुने । |
| २२ | **प्रदेशको प्रमुखलाई संविधानमा के नाम दिनु उपयुक्त हुन्छ ?**<br>गणराज्य प्रमुख, प्रान्तीय राज्य प्रमुख, प्रदेश प्रमुख नै नराख्ने, राज्य अधिकारी, क्षेत्रीय प्रमुख, प्रान्तपति, मुख्यमन्त्री, प्रमुखाधीश, नायक, प्रान्तपाल, प्रान्ताध्यक्ष, राज्यपाल, प्रान्तीय संयोजक, प्रादेशिक मन्त्री, प्रदेशाध्यक्ष, क्षेत्रपाल, मुख्यमन्त्री, राज्यनायक । |
| २३ | **(निर्वाचित हुने अवस्थामा बाहेक) प्रदेश प्रमुखको नियुक्ति कोबाट हुनु उपयुक्त हुन्छ ?**<br>सङ्घीय सरकारबाट, मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रपतिले, प्रदेशको मुख्यमन्त्रीको सिफारिशमा सङ्घीय सरकारद्वारा, सङ्घीय सरकारको सिफारिशमा राष्ट्रपतिले, सङ्घीय सरकारको सल्लाह अनुसार मुख्यमन्त्रीले । |
| २४ | **प्रादेशिक सरकारको प्रमुखलाई संविधानमा के नाम दिनु उपयुक्त हुन्छ ?**<br>राज्यपाल, प्रदेश प्रमुख, मुख्यमन्त्री, प्रदेशमन्त्री, चौतरिया, प्रान्तप्रमुख, राज्यमन्त्री । |
| २५ | **प्रदेश प्रमुखको कार्यकाल कति हुनु उपयुक्त हुन्छ ?**<br>३ वर्ष, १५ महिना, १ वर्ष, बढीमा २ वर्ष, ५ वर्ष, ६ वर्ष, २ वर्ष । |
| २६ | **प्रादेशिक मन्त्रिमण्डलमा सदस्य संख्या तोक्ने सम्बन्धमा कस्तो व्यवस्था हुनु उपयुक्त ठान्नु हुन्छ ?**<br>बढीमा ११ जना, जनसंख्याका आधारमा बढीमा १५%, बढीमा ११ देखि १५, १० देखि १५% (संसदको सदस्य संख्याको), बढीमा ३% (संसदको सदस्य संख्याको), बढीमा ५% (संसदको सदस्य संख्याको), सकेसम्म छोटो बनाउने आर्थिक स्थितिलाई ध्यान दिएर, बढीमा २५ जना, २५ देखि ३५, प्रादेशिक सदस्य संख्याको १०%, प्रदेशको क्षेत्रको आधारमा, ५ जनाको, ७ जनाको, व्यवस्थापिकाको ५% भन्दा बढी हुन नपाइने, व्यवस्थापिकाको १०% भन्दा बढी हुन नपाइने, व्यवस्थापिकाको २५% भन्दा बढी हुन नपाइने । |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| २७ | **प्रादेशिक सरकारको गठन कसरी गर्न उपयुक्त हुन्छ ?** प्रदेशसभाको बहुमतद्वारा, आदिवासी अग्राधिकारको संवैधानिक मान्यताको ५१% र बाँकी समन्वयको आधारमा, प्रादेशिक क्षेत्रभित्र गाउँ, नगरका निर्वाचित प्रतिनिधिबाट बहुमत प्राप्त हुनेले नेतृत्व गरी अन्य समानुपातिकमा सहभागिता, सर्वदलीय सरकार, बहुमत नआएमा सहमतिमा सरकार गठन गर्नुपर्ने, प्रादेशिक व्यवस्थापिकामा बहुमत पाउने दलमात्र सरकारमा सहभागी हुन पाउने । |
| २८ | **देशको कार्यकारिणी अङ्गलाई कति तहसम्म विस्तार गरिनु उपयुक्त ठान्नु हुन्छ ?** केन्द्र, प्रादेशिक क्षेत्र, जिल्ला (स्थानीयतह), ४ तह । |
| २९ | **स्थानीयतहमा कार्यकारिणी अङ्गको गठन कसरी हुनु उपयुक्त हुन्छ ?** प्रत्यक्ष, समानुपातिक, मनोनित, प्रत्यक्ष निर्वाचनद्वारा स्थानीय जनप्रतिनिधिसभा-व्यवस्थापिका गठन गरी सोही सभा-व्यवस्थापिकाले निर्वाचित गरेको व्यक्ति प्रमुख रहने । |
| ३० | **स्थानीय सरकारको प्रमुखलाई के नाम दिनु उपयुक्त हुन्छ ?** स्थानीय अभिभावक, इलाका प्रमुख, स्थानीय प्रान्तीय प्रमुख, बडाहाकिम, जनसरकारप्रमुख, गाविस प्रमुख, स्थानीय प्रमुख, स्थानीय महापाल, ग्रामपाल, ग्रामपिता, नगरपाल, अध्यक्ष, सभापति । |
| ३१ | **सङ्घीय व्यवस्थापिका-संसदको निर्वाचन कसरी हुनुपर्छ ?** मिश्रित निर्वाचनप्रणाली प्रत्यक्ष र समानुपातिक बराबर, एम.एम.पि.आर., ७५% प्रत्यक्ष र २५% समानुपातिक, प्रत्येक प्रदेशको निर्वाचनक्षेत्रहरूमा पालो गरी आरक्षण हुने, १५% प्रत्यक्ष र समानुपातिक, पूर्ण समानुपातिक अवलम्बन गर्ने, आरक्षण समानुपातिक, पूर्णरूपमा जनसंख्याको आधारमा समानुपातिक, समानुपातिक ६०% र प्रत्यक्ष ४०%, समानुपातिक ५०% र प्रत्यक्ष ५०% । |
| ३२ | **पहिलो हुने निर्वाचित हुने प्रणालीका आधारमा निर्वाचन अपनाउने हो भने कसरी हुनु उपयुक्त हुन्छ ?** आरक्षण नराख्ने, समानान्तर प्रणाली, मिश्रित प्रणाली, आरक्षण १ पटक भन्दा बढी हुन नहुने र क्रमगत रूपमा फेर्दै जाने, केही सिट आरक्षण गरी अन्य प्रत्यक्ष, ५०% महिला, भूगोल पछाडि परेका र तेस्रो लिङ्गीलाई पनि अवसर, पछाडि परेकालाई विशेष अधिकार दिएर उनीहरू बीच विशेष प्रतिस्पर्धा । |
| ३३ | **मिश्रित निर्वाचनप्रणाली अपनाउने भए कुन प्रकारले गर्नु उपयुक्त हुन्छ ?** पूर्ण समानुपातिक, विशेष अधिकार ग्यारेण्टी । |
| ३४ | **समानुपातिक निर्वाचनप्रणाली अपनाउने हो भने कुन आधारमा प्रतिनिधित्व गराउँदा उपयुक्त हुन्छ ?** एकल सङ्क्रमणीय मत प्रणाली, खुल्ला सूची प्रणाली, बन्द सूची प्रणाली, मिश्रित समानुपातिक । |
| ३५ | **मिश्रित प्रणाली अपनाउने हो भने कोटा निर्धारण कसरी गर्न उपयुक्त हुन्छ ?** प्रत्यक्ष समानुपातिक ५०% र ४०% समानुपातिक, महिला, दलित, जनजाति, मुस्लिमलाई पूर्ण समानुपातिक, जातीय जनसंख्याको आधारमा समानुपातिक प्रत्यक्षमा बराबरी हुने, प्रत्यक्ष र समानुपातिक बराबर संख्यामा, प्रत्यक्ष निर्वाचनमा ११२ र समानुपातिक १२३ जना हुनुपर्छ । |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| ३६ | **नयाँ संविधानमा मतदाताको न्यूनतम उमेर कति राख्नु उपयुक्त हुन्छ ?**<br>२५ वर्ष, महिला भए १८ वर्ष र पुरुष भए २१ वर्ष, १६ वर्ष, १७ वर्ष, १८ वर्ष, २० वर्ष । |
| ३७ | **नयाँ संविधानमा निर्वाचनक्षेत्र निर्धारण गर्ने आधार केलाई बनाउन उपयुक्त हुन्छ ?**<br>भौगोलिक क्षेत्र अनुसार प्रान्त, जनसंख्याका आधारमा जिल्ला, गा.वि.स., जनसंख्या र जनजातिको भौगोलिक क्षेत्रको आधारमा, भाषा र भौगोलिक क्षेत्रको आधारमा, भौगोलिक र जनसंख्याको आधारमा, हाल रहेको १४ अञ्चललाई २/२ अञ्चल जोडी ७ प्रान्त बनाउन उपयुक्त हुनुपर्दछ । |
| ३८ | **निर्वाचनक्षेत्र निर्धारण आयोगको गठन कसरी हुनु उपयुक्त हुन्छ ?**<br>संवैधानिक परिषद्को सिफारिशमा, विशेषज्ञको सिफारिशका आधारमा, कार्यकारी प्रमुखको स्वविवेकमा, संवैधानिक परिषद्को सिफारिशमा राष्ट्रपतिद्वारा, सबै दलको सल्लाह र जाति, धर्म, भाषा, समेटेर । |
| ३९ | **प्रादेशिक व्यवस्थापिकाको निर्वाचन कसरी गर्न उपयुक्त हुन्छ ?**<br>एम.एम.पि.आर., क्षतिपूर्ति सहितको समानुपातिक, प्रत्यक्ष र समानुपातिक बराबर हुने गरी, पूर्ण समानुपातिक, मिश्रित, समानुपातिक प्रतिनिधित्वको आधारमा मात्र पार्टीलाई चुन्ने । |
| ४० | **प्रादेशिक व्यवस्थापिकाको निर्वाचनमा पहिलो हुने निर्वाचित हुने प्रणाली अपनाउने हो भने कसरी हुनु उपयुक्त हुन्छ ?**<br>समावेशी जनसंख्याको आधारमा, समानुपातिक दिने, केही निश्चित निर्वाचनक्षेत्रलाई आरक्षण गरी सो क्षेत्रमा आरक्षित वर्ग र समुदायका उम्मेदवारहरु बीच मात्र प्रतिस्पर्धा गराउने, कोटा अनुसार, पूर्ण समानुपातिक, प्रत्यक्षमा बढी समानुपातिकमा कम, प्रत्यक्षमा ४० र समानुपातिकमा ६० प्रतिशत । |
| ४१ | **प्रादेशिक व्यवस्थापिकाको निर्वाचनमा मिश्रित प्रणाली अपनाउने हो भने कोटा निर्धारण कसरी गर्न उपयुक्त हुन्छ ?**<br>दलीय आधारमा र स्वतन्त्र हैसियतमा हुनुपर्छ, प्रत्यक्ष ५०% महिला, सीमान्तकृतलाई आरक्षण, जातीय आधारमा पूर्ण समानुपातिक । |
| ४२ | **स्थानीय सरकारको निर्वाचन कसरी गर्नु उपयुक्त हुन्छ ?**<br>निर्वाचन खर्च संविधानमा लेख्नु पर्ने, ४/४ वर्षमा आवधिक निर्वाचन, स्थानीय निर्वाचनको पहिलो हुने निर्वाचित हुने निर्वाचनप्रणाली, महिला र पुरुष बराबर निर्वाचित हुने, निर्वाचन निष्पक्ष बनाउन केन्द्र र स्वशासित क्षेत्रहरूको स्वतन्त्र निर्वाचन आयोग गठन गर्ने, निर्वाचन गर्दा सबै क्षेत्र, वर्ग र भौगोलिक अवस्थालाई समेत मध्यनजर राखी नागरिक समाजका अगुवा, वर्गीय र पीडित जातजातिलाई अधिकार र आरक्षण तोकेर, वर्ग, जात, धर्म, भाषा, क्षेत्र र दलबाट, प्रतिनिधिले विकासको कार्य गर्न नसके ५१% मतदाताको सिफारिशमा, निर्वाचनक्षेत्रको उम्मेदवारलाई बेग्लै क्षेत्रको उम्मेदवार दिनुपर्ने, निर्वाचनको लागि लिइने मतदाताको नाम छुटेको खण्डमा मतदान गर्ने दिने सम्म पनि नाम समावेश गरी मतदान गर्न पाउने व्यवस्था गर्ने । उम्मेदवारको शैक्षिक योग्यताको पनि व्यवस्था हुनुपर्ने । सीमान्तकृत र लोपोन्मुख जातिलाई समेट्ने । |
| ४३ | **निर्वाचनप्रणाली सम्बन्धी अन्य केही भएमा ।**<br>उल्लेखनीय केही नभएको । |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| ४४ | **प्रदेश तथा स्थानीयतहमा कर्मचारीको व्यवस्थापन कसरी गर्नु उपयुक्त हुन्छ ?**<br>कर्मचारीको इच्छा अनुसार समायोजन गर्ने, निश्चित आधार तयार पारी समायोजन गर्ने, प्रदेश र स्थानीय सरकारको सहमतिले गर्ने, हाल रहेका निजामती कर्मचारीलाई विशेष सुविधा दिई सङ्घीय सरकारमा लिने, निश्चित आधार तयार गरी प्रदेशमा समेत हस्तान्तरण गर्ने, तीनतहको व्यवस्था गर्ने, पहिलेकालाई छानी-छानी केहीलाईमात्र समायोजन गर्ने, सबैलाई सङ्घीय सरकार मातहतमा नै राख्ने । गरीबलाई प्राथमिकता दिनु पर्ने, उमेरको हदबन्दी तोकी पेन्सन दिने र खाली ठाउँमा पदपूर्ति गर्ने, नयाँ कर्मचारी नियुक्ति गर्दा बढी थुपार्ने भन्दा निवृत्तिभरण भएकालाई खुसीसाथ बिदाई दिने र नयाँ कर्मचारी नियुक्ति गर्ने आवश्यकता अनुसार थप्ने, ३०% र ७०%, इमान्दारलाई समायोजन अन्यलाई सेवाबाट अवकाश, प्रदेश तथा स्थानीयतहकालाई पहिलो प्राथमिकता दिने, केही नयाँ केही पुराना, विशिष्ट प्रकारका सेवामा रहेकाको समायोजन, १५ वर्ष पुगेकालाई अवकाश, स्थानीयस्तरकालाई प्राथमिकता, स्थानीय पदपूर्ति समिति गठन, जहाँ कर्मचारी त्यही समायोजन, सेवामा रहेको कर्मचारी नियुक्ति गर्ने, लैङ्गिक तथा भौगोलिक अल्पसंख्यकहरूको आरक्षण छुट्याउने, जातीय र क्षेत्रीय आधारमा आरक्षण र समानुपातिक, १५ देखि २० वर्ष पुगेकालाई अनिवार्य अवकाश, २०५० साल भन्दा पहिलेका सबैलाई अनिवार्य रूपमा हटाउनु पर्ने । ३० वर्ष सेवा अवधि पुगेका र ५५ वर्ष उमेर पुगेकालाई अनिवार्य अवकाश दिनु पर्ने । नोकरी अवधि २० वर्ष र उमेर ५० वर्ष कायम गर्ने, प्रदेशको निर्णय अनुसार, जातजाति, धर्म, वर्ण, लिङ्ग सबै मिलाएर, हालका कर्मचारी सबैलाई अवकाश दिएर, दक्ष, क्षमतावान कार्यकुशलताका आधारमा राख्ने वा हटाउन सक्ने, उमेर र सेवाको अवधि तोक्ने र अवकाश दिने, संविधानसभाको चुनावबाट आएको प्रत्यक्ष वा समानुपातिकबाट निर्वाचित व्यक्तिहरूको सल्लाह सुझाव अनुसार आ-आफ्नो क्षेत्रको आधारमा नयाँ कर्मचारी नियुक्ति गर्ने, विशेष प्रकारका सेवामा रहेका कर्मचारीलाई मात्र समायोजन गरी अरु सबै कर्मचारी नयाँ नियुक्ति गर्ने सेवारत कर्मचारीको उमेर, कार्यसेवा अवधि योग्यताका आधारमा निर्धारण गर्ने, आवश्यक परेमा प्रदेश सरकारले थप गर्न पाउने । प्रतिशतको आधार मानेर गर्ने, हिमाल पहाड मधेसको क्षेत्रको आधार मानेर, स्थानीयस्तरमा प्रतिस्पर्धाद्वारा, भ्रष्टाचारी कर्मचारीलाई बाहेक सबैलाई समायोजन गर्ने, थप नयाँ ६०% कर्मचारी नियुक्ति गर्ने समानुपातिक आधारमा, अहिलेलाई समायोजन गर्दा नपुग भए स्थानीयतहमा नै राख्ने, रोजगार पेन्सन पाकेकालाई हैन किसानलाई दिनुपर्छ, कार्यदक्षता पुनरावलोकन विधिद्वारा पुरानालाई जिम्मेवारी दिँदै दक्षता प्रदर्शन नगरेको स्थानमा नयाँलाई मौका दिनुपर्ने, न्यूनतम मापदण्डको परीक्षा लिई उर्त्तीण हुनेलाई समायोजन गर्ने र अन्यलाई लोकसेवा आयोगबाट माग गर्ने । |
| ४५ | **हालका विभिन्न सेवामा रहेका कर्मचारी समायोजन गर्दा कसरी गर्ने ?**<br>सङ्घ र प्रदेशको अलग अलग सेवाहरु हुनुपर्ने, सङ्घ मातहतको एउटामात्र सेवा हुनुपर्ने र कम्तीमा स्थानीय विशिष्टतालाई ध्यान दिनु पर्ने, सबैको एउटैमात्र सेवा हुनुपर्छ । |
| ४६ | **कति तहको सरकारी सेवा रहनु उपयुक्त लाग्छ ?**<br>आवश्यकता अनुसार प्रदेशसम्म, स्थानीय इलाकास्तरसम्म सेवाहरु स्थापना गर्ने । |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| ४७ | **सङ्घीय सरकार अन्तर्गतका निकायहरू कुन तहसम्म राख्न उपयुक्त हुन्छ ?**<br>स्थानीयलाई ग्राहयता दिने, स्थानीयस्तरमा योग्य व्यक्ति भएमा स्थानीयस्तरकै हुनुपर्ने, मधेसका कर्मचारी मधेसमै व्यवस्थित हुनुपर्ने, जुनसुकै सेवामा सम्बन्धित क्षेत्रको निवासीलाई प्राथमिकता हुनुपर्ने र देशको कुनै पनि भागबाट ल्याउन सकिने, जुनसुकै पदमा पनि सम्बन्धित क्षेत्रका मात्र योग्य हुनुपर्ने । |
| ४८ | **प्रादेशिक र स्थानीय सेवामा नियुक्ति गर्दा योग्यता/ग्राह्यताका सम्बन्धमा कस्तो व्यवस्था गर्न उपयुक्त हुन्छ ?**<br>कानूनद्वारा व्यवस्थित भएबमोजिम देशमा प्रादेशिक वा स्थानीयतहसम्म हुनुपर्ने, स्वतन्त्र प्रतिस्पर्धा गराइनु पर्ने, समानुपातिक चाहिँदैन योग्यता भए पुग्छ । आरक्षण गर्नु पर्दैन, कानूनद्वारा व्यवस्थित भएबमोजिम हुनुपर्ने, समानुपातिक समावेशीबाट नभई खुला प्रतियोगिताबाट गराउने । |
| ४९ | **सरकारी सेवामा समानुपातिक समावेशीका सम्बन्धमा कस्तो व्यवस्था हुनुपर्छ ?**<br>सुरक्षा, बैंकिङ, रक्षा, अर्थ, परराष्ट्र, मुद्रा, राज्य प्रमुख, उपराज्य प्रमुख, मन्त्रालय, विभाग, बृहत् खालका योजना कार्यान्वयन गर्ने संयन्त्र सेना, प्रहरी, अर्थ वाणिज्य, भूमिसुधार, करनीति, आर्थिक नीति, शान्तिसुरक्षा, प्राकृतिक साधन-स्रोत, केन्द्रीय न्यायालय, राष्ट्रिय योजना आयोग, सीमासुरक्षा, वैदेशिक सम्बन्ध अन्तरराज्य व्यापार भन्सार । |
| ५० | **सङ्घमा मात्र रहने कार्यकारिणी/प्रशासनिक संयन्त्र के के हुन सक्छन् ?**<br>सङ्घले गर्ने भनी तोकेको जिम्मेवारी, विदेश, गृह, सञ्चार, न्याय, रक्षा, अर्थ, शिक्षा, उद्योग, जलविद्युत, निर्माण यातायात, नागरिक उडड्यन, रेल, प्रादेशिक संयन्त्रमा सर्वदलीय मेलमिलाप, खाद्यान्न, स्वास्थ्य, शिक्षा, गभर्नर, प्रान्तीय परिषद्, प्रान्तीय व्यवस्थापिका, हुलाक, प्रहरी, प्रशासनिक कार्य, योजना आयोग, प्रादेशिक पूर्वाधारको स्ट्रक्चर निर्माण, मेलमिलाप, क्षेत्रीय कार्यालय, जिल्ला कार्यालय, शिक्षा, स्वास्थ्य, भूमिसुधार, सामाजिक सुरक्षा कार्यक्रम, जनमिलिसिया, सामान्य प्रशासन, प्राकृतिक स्रोत-साधन, विद्युत, मालपोत, अख्तियार दुरुपयोग अनुसन्धान आयोग । |
| ५१ | **प्रदेशमा मात्र रहने कार्यकारिणी/प्रशासनिक संयन्त्र के के हुन सक्छन् ?**<br>स्थानीय तीन निकायहरूः स्थानीय विकास, कृषि, सिञ्चाई, वन, सहकारी, यातायात, खानेपानी, युवा, महिला, समाजकल्याण, न्याय, शिक्षा, कर कार्यालय, सेवा केन्द्र, स्थानीय सडक, विद्युत, प्रकृतिक स्रोत, नागरिकता, सामुदायिक वन, जडिबुटि, शिक्षा, स्थानीय कर, न्याय, जमीन, ग्याँस, साना योजना, मट्टितेलको नियमित आपूर्ति, स्थास्थ्य र विकेन्द्रीकरण, स्थानीय कार्यबोर्ड स्थानीय संयन्त्रमा नियमानुसारका नेता चयन, उपस्वास्थ्य केन्द्र, पूर्वाधार निर्माण, प्राविधिक विकास, शान्तिसुरक्षा, सञ्चार, तालिम आदि स्थानीय निकायको पूर्वाधार निर्माण गर्ने, आम्दानी अनुसारको खर्च गर्न पाउने, स्थानीय जिल्ला जनप्रतिनिधिमूलक निकाय नगर एवं गाविसका संयन्त्र, प्रदेश र स्थानीय निकायमा एउटै संयन्त्र, प्राकृतिक स्रोत पहिचान र परिचालन, स्थानीय सुरक्षा संयन्त्र । |
| ५२ | **स्थानीय सरकारमा मात्र रहने कार्यकारिणी/प्रशासनिक संयन्त्र के के हुन सक्छन् ?**<br>सीमा सम्बन्धी, सन्धि-सम्झौता, मृत्युदण्डको सजाय, विकास बजेटमा समानुपातिक, सङ्कटकालीन अधिकार, सेना सम्बन्धी अधिकार र वैदेशिक नीति, सङ्घमा कार्यकारिणी प्रशासनिक अधिकार दिँदा हाम्रो देशमा प्राकृतिक सम्पदाहरूको अस्तित्वलाई जोगाउने |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| | र राष्ट्र र राष्ट्रियताको हितमा काम गर्ने अधिकार दिन सकिन्छ । सुरक्षा सम्बन्धी अधिकार, जलस्रोत सम्बन्धी अधिकार, शिक्षा, स्वास्थ्य सम्बन्धी अधिकार, राष्ट्रपतीय पद्धति, केन्द्रीय आर्थिक अधिकार सङ्घमा रहने, सेना, केन्द्रीय प्रहरी, सर्वोच्च अदालत, अन्तर्राष्ट्रिय व्यापार, विदेशनीति, राष्ट्र बैङ्क, मुद्रा निष्कासन, बाल अधिकार, महिला अधिकार, दलित, समानुपातिक ढङ्गको विकास वितरण गर्ने, मौद्रिक नीति सम्बन्धी अधिकार, शान्तिसुरक्षा, महत्वपूर्ण नीतिको अधिकार, देशको सीमा, ठूला खालका जलविद्युत आयोजना, जलस्रोत, खानी, ठूला औद्योगिक क्षेत्र सम्बन्धी अधिकार, राष्ट्रिय सुरक्षा सम्बन्धी अधिकार, परराष्ट्रनीति, बाधा अड्चन फुकाउने, सङ्कटकालको घोषणा, नियम बनाउने, राष्ट्रिय सुरक्षा, मुद्रा छाप्ने, कूटनीतिक सम्बन्ध, दौत्य सम्बन्ध, मौद्रिक नीति, वित्तीय नीति, अन्तरप्रान्तीय लोकमार्ग, ठूला सिचाई, रेल मार्ग, हुलाक, केन्द्रीय विश्वविद्यालय, वैज्ञानिक अनुसन्धान केन्द्र तथा केन्द्रीय तथ्याङ्क, नागरिकता वितरण, अन्तर्राष्ट्रिय सीमा, राज्य बीचको विवाद हल गर्ने, मुद्रा निष्कासन । |
| ५३ | **सङ्घमा मात्र रहने कार्यकारिणी/प्रशासनिक अधिकारहरू के के हुन सक्छ ?**<br>प्रान्तीय शान्तिसुरक्षा, रक्षा, शान्ति, प्रशासनिक र न्यायिक अधिकार, सामाजिक सुरक्षा, साना सिञ्चाई, साना जलविद्युत् । |
| ५४ | **प्रदेशमा मात्र रहने कार्यकारिणी/प्रशासनिक अधिकारहरू के के हुन सक्छ ?**<br>कर्मचारीको अभाव भएमा राख्नसमेत पाउने, विकास आयोजना स्थानीयतहमा छनोट गर्ने, जनतालाई सेवामूलक कार्यक्रम, जनताको जग्गाको लगत व्यवस्थापन गर्ने अधिकार, स्थानीय पूर्वाधार छनौट, निर्णय गर्ने अधिकार, आवश्यक विषय विशेषज्ञ, कर्मचारी माग गर्ने, नियुक्ति गर्ने अधिकार, स्थानीयतहका कार्यलयहरु सञ्चालन गर्ने सम्बन्धी अधिकार, स्थानीय स्रोत-साधनको परिचालन गर्ने अधिकार, स्थानीय कर सम्बन्धी स्थानीय प्रभाव सम्बन्धी अधिकार । |
| ५५ | **स्थानीय सरकारमा मात्र रहने कार्यकारिणी/प्रशासनिक अधिकारहरू के के हुनसक्छ ?**<br>कार्यपालिका, न्यायपालिका र व्यवस्थापिका, पत्रकारिता, स्थानीय प्रशासन, नागरिकसमाज, जनअधिकार प्रति सदैव सचेत र दण्डहीनताको अन्त्य । |
| ५६ | **भावी संविधानमा सुशासनको प्रत्याभूतिका लागि कसलाई बढी जिम्मेवार बनाउन उपयुक्त हुन्छ ?**<br>अनुगमन एकाइ, दण्डहीनताको अन्त्य गर्ने, सुशासन कायम गर्ने र गैर कानूनी काम छानविन गर्न सम्पूर्ण तहमा गुप्तचर निकायको व्यवस्था गर्ने, बालबालिका हितसंरक्षण आयोग गठन, गरीबी निवारण आयोग, दलित, महिला, आदिवासी, जनजाति, लोपोन्मुख र सीमान्तकृतलाई संरक्षण सहित आरक्षण, आलोचना गर्न पाउने हक, घुम्ती अदालत, सत्यनिरूपण आयोग, दण्डहीनताको अन्त्य, जनलेखापरीक्षण, लैङ्गिक भेदभाव हटाउने, राज्य सङ्गठित र सुशासित हुन तीनै निकाय मिल्नु पर्ने, सबै संयन्त्रमा समावेशी अनुहार झल्कने, योजना बनाउने र सञ्चालन गर्नेभन्दा फरक संयन्त्रले मूल्याङ्कन गर्ने, धर्म, भाषा, संस्कृतिमा हस्तक्षेपरहित, प्रधानमन्त्री. तथा मन्त्रीहरूलाई उद्घाटन कार्यमा निषेध गर्ने, जीविकोपार्जनको सुनिश्चित व्यवस्था, सेवा सुविधा प्राप्त गर्न मन्त्रीहरूलाई सार्वजनिक सुनुवाइ, समावेशी आयोग, विकास आयोग, अन्तरप्रदेश सम्बन्ध आयोग, पारदर्शिता, सहभागितात्मक, निष्पक्ष अनुगमन मूल्याङ्कन गर्ने संयन्त्र, स्थानीय अदालत, अख्तियार |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| | दुरूपयोग अनुसन्धान आयोग दलगत र व्यक्तिगत स्वार्थभन्दा माथि उठ्नु पर्ने, पुरस्कार र दण्डको संवैधानिक प्रावधान, जनगुनासो सुनुवाइको लागि सामाजिक सुरक्षाको पूर्ण प्रत्याभूति, लोककल्याणकारी सेवा आयोग, भ्रष्टाचार गर्नेलाई पदबाट हटाउने, वकिल, न्यायाधीश, पुलिस, नेता र कर्मचारीलाई कडा आर्थिक नियन्त्रण गर्नुपर्ने, तल्लो तहको अदालतलाई पनि रिटको सुविधा, जनताप्रति उत्तरदायी सुशासन र जनताको गाँस, बास र कपासको ग्यारेण्टी राज्यले गर्नुपर्ने, कार्यपालिकामा समावेशी पहुँच, स्थानीय निकायलाई अधिकारसम्पन्न बनाउनु, संवैधानिक अङ्गहरूलाई राजनीतिक हस्तक्षेपबाट टाढा राखिनु पर्ने र कर्मचारी यन्त्रलाई Law and Order निर्धारण गर्न स्वतन्त्र रहन दिनुपर्छ । ज्यानमारा र बलात्कारीलाई मृत्युदण्ड, असल काम गर्ने र नगर्नेलाई पुरस्कार र दण्ड, सामाजिकसुरक्षा, मौलिक हकको ग्यारेण्टी गर्ने, अनुगमनका लागि संयन्त्र बनाउने, कुशासन गर्ने व्यक्तिलाई दण्ड सजाय दिने, कानूनी सजाय गर्ने, भ्रष्टाचार नियन्त्रण आयोगको गठन संविधानमै व्यवस्था गर्ने, सार्वजनिक सुनुवाइ, अनुगमन, छड्के जाँच, गा.वि.स.लाई प्रभावकारी बनाउन पर्ने, सर्वपक्षीय संयन्त्रको विकास गर्ने, राज्य संयन्त्र तलसम्म आवश्यक, समावेशी अनुगमन निरीक्षण र नियन्त्रण संयन्त्र निर्माण, भूमिमेलमिलाप आयोग । |
| ५७ | **सुशासनको प्रत्याभूतिका लागि के कस्ता संवैधानिक प्रावधान एवं निकायहरू राखिनु उपयुक्त हुन्छ ?**<br>कार्यपालिकाले न्यायाधीशको नियुक्ति गर्ने, प्रधानमन्त्री संसदप्रति उत्तरदायी, स्वतन्त्र न्यायपालिका, व्यवस्थापिकाको मातहतमा जनउत्तरदायी सुशासनको व्यवस्था, नीति निर्देशन कार्यान्वयन गर्न जनताका सुझाव बमोजिम न्यायपालिकाले जनतालाई न्याय दिनु पर्ने, एकले अर्काको हस्तक्षेप नगर्ने, राजनीतिक हस्तक्षेप नगर्ने, व्यवस्थापिकाबाट सङ्घीय कानून बनाउने, व्यवस्थापिका र न्यायपालिका बीच विवाद निरूपण गर्न आयोग गठन गर्ने, व्यवस्थापिका-संसदमा न्यायालयमा उठेका विवादबारे संसदीय सुनुवाइ गर्ने र न्यायाधीश नियुक्तिमा संसदीय सुनुवाइ गर्ने, शक्तिसन्तुलनको सिद्धान्त अपनाउने, कानूनले तोके बमोजिम संविधानमा प्रष्ट हुनुपर्ने, न्यायपालिकाको स्वेच्छाचारितामा र वर्तमानको जस्तो अपारदर्शिताविरूद्ध व्यवस्थापिकाले प्रश्न उठाउने र महाभियोग लगाउन पाउने कार्यको व्यवस्था, न्यायपालिका पूर्णरूपमा व्यवस्थापिकाको नियन्त्रणमा हुनुपर्छ । व्यवस्थापिकाले तर्जुमा गरेका ऐनहरु संविधानतः राष्ट्रिय आवश्यकता, जनहित र नागरिक स्वतन्त्रता अनुकूल भए नभएको जाँच्ने अधिकार न्यायपालिकामा राखी कार्यपालिकाले सोको व्यवस्थापन गर्ने अधिकार पाउनु पर्छ । न्यायाधीशको पद दुरूपयोग भएमा सार्वजनिक सुनुवाइ गर्ने । |
| ५८ | **व्यवस्थापिका र न्यायपालिकासँगको अन्तरसम्बन्ध (सन्तुलन तथा नियन्त्रण) का सन्दर्भमा कार्यपालिकालाई के कस्तो अधिकारहरू प्रदान गर्नु उपयुक्त हुन्छ ?**<br>सबै सरकारको केन्द्र सरकारसँग सम्बन्ध रहनुपर्ने, स्वेच्छाचारी गरेमा केन्द्र/सङ्घले अङ्कुश लगाउनु पर्ने, प्रदेश-प्रदेश बीच विवाद सङ्घको निर्णय बमोजिम हुने, स्थानीय सरकार प्रदेशको मातहत, प्रादेशिक सरकार सङ्घ सरकारको मातहत, स्वतन्त्र रूपमा स्थानीय सरकार चलाउन पाउने, प्रादेशिक सरकार र स्थानीय सरकार बीच सन्तुलन हुनुपर्ने, केन्द्रले अनुगमन गरी निर्देशन दिन सक्ने अधिकार हुनुपर्ने, स्थानीय सरकारले कामको कार्यान्वयन गर्ने, गरिएका कामको अनुगमन प्रादेशिक सरकारले गर्नुपर्ने, सन्तुलन र नियन्त्रण सङ्घीय सरकारले गर्नुपर्ने,स्थानीय-स्थानीय निकाय बीच प्रदेशले र प्रदेश-प्रदेश एवं केन्द्र बीच केन्द्रले समन्वयगरी सन्तुलन गरी कायम गर्ने । |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| ५९ | **प्रादेशिक सरकार, सङ्घीय सरकार र स्थानीय सरकार बीचको अन्तर सम्बन्ध (सन्तुलन तथा नियन्त्रण) का सन्दर्भमा के कस्ता अधिकारहरू कुन-कुन निकायलाई प्रदान गर्नु उपयुक्त हुन्छ ?**<br>सङ्घ प्रदेश सरकारको मातहतमा राष्ट्रपतिले घोषणा गर्ने र एक महिनाभित्र सङ्घीय प्रतिनिधिसभाले अनुमोदन गर्ने, प्रादेशिक तथा स्थानीय यन्त्रलाई समेटी सङ्घीय सरकारमा, सङ्घीय सरकार र प्रादेशिक सरकारको सर्वसम्मतबाट, मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रपतिले घोषणा गर्ने तर व्यवस्थापिकाले अनुमोदन गर्ने, सङ्कटको प्रकृति हेरी केन्द्रीय सरकारको राय परामर्शद्वारा राष्ट्रपतिले, प्रादेशिक सरकारमा सङ्घीय सरकारको स्वविवेकमा । |
| ६० | **सङ्कटकालीन स्थिति जस्तो विशेष परिस्थिति उत्पन्न भएमा सङ्कटकाल घोषणा गर्ने अधिकार कसमा रहनु पर्छ ?**<br>अपराधीको मुद्दा सरकारले फिर्ता लिने हालको प्रचलन खारेज, जनप्रतिनिधिको सहयोग लिएर, केन्द्र/सङ्घ/प्रदेशका सबै सुरक्षाका निकायहरु परिचालन गरी शान्तिसुरक्षा कायम राख्नुपर्ने, प्रदेश सरकारको अनुरोध भएमा मात्र सङ्घले हस्तक्षेप गर्ने । |
| ६१ | **शान्तिसुरक्षा कायम गर्ने अधिकारलाई कसरी व्यवस्थित गर्नु उपयुक्त हुन्छ ?**<br>सुरक्षा परिषद्को निर्णयद्वारा नियन्त्रण गर्ने, वैचारिक संवाद तथा निर्वाचनद्वारा, सङ्घीय प्रतिनिधिको सिफारिशमा उचित कारण सहित राष्ट्रपतिले विघटन गर्ने, प्रदेश प्रमुखको सिफारिशमा सङ्घीय सरकारले, आवश्यक परेमा सङ्घीय सरकारद्वारा । |
| ६२ | **प्रादेशिक सरकारले स्वच्छन्दतापूर्वक कार्य गर्न थालेमा नियन्त्रणका लागि कस्तो उपाय अवलम्बन गर्न सकिन्छ ?**<br>केन्द्रीय सरकारको रोहवरमा, विवादित पक्षहरु बीच आपसी सहमतिमा विवाद अन्त गर्न सङ्घीय सरकारले पहल गर्ने, अन्तरप्रदेश समन्वय आयोगद्वारा, सर्वोच्चको निर्णयद्वारा, विवादका पक्ष, प्रदेश स्थानीय सरकारहरूको आपसी सहमतिबाट, प्रदेश बीचका समस्या समाधान गर्न छुट्टै निकाय गठन गर्ने, संवैधानिक अदालत । |
| ६३ | **प्रदेश-प्रदेश / प्रदेश-स्थानीय सरकार / स्थानीय सरकार-स्थानीय सरकारहरू बीच कुनै विवाद उत्पन्न भएमा यस्तो विवाद कसरी समाधान गर्नु उपयुक्त हुन्छ ?**<br>सङ्घ, प्रदेश, स्थानीय सरकारको अधिकार संविधानमा नै उल्लेख गर्ने, अनुगमन मूल्याङ्कन, समन्वय संयन्त्र निर्माण गर्ने, ५ करोडभन्दा माथिको योजना प्रादेशिक सरकार र ५० करोडभन्दा माथिको योजना सङ्घीय सरकार, आत्मनिर्णय सहितको स्वायत्तता, स्थानीयतहको सिफारिशमा प्रादेशिक र प्रादेशिकको सिफारिशमा सङ्घीय निकायले कार्यक्रम कार्यान्वयन गर्ने, सङ्घीयले कुनै कार्यक्रम कार्यान्वयन गर्दा प्रदेश र स्थानीयको परामर्शविना कुनै पनि कार्यक्रम सञ्चालन नगर्ने, परामर्श नै आवश्यक परेकोले केन्द्रले प्रदेशको र प्रदेशले स्थानीयतहको अधिकारलाई कुण्ठित नगर्ने, प्रदेश र स्थानीय सरकारले सबै निर्णय र कानून केन्द्रलाई जानकारी दिने, प्रादेशिक र स्थानीय सरकारले आ-आफ्नो अधिकार प्रयोग गर्दा अरूको अधिकार हनन् नहोस्, भएको पाइएमा सङ्घीय सरकारले हस्तक्षेप गरी नियन्त्रण गर्ने । अधिकार र निक्षेपण भएर संविधानमा सुनिश्चित हुनुपर्छ, केन्द्रमा सङ्घराज्य, प्रदेशमा प्रादेशिक राज्य र स्थानीयमा स्थानीय प्रमुख, प्रादेशिक सरकारले कुनै काम गर्दा सङ्घीय सरकारको इजाजत लिनुपर्ने, प्रदेशका सम्पूर्ण काम |

| प्रश्न नं | महत्वपूर्ण बुँदाहरू |
|---|---|
| | प्रादेशिक सरकारद्वारा गर्नुपर्ने, केन्द्रले प्रदेशमाथि र प्रदेशले स्थानीय सरकारमाथि अहस्तक्षेप नीति, राजस्व सङ्कलन ७५% प्रदेश र २५% सङ्घ, सङ्घीयतामा जाँदा सहमतिका आधारमा सबै दलहरु जानु पर्ने, देशको अखण्डतालाई अक्षुण्ण राख्दै शान्तिसुरक्षा कायम राख्ने प्रणालीको विकास, स्थानीय भूगोल, जनताको वास्तविकता, प्राकृतिक स्रोत-साधन र मानवीयतालाई ध्यान दिई शान्तिपूर्ण सम्बन्ध राख्ने, कर्णाली स्वायत्त गणराज्य बनाई जुम्ला सदरमुकाम बनाउने, स्थानीयतहमा अल्पसंख्यकको अनिवार्यता । |
| ६४ | **विभिन्न तहका (सङ्घीय, प्रादेशिक र स्थानीय) सरकारहरू बीचको अन्तर सम्बन्धको वारेमा थप केही सुझाव भएमा ।**<br>उल्लेखनीय केही नभएको । |

## ३.२.६. मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिको कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १ | रोजगारीको ग्यारेन्टी गरिनुपर्ने ।, कृषि बजारको व्यवस्था गरिनुपर्ने । महिला, आदिवासी जनजाति, दलित, मधेसी, पिछडिएको क्षेत्रको लागि विशेष आरक्षण गरिनुपर्ने । विगतको नागरिकता वितरण प्रक्रिया त्रुटिपूर्ण भएकोले सो सच्याउनु पर्ने । विरोध प्रदर्शनको रूपमा हुने चक्काजाम र उद्योगधन्दा कलकारखाना तथा शैक्षिक संस्था बन्द गर्ने परिपाटीको अन्त्य गर्नुपर्ने । दण्डहीनताको अन्त्य गर्नुपर्ने । महिलाविरूद्धको हिंसा अन्त्य हुनुपर्ने । मानव बेचबिखन तथा बलात्कार सम्बन्धी कानून कडा प्रकृतिको बनाउनु पर्ने । राज्यको हरेक अङ्गमा महिलाको ५० प्रतिशत प्रतिनिधित्वको व्यवस्था हुनु पर्ने । दाइजो प्रथा लगायत यस प्रकारका कुप्रथाहरूको अन्त्य हुनुपर्ने । सबै किसिमका अपाङ्गहरूका लागि भत्ताको व्यवस्था हुनुपर्ने । अपाङ्गहरूका लागि योग्यता र क्षमताका आधारमा रोजगारीको व्यवस्था हुनुपर्ने । स्वास्थ्य, शिक्षा र रोजगारीलाई मौलिक अधिकारको रूपमा व्यवस्था गरिनुपर्ने । एकल (विधवा) महिलालाई एकल हुनासाथ भत्ताको व्यवस्था गर्नुपर्ने । वृद्ध/जेष्ठ नागरिकहरूका लागि विशेष नीति तय गर्नुपर्ने । बाल श्रमशोषणको अन्त्य हुनुपर्ने । यौन शोषणको अन्त्य हुनुपर्ने । सबै प्रकारका विभेदको अन्त्य हुनुपर्ने । सबैको हक अधिकारको संरक्षण हुनुपर्ने । दोहोरो नागरिकताको अन्त्य गर्ने व्यवस्था गर्नुपर्ने । मातृभाषामा प्रारम्भिक शिक्षा पाउने व्यवस्था गर्नुपर्ने । छोरासरह छोरीलाई पैतृक सम्पत्तिको अधिकार हुनुपर्ने । लैङ्गिक विभेदको अन्त्य हुनुपर्ने । आमाको नामबाट समेत नागरिकता पाउने व्यवस्था हुनुपर्ने । दलित गैरदलित नामाकरणको अन्त्य हुनुपर्ने । गाँस, बास र कपासको ग्यारेन्टी हुनुपर्ने । किसानलाई आफ्नो उत्पादनको मूल्य आफैँ तोक्ने अधिकार हुनुपर्ने । खानेपानी र सिञ्चाईको अधिकार सुनिश्चित हुनुपर्ने । युवा सम्बन्धी छुट्टै विशेष नीति तय गर्नुपर्ने । सबै नागरिकहरूको मानव अधिकारको रक्षा हुनुपर्ने । न्यूनतम एक घर एक रोजगारको नीति लागू गरिनुपर्ने । धार्मिक अधिकारको सुनिश्चित हुनुपर्ने । रोजगारमूलक व्यावसायिक शिक्षाको व्यवस्था गरिनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
| --- | --- |
| टोली नं. २ | शिक्षा, स्वास्थ्य, गाँस, बास, कपास, रोजगारी, सुरक्षा मौलिक हकको रूपमा रहनु पर्ने । सबैखाले विभेदहरूको अन्त्य हुनुपर्ने । बाँच्न पाउने हक सुरक्षित गर्नका लागि चाहिने न्यूनतम शर्त राज्यले पूरा गर्नुपर्ने । जनताका लागि नागरिक तथा राजनीतिक अधिकार तथा आर्थिक, सामाजिक, सांस्कृतिक लगायत आधारभूत मानवअधिकारलाई नयाँ संविधानमा कार्यान्वयन गराउने प्रक्रिया र पद्धति सहित व्यवस्था गर्नुपर्ने । कृषिलाई आधुनिकीकरण गरी औद्योगिक राष्ट्रमा रूपान्तरण गराउने नीति अवलम्बन गरिनुपर्ने । |
| टोली नं. ३ | गाँस, बास, कपास, शिक्षा, स्वास्थ्य, रोजगार, शान्तिसुरक्षा, विकास, सामाजिक सुरक्षाका मान्यतालाई मौलिक अधिकार र राज्यको निर्देशक सिद्धान्तभित्र समेटिनु पर्ने । जनताको राज्यप्रतिको कर्तव्यको पनि व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ४ | जमीन बाँझो राख्नेलाई दण्ड जरिवाना गरिनुपर्ने । आर्थिक क्रान्तिलाई मुख्य कार्यभार बनाई कृषि, जलस्रोत, पर्यटनक्षेत्रको विकासलाई प्राथमिकतामा राखी औद्योगिक विकासमा जोड दिनुपर्ने । श्रमिकको आर्थिक वृद्धि र सामाजिक सुरक्षाको बन्दोबस्त गर्दै विपन्न वर्गको जीवनस्तर उकास्ने कामलाई राज्यले प्राथमिकतामा राख्नुपर्ने । मौलिक अधिकारको ग्यारेण्टी, सङ्घ सङ्गठन गर्ने स्वतन्त्रता, मानव अधिकारको प्रत्याभूति, भेलासम्मेलन, विरोध प्रदर्शन गर्ने स्वतन्त्रता, सुरक्षाको प्रत्याभूति, आवधिक निर्वाचन, प्रेस तथा प्रकाशन स्वतन्त्रता, बहुलवाद, बहुदलीय व्यवस्थाको पूर्णरूपले प्रत्याभूति गर्दै विधिको शासन स्थापित गर्नुपर्ने । बाल अधिकारको ग्यारेण्टी गर्दै सबै खाले बालश्रम निषेध गरिनुपर्ने । लिङ्गभेदको पूर्ण समाप्ति, महिलामाथि हुने सबै खाले विभेदको अन्त्य, सबै क्षेत्रमा महिला सहभागिताको ग्यारेण्टी, दाइजो प्रथामा कडाइका साथ प्रतिबन्ध, महिलाविरूद्ध हिंसाको अन्त्यको व्यवस्था गरिनुपर्ने । क्यान्सर, मृगौला, हेपाटाइटिस, मुटु, एड्स, ब्रेन ट्यूमरजस्ता ठूला रोगको उपचारको सम्पूर्ण जिम्मा राज्यले लिने र आधारभूत स्वास्थ्य सेवालाई पूर्ण रूपमा निःशुल्क बनाइनुपर्ने । समान श्रमको समान ज्याला हुनुपर्ने, श्रमिकको न्यूनतम ज्याला निर्धारण गर्नुपर्ने र शारीरिक तथा मानसिक श्रम बीच रहेको विभेदलाई न्यूनतम विन्दुमा झार्नुपर्ने । |
| टोली नं. ५ | प्राकृतिक स्रोत-साधन र जलसम्पदामाथि जनताको अधिकार र पहुँचको संवैधानिक व्यवस्था हुनुपर्ने । बलात्कारी, भ्रष्टाचारी, चेलीबेटी बेचबिखन गर्ने, राष्ट्रद्रोही, जनद्रोहीलाई मृत्युदण्डको सजाय दिने व्यवस्था हुनुपर्ने । बन्द, हडताल, चक्काजाम, निषेधित राष्ट्र घोषणा गर्नुका साथै दण्डहीनताको अन्त्य हुनुपर्ने । १२ कक्षासम्म मातृभाषामा सरकारी तवरबाट पठनपाठन गर्ने व्यवस्था हुनुपर्ने । मातृभाषाको शिक्षालाई अनिवार्य बनाइनुपर्ने । महिलालाई ५० प्रतिशत अधिकार सुनिश्चित गर्नुपर्ने । विश्व विद्यालयसम्म विभिन्न जातजातिको भाषाबाट पठन पाठन गर्न पाउनु पर्ने । दैवीप्रकोपमा परेकालाई पुनर्वासको संवैधानिक व्यवस्था हुनुपर्ने । शिक्षकलाई पनि कर्मचारीसरहको सेवा सुविधाको व्यवस्था गरिनुपर्ने । पैतृक सम्पत्तिमा महिलालाई पुरूषसरह समान अधिकारको ग्यारेण्टी हुनुपर्ने । दोहोरो शिक्षानीतिको अन्त्य गर्दै शिक्षालाई वैज्ञानिक, व्यावसायिक र रोजगारमूलक बनाइनुपर्ने । गाँस, बास, कपास, शिक्षा, स्वास्थ्य, रोजगार, खाद्य सम्प्रभूता र सुरक्षा मौलिक अधिकारको रूपमा ग्यारेण्टी हुनुपर्ने । सम्पूर्ण असमानता, जातीय भेदभाव, |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | छुवाछूत र सबैखाले उत्पीडनको अन्त्य सहित समान अवसरको ग्यारेण्टी हुनुपर्ने । वृद्धवृद्धा, अपाङ्ग र अनाथ बालबालिकाका लागि विशेष व्यवस्था हुनुपर्ने । त्रिभाषी नीति लागू हुनुपर्ने । आमाको नामबाट नागरिकता प्राप्त गर्ने व्यवस्थाको ग्यारेण्टी हुनुपर्ने । घरेलु हिंसाको अन्त्य गर्न संवैधानिक व्यवस्था हुनुपर्ने । एकल महिलाको लागि संविधानमा विशेष व्यवस्था हुनुपर्ने । |
| टोली नं. ६ | जनजीविकासँग प्रत्यक्ष सरोकार राख्ने गाँस, बास, कपास, शिक्षा, स्वास्थ्य, रोजगार, शान्तिसुरक्षा, विकास र सामाजिक सुरक्षाका मान्यतालाई समेटी देशमा अग्रगामी राजनीतिक, आर्थिक र सामाजिक परिवर्तन सुनिश्चित गर्न निर्देशक सिद्धान्त तथा राज्यको नीतिहरू कार्यान्वयनका लागि जनताको राज्यप्रतिको कर्तव्यको बारेमा संविधानमा नै किटान हुनु पर्ने । महिला हिंसा विरूद्ध कडा कारवाही मृत्युदण्ड समेतको व्यवस्था हुनुपर्ने । वैज्ञानिक भूमिसुधार, आधुनिक कृषि प्रणाली एवं कृषिमा आधारित उद्योगको स्थापना गर्ने बारेमा संविधानमा नै उल्लेख हुनुपर्ने । |
| टोली नं. ७ | मौलिक अधिकारको पूर्ण ग्यारेन्टी गर्नुपर्ने । गाँस, बास, कपास र शिक्षा, स्वास्थ्य, सञ्चार तथा सूचना र रोजगारीको व्यवस्था गर्नुपर्ने । सामाजिक न्याय, महिला, दलित, अपाङ्ग र अल्पसंख्यक जातजातिको हकहित स्पष्ट रूपमा उल्लेख हुनुपर्ने । राज्यका निर्देशक सिद्धान्त तथा नीति प्रभावकारी रूपमा कार्यान्वयन गरिनुपर्ने । स्वच्छ वातावरणमा बाँच्न पाउने र भावी पुस्तालाई, प्राकृतिक सम्पदा हस्तान्तरण गर्न पाउने कुराको ग्यारेन्टी हुनुपर्ने । मातृभाषामा शिक्षा, आफ्नो धर्म संस्कार जोगाउने र विकास गर्ने अधिकार हुनुपर्ने । शान्ति, सुरक्षा, खाद्य सम्प्रभूता र सबैखाले विकासको सुविधा निर्देशक सिद्धान्तले ग्यारेन्टी गर्नुपर्ने । |
| टोली नं. ८ | राज्यका निर्देशक सिद्धान्तमा स्थानीय स्रोत र साधनको उपयोगलाई बढावा दिने कुरा उल्लेख गर्नुपर्ने । महिला, दलित, युवा, वृद्ध र अपाङ्गहरूको हक सुरक्षित हुनुपर्ने । पैतृक सम्पत्तिमा समान अधिकार व्यवहारमा लागू हुनुपर्ने, महिलालाई विज्ञापनको साधन बनाउन नपाइने व्यवस्था हुनुपर्ने, पारिवारिक अदालतको व्यवस्था हुनुपर्ने । बलात्कारीलाई जन्मकैदको सजाय हुनुपर्ने । चेलीबेटी बेचबिखन जस्तो अपराधीलाई कडा कारवाहीको व्यवस्था हुनुपर्ने । एकल महिलालाई श्रीमान्को मृत्यु भएकै मितिबाट विधवा भत्ताको व्यवस्था हुनुपर्ने । घरेलु हिंसाको अन्त्य हुनुपर्ने । बालविवाह र अनमेलविवाहविरूद्ध कडा कानून बनाउनु पर्ने । दाइजो प्रथा र घुम्टो प्रथालाई रोक लगाइनुपर्ने । उच्चशिक्षासम्म महिलालाई निःशुल्क गर्नुपर्ने । राज्यको सम्पूर्णतहमा महिलाहरूको सम्मानजनक प्रतिनिधित्वको ग्यारेण्टी गरिनुका साथै आरक्षण र विशेषाधिकार लागू हुनुपर्ने । कामको पारिश्रमिकतामा समानताको ग्यारेण्टी गर्नुपर्ने । आमाको नामबाट नागरिकता पाउने व्यवस्था संविधानमै उल्लेख हुनुपर्ने । स्वास्थ्य, शिक्षा र रोजगार महिलाको विशेष अधिकारको रूपमा स्थापित गर्नुपर्ने । दलितविरूद्ध छुवाछूत गर्नेलाई राज्यले कडा कारवाही गर्नुपर्ने । भावी संविधानमा दलित शब्द हटाइनु पर्ने । दलितको आर्थिक अवस्था हेरिकन एक घर एक रोजगारीको व्यवस्था हुनुपर्ने । दलित छात्रवृत्ति पनि आर्थिक अवस्थाका आधारमा वितरण गरिनुपर्ने । अन्तर्जातीय विवाहलाई मान्यता दिइनुपर्ने । पुर्खौली पेशालाई कदर गर्दै समय अनुसार परिमार्जन गरी औद्योगीकरण गरिनुपर्ने । युवा रोजगारीको ग्यारेण्टी हुनुपर्ने । वेरोजगारी युवाहरूलाई भत्ताको व्यवस्था हुनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | कामको लागि विदेश जाने नीतिको अन्त्य गरिनुपर्ने । वृद्ध, अपाङ्ग, मानसिक सन्तुलन गुमाएका, असहाय र अनाथहरूलाई गाँस, बास, कपासको व्यवस्था राज्यले गर्नुपर्ने । मौलिक अधिकारको पूर्ण ग्यारेन्टी, गाँस, बास र रोजगारीको व्यवस्थाको सुनिश्चितता तथा सामाजिक न्यायको प्रत्याभूति हुनुपर्ने । राज्यका निर्देशक सिद्धान्त तथा नीति प्रभावकारी रूपमा कार्यान्वयन हुनुपर्ने । राष्ट्रभरि एकै किसिमको निःशुल्क शिक्षा प्रणाली अपनाइनु पर्ने । मातृभाषामा शिक्षा लिन पाउने व्यवस्था हुनुपर्ने । प्राविधिक तथा सीपमूलक शिक्षा प्रणालीको ग्यारेण्टी राज्यले गर्नुपर्ने । शिक्षक अस्पतालको व्यवस्था हुनुपर्ने । जग्गाको निश्चित हदबन्दी तोकिनुका साथै भूमिहीनलाई राज्यले भूमिको व्यवस्था गर्नुपर्ने । उत्पादनका साधनहरु बिउ, विजन र कृषि औजार राज्यले उपलब्ध गराउनु पर्ने । निर्व्याजी रूपमा कृषि ऋण उपलब्ध गराउनुपर्ने । विशिष्ट किसिमका रोग लागेका व्यक्तिहरूलाई राज्यबाटै निःशुल्क उपचारको व्यवस्था हुनुपर्ने । |
| टोली नं. ९ | आरक्षण दिंदा गरीबीलाई एउटा प्रमुख आधार बनाइनुपर्ने । राज्यले गाँस, बास, शिक्षा, स्वास्थ्य, रोजगार आदि आधारभूत आवश्यकताको ग्यारेण्टी गर्नुपर्ने । घरेलु हिंसा, महिलामाथि हुने भेदभाव, दहेज प्रथाको अन्त्य गर्न कानूनी व्यवस्था सहित प्रभावकारी कार्यान्वयन गरिनुपर्ने । हत्या, अपहरण, सार्वजनिक स्थलमा बम विष्फोट गरी हानी नोक्सानी गर्नेलाई मृत्युदण्डको सजाय हुने गरी कानून बन्नुपर्ने । नागरिकताको सम्बन्धमा प्रदेशले जारी गर्न सक्ने वा नसक्ने भन्ने कुरा स्पष्ट उल्लेख गरिनुपर्ने । |
| टोली नं. ११ | शिक्षा, स्वास्थ्य र रोजगारीको ग्यारेण्टी हुनुपर्ने । माछा मार्ने जातिले खोलानालामा निर्बाध रूपले माछा मार्न पाउनु पर्ने । यौन व्यावसायलाई व्यावसायिक दायरामा ल्याउनुपर्ने । स्थानीय भाषामा सरकारी कामकाज गर्न गराउन पाउनु पर्ने । सरकारले पठाउने वैदेशिक रोजगारीमा कोटा प्रणालीको व्यवस्था गरिनुपर्ने । जोखिमपूर्ण काम गर्नेलाई विशेष सुरक्षाको व्यवस्था हुनुपर्ने । वर्गीय आरक्षण राज्यका सबै क्षेत्रमा आवश्यक पर्ने तर निश्चित अवधिका लागि मात्र हुनुपर्ने । मुख्य राजमार्ग, शिक्षण संस्थाहरु, स्वास्थ्य संस्थाहरूलाई शान्तिक्षेत्र घोषित गरी बन्द हडताल निषेधितक्षेत्र बनाउनुपर्ने । मुस्लिम कानून बनाउनु पर्ने । संविधानमा नागरिकका कर्तव्य पनि उल्लेख हुनुपर्ने । प्रत्येक नेपालीलाई नागरिकताको हक हुने व्यवस्था गर्ने । गम्भीर अपराधमा मृत्युदण्डको व्यवस्था हुनुपर्ने । पुँजीगत दण्डको व्यवस्था हुनुपर्ने । शिक्षक, विद्यार्थी, कर्मचारी लगायत सरकारी तलव खाने कुनै पनि व्यक्ति/समुदाय राजनीतिबाट मुक्त हुनुपर्ने तर भोट हाल्न भने पाउनु पर्ने । सरकारी डाक्टरले क्लिनिक चलाउन नपाउने व्यवस्था गरिनुपर्ने । कृषि बजारको व्यवस्था हुनुपर्ने । |
| टोली नं. १२ | गाँस, बास, कपास, शिक्षा, स्वास्थ्य रोजगारी लगायतका विषयलाई मौलिक अधिकारको रूपमा संविधानमा नै व्यवस्था गर्नुपर्ने । विधवालाई दिइने भत्ता विधवा भएको अवस्थादेखि नै र वृद्ध भत्ता नेपालको औसत आयुलाई आधार मानेर उपलब्ध गराउने व्यवस्था हुनुपर्ने । नागरिकता वितरण प्रक्रियालाई अझ बढी व्यवस्थित गर्नुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १३ | शिक्षा, स्वास्थ्य, गाँस, बास, कपास, रोजगारी, सुरक्षा मौलिक हकको रूपमा रहनुपर्ने । कर तिर्ने प्रणालीलाई मौलिक कर्तव्यको रूपमा राख्नुपर्ने । विभेद अन्त्य गर्न संविधानमा नै सामाजिक चेतना सम्बन्धी कार्यक्रम र प्रभावकारी कानूनी व्यवस्था गर्नुपर्ने । मौलिक कर्तव्यको रूपमा सबै नागरिक शिक्षित, समानताको व्यवहार, भेदभावको अन्त्य गर्ने । सबै वर्गलाई नेपाली भन्ने भावना जगाउनुपर्ने । राज्यको हरेक अङ्गमा समानुपातिक सहभागी हुनुपर्ने । राष्ट्रको हितको लागि सदैव क्रियाशील रहनुपर्ने । |
| टोली नं. १५ | भक्तपुर जिल्लालाई सांस्कृतिक सम्पदाक्षेत्र घोषणा गरी पौराणिक कलायुक्त बसोवास क्षेत्र बनाउनुपर्ने । उपभोक्ताको स्वास्थ्यमा प्रतिकूल असर पर्ने गरी विषादिको अत्यधिक प्रयोग भई रहेको कुरा किसानहरूबाटै आएकोले यसको प्रयोग स्वास्थ्यमा प्रतिकूल असर नपर्ने गरी गर्न कृषकलाई विषादि प्रयोग सम्बन्धी नियमित तालिम र जन चेतनामूलक कार्यक्रम अभियानको रूपमा तत्काल सञ्चालन गरिनुपर्ने साथै जैविक खेतीको विकास गरिनु पर्ने । भक्तपुर जिल्लामा रहेका अल्पसंख्यक जातिको पहिचान गरी उनीहरूका लागि विशेष कार्यक्रम लागू गर्नुपर्ने । सवारी दुर्घटना लगायत अन्य विभिन्न कारणले अपाङ्ग हुन विवश नागरिकहरूको संख्या पनि बढ्दो देखिएकोले अपाङ्ग पुनःस्थापना केन्द्र खोल्नु पर्ने साथै अन्य लोककल्याणकारी अपाङ्गमैत्री कार्यक्रम सञ्चालन गरिनुपर्ने । घरेलु हिंसा रोक्नु पर्ने । महिला र बच्चा मार्नेलाई मृत्युदण्डको व्यवस्था संविधानमा गर्नुपर्ने । ठूला-ठूला आयोजना सञ्चालन गर्दा जनजाति लाभान्वित हुनुपर्ने । जनतालाई खाना, नाना र छानाको ग्यारेन्टी हुनुपर्ने । रोजगारीमा महिलालाई प्राथमिकता दिनुपर्ने । जाति र भाषाको कुरा मानवीयताको कुरा भएकोले यसको रक्षा हुनुपर्ने । महिलालाई विशेष हक अधिकार दिने वारेमा संविधानमा स्पष्ट उल्लेख गर्नुपर्ने । महिलालाई यातना दिने र बेचबिखन गर्नेलाई कठोर दण्डको व्यवस्था हुनुपर्ने । पुरूष र घरपरिवारबाट अपहेलित महिलाका लागि संरक्षणको व्यवस्था हुनुपर्ने । नेपाली नागरिकता बसाइँको आधारमा होइन, वंशजको आधारमा मात्रै दिइनुपर्ने । अबको व्यापक लगानी जलस्रोतमा गर्नुपर्ने । मानिसमानिसमा विभेद हुने प्रथा बन्द हुनु पर्ने । देश मेरो हो भन्ने भावना विकास गरिनुपर्ने । छुवाछूत गर्ने विरूद्ध कडा दण्ड सजायको व्यवस्था हुनुपर्ने । महिला, दलित र जनजातिलाई संविधानद्वारा विशेष संरक्षण दिइनुपर्ने । शिक्षा, स्वास्थ्य निःशुल्क हुनुपर्ने । नेपालमा जन्मेको व्यक्ति नेपाली नागरिक हुनुपर्ने । मजदूरको जीवनयापनको व्यवस्था, क्रान्तिकारी भूमिसुधारको कार्यान्वयन, दण्डहीनताको अन्त्य र सबै जातजातिलाई संरक्षणको व्यवस्था हुनुपर्ने । संविधानले जातजाति र भाषाको संरक्षण गर्नुपर्ने । गरीब, सीमान्तकृत र निमुखाको मुद्दा न्याय कोषमार्फत् गरिनुपर्ने । दलितलाई योग्यताको आधारमा नोकरीको व्यवस्था गरिनुपर्ने । महिलामाथि हुने भेदभावको, नातावाद र कृपावादको अन्त्य गरी दलितलाई पछाडि पार्ने संस्कारको अन्त्य गरिनुपर्ने । वैदेशिक रोजगारीमा युवाहरु पठाउने काम रोकिनुपर्ने । अपाङ्गको अधिकार सुनिश्चित हुनुपर्ने । अपाङ्गलाई राज्यको माथिल्लो निकायमा पठाउने नीति बन्नुपर्ने । सबैका लागि एउटै शैक्षिक नीति बनाई हरेक भाषाको विश्वविद्यालय खोल्नुपर्ने । गाउँस्तरीय वृद्धाश्रमको व्यवस्था गरी अपाङ्ग भत्ता खारेजी गर्ने । तेस्रो |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | लिङ्गीले पहिचान सहित नेपाली नागरिकताको प्रमाणपत्र पाउनु पर्ने । पुरातात्विक वस्तुको संरक्षण हुनुपर्ने । समानताको सुनिश्चितता हुनुपर्ने । वैयक्तिक अधिकारको उपभोगमा स्वतन्त्रता हुनुपर्ने । भेदभावविरूद्धको अधिकार हुनुपर्ने । आधारभूत शिक्षा, स्वास्थ्य र रोजगारको प्रत्याभूति हुनुपर्ने । गाँस, बास र कपासको सुनिश्चितता हुनुपर्ने । महिला, दलित, आदिवासी, जनजाति, अल्पसंख्यक, कर्णाली क्षेत्रको विशेष अधिकार हुनुपर्ने । शोषणविरूद्धको हक हुनुपर्ने । ट्रेड युनियन र सामूहिक सौदावाजीको हक हुनुपर्ने । बाध्यकारी श्रमविरूद्धको हक हुनुपर्ने । बालश्रमको अन्त्य हुनुपर्ने । सामाजिक सुरक्षाको व्यवस्था हुनुपर्ने । आरक्षण आर्थिक सूचकको आधारमा हुनुपर्ने ।<br><br>राष्ट्रप्रमुख पनि दण्डभागी हुने व्यवस्था गर्दै दण्डहीनताको अन्त्य हुनुपर्ने । सबै विकास योजना सहभागितामूलक रूपमा सञ्चालन हुनुपर्ने । निःशुल्क र समान किसिमको व्यावसायिक शिक्षाको व्यवस्था हुनुपर्ने । निजी विद्यालयलाई सरकारी शिक्षामा रूपान्तरित गर्नुपर्ने । जग्गा र सम्पत्तिमा हदबन्दी लगाउनुपर्ने । पुरूषसरह अगाडि आउन महिलाका लागि विशेष अधिकारको व्यवस्था गरिनुपर्ने । जसको जोत उसको पोत हुनुपर्ने । गा.वि.स.मा महिलाको निम्ति रकम छुट्याउनु पर्ने । शिक्षा अनिवार्य र निःशुल्क गर्नुपर्ने । शिक्षकका अधिकार समानताको आधारमा स्थापित हुनुपर्ने । शिशु अवस्थामा बालबालिकाको हक सुरक्षित हुनुपर्ने । समान कामको लागि महिला र पुरूषको ज्याला बराबर हुनुपर्ने । तँ, तिमी, तपाई, हजुरको सामन्ती संस्कार हटाइनुपर्ने । किसानको हित र भूमिसुधारमाथि ध्यान दिनुपर्ने । गम्भीर अपराध गर्नेलाई मृत्युदण्ड दिनुपर्ने । मातृभाषामा शिक्षा दिनुपर्ने । उत्पीडकहरूको मानसिकता बदल्ने कुरामा जोड दिनुपर्ने । |
| टोली नं. १६ | स्थानीय भाषामा सरकारी कामकाज गर्न गराउन पाउनु पर्ने । सरकारले पठाउने वैदेशिक रोजगारीमा कोटा प्रणालीको व्यवस्था गरिनुपर्ने । जोखिमपूर्ण काम गर्नेलाई विशेष सुरक्षाको व्यवस्था हुनुपर्ने । वर्गीय आरक्षण राज्यका सबै क्षेत्रमा आवश्यक पर्ने तर निश्चित अवधिका लागि मात्र हुनुपर्ने । मुख्य राजमार्ग, शिक्षण संस्थाहरू, स्वास्थ्य संस्थाहरूलाई शान्ति क्षेत्र घोषित गरी बन्द हडताल निषेधितक्षेत्र बनाउनु पर्ने । मुस्लिम कानून बनाउनु पर्ने । संविधानमा नागरिकका कर्तव्य पनि उल्लेख हुनुपर्ने । प्रत्येक नेपालीलाई नागरिकताको हक हुने व्यवस्था गर्ने । गम्भीर अपराधमा मृत्युदण्डको व्यवस्था हुनुपर्ने । पुँजीगत दण्डको व्यवस्था हुनुपर्ने । शिक्षक, विद्यार्थी, कर्मचारी लगायत सरकारी तलव खाने कुनै पनि व्यक्ति/समुदाय राजनीतिबाट मुक्त हुनुपर्ने तर भोट हाल्न भने पाउनु पर्ने । |
| टोली नं. १७ | बलात्कारीलाई जन्मकैदको सजाय हुनुपर्ने । चेलीबेटी बेचबिखन जस्तो अपराधीलाई कडा कारवाहीको व्यवस्था हुनुपर्ने । एकल महिलालाई श्रीमानको मृत्यु भएकै मितिबाट विधवा भत्ताको व्यवस्था हुनुपर्ने । घरेलु हिंसाको अन्त्य हुनुपर्ने । बालविवाह र अनमेल विवाह विरूद्ध कडा कानून बनाउनु पर्ने । दाइजो प्रथा र घुम्टो प्रथालाई रोक लगाइनुपर्ने । उच्चशिक्षासम्म महिलालाई निःशुल्क गर्नुपर्ने । राज्यका सम्पूर्णतहमा महिलाहरूको सम्मानजनक प्रतिनिधित्वको ग्यारेण्टी गरिनुका साथै आरक्षण र विशेषाधिकार लागू हुनुपर्ने । कामको पारिश्रमिकतामा समानताको |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | ग्यारेण्टी गर्नुपर्ने । आमाको नामबाट नागरिकता पाउने व्यवस्था संविधानमै उल्लेख हुनुपर्ने । स्वास्थ्य, शिक्षा र रोजगार महिलाको विशेष अधिकारको रूपमा स्थापित गर्नुपर्ने । दलितविरूद्ध छुवाछूत गर्नेलाई राज्यले कडा कारवाही गर्नुपर्ने । भावी संविधानमा दलित शब्द हटाइनु पर्ने । दलितको आर्थिक अवस्था हेरिकन एक घर एक रोजगारीको व्यवस्था हुनुपर्ने । दलित छात्रवृत्ति पनि आर्थिक अवस्थाका आधारमा वितरण गरिनुपर्ने । अन्तर्जातीय विवाहलाई मान्यता दिइनुपर्ने । पुर्खौली पेशालाई कदर गर्दै समय अनुसार परिमार्जन गरी औद्योगिकीकरण गरिनुपर्ने । |
| टोली नं. १८ | विश्वव्यापी मानवअधिकार घोषणाका प्रावधान अब बन्ने संविधानमा राख्नुपर्ने । मौलिक अधिकारमाथि कुनै पनि हालतमा बन्देज लगाउन नपाइने प्रावधान हुनुपर्ने । शिक्षा, स्वास्थ्य, रोजगारलाई मौलिक हकमा राखेर ती हक अधिकार राज्यबाट प्रदान गर्ने सुनिश्चित हुनुपर्ने । बालबालिका, महिला, दलित, अपाङ्ग, लोपोन्मुख, सीमान्तकृत, पिछडिएका जाति, क्षेत्र, वर्गका नागरिकको अधिकार राज्यले संरक्षण दिनुपर्ने । विद्यमान नागरिकता वितरण प्रणालीलाई पुनः विचार गरी वैज्ञानिक र व्यवस्थित गर्नुपर्ने । नेपालीले नागरिकता सरल र सहज रूपमा पाउनु पर्ने व्यवस्था राख्ने । अन्तरिम संविधानमा व्यवस्था गरिएका प्रावधान यथावत् राख्ने । दलित, महिला, उत्पीडित, आर्थिक, सामाजिक दृष्टिले पिछडिएका जातलाई प्रतिस्पर्धी क्षमता नमर्ने र प्रतिभापलायन हुन नपाउने गरी आरक्षण र विशेषाधिकारको व्यवस्था गर्ने । |
| टोली नं. १९ | आधारभूत नागरिक अधिकार र स्वतन्त्रताको प्रत्याभूति हुनुपर्ने । महिला, बालबालिका, युवा, मजदूर, किसान, मधेसी, आदिवासी, जनजाति, दलित, पिछडिएको क्षेत्र, अपाङ्ग, मुस्लिम लगायत सबै अल्पसंख्यक समुदायको हक, अधिकार संरक्षण गरिनुपर्ने । मौलिक अधिकारको कार्यान्वयन सम्बन्धी व्यवस्था सरल, सहज र छिटोछरितो हुनुपर्ने । नागरिकहरूको मौलिक कर्तव्य पनि संविधानमा उल्लेख गरिनुपर्ने । |
| टोली नं. २० | आमाको नामबाट नागरिकता पाउने व्यवस्था संविधानमै उल्लेख हुनुपर्ने । स्वास्थ्य, शिक्षा र रोजगार महिलाको विशेष अधिकारको रूपमा स्थापित गर्नुपर्ने । दलितविरूद्ध छुवाछूत गर्नेलाई राज्यले कडा कारवाही गर्नुपर्ने । भावी संविधानमा दलित शब्द हटाइनु पर्ने । दलितको आर्थिक अवस्था हेरिकन एक घर एक रोजगारीको व्यवस्था हुनुपर्ने । |
| टोली नं. २१ | छुवाछूत तथा जातीय विभेद विरूद्धको हक उल्लेख हुनुपर्ने । दलितहरूलाई सबै किसिमका शिक्षा र तहमा छात्रवृत्ति सहित निःशुल्क शिक्षाको हक हुनुपर्ने । शिक्षा, स्वास्थ्य, रोजगार र खाद्य सम्प्रभूताकासाथै रोजगारीको ग्यारेन्टी नहुँदासम्म वेरोजगारी भत्ताको व्यवस्था हुनुपर्ने । एक घर एक रोजगारको व्यवस्था लागू गरिनुपर्ने । महिलाको प्रजनन अधिकार सुनिश्चित हुनुपर्ने । दम्पतीको स्वीकृति वेगर गर्भपतन गराएमा रू.५०,००० ।– जरिवाना गर्नुपर्ने । महिला, दलित, अपाङ्ग र पिछडिएका वर्गलाई राज्यसत्ताको हरेक अङ्ग वा निकायमा सहभागी गराउन विशेष अधिकारको व्यवस्था हुनुपर्ने । पैतृक सम्पत्तिमा महिला र पुरूषलाई समान अधिकार हुनुपर्ने । समान कामको लागि समान ज्याला हुनुपर्ने र महिलाहरूलाई सम्पत्तिमाथिको अधिकारको प्रत्याभूत गराउन अचल सम्पत्ति बेचबिखन गर्दा श्रीमान् |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | र श्रीमती दुबैको सहमति चाहिने व्यवस्था गरिनुपर्ने । सबै जातजातिले आफ्नो मातृभाषामा शिक्षा लिन पाउनु पर्ने । क्षतिपूर्तिको हक हुनुपर्ने । शुद्ध पिउने पानी र सरसफाई सम्बन्धी हक हुनुपर्ने । |
| टोली नं. २२ | शिक्षा, स्वास्थ्य (प्रजनन स्वास्थ्यसमेत) र रोजगारीलाई मौलिक हकको रूपमा राखिनु पर्ने । खाद्य सम्प्रभूताको हक (गाँस), आवास, लुगा लगाउने अधिकार (कपास), शिक्षा, स्वास्थ्य, रोजगारीको हक, सूचनाको हक, सुरक्षाको हक, विकासको हक र मनोरञ्जनको हकलाई मौलिक हकको रूपमा राखिनु पर्ने । मल, बीउ र औजारमा सहुलियत र उत्पादित सामानको उचित मूल्यमा बिक्रीको लागि बजारको ग्यारेन्टी गरिनुपर्ने । कक्षा १२ सम्म अनिवार्य र निःशुल्क शिक्षाको व्यवस्था हुनुपर्ने । महिला, आदिवासी जनजाति, दलित, मधेसी, मुस्लिम र पिछडिएको क्षेत्र लगायतको लागि विशेष आरक्षण गरिनुपर्ने । यस व्यवस्था अन्तर्गत विशेष वर्गभन्दा पनि निश्चित मापदण्डभन्दा तल रहेका सबैलाई आरक्षण गरिनुपर्ने । विगतको नागरिकता वितरण प्रक्रिया त्रुटिपूर्ण रहेको हुँदा यसलाई सुधार गरिनुपर्ने । विरोध प्रदर्शनको रूपमा हुने चक्काजाम र शैक्षिक संस्था बन्द गर्ने परिपाटीको अन्त्य गरी आन्दोलनको नयाँ तरिका अवलम्बन गरिनुपर्ने । दण्डहीनताको अन्त्य गरिनुपर्ने । विदेशमा रहेका नेपालीहरूको मताधिकारको सुनिश्चितता गरिनुपर्ने । अपाङ्गहरूको लागि विशेष आरक्षणको व्यवस्था गरिनुपर्ने । |
| टोली नं. २३ | मौलिक अधिकारका विषयमा अन्तरिम संविधानमा व्यवस्था भए बाहेक शिक्षा, स्वास्थ्य, खाद्य सम्प्रभूता, रोजगार, आवासको हक सुनिश्चित हुनुपर्ने । सामाजिक न्याय, महिला, दलितका हकहित जस्ता विषयमा संविधानमा स्पष्ट व्यवस्था हुनुपर्ने । राज्यका निर्देशक सिद्धान्त तथा नीति प्रभावकारी कार्यान्वयन हुनुपर्ने । नागरिकता सम्बन्धी व्यवस्थाको दुरूपयोग नहुनेगरी संविधानमा नै व्यवस्था गर्नुपर्ने । |
| टोली नं. २४ | मौलिक अधिकारको पूर्ण ग्यारेण्टी, गाँस, बास र रोजगारीको व्यवस्था, सामाजिक न्याय, महिला, दलित अपाङ्गका हकहित जस्ता विषयमा स्पष्ट व्यवस्था हुनुपर्ने । राज्यका निर्देशक सिद्धान्त तथा नीति प्रभावकारी रूपमा कार्यान्वयन हुनुपर्ने । शिक्षा, स्वास्थ्य, रोजगारी र खाद्य सम्प्रभूता जनताका मौलिक अधिकार हुनुपर्ने । चक्काजाम, हड्तालजस्ता कार्य बन्द गरिनुपर्ने । शिक्षा, स्वास्थ्य र शान्तिसुरक्षाका जस्ता विषय प्रस्तावनामा राखिनुपर्ने । |
| टोली नं. २५ | सम्पूर्ण मजदूरका लागि राज्यद्वारा गाँस, बास, कपास, स्वास्थ्य र रोजगारीको ग्यारेण्टी हुनुपर्ने । राशन कार्ड र वेरोजगारी भत्ताको ग्यारेण्टी हुनुपर्ने । जातीय, क्षेत्रीय, वर्गीय, धार्मिक र लैङ्गिक आधारमा विभेद हुनु नहुने । बालश्रमको अन्त्य हुनुपर्ने । राज्य र राजनीतिक दलका सबै तहमा समानुपातिक प्रतिनिधित्व हुनुपर्ने । |
| टोली नं. २६ | गाँस, बास, कपास, शिक्षा, स्वास्थ्य, रोजगार, शान्तिसुरक्षा, विकास, सामाजिक सुरक्षाका मान्यतालाई मौलिक अधिकार र राज्यको निर्देशक सिद्धान्तभित्र समेटिनु पर्ने । जनताको राज्यप्रतिको कर्तव्यको पनि व्यवस्था गरिनुपर्ने । महिला र दलित समुदायका अधिकारलाई सुनिश्चित गर्नुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. २७ | सामाजिक न्याय, महिला, दलितका हकहितजस्ता विषयमा संविधानमा स्पष्ट व्यवस्था हुनुपर्ने । राज्यका निर्देशक सिद्धान्त तथा नीति प्रभावकारी कार्यान्वयन हुनुपर्ने । नागरिकता सम्बन्धी व्यवस्थाको दुरूपयोग नहुनेगरी संविधानमा नै व्यवस्था गर्नुपर्ने । |
| टोली नं. २८ | महिलाविरूद्ध हिंसा र कानूनी विभेदको अन्त्य हुनुपर्ने । पिछडिएका र सीमान्तकृत वर्गको उत्थानको निम्ति कटिबद्ध हुनुपर्ने । राज्यको नीति परिणाममुखी हुनुपर्ने, साधनको परिचालन न्यायोचित हुनुपर्ने । समानतामा जोड दिइनुपर्ने । सबै जनजातिलाई समान अवसर दिइनु पर्ने । |
| टोली नं. २९ | सुकुम्बासी र भूमिहीनहरूको अधिकार संरक्षण र जग्गाको व्यवस्था गरिनुपर्ने । बन्द हडताल जस्ता कुराहरु तुरून्त बन्द गरिनुपर्ने । कमैयाहरूको समस्या समाधान गरिनुपर्ने । उत्पीडित जातिहरूलाई समेट्ने संविधान निर्माण हुनुपर्ने । एकल महिला भएकै दिनदेखि भत्ताको व्यवस्था हुनुपर्ने । राज्यको नीतिनिर्माणतहमा महिलाको उचित सहभागिता हुनुपर्ने । संसदमा दलितको सहभागिता र राज्य व्यवस्थामा विशेषाधिकार हुनुपर्ने । विभेदकारी कानूनहरूको अन्त्य गरिनुपर्ने । बेपत्ता परिवारलाई राहत दिनुपर्ने । |
| टोली नं. ३० | नागरिकलाई योग्यता, क्षमता, रूचि र सीपको आधारमा रोजगारी, खान, लाउन, बस्ने एवं स्वास्थ्य र मानव अधिकारको ग्यारेन्टी मौलिक हकमा लेखिनुपर्ने । द्वैधशिक्षा प्रणालीको अन्त हुनुपर्ने । स्नातकतहसम्मको शिक्षा निःशुल्क र अनिवार्य हुनुपर्ने । प्राविधिक शिक्षा प्रणालीको व्यवस्था हुनुपर्ने । उत्पादन श्रमसँग जोडिएको शिक्षा प्रणाली हुनुपर्ने । मदरसाहरूको उचित व्यवस्थापन र केन्द्रीय मदरसा बोर्डको गठन हुनुपर्ने । |
| टोली नं. ३१ | महिला र दलितहरूको समस्याको बारेमा विशेषाधिकारको व्यवस्था हुनुपर्ने । शिक्षा, स्वास्थ्य र रोजगारीलाई मौलिक अधिकारका रूपमा ग्यारेण्टी गरिनुपर्ने । |
| टोली नं. ३२ | वंशज, अङ्गीकृत र बाबुआमा पत्ता नलागेमा पनि नेपालको नागरिकता प्रदान गरिनुपर्ने । संविधानमा मौलिक अधिकार तथा कर्तव्य, राज्यको दायित्व र निर्देशक सिद्धान्तको स्पष्ट परिभाषा र व्याख्या गर्नुपर्ने । राज्यको दायित्व र निर्देशक सिद्धान्तमा संविधानको पालना गर्ने गराउने, जनताको मौलिक हकको प्रत्याभूति गराउनुपर्ने । गाँस, बास, कपास, शिक्षा, स्वास्थ्य र रोजगारजस्ता जनताका आधारभूत आवश्यकताहरु मौलिक अधिकार तथा राज्यको दायित्वमा समेट्नु पर्ने । |
| टोली नं. ३३ | राज्यका निर्देशक सिद्धान्तमा स्थानीय स्रोत र साधनको उपयोगलाई बढावा दिने कुरा उल्लेख गर्नुपर्ने । एकल महिलालाई भत्ता दिने सबालमा उमेरको कुनै सीमा तोकिन नहुने । महिला, दलित, युवा, वृद्ध, दृष्टिविहीन, अपाङ्गहरूको हक सुरक्षित हुनुपर्ने । डोल्पाली लगायत कर्णालीवासीहरूले गाँस, बास, कपास, स्वास्थ्य, शिक्षा र रोजगारलाई मौलिक हकको रूपमा पाउनु पर्ने । सामाजिक सुरक्षा भत्ता वृद्धि गर्नुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ३४ | एक घर एक रोजगार हुनुपर्ने । महिला अधिकार व्यवहारमा लागू हुनुपर्ने । खाद्य सम्प्रभूताको हक मौलिक हकमा हुनुपर्ने । दुर्गमक्षेत्रका जनताले आफ्नै जिल्लामा रोजगारी पाउनु पर्ने । ग्रामीण जनताका लागि चाहिने सेवा गाँउमा नै उपलब्ध हुनुपर्ने । मानवअधिकारको सम्मान हुनुपर्ने । |
| टोली नं. ३५ | गाँस, बास, कपासलाई मौलिक अधिकारको रूपमा स्थापित गरिनुपर्ने र यसमा कर्णालीका जनतालाई विशेषाधिकार हुनुपर्ने । स्वास्थ्य सुविधा हुम्लाबासीलाई निःशुल्क हुनुपर्ने र उच्चशिक्षासम्म कर्णालीवासीलाई निःशुल्क बनाइनु पर्ने । हुम्लावासीलाई रोजगारीमा अग्राधिकारको व्यवस्था हुनुपर्ने । |
| टोली नं. ३६ | बाल अधिकारको ग्यारेन्टी हुनुपर्ने । निजी र सरकारी विद्यालयमा एउटै पाठ्यक्रम हुनुपर्ने । १२ कक्षासम्म अनिवार्य शिक्षा हुनुपर्ने । आरक्षणको कोटा खारेज गर्दै स्वतन्त्र प्रतिस्पर्धा हुनुपर्ने । बलात्कार मुद्दामा हदम्याद राखिनु नहुने । विधवा भएकै दिनदेखि विधवा भत्ता उपलब्ध हुनुपर्ने । शिक्षा, स्वास्थ्य र रोजगारीको ग्यारेन्टी हुनुपर्ने । खुला विश्वविद्यालयको अवधारणालाई कार्यान्वयन गराउनुपर्ने । |
| टोली नं. ३८ | गाँस, बास, कपास, शिक्षा, स्वास्थ्य, रोजगार, शान्तिसुरक्षा, विकास, सामाजिक सुरक्षाका मान्यतालाई मौलिक अधिकार र राज्यको निर्देशक सिद्धान्तभित्र समेटिनु पर्ने । जनताको राज्यप्रतिको कर्तव्यको पनि व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ३९ | गास, बास, कपास, शिक्षा, स्वास्थ्य, रोजगारी, खाद्य सुरक्षाजस्ता विषयलाई मौलिक हकका रूपमा पाउनु पर्ने । आधारभूत अधिकारको लागि आवश्यक पर्ने पूर्वाधार निर्माणको दायित्व सरकारको हुनुपर्ने । छुवाछूतको अन्त्य, जातीय विभेद र छोरीमाथि विभेद गर्नेलाई कडा दण्डको व्यवस्था हुनुपर्ने । हलिया, सुकुम्वासी, वादी समुदायको पुनःस्थापनाको व्यवस्था हुनुपर्ने । धर्मनिरपेक्षता हुनुपर्ने । परम्परागत सीप र व्यवसायको व्यावसायिकीकरणका लागि आवश्यक व्यवस्था हुनुपर्ने । समानुपातिक सहभागिताको सुनिश्चितता हुनुपर्ने । सम्पत्तिमाथिको समान अधिकार स्थापना गरिनुपर्ने । |
| टोली नं. ४० | अधिकांश जनतालाई बसोबास, खाद्यान्न, पानी, बिजुली, शिक्षा तथा रोजगारी र पुल पुलेसा, कूलो, स्वास्थ्यको व्यवस्था हुनुपर्ने । सडक, गाडी, बाटोघाटो र सिञ्चाई तथा पानीको साथै दुर्गमक्षेत्रको रूपमा सबै सुविधा पाउनु पर्ने । छुवाछूत र छाउपडीप्रथा हटाउनुपर्ने । महिलाहरूको प्रौढ कक्षा, महिला सीपमूलक तालिम, रोजगार र पिछडिएको महिलाहरूको उत्थान र निःशुल्क उच्चशिक्षाको व्यवस्था हुनुपर्ने । |

## ३.२.७. राज्यको पुर्नसंरचना र राज्यशक्तिको बाँडफाँड समितिको कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १ | राज्य सङ्घीय वा एकात्मक हुने भन्ने वारेमा दुबै प्रमुख सुझाव आएका छन् । सङ्घीयतामा लैजाँदा राज्यलाई हिमाल पहाड तराई मिलाएर विभाजन गर्ने । सङ्घीयताको आधार देश नटुक्रिने गरी सहमतिबाट कायम हुनुपर्ने । सङ्घीय प्रणलीमा प्राकृतिक स्रोत, मुद्रा, परराष्ट्रनीति र रक्षा सम्बन्धी जिम्मेवारी केन्द्रीय सरकारमा हुनुपर्ने । राष्ट्रिय अखण्डतामा खलल नपर्ने गरी आत्मनिर्णयको अधिकार सहितको सङ्घीयताको व्यवस्था गर्ने हो भने सो आत्मनिर्णयको अधिकारको प्रयोग राज्यको विभाजनमा प्रयोग गर्न नपाइने व्यवस्था समेत उल्लेख गर्नुपर्ने । बहुजाती, बहुभाषी, बहुधर्म, बहुसंस्कृतिको सम्मान हुने गरी राज्यको पुनर्संरचना हुनुपर्ने । राज्यको पुनर्संरचना गर्दा सकेसम्म थोरै सङ्घ बन्नु राम्रो हुने । राज्य पुनर्संरचना गर्दा भौगोलिकता, इतिहास, जातीय बसोवास, भाषा, संस्कृति, आर्थिक संभाव्यता आदिसमेतको आधारमा गरिनुपर्ने । कर्णाली प्रदेश सहित ६ वटा राज्य हुनुपर्ने । |
| टोली नं. २ | स्वाधीनता, अखण्डता र राष्ट्रियतालाई अक्षुण्ण राख्दै मुलुकलाई सङ्घीय संरचनामा लैजाने । ताप्लेजुङ्ग र पाँचथर जिल्ला लिम्बू जातिको बाहुल्यता भएको जिल्ला भएकाले लिम्बुवान प्रान्त हुनुपर्नेमा जोड रहेको । राज्यको पुनर्संरचनाको आधार जातीय, क्षेत्रीय, भाषिक, सांस्कृतिक र ऐतिहासिक हुनुपर्ने । सीमाङ्कन ऐतिहासिक पृष्ठभूमिका आधारमा हुनुपर्ने । नामाङ्कन जातीय एवं ऐतिहासिक पहिचानको आधारमा हुनुपर्ने । आत्मनिर्णयको अधिकार सहितको लिम्बुवान स्वायत्त राज्यको माग पूरा हुनु पर्ने । राज्यशक्तिको बाँडफाँड गर्दा कार्यकारी राष्ट्रपति र दैनिक कार्यसञ्चालनको लागि प्रधानमन्त्री हुनुपर्ने । केन्द्र , प्रदेश र स्थानीय गरी ३ तहको सरकार हुनुपर्ने । २ सदनको केन्द्र, जनप्रतिनिधिसभा र राष्ट्रियसभा हुनुपर्ने र प्रदेशमा १ सदन हुनुपर्ने । |
| टोली नं. ३ | राष्ट्रिय एकता र जनता बीचको भाइचारामा खलल नपुग्ने गरी सहयोगात्मक अवधारणामा आधारित भएर सङ्घीय इकाइहरु निर्माण गर्नुपर्ने । |
| टोली नं. ५ | राज्यको पुनर्संरचना आर्थिक, भौगोलिक र ऐतिहासिक आधारमा हुनुपर्ने । |
| टोली नं. ६ | भौगोलिक अवस्थिति र अनुकूलता, जनसंख्याको प्रकृति र जनघनत्व, प्राकृतिक स्रोत र आर्थिक, सम्भावना, भाषिक, सांस्कृतिक एवं जातीय सघनता, राजनीतिक र प्रशासनिक सम्भाव्यताका आधारमा न्यूनतम प्रदेशहरूको बाँडफाँड गरी सङ्घीय एकाइहरु बीच उत्पन्न हुनसक्ने विवाद समाधान सम्बन्धी संयन्त्रको निर्माण संविधानमा हुनुपर्ने । |
| टोली नं. ७ | राज्य पुनर्संरचनाका आधारमा ऐतिहासिक, भूगोल, जातीय प्राकृतिक स्रोत-साधनको उपलब्धता जस्ता विषयमा मिश्रित राय प्राप्त भएको । राज्य पुनर्सरचना गर्दा नेपाली जनतासँग अझ छलफल वहस चलाई सबैलाई जानकारी गराउनु पर्ने । शेर्पाहरूको बाहुल्यता भएको क्षेत्रमा शेर्पा स्वायत्तप्रदेशको माग रहेको । राज्य पुर्नसंरचना गर्दा ILO 169 र UNDRIP लाई आधारमा गर्नुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ८ | राज्यको ढाँचा आत्मनिर्णयको अधिकार सहितको स्वायत्त र सङ्घीय हुनुपर्ने, राज्य पुनर्संरचनाका आधार जातीय, भूगोल, भाषा, ऐतिहासिक पृष्ठभूमि, प्राकृतिक स्रोत-साधनको उपलब्धताजस्ता विषयमा मिश्रित राय प्राप्त भएको । राज्य पुनर्संरचना गर्दा अन्तर्राष्ट्रिय अनुभवबाट पनि शिक्षा लिन सुझाव प्राप्त, राज्य पुनर्संरचना गर्दा नेपाली जनतासँग अझ छलफल वहस चलाई सबैलाई जानकार बनाइनु पर्ने । सङ्घीय एकाइहरूको संख्या सम्बन्धी मिश्रित सुझाव प्राप्त भएको छ, सबै समूहका मागभन्दा वास्तविक नेपालको आवश्यकता के हो भनी पहिचान गरी त्यसको समाधान हुनेगरी मात्र पुनर्संरचना गर्नुपर्ने । |
| टोली नं. ९ | सार्वभौमसत्ता, राष्ट्रिय अखण्डता र राष्ट्रिय एकतामा कुनै पनि हिसाबले खलल नपुग्नेगरी राज्यको पुनर्संरचना गरिनुपर्ने । जातीय कलह र देशविखण्डन नहुने गरी प्रदेशहरु निर्माण गरिनुपर्ने । स्वायत्तता विकास र अग्रगमनका लागि हुनुपर्ने, राज्यबाट अलग्गिने गरी दिइनु नहुने । |
| टोली नं. १० | केन्द्र, प्रान्त, जिल्ला र स्थानीयतह गरी बढीमा चार तह हुनुपर्ने । कतिपय ठाउँमा केन्द्र, प्रान्त र स्थानीय गरी तीनको पक्षमा पनि सुझाव प्राप्त भएको । प्रान्त सकेसम्म कम हुनु पर्दछ । स्वायत्त मधेस एक प्रदेश हुनुपर्ने । राज्य विभाजनको आधार भूगोल, आर्थिक संभाव्यता, जनजाति र भाषाभाषी हुनुपर्ने । राजस्व जुन क्षेत्रमा उठेको छ त्यसै क्षेत्रमा बढी खर्च हुनुपर्ने । स्वायत्तप्रदेशभित्र उपप्रदेश हुन सक्ने । प्रत्येक प्रान्तमा छुट्टाछुट्टै सुरक्षा बल हुनुपर्ने । |
| टोली नं. १२ | सङ्घीय राज्य हुनुपर्ने, समग्र मधेस एक प्रदेश हुनुपर्ने, पहाड तराई र हिमाल मिलाएर सङ्घीयता कायम गर्नुपर्ने, राज्यशक्तिको बाँडफाँड सङ्घीय र प्रान्तीय रूपमा हुनुपर्ने । |
| टोली नं. १३ | नेपालको प्रान्तीय विभाजन, भाषा, जनसंख्या, प्राकृतिक स्रोतको आधारमा हुनुपर्दछ । प्रान्तको नामाकरण ऐतिहासिक स्थल, राष्ट्रिय विभूति, भाषाको आधार उपयुक्त हुन्छ । नेपाललाई ७ प्रान्तीय एकाइमा विभाजन गर्न उपयुक्त हुन्छ । प्रान्तीय सिमानाको निर्धारण जिल्लाको आधारमा हुनुपर्दछ । केन्द्र र प्रान्त बीचको विवादको समाधान, सर्वोच्च अदालत, संवैधानिक अदालत र उच्च स्तरीय आयोगको माध्यमबाट गरिनु पर्दछ । केन्द्रीय, प्रान्तीय र स्थानीय सरकारको अधिकारको बाँडफाँड स्थानीय सरकारले मात्र गर्न पाउने अधिकारको सूची उल्लेख गर्नु पर्दछ । |
| टोली नं. १५ | तल्लो तहमा बढी अधिकार दिनु पर्ने । ३–१५ सम्म प्रदेश निर्माण गरिनुपर्ने । जातीयताको आधारमा सङ्घ निर्माण गरिनु हुँदैन र भौगोलिक आधारमा सङ्घ निर्माण गर्ने । नेवाः राज्य, ताम्सालिङ र थारू राज्यको कुराहरु समाजमा व्यापक रूपमा उठ्ने गरेको छ, खस, बाहुनको कुरा कतै उठदैन संविधानले नेवाः राज्य, ताम्सालिङ, थारू राज्य बनाएमा खस, बाहुनको पनि छुट्टै राज्य हुनुपर्ने । |
| टोली नं. १७ | पुरानो सामन्तवादी संरचना गतिशील नभएको हुँदा राज्यको सबै क्षेत्रमा पुनरर्संरचना होस् । अबको सङ्घीयता आत्मनिर्णयको अधिकार सहितको जातीय/क्षेत्रीय स्वशासनयुक्त होस् । आर्थिक हिसाबले पनि सङ्घात्मक बनाउनु पर्छ । सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्था होस् । भूगोल र |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | जनसंख्याको आधारमा सङ्घीयता हुनुपर्छ । पाँच विकास क्षेत्रलाई नै प्रदेश मानेर सङ्घीयता लागू गर्नुपर्ने । जनजातिका आधारमा सङ्घीयता बन्नु नहुने । हिमाल, पहाड र तराई मिलाएर मात्र सङ्घीयतामा जानु पर्ने । जातीय निरपेक्ष सङ्घीयता हुनुपर्छ । |
| टोली नं. १८ | राष्ट्रिय अखण्डता, अक्षुण्णता कायम राख्दै सबैलाई स्वीकार हुने गरी सङ्घीय प्रदेशको विभाजन गरिनुपर्ने । प्रदेश विभाजन गर्दा, जातीय, भाषिक, संस्कृति, जनसंख्या, प्राकृतिक स्रोत, भूगोल, प्रशासनिक सुगमता, आर्थिक आधारजस्ता विषयहरु अध्ययन विश्लेषण गरी प्रदेश विभाजनको आधारहरु तय गरिनुपर्ने । जनताको चाहना र भावना अनुरूप प्रदेशको नामाकरण गरिनुपर्ने । प्रदेश विभाजनका आधारबाट नै नामाकरण गर्न सकिने । केन्द्र, प्रदेश, स्थानीय गरी ३ तहको सरकारको व्यवस्था गर्ने, केन्द्र, प्रदेश र स्थानीय सरकारको अधिकार बाँडफाँड संविधानमा नै स्पष्ट गर्नुपर्ने । अधिकारको प्रयोग गर्दा विवाद हुन आएमा विवादित विषयको गम्भीरता र महत्व हेरी सरकार, अदालत, जनमतसङ्ग्रहबाट टुङ्गो लगाउने प्रावधान राख्ने । |
| टोली नं. १९ | सार्वभौमिकता, राष्ट्रिय एकता र अखण्डतालाई अक्षुण्ण राख्दै नेपाली समाजका विद्यमान जातीय, वर्गीय, क्षेत्रीय, लैङ्गिक र सीमान्तीकरणको समस्या अन्त्य गर्ने गरी लोकतान्त्रिक मूल्य मान्यतामा आधारित भएर राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड गरिनुपर्ने । बलियो केन्द्र, गतिशील र सहयोगात्मक सङ्घीयताको आधारमा राज्यको पुनर्संरचना गरिनुपर्ने । सङ्घीय एकाइहरूको नामाकरण गर्दा स्थानीय भाषा र ऐतिहासिकता आधारमा हुनुपर्ने । |
| टोली नं. २० | जाति, भाषा र क्षेत्रको आधारमा आत्मनिर्णयको अधिकार र स्वशासन सहितको सङ्घीय प्रदेशहरु हुनुपर्ने । क्षेत्रीय, भौगोलिक र जनसंख्याको आधारमा राज्यको पुनर्संरचना हुनुपर्ने । संसदीय प्रणाली नभई जनताको गणतन्त्रात्मक राज्यप्रणाली अपनाउनु पर्ने । राज्य तीन तहको हुनुपर्ने । सङ्घीय (केन्द्र, राज्य र स्थानीय) एकाइ निर्धारण गर्दा ध्ष्ल ध्ष्ल ब्नचभझभलत अपनाउनु पर्ने । विभिन्न तहको सङ्घीय एकाइको अधिकार सम्बन्धी विषयसूची र साझासूचीको निर्धारण गर्दा समता, समानता र समावेशीको सिद्धान्त अनुसार गर्नुपर्ने । सङ्घीय एकाइहरु बीच उत्पन्न हुन सक्ने विवादको समाधान संवैधानिक अदालतबाट गरिनुपर्ने । |
| टोली नं. २१ | ऐतिहासिक पहिचानको आधारमा सङ्घीय एकाइ विभाजन । ३ देखि १३ सङ्घीय एकाइमा विभाजन गर्नुपर्ने, जाति, भाषा, संस्कृति, प्राकृतिक र भू-बनौटको आधारमा एकाइ विभाजन, आर्थिक सम्भाव्यताको आधारमा कार्यविभाजन । सङ्घीय एकाइमा विभाजन गर्न नहुने, सङ्घीय एकाइको नामाकरण जातीय आधारमा हुनुपर्ने । हिमाल चुचुराको आधारमा हुनुपर्ने, नदीनालाको आधारमा हुनुपर्ने, राष्ट्रिय विभूतिको नामको आधारमा हुनुपर्ने, धार्मिकस्थलको आधारमा हुनुपर्ने । |
| टोली नं. २२ | नेपाल सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक हुनुपर्दछ भन्ने अधिकांश वक्ताको भनाइ रहेको छ भने सङ्घीयताले राज्य टुक्रन्छ भन्ने केही भनाइ आएका छन् सङ्घीय राज्यहरूको विभाजन गर्दा लिनुपर्ने आधारहरूको बारेमा विविधता देखा |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | परेको छ । राज्यहरूको सीमाङ्कन गर्दा जातिगत रूपमा गर्नुपर्ने भन्ने केही राय सुझाव आएका छन् भने देशको भूगोल, जनसंख्या र आयस्रोतका आधारमा राज्यहरूको सीमाङ्कन गर्नुपर्ने भने केही राय प्राप्त भएका छन् । राज्यलाई हिमाल, पहाड र तराई/मधेस समेटिने गरी विभाजन गरिनु पर्दछ भन्ने केही सुझाव र तराई/मधेसलाई छुट्टै प्रदेश बनाउने भन्ने केही सुझाव आएका छन् । जनगणना पछिमात्र राज्यको पुनर्संरचना गरिनुपर्छ भन्ने केही सुझाव आएका छन् । भूमि सम्बन्धी कानून बनाउने अधिकार प्रान्तीय सरकारमा हुनुपर्ने । |
| टोली नं. २३ | राज्य पुनर्संरचना एउटै मात्र आधारलाई लिएर गर्न नहुने । सङ्घीयतामा जाँदा राष्ट्र बलियो हुने गरी गरिनुपर्ने । कुनै एउटा मात्र पक्षको माग पूरा गर्ने गरी सङ्घीयताको आधार लिन नहुने । सङ्घीयताका वारेमा गहन वहस, छलफलको आवश्यकता छ । |
| टोली नं. २४ | राज्य पुनर्संरचनाका आधार जातीय, भूगोल, ऐतिहासिक, प्राकृतिक स्रोत-साधनको उपलब्धता जस्ता विषयमा मिश्रित राय प्राप्त भएको । रा.ज.मो. पक्षका कार्यकर्ताबाट सङ्घीयता नभई केन्द्रीकृत राज्य संरचना तय गरी विकेन्द्रीकरणलाई प्रभावकारी कार्यान्वय गर्ने खालको हुनुपर्ने । राज्य पुनर्संरचना गर्दा नेपाली जनतासँग अझ छलफल वहस चलाई सबैलाई जानकार बनाउनुपर्ने । सबै समूहका मागभन्दा वास्तविक नेपालको आवश्यकता के हो भनी पहिचान गरी त्यसको समाधान हुनेगरी मात्र गर्नुपर्ने । |
| टोली नं. २५ | सङ्घीय संरचना जाति, प्रदेश, धर्म, संस्कृति, भाषा, प्राकृतिक सम्पदा र भूगोलको आधारमा मिश्रित हुनुपर्ने । स्थानीयतहलाई स्वायत्त शासनको अधिकार दिइनुपर्ने । प्राकृतिक स्रोतसाधन, उव्जाउ जमीन, वनजङ्गल, जलस्रोत र खनिजको न्यायोचित वितरण भूगोलको आधारमा हुनुपर्ने । राज्यविखण्डन हुन नदिन अधिकार केन्द्रलाई दिनुपर्ने । |
| टोली नं. २६ | आदिवासी, जनजाति, मधेसी, मुस्लिम, दलित र पिछिडएका महिलाको उत्थानका लागि विशेष अधिकार सहितको व्यवस्था गरिनुपर्ने । |
| टोली नं. २७ | राष्ट्रिय एकता र जनता बीचको भाइचारामा खलल नपुग्ने गरी सहयोगात्मक अवधारणामा आधारित भएर सङ्घीय इकाइहरु निर्माण गर्नुपर्ने । |
| टोली नं. २८ | जुन भूगोलमा जुन जाति छ, तिनीहरूलाई पूर्ण अधिकार दिइनुपर्ने । राष्ट्रखण्डित नहुने गरी संविधान बनाइनुपर्ने । सबै जनजातिलाई समान अवसर दिइनु पर्ने, महिलाहरूलाई विशेष संरक्षण गर्नुपर्ने । दलितहरूलाई माग सम्बोधन गरिनुपर्छ । जाति, भाषा र भूगोलको आधारमा राज्यको पुनर्संरचना गरिनुपर्ने । सङ्घीय एकाइहरूको तह - (१) सङ्घ (केन्द्र) (२) स्वायत्तप्रदेश (३) स्थानीय उप स्वायत्तक्षेत्र इलाका हुनु पर्ने । |
| टोली नं. २९ | हिमाल, पहाड, तराई, जाति र सम्प्रदाय मिलाएर सङ्घीय राज्यको निर्माण गर्ने । सङ्घीय राज्य निर्माण गर्दा बढीमा १० वटा सङ्घीय राज्य हुनुपर्ने । दलितको हकमा विशेष अधिकार हुनुपर्ने । थारूवान प्रदेशको व्यवस्था हुनुपर्ने । सङ्घीय विभाजन भूगोल, जनसंख्या र प्रकृतिको आधारमा गरिनुपर्ने । एक |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | प्रदेश एक मधेस मान्य नहुने । सेना, मुद्रा, वैदेशिक सम्बन्ध र ठूला विद्युतीय प्रोजेक्टहरू केन्द्र सरकारसँग हुनुपर्ने । ७५ जिल्लालाई घटाएर ३५/४० बनाउनु पर्ने । धर्म निरपेक्षताको विषयमा जनमतसङ्ग्रहमा जानु पर्ने । |
| टोली नं. ३० | सङ्घीयता सम्बन्धमा जातीय, क्षेत्रीय आधारमा गरिनु पर्छ । स्वायत्त मधेस हुनुपर्ने । सद्भावनात्मक रूपले प्रदेश विभाजन गरिनु पर्छ । धर्म, जात, लिङ्ग वर्ग समुदाय क्षेत्र आदि सबैलाई अटाउने गरी सङ्घीयता बनाइनु पर्ने । उत्तर–दक्षिणक्षेत्र निर्धारण गरी सङ्घीयता कायम हुनुपर्ने । सङ्घीय राज्यको संख्या ५ देखि १४ बनाइनु पर्ने । सङ्घीय राज्यको आधार भूगोल, जनसंख्या, पहाड, तराई हिमाल समेटेर हुनुपर्ने । आत्मनिर्णयको अधिकार हरेक सङ्घीय राज्यलाई दिनुपर्छ । मधेस एक प्रदेश हुनु हुँदैन । जातीय, क्षेत्रीय र भौगोलिक आधारमा सङ्घीय राज्य बनाइनु पर्छ । |
| टोली नं. ३१ | कर्णाली प्रदेशलाई स्वयत्तता दिनुपर्ने र सङ्घीयतामा गइसकेपछि २०-२५ वर्षसम्म केन्द्रीय सरकारबाट प्राथमिकताका साथ विशेष बजेटको व्यवस्था हुनुपर्ने । कर्णाली प्रदेशका सम्पूर्ण महिला र दलितहरूको समस्याको बारेमा नयाँ बन्ने संविधानमा नै विशेष व्यवस्था गर्नु पर्ने कुराको सम्बोधन हुनु पर्ने । |
| टोली नं. ३२ | नेपाललाई सङ्घीय एकाइ (प्रान्त) मा विभाजन गर्दा कुनै एउटा मात्र पक्षलाई आधार नलिई हाम्रो समाजको विविधतायुक्त पक्षहरूलाई आत्मसात् गर्दै जातीय बसोबासको स्थिति, भाषा-संस्कृतिको विद्यमान अवस्था विभाजित नहुने गरी भौगोलिक क्षेत्र, प्राकृतिक स्रोत सम्पदा, आर्थिक सम्भाव्यतालाई ध्यान पुऱ्याई प्रान्तहरू निर्माण गरिनुपर्ने सुझाव आएको छ । देशको सार्वभौमसत्ता विखण्डित नहुने गरी आदिवासी जनजातिहरूलाई आत्मनिर्णयको अधिकार दिइनुपर्ने । समान विकास हुने, छुवाछूत र सामन्तवादको अन्त्य हुने खालको स्वायत्तप्रदेश निर्माण गरिनुपर्ने विषय रहेका छन् । प्रान्त निर्माण गर्दा हिमाल, पहाड, तराई पर्ने गरी गर्नुपर्ने । नेपाललाई सङ्घीय नबनाई वर्तमान संरचनामा नै समावेशी बनाउनुपर्ने । राज्यलाई स्वायत्त अधिकार दिएर केन्द्रलाई बढी अधिकार दिई देशलाई शक्तिशाली बनाउनुपर्छ । सङ्घीय इकाइ (प्रान्त) को नामाकरण गर्दा भूगोल, नदीनाला, धार्मिकस्थल, हिमाली, चुचुरा र ऐतिहासिक स्थल, जाति, भाषा-संस्कृतिको आधारमा गरिनुपर्ने । प्रान्तको सीमा निर्धारण गर्दा जातीय सघन उपस्थितिलाई प्राथमिकता दिइनुपर्ने समेत पाइन्छ । सुझावमा नेपाललाई मूलतः ११ देखि १४ वटा प्रान्तमा विभाजन गर्न उपयुक्त हुने उल्लेख छ । पिछडिएको प्रान्तलाई विशेष अधिकार दिएर सङ्घीय एकाइ बीच अधिकार बाँडफाँड गर्ने तथा केन्द्र, प्रान्त र स्थानीयतहमा गरी ३ तहको सरकार गठन गरिनुपर्ने । |
| टोली नं. ३३ | साझा मनोविज्ञान, समान अर्थजीवन भएको क्षेत्र कर्णाली अञ्चललाई कर्णाली प्रदेश कायम गर्नुपर्ने, राज्यको ढाँचा आत्मनिर्णयको अधिकार सहितको स्वायत्त र सङ्घीय हुनुपर्ने, सङ्घ विभाजन गर्दा हिमाल, पहाड र तराईलाई मिलाएर गर्नुपर्ने, डोल्पा जिल्लालाई दुई भागमा विभाजन गर्नुपर्ने, डोल्पा जिल्लाका बासिन्दालाई अन्यत्र बस्ने व्यवस्था मिलाई जिल्लालाई राज्यको विशेष पर्यटनक्षेत्रको रूपमा विकास गर्नुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ३४ | सङ्घीयताको विभाजन जातीय आधारमा गरिनु नहुने यसको लागि भौगोलिक आधारमा सङ्घीयता दिनु पर्ने । भौगोलिक तथा सांस्कृतिक आधारमा सङ्घ बनाइनु पर्ने । भेरी, कर्णालीलाई एउटै सांस्कृतिक पहिचान भएकाले यसलाई एउटा सङ्घ बनाइनु पर्ने । आत्मनिर्णय सहितको अधिकार दिइनु पर्ने । आफ्नो हक हितका लागि विद्रोह हुनु स्वाभाविकै हो । कर्णाली सङ्घीयता प्रदेश बनाउदा बाजुराको ११ गा.वि.स. पनि समावेश गरिनुपर्ने । वर्तमान जिल्ला, अञ्चल निर्माण गर्दा जिल्लास्तरीय छलफल गरी टुङ्ग्याउनुपर्ने । राज्यको स्वरूप तीन तहको (केन्द्र, प्रदेश र स्थानीय) हुनुपर्ने । मुगुको नाम फेरी रारा जिल्ला भनिनु पर्ने । मुगुमा खत्याड जिल्ला अलग्गै हुनुपर्ने सुझाव पनि आएको । राष्ट्रिय अखण्डतामा असर पर्ने गरी सन्धि-सम्झौता गर्न नहुने । राज्य पुनर्संरचना गर्दा आर्थिक, भौतिक, सांस्कृतिक सबै पक्षको विचार गर्नु पर्दछ । विकेन्द्रीकरणको अवधारणा अनुरूप सेवा केन्द्र स्थापना भए पनि केन्द्रबाट नियन्त्रण गर्ने कार्य राम्रो होइन । सङ्घीयता पूर्व जलस्रोत सम्बन्धी सन्धि-संझौता नगरियोस् । कर्णाली सङ्घीयता दिनु पर्ने यसमा सेती अञ्चलको केही भाग (बाजुरा) कर्णालीमा गाभिनु पर्ने । कर्णालीको स्रोत सम्पदा अन्यत्र लान दिन नहुने । कर्णालीमाथिको हक अधिकार कर्णालीवासी कै हुनुपर्ने । नागरिकता सरल तरिकाबाट पाउन गाउँ विकास समितिबाटै वितरणको व्यवस्था गरिनुपर्ने । अब संविधान बनेपछि नयाँ विद्रोह प्रारम्भ नहोस् । सेती कर्णाली बेग्लै प्रदेश हुनुपर्छ । |
| टोली नं. ३५ | कर्णाली स्वायत्तप्रदेश/भेरी कर्णाली स्वायत्तप्रदेश/लामा (भोटे) जातिहरूले जातीय स्वायत्तप्रदेशको माग सुनिएको कारणले यी विषयहरूलाई सम्बोधन गर्न सक्नु पर्ने । हुम्ला जिल्लालाई भौगोलिक अवस्था अनुसार तीन भागमा विभाजन गरिनुपर्ने देखिन्छ । देशको सार्वभौमसत्ता र राष्ट्रिय अखण्डतामा कुनै पनि किसिमको आँच नआउने गरी राज्यको पुनर्संरचना गरिनुपर्ने, र त्यसको आधार भूगोललाई बनाइनुपर्दछ । |
| टोली नं. ३६ | भाषागत, क्षेत्रगत आधारमा प्रदेश विभाजन हुनुपर्ने । आत्मनिर्णयको आधारमा सङ्घीयता हुन नहुने । प्रान्तको स्वायत्त सरकार भए पनि केन्द्र सरकारको अधीनमा रही कामकाज गर्नुपर्ने । बढीमा ६ – १० वटा सङ्घीय राज्य हुनुपर्दछ । कैलाली, कञ्चनपुर, बाँके, वर्दिया र दाङ एउटा राज्य हुनुपर्ने र नाम तराई प्रदेश राख्ने । प्रदेशलाई आत्मनिर्णयको अधिकार दिनुपर्ने । सेना, मुद्रा र परराष्ट्र सम्बन्ध बाहेकको अधिकार राज्यलाई दिनुपर्ने । भौगोलिक क्षेत्रको आधारमा गा.वि.स. थप गरिनुपर्ने । सुदूरपश्चिमलाई कर्णाली प्रदेश सरहको रूपमा स्थापित गरिनुपर्ने । तराई, पहाड र हिमाल मिलाएर राज्यको निर्माण हुनुपर्ने । सुदूर पश्चिमाञ्चलको राजधानी डडेल्धुरा हुनुपर्ने । ७ प्रदेशः कोशी, सगरमाथा, बागमती, गण्डकी, लुम्बिनी, कर्णाली र महाकाली हुनुपर्ने । सेती, महाकाली प्रदेश हुनुपर्ने । |
| टोली नं. ३८ | राष्ट्रिय एकता र जनता बीचको भाइचारामा खलल नपुग्ने गरी सहयोगात्मक अवधारणामा आधारित भएर सकेसम्म थोरै संख्यामा सङ्घीय इकाइहरु निर्माण गर्नुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ३९ | सबैले सबै प्रदेश (सिङ्गो नेपाल) मेरो हो भन्न सक्ने भावनाको विकास हुने गरी सङ्घीयतामा जानुपर्ने । जातीय आधारमा मात्र सङ्घीयतामा जानु नहुने । सङ्घीयताको आधार भूगोल, जनसंख्या, भाषा, प्राकृतिक साधन-स्रोत, आर्थिक उपार्जन क्षमता र संस्कृतिलाई मानिनु पर्ने । सुदूरपश्चिमाञ्चलका ९ वटा जिल्ला एउटै प्रदेश हुनुपर्ने । प्रादेशिक केन्द्र चयन गर्दा एकदिनको दूरीमा सबैलाई पायक पर्ने ठाउँमा राखिनुपर्ने । राज्य र राज्य बीचको ठाडो र तेर्सो सम्बन्ध कसरी तय गरिने भन्ने विषयमा स्पष्ट हुनुपर्ने । |

## ३.२.८. न्यायप्रणाली सम्बन्धी समितिको कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १ | बढीमा ४ तहसम्मको न्यायप्रणाली हुनुपर्ने । वर्तमान न्यायप्रणाली प्रभावकारी नभएकोले प्रभावकारी न्यायप्रणालीको व्यवस्था हुनुपर्ने, न्यायालय स्वतन्त्र, निष्पक्ष, प्रभावकारी र जवाफदेही बनाउनु पर्ने, सङ्घीय फौजदारी मुद्दा फिर्ता लिने परिपाटी नियन्त्रण गर्नुपर्ने । महिला अदालत/बेन्चको व्यवस्था हुनुपर्ने, नयाँ संविधान बनाउँदा बन्दीका लागि परिर्वतनको आभास हुने व्यवस्था हुनुपर्ने, बन्दिका नावालक बच्चाहरूका लागि शिक्षाको विशेष नीति बनाउनु पर्ने, न्यायप्रणाली सुलभ, सरल र पारदर्शी हुनुपर्छ, नैतिक तथा आदर्श जेललाई सुधारगृहको रूपमा विकास गरी शिक्षा, दीक्षा, स्वास्थ्य र आवास तथा सीप सिकाउने सुविधाको व्यवस्था गर्नुपर्ने, |
| टोली नं. २ | न्यायाधीशको नियुक्तिको न्यूनतम तथा अधिकतम उमेर तोकिनुपर्ने । न्यायाधीशले भ्रष्टाचारजन्य कसूर गरेमा त्यसको अनुसन्धान अख्तियार दुरूपयोग अनुसन्धान आयोगले गर्ने र तोकिएको अदालतले मुद्दा हेर्ने । न्यायाधीशलाई जनताप्रति उत्तरदायी बनाउन भिन्न संयन्त्र निर्माण गर्ने । न्यायलाई सस्तो र सर्वसुलभ बनाउन कोर्ट फि घटाउनु पर्दछ । मुद्दाहरु छिटोछरितो फैसला गर्ने कार्यविधिमा सुधार गर्नुपर्दछ । जनतालाई न्यायप्रति बढी विश्वास दिलाउन अदालतको कार्यप्रकृतिलाई सुधार गर्ने । न्यायालय केन्द्र, राज्य र स्थानीय गरी ३ तहको हुनुपर्ने । |
| टोली नं. ३ | कानूनको शासन र स्वतन्त्र न्यायपालिकाको अवधारणा विपरीत नहुने गरी जनउत्तरदायी न्यायप्रणाली विकास गर्ने खालको न्यायप्रणालीको व्यवस्था गरि नुपर्ने । |
| टोली नं. ४ | न्यायप्रणाली सस्तो, सुलभ, जनताप्रति उत्तरदायी, पारदर्शी, भ्रष्टाचारमुक्त बनाउन अदालतको पूर्ण पुनर्संरचना गरिनु पर्दछ । न्यायाधीशहरु जनप्रतिनिधिबाट निर्वाचित हुने व्यवस्था गरिनु पर्दछ । प्रत्याव्हानको व्यवस्था गरिनु पर्दछ । अदालतको निर्णयउपर टीकाटिप्पणी, आलोचना, विरोध गर्न पाइने व्यवस्था गरिनु पर्दछ । गलत निर्णय गर्नेलाई दण्डको व्यवस्था गरिनु पर्दछ । |
| टोली नं. ६ | स्वतन्त्र, सक्षम र जनउत्तरदायी, कानूनी शासन र स्वतन्त्र न्यायपालिकाको अवधारणा विपरीत नहुने खालको स्वतन्त्र न्यायप्रणालीको व्यवस्थाका लागि न्यायिक संरचनाको ढाँचा, न्यायालयको तह, अधिकारको स्पष्ट किटान संविधानमा उल्लेख गरिनुपर्ने । स्वतन्त्र, सक्षम र जनउत्तरदायी न्यायप्रणाली हुनुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ७ | राज्यमा ३ तहका अदालतहरु हुनुपर्ने । विशेष अदालतको व्यवस्था गरिनुपर्ने । महिला हिंसा जातीय उत्पीडनजस्ता विषयका लागि स्थानीय अदालतलाई प्रभावकारी बनाइनु पर्ने । अदालतमा पेश भएका मुद्दा बढीमा कति समयभित्र फछ्र्यौट गर्नुपर्ने हो सोको व्यवस्था संविधानमा नै गरिनुपर्ने । सर्वोच्च अदालतका न्यायाधीशहरूको नियुक्ति ५० प्रतिशत सेवाबाट र ५० प्रतिशत बाहिरबाट गरिनुपर्ने । आदिवासी जनजातिहरूको परम्परागत कानून (Customary Law) लाई कानूनी मान्यता दिनुपर्ने । आमजनताको पहुँच हुने गरी न्यायप्रणालीमा सुधार गरिनुपर्ने । |
| टोली नं. ८ | राज्यमा केन्द्रीय, प्रान्तीय र स्थानीय गरी ३ तहका अदालतहरु हुनुपर्ने र विशेष अदालतको व्यवस्था हुनुपर्ने, न्यायाधीश स्थानीय व्यक्तिमध्येबाट हुनुपर्ने र जननिर्वाचित हुनुपर्ने, महिला हिंसा, जातीय उत्पीडनजस्ता विषयका लागि स्थानीय अदालतलाई प्रभावकारी बनाइनुपर्ने, अदालतमा पेश भएका मुद्दा बढीमा कति समयभित्र फछ्र्यौट गर्नुपर्ने हो सोको व्यवस्था संविधानमा नै हुनुपर्ने, सर्वोच्च अदालतका न्यायाधीशहरूको नियुक्ति ५० प्रतिशत सेवाबाट र ५० प्रतिशत बाहिरबाट गरिनुपर्छ । |
| टोली नं. ९ | स्थानीय निकायमा स्थानीय अदालत, घुम्ती अदालत वा मेलमिलाप केन्द्रको स्थापना गरिनुपर्ने । न्याय छिटोछरितो, सहज तरिकाले पाउनु पर्छ । विषयगत अदालतहरु स्थानीयतहमा पनि हुनुपर्ने । |
| टोली नं. १२ | न्यायपालिका स्वतन्त्र हुनु पर्ने । न्यायलाई सस्तो र सर्वसुलभ बनाउनु पर्ने । योग्य र सक्षम व्यक्तिलाई न्यायाधीशमा नियुक्त गर्नु पर्ने । |
| टोली नं. १३ | न्यायाधीशको नियुक्तिको न्यूनतम उमेर ५५ देखि माथि हुनुपर्ने । न्यायाधीशले भ्रष्टाचारजन्य कसूर गरेमा त्यसको छानविन अख्तियार दुरुपयोग अनुसन्धान आयोगबाट हुनुपर्दछ । न्यायाधीशलाई जनताप्रति उत्तरदायी बनाउन जनउत्तरदायी सरकारबाट नियुक्ति गर्नु पर्दछ । न्यायलाई सस्तो र सर्वसुलभ बनाउन कोर्ट शुल्क घटाउनु पर्दछ । मुद्दाहरु छिटोछरितो फैसला गर्ने कार्यविधिमा सुधार गर्नुपर्दछ । जनतालाई न्यायप्रति बढी विश्वास दिलाउन अदालतलाई उत्तरदायी वनाएर, कानून र कार्यविधिमा सुधार गरेर, कम खर्चिलो र झन्झटमुक्त र छिटो न्याय प्रदान गरेर । न्यायपालिका क्षेत्रमा व्यापक भ्रष्टाचार रहेको हुँदा सोको अन्त्य गरी सर्वसुलभ न्यायप्रणालीको व्यवस्था हुनुपर्दछ । |
| टोली नं. १५ | परम्परा, धर्म-संस्कृति संरक्षणको अधिकारको नाममा दलितमाथि भेदभाव हुँदा न्याय नपाउने स्थितिको अन्त्य हुनुपर्छ आपसमा बाझिने हुनुहुँदैन, न्यायप्रणाली सरल, सुलभ र छिटो बनाइनुपर्ने । ढिलो र तजबिजी न्याय छ यसमा सुधार हुनुपर्छ, सबैलाई न्याय र अधिकार दिएर कलह हटाउनु पर्ने । |
| टोली नं. १७ | सबै वर्गले न्याय पाउने व्यवस्था सुनिश्चित होस् । न्यायाधीशलाई पनि कारवाही हुने व्यवस्था होस् । दण्डहीनता अन्त्य हुने व्यवस्था सुनिश्चित होस् । न्यायप्रणाली छिटो, छरितो, सस्तो, सुलभ तथा जनताको पहुँचमा हुने व्यवस्था हुनुपर्ने । न्यायप्रणाली तह-सर्वोच्च अदालत, प्रादेशिक (सङ्घीय) अदालत, स्थानीय अदालत र मेलमिलाप केन्द्रहरु गरी ४ तहको हुनुपर्दछ । अदालतको संरचना स्थानीय, |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | प्रान्तीय तथा केन्द्रीय गरी तीन तहको हुनुपर्ने । न्यायाधीश जननिर्वाचित हुनुपर्ने । ज्यानमारा, भ्रष्टाचारी, बलात्कारी तथा महिला बेचबिखनमा संलग्नहरूलाई आजीवन कारावासको सजाय हुने गरी कडा कानूनी व्यवस्था हुनुपर्ने । |
| टोली नं. १८ | घरेलु हिंसा गर्नेलाई दण्डित गर्ने कानून हुनुपर्ने । न्यायप्रणाली कम खर्चिलो, सरल, छिटो हुनुपर्ने । पीडित पक्षले न्याय पाउने व्यवस्था हुनुपर्ने । फैसला कार्यान्वयन यथाशीघ्र हुनुपर्ने । स्थानीयतहमा न्याय पाउने प्रावधान राख्ने । दण्डहीनताको अन्त्य हुनुपर्ने । अपराधीलाई अपराध अनुसारको सजाय हुनुपर्ने । अपराधी छुटाउन राजनीतिक हस्तक्षेप गर्न नहुने । कानून र कार्यविधि सरल र बुझ्ने गरी बनाइनु पर्ने । सर्वसाधारणको न्यायमा पहँच पुग्ने वातावरण हुनुपर्ने । महिलाले समान अधिकार, अवसर, पहुँच र राज्यका हरेक अङ्गमा अनिवार्य उपस्थिति हुने गरी कानूनमा व्यवस्था हुनुपर्ने । न्यायपालिकाको ढाँचामा पुनःविचार गरी सर्वसुलभ न्यायप्रणालीको व्यवस्था गर्ने । न्यायाधीशलाई दिइएको तजविजी अधिकारको सीमा सीमित गर्नुपर्ने । |
| टोली नं. १९ | स्वतन्त्र, सक्षम र जनउत्तरदायी न्यायप्रणालीको सुनिश्चता गरिनुपर्ने । न्याय प्राप्ति सरल, सहज र मितव्ययी हुनेगरी न्यायिक संरचना निर्धारण गरिनुपर्ने ।कानूनको शासन र स्वतन्त्र न्यायपालिकाको सिद्धान्तमा आधारित जनउत्तरदायी न्यायप्रणाली हुनुपर्ने । |
| टोली नं. २१ | अहिलेको अदालतको अवस्था सुधार गर्नुपर्ने । अहिलेको अदालतको सेवा स्थिति सुधार गर्नुपर्ने । न्यायप्रणाली नराम्रो भएको । ४ तहको अदालत आवश्यक भएको । न्यायाधीशको नियुक्ति सम्बन्धी व्यवस्था न्यायपरिषद् वा यस्तै अन्य निकायबाट हुनुपर्ने । न्यायाधीश हुन आवश्यक योग्यताको उमेर ३५/४५ वर्ष । न्यायाधीशको अवकाश सम्बन्धी व्यवस्था ६५ वर्ष हुनुपर्ने । |
| टोली नं. २२ | सर्वोच्च अदालत, प्रान्तीय अदालत, जिल्ला अदालत र स्थानीय अदालत गरी ४ तहको अदालत हुनु उपयुक्त हुन्छ । लामो तथा झन्झटिलो कार्यविधि तथा महङ्गो शुल्कको कारण वर्तमान न्यायप्रणाली सर्वसुलभ हुन सकेको छैन । राजनीतिक प्रकृतिका मुद्दाबाहेक संगीन फौजदारी मुद्दा फिर्ता लिने वर्तमान परिपाटी नियन्त्रण गर्नुपर्ने । पारिवारिक अदालतको गठन हुनुपर्ने । |
| टोली नं. २३ | राज्यमा ३ तहका अदालतहरु हुनुपर्ने र विशेष अदालतको व्यवस्था हुनुपर्ने, महिला हिंसा जातीय उत्पीडनजस्ता विषयका लागि अलग इजलासको व्यवस्था हुनुपर्ने । न्यायपालिकालाई सुधार गरिनुपर्छ । |
| टोली नं. २४ | राज्यमा ३ तहका अदालतहरु हुनुपर्ने र विशेष अदालतको व्यवस्था हुनुपर्ने, महिला हिंसा जातीय उत्पीडनजस्ता विषयका लागि स्थानीय अदालतलाई प्रभावकारी बनाइनुपर्ने । अदालतमा पेश भएका मुद्दा बढीमा कति समयभित्र फछ्र्यौट गर्नुपर्ने हो सोको व्यवस्था संविधानमा नै हुनुपर्ने, सर्वोच्च अदालतका न्यायाधीशहरूको नियुक्ति ५० प्रतिशत सेवाबाट र ५० प्रतिशत बाहिरबाट गरिनुपर्छ । जिल्ला अदालत र पुनरावेदन अदालतका न्यायाधीशको नियुक्ति हुन न्यूनत्तम उमेरको हदबन्दी तोकिनु पर्छ । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. २५ | बाल इजलास तथा बाल अधिकारको लागि केन्द्रदेखि स्थानीयतहसम्म बालकल्याण समितिहरूको स्थापना हुनुपर्ने । न्याय दिने निकाय निष्पक्ष, स्वतन्त्र र सक्षम हुनुपर्ने । शान्ति समूह तथा स्थानीयतहको अदालत पनि हुनुपर्ने । हत्या, हिंसा, लुटपाट र भ्रष्टाचारजस्ता अपराध गर्नेलाई मृत्युदण्ड दिनुपर्ने । घरेलु हिंसाको लागि पारिवारिक अदालत हुनुपर्ने । सबै न्यायिक तथा अर्धन्यायिक निकायमा अपराध निगरानी केन्द्र हुनुपर्ने । अख्तियार दुरूपयोग अनुसन्धान आयोगलाई अधिकारसम्पन्न बनाई राजनीति तथा न्यायकर्मी र सेना सम्बन्धी भ्रष्टाचार समेत हेर्ने क्षेत्राधिकार तोकिनुपर्ने । |
| टोली नं. २७ | कानूनको शासन र स्वतन्त्र न्यायपालिकाको अवधारणा विपरीत नहुने गरी जनउत्तरदायी न्यायप्रणाली विकास गर्ने खालको न्यायप्रणालीको व्यवस्था गरिनुपर्ने । |
| टोली नं. २९ | न्यायपालिका सर्वसुलभ र निःशुल्क हुनुपर्ने । आमजनताको पहुँच हुने गरी न्यायप्रणालीमा सुधार गरिनुपर्ने । स्थानीय र केन्द्रीय न्यायपालिकाको व्यवस्था हुनुपर्ने । न्यायपालिकाले कार्यपालिका र व्यवस्थापिकालाई नियन्त्रण गर्न सक्ने बनाउनु पर्छ । गरीब जनताका लागि निःशुल्क न्यायालयको व्यवस्था हुनुपर्छ । न्यायपालिका स्वतन्त्र हुनुपर्ने । न्यायप्रणालीलाई छिटोछरितो र व्यवस्थित बनाउनु पर्ने । न्यायपालिका तीन तहको हुनुपर्छ । गरीबहरूले समेत पहुँच पुऱ्याउन सक्ने खालको न्याय व्यवस्था स्थापना गर्नुपर्ने । न्यायपालिकालाई सर्वसुलभ र छरितो बनाउनु पर्ने । |
| टोली नं. ३० | कार्यकारी राष्ट्राध्यक्ष वा कार्यकारी प्रधानमन्त्रीद्वारा प्रस्ताव र संसदद्वारा अनुमोदित व्यक्तिहरु न्यायाधीश पदमा नियुक्ति गरिनुपर्ने । उपभोक्ता कानून र उपभोक्ता अदालतको व्यवस्था हुनुपर्ने । संवैधानिक अदालतको व्यवस्था हुनुपर्ने । अदालत ३ तहमा हुनुपर्ने । १. केन्द्रीय अदालत, २. प्रान्तीय अदालत, ३. स्थानीय अदालत अहिलेको अदालतको व्यवस्थापनलाई आमूल परिवर्तन गरी जनतामुखी अदालतको व्यवस्था गरिनुपर्ने । सर्वोच्च अदालतको प्रधानन्यायाधीश तथा न्यायाधीश न्यायक्षेत्रबाट निर्वाचित गरिने व्यवस्था हुनुपर्छ । महिलाको लागि छुट्टै न्यायालयको स्थापना हुनुपर्ने । सैनिक अदालतलाई न्यायिक संरचनाभित्र राख्नुपर्ने । बन्दीलाई सूचनाको अधिकार सुनिश्चित गरिनुपर्छ । विधिको शासन कायम गरी दण्डहीनताको अन्त्य गरिनुपर्छ । दलितको न्यायको लागि छुट्टै न्यायालयको व्यवस्था हुनुपर्ने । |
| टोली नं. ३२ | प्रधानन्यायाधीशको चयन न्यायाधीशहरूको प्रत्यक्ष निर्वाचनबाट हुनुपर्ने । अदालतले न्याय सम्पादन गर्ने विषय सन्तोषजनक नरहेको अधिकांश जनताको राय प्राप्त भएको । अदालत सर्वसाधारणको पहुँचमा नरहेको । अदालत ३ तहको हुनुपर्ने र स्थानीयतहमा मेलमिलाप केन्द्र तथा जन अदालत राख्नुपर्ने । न्यायाधीशको नियुक्ति जन उत्तरदायी सरकारबाट गर्नुपर्ने । न्यायाधीशको नियुक्ति ४० वर्ष तथा अवकाशको उमेर ६० वर्ष हुनुपर्ने । न्यायाधीशको निवृत्तिभरण अनिवार्य अवकाशको उमेर भएपछि मात्र हुने । नेपाली नागरिक, निश्चित उमेर, निश्चित कानूनी योग्यता र अनुभव भएको, नैतिक पतन र फौजदारी अभियोग नलागेको व्यक्तिमात्र न्यायाधीशको लागि योग्य हुने । कार्यक्षमताको अभाव, खराब आचरण, आचारसंहिताको पालना नगरेको र नैतिक पतन तथा फौजदारी अभियोग लागेमा न्यायाधीश पदमुक्त हुने । मुद्दा छिटोछरितो गर्ने कार्यविधिमा सुधार गर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ३३ | अदालत स्थानीय, प्रान्तीय र केन्द्रीय गरी तीन प्रकारको हुनुपर्ने, न्यायाधीश स्थानीय हुनुपर्ने र जननिर्वाचित हुनुपर्ने, ज्यान मार्ने अपराधीलाई मृत्युदण्डसम्मको सजायको व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ३४ | अदालतको व्यवस्था गाउँस्तरसम्म हुनुपर्ने । हाल मुद्दा मामिलामा झन्झट र खर्चिलो हुने गरेको । कम्तीमा ४ तहको (जन अदालत, जिल्ला अदालत, सङ्घीय अदालत र सर्वोच्च) अदालत हुनुपर्छ । सबैलाई समान कानून हुनुपर्ने । कानून बनाउदा (संविधान) दीर्घकालसम्म रहने गरी बनाउनु पर्ने । ग्रामीण तहमा लोक वा जनअदालत हुनुपर्ने । न्यायाधीश स्वतन्त्र हुनुपर्ने । मुद्दाको प्रकृति अनुसार अपराधीलाई मृत्युदण्डसम्मको सजायको व्यवस्था हुनुपर्ने । राष्ट्रपति, प्रधानमन्त्री, सभासद लगायत उच्च पदस्थ अधिकारीलाई पनि कडा सजाय तोकिनु पर्ने । भ्रष्टाचार, अन्याय र अत्याचार सहेर बस्नुपरेको । |
| टोली नं. ३५ | न्याय प्रदान गर्ने सन्दर्भमा स्थानीय अदालत वा मेलमिलाप केन्द्र स्थापना गरिनुपर्ने देखिन्छ, न्याय प्रदान गरिसक्नुपर्ने (मुद्दा किनारा गर्ने) समय किटान हुनुपर्ने । |
| टोली नं. ३६ | न्यायप्रणाली स्वतन्त्र, जनमुखी, पारदर्शी, छिटोछरितो र निष्पक्ष हुनुपर्ने । भ्रष्टाचारी र अन्य अपराधीमाथि कडा कानूनको व्यवस्था हुनुपर्ने । न्यायालय संसदप्रति उत्तरदायी हुनुपर्ने । सबै क्षेत्रमा ५० प्रतिशत महिला सहभागिता सुनिश्चित हुनुपर्ने । बहुविवाह, बालविवाह, भ्रष्टाचारीलाई मृत्युदण्डको सजाय हुनुपर्ने । दलितको क,ख,ग,घ गरी वर्गीकरण हुनुपर्ने । सुदूरपश्चिमाञ्चल विश्वविद्यालय हुनुपर्ने । घरेलु हिंसा नियन्त्रण गर्न अलग्गै कानून निर्माण गर्नुपर्ने । न्यायालय स्वतन्त्र हुनुपर्ने । |
| टोली नं. ३८ | कानूनको शासन र स्वतन्त्र न्यायपालिकाको अवधारणा विपरीत नहुने गरी जनउत्तरदायी न्यायप्रणाली विकास गर्ने खालको न्यायप्रणालीको व्यवस्था गरि नुपर्ने । |
| टोली नं. ३९ | न्यायप्रणाली पारदर्शी, चुस्त हुनुपर्ने । न्याय सर्वसुलभ हुनुपर्ने । निःशुल्क वकिलको व्यवस्था हुनुपर्ने । स्थानीयतहमा न्याय संयन्त्रको विकास गरिनुपर्ने । महिला, दलित, अन्य सीमान्तकृत तथा लोपोन्मुख व्यक्ति तथा समुदायको मुद्दा हेर्ने छुट्टै इजलासको व्यवस्था हुनुपर्ने । |

## ३.२.९. व्यवस्थापिकीय अङ्गको स्वरुप निर्धारण समितिको कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १ | सङ्घीय र राज्यस्तरमा गरी २ तहका विधायिका अङ्ग हुनुपर्ने, विधायकहरूको संख्या सानो बनाउनु पर्ने, केन्द्रमा दुई सदनात्मक व्यवस्था हुनुपर्ने, पूर्ण समानुपातिक/मिश्रित निर्वाचनप्रणालीको व्यवस्था हुनुपर्ने, राज्यमा एक सदनात्मक व्यवस्थापिका हुनु पर्दछ, |
| टोली नं. २ | केन्द्रमा द्विसदनात्मक विधायिका राख्ने । प्रान्तमा एक सदनात्मक विधायिका राख्ने । मिश्रित निर्वाचनप्रणाली अवलम्बन गर्ने । आधार र कारण सहित विघटनको अधिकार राख्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ३ | राज्यलाई कम व्ययभार पर्ने गरी सानो सदस्य संख्या भएको केन्द्रीय व्यवस्थापिका दुई सदनात्मक एवं प्रान्तीय/राज्य व्यवस्थापिका एक सदनात्मक हुनुपर्ने । |
| टोली नं. ४ | जनप्रतिनिधिले भ्रष्टाचार गरे पद खालि हुने थप व्यवस्था हुनपर्दछ । |
| टोली नं. ५ | दुई सदनात्मक व्यवस्थापिका-संसद हुनुपर्ने । प्रतिनिधिसभा र राष्ट्रियसभा हुनुपर्ने । मिश्रित निर्वाचनप्रणाली अवलम्बन गर्ने । आधार र कारण सहित विघटनको अधिकार राख्ने । |
| टोली नं. ६ | मुलुकको आकार, प्रान्तीय संख्या बमोजिमको सदस्य संख्या रहनेगरी केन्द्रीय व्यवस्थापिका दुई सदनात्मक एवं प्रान्तीय राज्यको व्यवस्थापिकीय अङ्ग एक सदनात्मक हुनुपर्ने । विभिन्न तहका सङ्घीय एकाइका विधायिकाहरू बीचको अन्तरसम्बन्धका सम्बन्धमा संविधानमा उल्लेख गरिनुपर्ने । |
| टोली नं. ७ | केन्द्रमा २ प्रकारको राष्ट्रियसभा र जनप्रतिनिधिसभा रहनुपर्ने । तिनीहरूको नियन्त्रण र सन्तुलनको प्रभावकारी व्यवस्था हुनुपर्ने । व्यवस्थापिकाको अध्यक्ष र उपाध्यक्ष एउटै दलको नभई फरक दलको र समावेशी स्वरूपको हुनुपर्ने । |
| टोली नं. ८ | व्यवस्थापिकामा सबै जाति, भाषा, लिङ्ग, वर्ण, आदिको प्रतिनिधित्व हुनुपर्ने, केन्द्रमा २ सदनात्मक व्यवस्थापिका हुनुपर्ने, जस्मा माथिल्लो सदन जातीय सदन हुनुपर्ने र भूगोलका आधारमा प्रतिनिधित्व हुनुपर्ने, व्यवस्थापिकाभित्रका विभिन्न सदनहरू बीच नियन्त्रण र सन्तुलनको प्रभावकारी व्यवस्था हुनुपर्ने, विधायकहरूको लागि शैक्षिक योग्यताको मापदण्ड निर्धारण गरिनुपर्ने । |
| टोली नं. ९ | निर्वाचनप्रणाली प्रत्यक्ष र समानुपातिक दुबै हुनुपर्ने र स्थानीय निकायको निर्वाचनमा पनि यो प्रणालीको व्यवस्था लागू हुनुपर्ने । सङ्घीय व्यवस्थापिका २ सदनात्मक हुनुपर्ने, तल्लो सदनमा रहेको सदस्य संख्याको आधा माथिल्लो सदनमा सदस्य रहनु पर्ने । माथिल्लो सदन जातीय सदन हुनुपर्ने । |
| टोली नं. ११ | केन्द्रीय र प्रान्तीय व्यवस्थापिका हुनुपर्ने । मिश्रित निर्वाचनप्रणाली हुनुपर्ने । व्यवस्थापिका समावेशी हुनुपर्ने । अल्पसंख्यक र सीमान्तकृत वर्गको पनि प्रतिनिधित्व सुनिश्चित हुनुपर्ने । प्रान्तको नागरिकमात्र प्रान्तीय सभाको सदस्य हुन पाउनु पर्ने । सदस्यहरू राम्ररी लेखपढ गर्न सक्ने हुनुपर्ने । जुनसुकै सभाहरू सानो र छरितो हुनुपर्ने । नागरिकता लिएपछि भोट हाल्न पाउनु पर्ने । समानुपातिक निर्वाचनप्रणाली हुनुपर्ने । |
| टोली नं. १२ | द्विसदनात्मक व्यवस्था हुनु पर्दछ । |
| टोली नं. १३ | राज्यप्रमुख सहितको केन्द्रीय विधायिका राख्ने । केन्द्रीय विधायिका द्विसदनात्मक हुनु उपयुक्त हुने । माथिल्लो सदनलाई राज्यसभा नाम दिन उपयुक्त हुने । माथिल्लो सदनको निर्वाचनप्रणाली समानुपातिक हुन उपयुक्त हुने । केन्द्रीय विधायिकाको तल्लो सदनलाई प्रतिनिधिसभा भन्नु उपयुक्त हुने । तल्लो सदनको विघटन सम्बन्धी अधिकार राख्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १७ | दुई सदनात्मक व्यवस्थापिका अर्थात् राष्ट्रियसभा र सङ्घीय जनप्रतिनिधिसभा गठन होस् । सङ्घ, स्वायत्तप्रदेश र स्थानीय उप-स्वायत्तक्षेत्र इलाका गरी सङ्घीय एकाइहरूको तहगत संरचना हुनुपर्छ । दुई सदनात्मक व्यवस्थापिकामा जनसंख्याको अनुपातमा सबै जाति, लिङ्ग, क्षेत्र, भाषा र वर्गको प्रतिनिधित्वको ग्यारेन्टी गर्नुपर्ने । |
| टोली नं. १८ | केन्द्रीय व्यवस्थापिका २ सदनात्मक हुनुपर्ने । जनप्रतिनिधिसभा/प्रतिनिधिसभा/लोकसभा/जातीयसभा/राष्ट्रियसभा/माथिल्लोसभाको व्यवस्था हुनुपर्ने । पहिलो हुने निर्वाचित हुने र समानुपातिक र समावेशी निर्वाचन पद्धतिको व्यवस्था हुने मिश्रित निर्वाचन पद्धतिको व्यवस्था हुनुपर्ने । प्रत्येक प्रदेशबाट प्रतिनिधित्व गराउनु पर्ने र जनसंख्याको आधारमा प्रदेशको प्रतिनिधि संख्या निर्धारण गर्नुपर्ने । प्रदेशमा भने एक सदनात्मक व्यवस्थापिका हुनुपर्ने । मिश्रित निर्वाचन पद्धतिको व्यवस्था हुनुपर्ने । देशको अर्थतन्त्रले धान्न सक्ने गरी सानो आकारको संख्या निर्धारण हुनुपर्ने । व्यवस्थापिका सांसद मन्त्री हुन पाउने/नपाउने मिश्रित धारणा रहेको । व्यवस्थापिका सांसद हुनका लागि न्यूनतम शैक्षिक योग्यता तोक्नु पर्ने/नपर्ने सम्बन्धमा दुबै विचारहरु अभिव्यक्त भएको । |
| टोली नं. १९ | केन्द्रीय व्यवस्थापिका २ सदनात्मक र प्रान्तीय व्यवस्थापिका १ सदनात्मक हुनुपर्ने । केन्द्रीय र प्रान्तीय व्यवस्थापिकाको आकार सानो र कम आर्थिक व्ययभार पर्ने किसिमको हुनुपर्ने । |
| टोली नं. २० | कार्यकारी अधिकार सहितको राष्ट्रपति र प्रशासकीय अधिकार सहितको प्रधानमन्त्री हुनुपर्ने । जनताबाट निर्वाचित कार्यकारी अधिकार सहितको प्रधानमन्त्रीय प्रणाली हुनुपर्ने । संसदबाट निर्वाचित कार्यकारी अधिकार सहितको प्रधानमन्त्री र आलंकारिक राष्ट्रपति हुनुपर्ने । केन्द्रमा दुई सदनात्मक हुनुपर्ने । राज्यमा दुई सदनात्मक हुनुपर्ने । स्थानीयतहमा परिषद् हुनुपर्ने । साझा विषयमा साझा बैठक गरी सहमतिको सिद्धान्त अनुसार गर्ने अन्तरसम्बन्ध हुनुपर्ने । अधिकारको स्पष्ट किटान हुनुपर्ने । राष्ट्रिय महत्वको विषयमा विधेयक पेश गर्नु पूर्व जनमत बुझ्ने प्रक्रिया हुनुपर्ने । |
| टोली नं. २१ | क) सङ्घीय विधायिका दुई सदनात्मक हुनुपर्ने । माथिल्लो सदनमा सदस्य संख्या ३१ हुनुपर्ने । तल्लो सदन व्यवस्थापिका ११५ हुनुपर्ने । ख) सङ्घीय एकाइ विधायिका र सदस्य संख्या एक सदनात्मक गर्ने र सदस्य ५० जनाको राख्ने । ग) निर्वाचनप्रणाली समानुपातिक र प्रत्यक्ष । फरक-फरक निर्वाचनप्रणाली हुनुपर्ने, घ) उम्मेदवारको उमेर दुबैको लागि २५ वर्ष पूरा गरेको हुनुपर्ने । ङ) मतदाताको उमेर १६/१८ वर्ष पुगेको हुनुपर्ने । च) सङ्घीय विधायिका र सङ्घीय एकाइ विधायिकामा आरक्षण सम्बन्धी व्यवस्था २० वर्षसम्मको लागि उपयुक्त हुन्छ । आरक्षण सम्बन्धी व्यवस्था उपयुक्त हुँदैन । छ) विधायिकाको सदस्यको उम्मेदवार हुन चाहिने शैक्षिक योग्यता स्नातक उत्तीर्ण गरेको हुनुपर्ने । योग्यता आवश्यक नपर्ने । ज) सङ्घीय विधायिका र सङ्घीय एकाइ विधायिकाको कार्यकाल सम्बन्धी व्यवस्था ५ वर्ष हुनुपर्ने । झ) सङ्घीय विधायिका र सङ्घीय एकाइ विधायिकाको विघटन गर्ने सम्बन्धी व्यवस्था राख्नु हुँदैन र राख्नु पर्छ भन्ने दुबै सुझाव आएको । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. २३ | केन्द्र र राज्य स्तरमा गरी २ तहका विधायिका अङ्ग हुनु उपयुक्त हुन्छ । विधायिकामा विधायकहरूको संख्या सानो आकारमा बनाउनु उपयुक्त हुन्छ । केन्द्रीय विधायिका २ सदनात्मक उपयुक्त हुन्छ । माथिल्लो सभा जातीय सभा हुनु उपयुक्त हुन्छ । |
| टोली नं. २४ | केन्द्रमा २ सदनात्मक र प्रदेशमा एक सदनात्मक व्यवस्थापिका रहनुपर्ने तिनीहरु बीच नियन्त्रण र सन्तुलनको प्रभावकारी व्यवस्था हुनुपर्ने । |
| टोली नं. २५ | निर्वाचित जनप्रतिनिधिको कार्यकाल ३ वर्ष हुनुपर्ने । व्यवस्थापिकाको आकार सानो तथा कार्यकाल ४ वर्ष हुनुपर्ने । कार्यकारिणी अधिकार मन्त्रिपरिषद्मा हुनुपर्ने । कार्यपालिका अन्तर्गत १ मन्त्रालयमा १ जना मन्त्रीमात्र हुने तथा सहायकमन्त्री नराख्ने । व्यवस्थापिकाको कार्यकाल ५ वर्ष हुनुपर्ने । कुनै पनि व्यक्ति २ पटकसम्म मात्र मन्त्री हुन पाउने । कम्तीमा आगामी २० वर्षका लागि महिलालाई संसदमा न्यूनतम ३३ देखि ५० प्रतिशतसम्म सिट आरक्षण गर्नुपर्ने । |
| टोली नं. २७ | सानो सदस्य संख्या भएको र राज्यलाई कम व्ययभार पर्ने गरी केन्द्रीय व्यवस्थापिका दुई सदनात्मक एवं प्रान्तीय राज्यको व्यवस्थापिका एक सदनात्मक हुनुपर्ने । |
| टोली नं. २९ | दुई सदनात्मक व्यवस्थापिका हुनुपर्ने । संवैधानिक राष्ट्रपति हुनुपर्ने । राष्ट्रपति र उपराष्ट्रपतिमध्ये एक पुरूष र एक महिला हुनुपर्ने । |
| टोली नं. ३० | केन्द्रमा २ सदन र राज्यमा १ सदनको व्यवस्था हुनुपर्ने । निर्वाचित जनप्रतिनिधिहरु मन्त्री बन्न नपाउने व्यवस्था हुनुपर्ने । माथिल्लो सदनमा सदस्य संख्या ७५ जना हुनुपर्ने र विशेषज्ञतालाई प्राथमिकता दिई समावेशी पनि हुनुपर्ने । तल्लो सदनमा २२५ जनासम्म जनप्रतिनिधि हुने व्यवस्था हुनुपर्ने । |
| टोली नं. ३२ | केन्द्रीय विधायिका राष्ट्रप्रमुख सहितको र दुई सदनात्मक तथा प्रादेशिक विधायिका एक सदनात्मक हुनेछ । केन्द्र र प्रदेशको विधायिका सम्बन्धमा निम्न व्यवस्था हुनु पर्दछ । |

| विषय | केन्द्रीय विधायिका | | एकाई वा प्रादेशिक विधायिका |
|---|---|---|---|
| | माथिल्लो सदन | तल्लो सदन | |
| विधायिकाको नाम | राष्ट्रियसभा | सङ्घीय जनप्रतिनिधिसभा | प्रादेशिक जनप्रतिनिधिसभा |
| अधिकतम सदस्य संख्या | ७५ | २४५ | ३५ |
| निर्वाचन प्रणाली | समानुपातिक | मिश्रित | मिश्रित |
| मतदाताको न्यूनतम उमेर | १६-१८ वर्ष | १६-१८ वर्ष | १६-१८ वर्ष |
| उम्मेदवारको न्यूनतम उमेर | ३० वर्ष | २३-२५ वर्ष | २१-२३ वर्ष |
| सदनको कार्यकाल | ६ वर्ष | ५ वर्ष | ४ वर्ष |
| सदन विघटन हुने, नहुने | नहुने | नहुने | हुने |
| सदन स्थायी वा अस्थायी के | स्थायी | अस्थायी | अस्थायी |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ३३ | व्यवस्थापिकामा सबै जाति, भाषा, लिङ्ग, वर्ण आदिको प्रतिनिधित्व हुनुपर्ने, दुई सदनात्मक व्यवस्थापिकीय अङ्ग हुनुपर्ने, जनसंख्याको आधारमा नभई क्षेत्रफलको आधारमा प्रतिनिधित्वको व्यवस्था हुनुपर्ने आदि । |
| टोली नं. ३५ | सङ्घीय विधायिकामा कर्णालीलाई विशेष प्रतिनिधित्वको व्यवस्था गरिनु पर्दछ, सङ्घीय विधायिकाको निर्माण जनसंख्याको आधारमा गर्दा कर्णालीको भूगोलको प्रतिनिधित्व नहुने हुँदा यसको आधार भूगोललाई बनाइनु पर्दछ । |
| टोली नं. ३६ | व्यवस्थापिका-संसदको सदस्य संख्या बढीमा ३०१ सम्म हुनुपर्ने । व्यवस्थापिका-संसदको बैठक भत्ता उपलब्ध गराउने हालको व्यवस्था खारेज गरी निश्चित तलबमात्र दिने व्यवस्था गर्नुपर्ने । माथिल्लो सदन–पूर्ण समानुपातिक र तल्लो सदन – प्रत्यक्ष निर्वाचित हुनुपर्ने । दुई सदनात्मक व्यवस्थापिका हुनुपर्ने । केन्द्रमा ६० सदस्यीय सङ्घीय माथिल्लो सदन हुनुपर्ने र २०१ सदस्यीय प्रतिनिधिसभा तल्लो सदन हुनुपर्ने । प्रत्येक प्रान्तमा एक सदनात्मक जनप्रतिनिधिसभा – प्रत्यक्ष निर्वाचन गरी ३५ सदस्यीय हुनुपर्ने । प्रत्येक तहमा व्यवस्थापिकाको गठन मिश्रित निर्वाचनप्रणालीद्वारा गरिनुपर्ने । सांसदलाई आ-आफ्नो क्षेत्रमा कम्तिमा ४ महिना बस्ने व्यवस्था गरिनुपर्ने । प्रत्येक प्रान्तमा एक सदनात्मक जनप्रतिनिधिसभा–प्रत्यक्ष निर्वाचन गरी ३५ सदस्यीय समानुपातिक निर्वाचनप्रणाली अन्तर्गत अल्पसंख्यक, सीमान्तकृत समुदाय, दलित, लैङ्गिक अल्पसंख्यक, आदिवासी जनजाति र फरक क्षमता भएका समुदायको प्रतिनिधित्व सुनिश्चित गर्ने । प्रत्येक सङ्घीय सरकारले १/१ जना मनोनित गर्ने । प्रतिनिधिसभा र राष्ट्रियसभा हुनुपर्ने । प्रत्येक सांसदले तीन महिनामा गाउँमा आउनै पर्ने संवैधानिक व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ३९ | सानो सदस्य संख्या भएको र राज्यलाई कम व्ययभार पर्ने गरी केन्द्रीय व्यवस्थापिका दुई सदनात्मक हुनुपर्ने । प्रान्तीय राज्यको व्यवस्थापिका एक सदनात्मक हुनुपर्ने । |

## ३.२.१०. प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १ देखि ४० सम्म | सहयोगात्मक संविधानको अवधारणामा आधारित भएर प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड सम्बन्धी व्यवस्था गरिनुपर्ने । देशभरि उपलब्ध प्राकृतिक साधन-स्रोतको बृहत्तर जनहित हुने गरी केन्द्रले सबै प्रदेश वा स्थानीयतहलाई समान व्यवहार गर्नुपर्ने । आर्थिक रुपले कमजोर प्रान्त तथा स्थानीयतहलाई केन्द्रले सकारात्मक विभेदको नीति समेत अवलम्बन गर्न सक्नेछ । स्थानीयतहमा राजस्वको बाँडफाँड गर्दा राज्यले आर्थिक न्यायका लागि पुनर्वितरणकारी भूमिका खेल्नुपर्नेछ । आयस्रोतको बाँडफाँड गरिने मापदण्डको निर्धारण गर्दा प्राप्त स्रोत र पिछडिएको क्षेत्रलाई प्रमुख आधार बनाइनुपर्ने । प्राकृतिक स्रोत र साधनहरु राष्ट्रियकरण गरिनुपर्ने । प्राकृतिक स्रोत-साधनको संरक्षण र सम्वर्द्धन तथा उपयोगको अधिकार प्रान्त र स्थानीय निकायलाई दिनुपर्ने । प्रत्येक किसानलाई सहुलियत दरमा वीउ-विजन उपलब्ध गराउनु |

पर्ने । वन, अतिक्रमण रोक्नुपर्ने । नेपालको कूल भागको ४५.५० प्रतिशत भाग जङ्गल रहनु पर्ने व्यवस्था गरिनुपर्ने । प्राकृतिक सम्पदाप्रति राष्ट्रको दृष्टिकोणमा परिवर्तन हुनुपर्ने । प्राकृतिक स्रोत र साधनको उचित व्यवस्थापन र बाँडफाँड गरिनुपर्ने । वैज्ञानिक भूमिसुधार कार्यक्रम लागू हुनुपर्ने । प्रत्येक गा.वि.स. मा कृषि सेवा केन्द्र हुनुपर्ने । आधुनिक कृषि प्रणाली लागू गर्नुपर्ने । जलसम्पदाको उपयोग आमजनताको सर्वोपरि हित हुनेगरी गर्नुपर्ने । जङ्गली जनावरबाट हुने क्षतिको क्षतिपूर्ति राज्यले उपलब्ध गराउनु पर्ने । कृषक र कृषिक्षेत्रको उत्थान, उत्पादन र वैज्ञानिक भूमिसुधारबारे उत्पादन र बजार व्यवस्थापन गर्न संविधानमा नै उल्लेख गर्नुपर्ने । राष्ट्रियहित संरक्षणका लागि प्राकृतिक स्रोत, नदीनालावारे सम्झौता गर्दा जनताको राय सुझाव लिनु पर्ने, निष्पक्ष भूमिसुधार आयोग गठन हुनुपर्छ । भूमिसुधार आयोगबाट आफ्ना स्वार्थ पूरा गर्ने होइन वास्तविक सुकुम्वासीको समस्याको पहिचान गर्नु पर्दछ । भूमिसुधार आयोगको अध्यक्ष सुकुम्वासीकै प्रतिनिधि हुनुपर्दछ । जङ्गललाई राष्ट्रियकरण गरी व्यवस्थित गर्नु पर्दछ । किसान वर्गको सम्मान हुनु पर्दछ । कृषि बजारको उचित व्यवस्था गर्नु पर्दछ । कृषियोग्य जमीन बाँझो राख्न नपाइने व्यवस्था हुनुपर्ने । खेतीयोग्य जमीनमा सिञ्चाईको व्यवस्था गर्नु पर्दछ । कृषि, पशु, वन सम्बन्धी विश्वविद्यालय स्थापना गर्नु पर्दछ । कृषि ऋणको व्यवस्था गरिनुपर्छ । घरेलु तथा साना उद्योगलाई सरकारले संरक्षण दिनु पर्दछ । जल, जङ्गल, जमीन, जडीबुटीमाथि स्थानीय आदिवासीको अग्राधिकार कायम गरिनु पर्दछ । जल, जङ्गल, जमीन साथै खनिजजन्य अन्य प्राकृतिक स्रोत-साधनमाथि स्थानीय जनताको प्रथम अधिकार हुनुपर्ने । जसको जोत, उसको पोतको आधारमा क्रान्तिकारी भूमिसुधार लागू गर्नुपर्ने । किसानलाई कृषि सामग्रीमा अनुदान दिनुपर्ने र किसानको उत्पादन उचित मूल्यमा सरकारले खरिद गर्नुपर्ने । जनमैत्री जङ्गलको व्यवस्थापन गर्ने र सो अनुसारको वृक्षारोपण गर्नुपर्ने । स्थानीय प्राकृतिक साधन र स्रोतको उपयोगमा स्थानीय जनतालाई प्राथमिकता दिनु पर्ने । राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तुसंरक्षण ऐन २०२९ लाई सरलीकरण गर्नुपर्ने । खेतीयोग्य जमीन र आवासक्षेत्र छुट्याउनु पर्ने । कृषिमा संवैधानिक रूपमा नै अनुदानको व्यवस्था हुनुपर्ने । वातावरण संरक्षणको लागि दीर्घकालीन नीति तयार गर्नुपर्ने । दैवीप्रकोपमा परेकालाई पुनर्वासको व्यवस्था गरिनुपर्ने । प्राकृतिक स्रोतको बाँडफाँड तथा सीमानिर्धारण सम्बन्धी शान्ति तथा मैत्रीसन्धिहरूलाई व्यवस्थापिका-संसदको दुई तिहाई बहुमत र जनमतसङ्ग्रहले पारित गर्नुपर्ने प्रावधान राख्नुपर्ने । स्थानीय स्रोत र साधनमा स्थानीय निकायको सर्वोपरि अधिकार हुनुपर्ने । स्थानीय जडीबुटी प्रशोधनकेन्द्र स्थानीयस्तरमा नै हुनुपर्ने । कर्णालीको प्राकृतिक स्रोत र साधनको संरक्षण र सदुपयोगमा कर्णालीका जनताको अग्राधिकार रहने गरी संविधान बनाइनुपर्ने । जलसम्पदाको उपयोग गर्ने अधिकार प्रदेशमा हुनुपर्ने । वैज्ञानिक कृषि प्रणाली लागू गर्ने । कृषिजन्य र पशुजन्य वस्तुको बीमा गरिनुपर्ने । एक गाउँ एक कृषिको नीतिलाई लागू गर्ने । बाँझो जमीन सरकारले अधिग्रहण गर्नुपर्ने । स्थानीयस्तरमा रहेका स्रोत-साधनहरूको सम्पूर्ण अधिकार स्थानीय समुदायलाई नै दिइनु पर्ने । सन्तुलित विकास, आर्थिक अवस्थाको आधारमा राहत सुविधा दिइनु पर्ने । सुदूरपश्चिमलाई केही अवधि तोकेर थप आर्थिक आरक्षणको व्यवस्था गर्ने नीति संविधानमा राखिनु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | पर्ने । जमीन, जङ्गल र जलमा आदिवासीको अधिकार हुनुपर्ने । कृषि औजार र मलखाद प्राप्त गर्ने तथा कृषि उत्पादनको मूल्य आफैं तोक्न पाउने हक हुनुपर्ने । युवालाई कृषि तालिम र स्वरोजगारको व्यवस्था हुनुपर्ने । आलिताल, उग्रतारा, अजयमेरू, खप्तड, कर्णाली, मालिका लगायतका क्षेत्रलाई पर्यटकीयक्षेत्र घोषणा गरिनुपर्ने । ग्रामीण क्षेत्रमा खानेपानीका लागि प्राथमिक प्रावधान हुनुपर्ने । देशभरि उपलब्ध प्राकृतिक साधन-स्रोतको बृहत्तर जनहित हुने गरी केन्द्रले सबै प्रदेश वा प्रान्त तथा स्थानीयतहलाई समान व्यवहार गरिनुपर्ने । सबै एकाइले एक आपसमा दुश्मनी नगरी समान एवं सहकर्मीको व्यवहार गर्नुपर्ने । प्राकृतिक स्रोतको सम्बन्धमा केन्द्र, प्रान्त र स्थानीय निकाय बीच उत्पन्न हुने विवाद समाधानका लागि प्रशासनिक संयन्त्रको व्यवस्था गर्नुपर्ने । राजनीतिक स्वतन्त्रता, आर्थिक समानता सामाजिक आर्थिक रूपान्तरण सहित विद्यमान प्रचलित सम्पूर्ण विभेदहरूको अन्त्य गरिनुपर्ने । किसानको हक मौलिक हकमा हुनुपर्ने । राष्ट्रिय भू-उपयोग नीति हुनुपर्ने । नदीनाला र अन्य प्राकृतिक क्षेत्रको संरक्षण राज्यद्वारा व्यवस्थित गरिनुपर्छ । कृषि तथा विविध क्षेत्रमा कीटनाशक औषधि तथा विषाक्त पदार्थ प्रयोग गर्न नपाउने व्यवस्था गरिनुपर्ने । स्थानीय स्रोत र सम्पत्तिको जिम्मा स्थानीय सरकारमा हुनुपर्छ । सूचीकृत स्रोतलाई स्थानीयतहमा राख्ने । प्रान्तहरु बीचको आर्थिक असमानता हटाउन प्रान्तीय सरकार बीच आफ्नै स्रोत-साधनका आधारमा स्वतन्त्र प्रतिस्पर्धा गर्न दिनुपर्छ । प्रान्तबाट निश्चितप्रतिशत रकम केन्द्रलाई बुझाउने व्यवस्था हुनुपर्ने । वातावरणमा प्रभाव पार्ने पक्षबाट प्रभावितलाई क्षतिपूर्तिको व्यवस्था गर्नुपर्ने । प्राकृतिक स्रोत सम्बन्धी अन्तर्राष्ट्रिय सम्झौतामा दुई तिहाई बहुमतले अनुमोदन गर्नुपर्ने । राष्ट्रिय महत्व र ठूलो धनराशि लाग्ने स्रोत र आयोजना केन्द्रको नियन्त्रणमा राख्ने र स्थानीय स्रोतको उपयोगको नीति आउनु पर्ने । प्राकृतिक स्रोत-साधनको संरक्षण नेपाली सेनाले गर्नुपर्ने । जलसम्पदाको प्रयोगवारे संविधानमै स्पष्ट धारणा उल्लेख हुनुपर्ने । कर प्रणालीलाई वर्गीकरण गरी केन्द्र र प्रदेशले कुन कुन लिने भन्ने संविधानमा नै उल्लेख हुनुपर्ने । भन्सार, आयकर,वातावरण प्रदूषण करजस्ता करहरु केन्द्रले लिने व्यवस्था गर्दा राम्रो हुने र पछि परेको क्षेत्रलाई अनुदानको व्यवस्था प्रभावकारी ढङ्गले गरिनुपर्छ । नेपालमा रहेका प्राकृतिक स्रोत र साधनलाई उच्चतम परिचालन गर्न सक्ने गरी बाँडफाँड गर्ने । जलसम्पदाको परिचालनमा राज्यले स्पष्ट धारणा लिनु पर्दछ । कर प्रणालीलाई व्यवस्थित तरिकाले संविधानमा नै उल्लेख गर्नु पर्छ । पिछडिएका क्षेत्रलाई राज्यले प्रभावकारी रूपमा संरक्षण गर्नु पर्छ । कूल राजस्वको ७५% प्रान्तले र २५% केन्द्रले लिने । खानीहरु प्रदेशको नियन्त्रणमा हुनुपर्ने । कृषियोग्य जमीनमाथि कृषकको हक सुनिश्चित हुनुपर्ने । राष्ट्रिय वन, ठूला किसिमका जलविद्युत्, खानी, सिञ्चाइलाई केन्द्रले सञ्चालन गर्दा जनताले केही प्रतिफल पाउन सुनिश्चितता हुनुपर्ने । प्रान्तहरु बीचको आर्थिक असमानता हटाउन प्रान्तलाई केन्द्रले नीति बनाउने र त्यसको कार्यान्वयन प्रान्तहरूले गर्ने । प्राकृतिक सम्पदाको संरक्षण भावी पुस्ताको लागि समेत गर्ने व्यवस्था मिलाउने । खोला-नालाहरूको संरक्षण गरी व्यवस्थापन गरिएको जग्गामा सुकुम्बासीहरूको बसोवासको व्यवस्था गर्ने । जडीबुटी सम्बन्धी राष्ट्रिय नीति तय गर्ने । चिया, अलैंची, अदुवा, कफी लगायत नगदेवाली सम्बन्धी राष्ट्रिय नीति तय गर्नुपर्ने । जैविक विविधताको संरक्षणमा जोड दिइनुपर्ने । |

## ३.२.११. राष्ट्रियहितको संरक्षण समितिको कार्यक्षेत्रका विषय सम्बन्धी सुझावहरु

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. १ | सीमा अतिक्रमण सम्बन्धी समस्या समाधान गरिनुपर्ने । सेना केन्द्र मातहत हुनुपर्ने । सीमा अतिक्रमण रोक्न सीमा व्यवस्थापन, सीमासुरक्षा गर्ने राष्ट्रिय नीति तय गर्नुपर्ने । सहमतिबाट राष्ट्रिय विकास नीति तय गर्नुपर्ने । राष्ट्रिय सहमतिको सरकार बन्नु पर्ने । राष्ट्रिय महत्वका विषयहरूमा जनमतसङ्ग्रहको व्यवस्था हुनुपर्ने । खेलकूद सम्बन्धी विशेष नीति तय गर्नुपर्ने । माओवादी लडाकुहरूको समायोजन र पुनःस्थापना यथाशीघ्र गर्नुपर्ने । राष्ट्रिय मुद्दाहरूमा राष्ट्रिय सहमति साथ निर्माण हुनुपर्ने । |
| टोली नं. २ | राष्ट्रियहित भन्नाले सार्वभौमसत्ता र राष्ट्रिय अखण्डताको रक्षा गर्नुपर्ने । नेपालको राष्ट्रियहितको मुख्य विषयवस्तु राष्ट्रिय सुरक्षा हो । राष्ट्रिय सम्पदाको संरक्षण गर्ने जिम्मेवारी सबै नेपाली जनता र सरकारी तथा गैरसरकारी निकायहरूको हुने । प्राकृतिक सम्पदाको संरक्षण भावी पुस्ताको लागि समेत गर्ने व्यवस्था मिलाउने । सन्धि-सम्झौताको कार्यान्वयन छुट्टै कानूनको तर्जुमा गरी कार्यान्वयन गर्ने । नेपालको परराष्ट्रनीतिको आधार पञ्चशीलको सिद्धान्तको आधारमा हुनुपर्दछ । नेपालको सीमा अतिक्रमण भएमा तुरून्तै व्यवस्थापिका-संसदलाई जानकारी गर्ने । |
| टोली नं. ३ | राष्ट्रिय अस्मितामा आँच नआउने गरी राष्ट्रिय एकता, अखण्डता, सार्वभौमसत्ताको दिगो संरक्षण हुने खालका व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ४ | सेना, प्रहरी-प्रशासन पुनर्संरचना गरी नयाँपन ल्याउनु पर्दछ । यस्ता निकायलाई जनता र जननिर्वाचित सरकारप्रति उत्तरदायी बनाउनु पर्दछ । जनउत्तरदायी नहुनेलाई सेवाबाट तत्काल निष्कासन गर्ने तथा भ्रष्टाचारीलाई माथि उल्लेख भए अनुरूपको कडा सजायको व्यवस्था गर्नु पर्दछ । यसलाई राजनीतिबाट मुक्त राख्नु पर्दछ । वैज्ञानिक र प्रगतिशील भूमिसुधार कायम गरी सामन्ती, शोषण, उत्पीडन र त्यसका सामाजिक–सांस्कृतिक अवशेषहरूको अन्त्य गरिनु पर्दछ । सुकुम्वासीहरूलाई जमीन र आवासको व्यवस्था गरिनु पर्दछ । प्राकृतिक प्रकोपमा परेका वा सरकारी योजना वा अन्तर्राष्ट्रिय सन्धि-सम्झौता अन्तर्गत बेदखल भएका जनतालाई सम्झौता अन्तर्गत जमीन क्षतिपूर्ति/सट्टाभर्ना उपलब्ध गरिनु पर्दछ । जमीन बाँझो राख्नेलाई दण्ड जरिवाना गरिनु पर्दछ । राष्ट्रियहित प्रतिकूल हुने कुनै पनि सन्धि-सम्झौता र कार्य गर्न नपाइने व्यवस्था गरिनुपर्छ । नेपाल भारत चीन सिमानालाई नियमन गरिनुपर्दछ । असमान सन्धिहरूको खारेजीको व्यवस्था गर्नुपर्दछ । नागरिकको सम्पूर्ण विवरण राज्यले राख्नु पर्दछ । नागरिकको राज्यप्रतिको दायित्व किटान गरिनु पर्दछ । |
| टोली नं. ६ | राष्ट्रिय एकता, अखण्डता, सार्वभौमसत्ताको दिगो संरक्षण, मित्रराष्ट्रहरूसँग सीमाविवाद, अन्तर्राष्ट्रिय सन्धि-सम्झौता, राष्ट्रिय सुरक्षा, नेपाली सेनाको कर्तव्य र यसको सञ्चालन गर्ने विधिका सम्बन्धमा नयाँ संविधानमा उल्लेख गरिनुपर्ने । |
| टोली नं. ७ | सीमासुरक्षा व्यवस्थित गरिनुपर्ने । छिमेकी राष्ट्रहरूलाई समान व्यवहार गर्नुपर्ने । नेपालको परराष्ट्रनीति पञ्चशीलका सिद्धान्तमा आधारित संविधानमा राख्नुपर्ने । सीमासुरक्षा कडा गराउनु पर्ने । सुरक्षानिकायलाई चुस्त दुरूस्त राख्नुपर्ने । चौकी पुनः स्थापना तथा व्यवस्थित गर्नुपर्ने । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| टोली नं. ८ | सेनासमायोजन सम्बन्धी मिश्रित सुझाव प्राप्त भएको छ । सेनालाई सीमासुरक्षा र विकासमा लगाउनु पर्ने । भारतसँगको खुला सिमानालाई व्यवस्थित गरी आवत-जावतमा परिचयपत्रको व्यवस्था अनिवार्य गरिनुपर्ने । समदूरीका छिमेकी राष्ट्रहरूलाई विशेष र समान व्यवहार गर्नुपर्ने र पञ्चशीलका सिद्धान्तमा आधारित परराष्ट्रनीति लागू गर्नुपर्ने । |
| टोली नं. ९ | सीमासुरक्षा कडा बनाई सीमा अतिक्रमण नियन्त्रण गरिनुपर्ने । राष्ट्रिय सेनालाई जनताप्रति उत्तरदायी बनाइनु पर्छ । |
| टोली नं. ११ | सङ्घीयताले राष्ट्रिय एकता मजबुत हुनुपर्ने । सीमासुरक्षा केन्द्र र प्रान्त दुबै मिली गर्नुपर्ने । सीमासुरक्षाबल, औद्योगिक सुरक्षावल गठन गरिनुपर्ने । विशेष सुरक्षादस्ता बनाउनु पर्ने । समावेशी सेना हुनुपर्ने । राष्ट्राध्यक्षबाट सेना परिचालन हुनुपर्ने । अन्तर्राष्ट्रिय सन्धि-सम्झौता व्यवस्थापिकाबाट अनुमोदन गरेरमात्र कार्यान्वयन गर्नुपर्ने । अन्तर्राष्ट्रिय सन्धि-सम्झौता केन्द्रले मात्र गर्न सक्ने प्रावधान राख्नुपर्ने । राष्ट्रको सीमानियमनको भरपर्दो व्यवस्था हुनुपर्ने । |
| टोली नं. १२ | स्थानीय समुदायको सहभागितामा प्राकृतिक सम्पदाको संरक्षण हुनुपर्ने । विभेदरहित समाजको निर्माण हुनुपर्ने । अन्तर्राष्ट्रिय सन्धि-सम्झौता गर्ने अधिकार केन्द्रीय सरकारसँग रहनुपर्ने । अन्तर्राष्ट्रिय सीमाव्यवस्थापनमा सरकारको प्रभावकारी भूमिका हुनुपर्ने । |
| टोली नं. १३ | राष्ट्रियहित भन्नाले सार्वभौमसत्ता र राष्ट्रिय अखण्डताको रक्षा गर्नु, नेपालको राष्ट्रियहितको मुख्य विषयवस्तु राष्ट्रिय सुरक्षा हो । प्राकृतिक सम्पदाको संरक्षण भावी पुस्ताको लागि आवश्यक भएको । सन्धि-सम्झौताको कार्यान्वयन छुट्टै कानूनको तर्जुमा गरी कार्यान्वयन गर्ने । नेपालको परराष्ट्रनीतिको आधार पञ्चशीलको सिद्धान्तको आधारमा हुनुपर्दछ । नेपालको सीमा अतिक्रमण भएमा तुरुन्तै व्यवस्थापिका-संसदलाई जानकारी गर्ने । |
| टोली नं. १५ | सन्धि-सम्झौता गर्दा स्थानीय जनतासँग सोधेर मात्र गर्ने । प्राकृतिक स्रोतमा जनताको अधिकार हुनुपर्छ । राष्ट्रिय मुद्दाहरूमा जनमतसङ्ग्रहबाट निर्णय लिइनुपर्छ । संवैधानिक व्यवस्था गरी सेनालाई राजनीतिबाट टाढा राखिनु पर्दछ । संविधान भन्दा माथि जनता हुनुपर्छ र राज्यलाई पनि संविधान भित्र समावेश गरिनुपर्छ । |
| टोली नं. १६ | राष्ट्रियताको रक्षाको लागि १८ वर्ष पुगेका सबै नागरिकलाई फौजी तालिम दिनुपर्ने । सुगौली सन्धि लगायत असमान सन्धिहरु खारेज हुनुपर्ने । राष्ट्रिय महत्वका सन्धि-सम्झौताहरु व्यवस्थापिका-संसदबाट पारित हुनुपर्ने । स्थानीय स्रोत-साधन, सीप, ज्ञान र क्षमताको राज्यले सम्मान, संरक्षण र विकास गर्नुपर्ने । समग्र भू-उपयोग नीति लागू गर्नुपर्ने । राष्ट्रिय निकुञ्ज तथा वन्य जन्तु संरक्षण ऐन, २०२९ लाई सरलीकृत गरिनुपर्ने । जनहितमा सञ्चालन हुने कुनै पनि निकाय निर्माण कार्य सञ्चालन गर्न राष्ट्रिय निकुञ्ज तथा वन्य जन्तु संरक्षण ऐन, २०२९ बाधक बन्ने प्रावधानहरु हटाउनु पर्ने । प्राकृतिक स्रोत-साधन र वातावरण संरक्षणको कार्य अनिवार्य सत्य भए तापनि जनताको विकासको अधिकारलाई यसले कुण्ठित पार्न नहुने । सार्वभौम जनताको अधिकारलाई प्राकृतिक स्रोत-साधन सम्बन्धी ऐन |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | नियमले सङ्कुचित गर्न नहुने । मौलिक हक वा प्राकृतिक स्रोत-साधनको संरक्षण कुन विषयले संविधानमा पहिलो प्राथमिकता पाउनु पर्ने हो, किटान हुन पर्‍यो । प्राकृतिक स्रोत-साधन सम्बन्धी कानून जनमैत्री बन्नु पर्‍यो । स्थानीय प्राकृतिक स्रोत-साधनको उपयोगमा स्थानीय जनतालाई पहिलो प्राथमिकता दिनुपर्‍यो । स्थानीय प्राकृतिक स्रोत-साधनको उपयोगबाट प्राप्त राजस्व सम्बन्धित क्षेत्रको विकासमा परिचालन गर्नुपर्ने । जनमैत्री जङ्गलको व्यवस्थापन गर्न सो अनुसारको वृक्षारोपणको व्यवस्था हुनुपर्‍यो । |
| टोली नं. १७ | असमान सन्धिहरु खारेज हुनुपर्दछ । राष्ट्रिय अखण्डता र स्वाभिमान जोगिने संविधान बनाउनु पर्छ । सीमासुरक्षामा विशेष व्यवस्था हुनुपर्ने । राजनीतिले राष्ट्रियताको भावना पैदा गर्ने व्यवस्था राखिनु पर्ने । |
| टोली नं. १८ | देशको सार्वभौमिक र अखण्डतालाई कायम राख्ने । प्राकृतिक र सांस्कृतिक सम्पदाको उचित संरक्षण गर्नुपर्ने । सेनासमायोजन गर्नुपर्ने । नेपालको अन्तर्राष्ट्रिय सिमानालाई व्यवस्थित रूपमा सीमाङ्कन गर्ने । सीमासुरक्षाको उचित प्रबन्ध हुनुपर्ने । नेपालको परराष्ट्रनीति राष्ट्रियहितमा राखेर सम्बन्ध विस्तार गर्ने । |
| टोली नं. १९ | प्रतिनिधिमूलक, जवाफदेही र उत्तरदायी सरकार र राज्यको कामकारवाहीमा खुला र पारदर्शी संस्कृतिको अवलम्बन गरिनुपर्ने साथै राज्य व्यवस्थामा जनताको सहभागिता, सम्मान र संरक्षणको सुनिश्चिताको आधारमा राष्ट्रियहितको प्रवर्द्धन गरिनुपर्ने । |
| टोली नं. २० | नेपालको राष्ट्रिय हितको पहिचान र परिभाषा : अखण्डता, एकता, सार्वभौमता, स्वतन्त्रता र जातीय, भाषीय, भौगोलिक, सांस्कृतिक, सामाजिक आदि । |
| टोली नं. २२ | सीमा अतिक्रमण सम्बन्धी समस्या सरकारबाट छिटो समाधान गरिनुपर्दछ । सेना केन्द्र मातहत हुनु उपयुक्त हुन्छ । सङ्कटकालीन अधिकार मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रपतिलाई हुनुपर्ने र संसदबाट अनुमोदन गराउनु उपयुक्त हुने । दुई देशको सम्बन्ध र स्थानीय जनताको सुविधालाई ध्यानमा राखी सीमा व्यवस्थापन हुनुपर्ने । प्रान्तीय राज्यहरूको सरोकार भएका विषयहरूमा अन्तर्राष्ट्रिय सन्धि-सम्झौता गर्दा प्रान्तीय सरकारको सहमतिमा मात्र केन्द्र सरकारले गर्नुपर्ने । |
| टोली नं. २३ | सीमासुरक्षा कडा बनाउनु पर्ने । छिमेकी राष्ट्रहरूलाई समनिकटता र समान व्यवहार गरियोस् पञ्चशीलका सिद्धान्तमा आधारित परराष्ट्रनीति गरिनुपर्ने । सेना जनताप्रति उत्तरदायी बनाउने व्यवस्था संविधानमा गरियोस् । नेपाल र भारत बीचको सीमा वैज्ञानिक बनाई, अतिक्रमण भएका नेपाली भूभागमा देखिएको समस्या तुरून्त समाधान गरियोस् । |
| टोली नं. २४ | सीमासुरक्षा कडा बनाउनु पर्ने । राष्ट्रिय जनावर गाई र गैडा हुनुपर्ने वा सबैलाई मान्य हुनेगरि जनावर तोक्ने । सेनालाई राष्ट्रिय सेना बनाउनु पर्ने र नपर्नेमा मिश्रित विचार छ । |
| टोली नं. २५ | नेपालको परराष्ट्र सम्बन्धका आधारहरूमा पञ्चशीलको सिद्धान्त, संयुक्त राष्ट्रसङ्घको बडापत्र, असंलग्नता, अन्तराष्ट्रिय कानून र विश्व शान्ति तथा राष्ट्रियहितको प्रवर्द्धनलाई मानिने छ । नेपालले छिमेकी मुलुकहरूसँग |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | समदूरीको सम्बन्ध राख्नेछ । नेपाल पक्ष हुने सन्धिहरूको कार्यान्वयन हुन व्यवस्थापिकाबाट अनुमोदन, सम्मिलन, स्वीकृति वा समर्थन अनिवार्य हुनुपर्नेछ । अन्यथा त्यस्ता सन्धि स्वतः निष्क्रिय हुनेछ । नेपाली राष्ट्रिय सुरक्षा अङ्गहरूलाई समावेशी बनाउन आरक्षणको वर्तमान व्यवस्था कायमै राख्नु पर्दछ । |
| टोली नं. २७ | राष्ट्रिय अस्मितामा आँच नआउने गरी राष्ट्रिय एकता, अखण्डता, सार्वभौम सत्ताको दिगो संरक्षण हुने खालका व्यवस्था गरिनुपर्ने । समितिहरूको कार्यक्षेत्रसँग सम्बन्धित उल्लिखित अवधारणात्मक पक्षका अतिरिक्त संविधान निर्माण समयमै हुनुपर्ने भन्ने जनमत रहेको देखिएको छ । |
| टोली नं. २८ | राष्ट्रखण्डित नहुने गरी संविधान बनाइनुपर्ने । विविधतालाई सम्बोधन गर्ने व्यवस्था हुनुपर्ने । |
| टोली नं. २९ | सेना र प्रहरीमा पारिवारिक आवास हुनुपर्ने । राष्ट्रिय निकुञ्ज र संरक्षणक्षेत्रसँग सम्बन्धित कानूनहरु बनाउँदा त्यससँग सम्बन्धित व्यक्तिहरूसँग परामर्श गरी बनाउनु पर्ने । प्राकृतिक सम्पदाप्रतिको राष्ट्रको दृष्टिकोणमा परिवर्तन हुनुपर्ने । राष्ट्रिय निकुञ्ज, जनताको सम्पत्ति र ज्यानको खतराको क्षतिपूर्तिवारे संविधानमा उल्लेख हुनुपर्ने । सेना, मुद्रा र विदेशनीति केन्द्रीय सरकारको मातहतमा हुने । प्राकृतिक स्रोत र साधन कम भएका राज्यलाई केन्द्रले मिलाउने व्यवस्था हुनुपर्ने । नयाँ परराष्ट्रनीतिको अवलम्बन गर्नुपर्ने । कुनै पनि राजनीतिक दलले सेनाको भर्ती गर्नुहुँदैन । नेपालको सीमासुरक्षाको उचित प्रवन्ध गर्नुपर्ने । सैनिक अदालतको खारेज गरी सेनालाई नागरिक अदालतको मातहतमा ल्याउनु पर्ने । कृष्णसारक्षेत्रको संरक्षण र विकास हुनुपर्ने । मधेसीलाई सेना लगायतको क्षेत्रमा ५० प्रतिशत आरक्षण हुनुपर्ने । प्राकृतिक स्रोत र साधनको न्यायोचित वितरण हुनुपर्ने । सेना, मुद्रा वैदेशिक सम्बन्ध र ठूला विद्युतीय प्रोजेक्टहरु केन्द्र सरकारसँग रहनुपर्ने । प्राकृतिक स्रोत-साधन नियन्त्रण आयोग गठन हुनुपर्ने । राष्ट्रिय जनावर हात्ती हुनुपर्ने । देश टुक्रन नहुने । जलसम्पदाको उपभोग आमजनताको सर्वोपरि हित हुने गरी गर्नुपर्ने । राष्ट्रियताको संरक्षण गर्ने, स्वतन्त्र र अखण्ड नेपालको अस्तित्व कायम राख्नुपर्ने । अन्तराष्ट्रिय सन्धि-सम्झौता संविधानमा उल्लेख गर्नुपर्ने । राष्ट्रिय हित, संरक्षणका लागि प्राकृतिक स्रोत नदीनालावारे सम्झौता गर्दा जनताको राय सुझाव लिनु पर्ने । अन्तराष्ट्रिय सन्धि-सम्झौता केन्द्रीय सरकारले मात्र गर्नुपर्दछ । जङ्गली जनावरबाट हुने क्षतिको क्षतिपूर्ति राज्यले उपलब्ध गराउनुपर्दछ । शिक्षानीति राष्ट्रिय एकतामा आधारित हुनु पर्दछ । प्राकृतिक स्रोतहरु प्रान्तीय सरकारमा रहनु पर्छ । वनलाई राष्ट्रियकरण गरी व्यवस्थित गरियोस् । खुल्ला सिमानाको अन्त्य गरिनुपर्ने । प्राकृतिक स्रोतहरूको उचित विभाजन हुनुपर्ने । राष्ट्रभाषा एक हुनुपर्ने । अधिकारको खाकाभन्दा कर्तव्यको खाका बनाउनु पर्ने । माओवादी सेनालाई औद्योगिक सुरक्षामा प्रयोग गर्नुपर्दछ । संवैधानिक सर्वोच्चता हुनुपर्ने । सेनासमायोजन तत्काल गरी एउटै राष्ट्रिय सेना निर्माण गर्नुपर्ने । राष्ट्रिय जनावर गाई हुन सक्दैन कसैले नखाने जनावरलाई राष्ट्रिय जनावरको मान्यता दिनु पर्ने । राष्ट्रिय सम्पदाको संरक्षण सरकार तर्फबाट गरिनुपर्ने । १९५० को सन्धिलाई खारेज गर्नुपर्छ । भूमिको वैज्ञानिक व्यवस्था हुनुपर्ने । राष्ट्रको सुरक्षाको लागि सीमासुरक्षावल निर्माण गरी व्यवस्थित गर्ने । विखण्डन |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
|---|---|
| | नहुने गरी राज्यको पुनसंरचना हुनपर्ने । सङ्घीय शासनप्रणालीमा देश लैजाने कुरामा जनमतसङ्ग्रह गर्नुपर्ने । सेनासमायोजन गरी राष्ट्रिय सेनाको निर्माण गरिनुको साथै सेनाको संख्या २० हजारको हाराहारीमा राखिनु पर्ने । प्राकृतिक स्रोत-साधनमा सबैको पहुँच पुग्ने व्यवस्था हुनु पर्दछ । धर्मनिरपेक्ष राज्य बनाउनु पर्दछ । औद्योगिक सुरक्षावल गठनगरिनु पर्दछ । |
| टोली नं. ३० | सुरक्षानिकायमा समान रूपमा सबैले जागीर पाउनु पर्छ । राष्ट्रिय अखण्डताप्रति सजग रही विधिको शासन हुनुपर्ने । नेपाली सेना र जनमुक्ति सेनासमायोजन गरी राष्ट्रिय सेना बनाइनु पर्ने । सेना ३ किसिमको बनाइनु पर्ने । राज्यसुरक्षा सेना, सीमासुरक्षा सेना, हवाई सेना, सेनामा हामी नागरिकका सेवक हौं, मालिक होइनौं भन्ने भावना जागृत गराइनु पर्ने । सेना प्रमुख तथा प्रहरी प्रमुखलाई समूहबाट नै निर्वाचित हुने व्यवस्था हुनुपर्ने । महत्वपूर्ण निर्णय तथा सन्धि-सम्झौता गर्नु पर्दा जनमतसङ्ग्रहको व्यवस्था हुनुपर्ने । सन १९५० देखि यताका असमान सन्धि-सम्झौता खारेज गरिनुपर्छ । राष्ट्रिय जनावर गैंडा हुनुपर्छ । |
| टोली नं. ३२ | नेपालको सार्वभौमसत्ता, अखण्डता र राष्ट्रिय एकतालाई अक्षुण्ण राख्न नागरिकको अधिकार र कर्तव्य संविधान मै उल्लेख गर्नुका साथै राष्ट्रहित प्रतिकूल हुने गरी अन्तर्राष्ट्रिय सम्झौता गर्न नपाइने व्यवस्था गरिनुपर्ने जनताहरूको सुझाव रहेका छन् । राष्ट्रका सम्पूर्ण सुरक्षा निकायहरूलाई राष्ट्रिय सुरक्षा परिषद्को मातहतमा राख्नु पर्दछ । नेपालको परराष्ट्र सम्बन्धका आधारहरूमा पञ्चशीलको सिद्धान्त, संयुक्त राष्ट्रसङ्घको बडापत्र, असंलग्नता, अन्तराष्ट्रिय कानून र विश्वशान्ति तथा राष्ट्रिय हितको प्रवर्द्धनलाई मानिने छ । नेपालले छिमेकी मुलुकहरूसँग समदूरीको सम्बन्ध राख्नेछ । नेपाल पक्ष हुने सन्धिहरूको कार्यान्वयन हुन व्यवस्थापिकाबाट अनुमोदन, सम्मिलन, स्वीकृति वा समर्थन अनिवार्य हुनुपर्नेछ । अन्यथा त्यस्ता सन्धि स्वतः निष्क्रिय हुनेछ । नेपाली राष्ट्रिय सुरक्षा अङ्गहरूलाई समावेशी बनाउन आरक्षणको वर्तमान व्यवस्था कायमै राख्नु पर्दछ । |
| टोली नं. ३३ | सेनासमायोजन गरी राष्ट्रिय सेना बनाउनु पर्ने । सेना जननिर्वाचित निकायको अधीनमा रहनु पर्ने । विगतका आन्दोलनहरूको स्मरणको साथसाथै "सामन्तवाद र साम्राज्यवादविरूद्धको जनयुद्ध र जनआन्दोलनको उपलब्धि ......" भनी संविधानमा उल्लेख गर्नुपर्ने । सेनाको संख्या घटाउनु पर्ने । सेनालाई सीमासुरक्षा र विकास निर्माणमा लगाइनु पर्ने आदि । |
| टोली नं. ३४ | नेपाली सेनाको संख्या घटाउनु पर्ने । सेनालाई व्यावसायीकरण गर्नुपर्ने । कतिपय स्थानमा नेपाली सेनाको संख्या बढाउनु पर्ने कुरा पनि आएको छ । सामाजिक भेदभाव हट्नु पर्ने । नेपालको राष्ट्रिय एकता हुने खालको राष्ट्रिय अखण्डतामा आँच नआउने र सङ्घीयताको नाममा देश टुक्र्याउने संविधान नबनोस् । |
| टोली नं. ३५ | नेपालको उत्तरी सिमानामा आवश्यक सुरक्षा व्यवस्था मिलाउन आवश्यक देखिन्छ, उत्तरीक्षेत्रमा चिनियाँ युयानको सटही सम्बन्धमा विशेष व्यवस्था गर्न आवश्यक देखिन्छ । |

| टोलीको नाम | प्राप्त सुझावको विवरण |
| --- | --- |
| टोली नं. ३६ | भारतबाट अतिक्रमण हुनबाट बचाउनुपर्ने । १६ वर्षमाथिकालाई सैनिक तालिम दिनुपर्ने । भारतीय सीमामा पासपोर्टको व्यवस्था गर्नुपर्ने । सीमामा नेपालीहरूमाथि भइरहेको अत्याचार रोकिनुपर्ने । नेपालको जलसम्पदा तथा प्राकृतिक स्रोतको सुरक्षा गर्नुपर्ने । वंशजको आधारमा नागरिकता दिने व्यवस्था हुनुपर्ने । असमान सुगौली सन्धिलाई पुनरावलोकन गरी नेपालको हितमा पुनः सन्धि-सम्झौता हुनुपर्ने । दुई तिहाई बहुमतबाट सन्धि, सम्झौताको अनुमोदन हुनुपर्ने । साम्राज्यवादको अन्त्य हुनुपर्ने । १९५० को सन्धि लगायत असमान सन्धि, सम्झौता खारेजी हुनुपर्ने । राष्ट्रभाषा नेपाली हुनुपर्ने । जन्म दर्ताको व्यवस्था प्रभावकारी गरिनुपर्ने । पञ्चशीलको आधारमा सीमानिर्धारण हुनुपर्ने । देशको भू-भाग र सिमानाको सुरक्षा हुनुपर्ने । श्रमिक परिचयपत्र लागू हुनुपर्ने । सुरक्षानिकायमा भर्ना हुनका लागि चारित्रिक योग्यतालाई मुख्य आधार बनाइनु पर्ने । जन्मका आधारमा नेपाली नागरिकता दिने व्यवस्था खारेज हुनुपर्ने । राष्ट्र र राष्ट्रियताविरूद्धको अपराधमा संलग्न व्यक्तिलाई मृत्युदण्डको व्यवस्था गरिनुपर्ने । |
| टोली नं. ३८ | राष्ट्रिय अस्मितामा आँच नआउने गरी राष्ट्रिय एकता, अखण्डता, सार्वभौमसत्ताको दिगो संरक्षण हुने खालका व्यवस्था गरिनुपर्ने । |

## ३.३. विषयगत समितिहरुद्वारा जनताबाट प्राप्त सुझाव, विशेषज्ञ, राजनीतिक दल र सरोकारवालाहरुले दिएको सुझाव समेतका आधारमा अवधारणापत्र र व्याख्यात्मक टिप्पणी सहितको प्रारम्भिक मस्यौदा निर्माण

विभिन्न माध्यमबाट सुझाव प्राप्त गर्ने र जनताको राय सुझावको अध्ययन विश्लेषण गर्ने कार्यसम्पन्न गरेपछि संवैधानिक समिति र विषयगत समितिहरूले संवैधानिक अभ्यास, मूल्य र मान्यताबारेमा जानकार हुन र अस्पष्टता भएका विषयमा थप स्पष्ट हुदै संविधान निर्माण प्रक्रियामा सर्वोच्च अदालतका माननीय न्यायाधीशहरु सहित संविधानविद्, कानूनविद्, राजनीतिशास्त्री, मानवअधिकारवादी, प्रशासनविद्, पत्रकार लगायत नागरिक समाजका अगुवाहरूको समेत सहभागिता सुनिश्चित गर्न विभिन्न विषयगत समितिको कार्यक्षेत्रका विषयसँग सम्बन्धित विशेषज्ञलाई आमन्त्रण गरी प्रस्तुति गर्न अनुरोध गरिएको थियो । यसरी विशेषज्ञहरूले संविधानका अन्तर्निहित विषयवस्तुका सम्बन्धमा महत्वपूर्ण सहयोग र योगदान दिनु भएको थियो । यस रूपमा अघि बढ्दै विभिन्न समितिहरूले अवधारणा सहितको प्रारम्भिक मस्यौदा गर्ने कार्यसम्पन्न गरेका थिए । यसरी तयार भएका समितिका प्रतिवेदनहरु मिति २०६६/२/९ देखि २०६६/१०/१२ सम्ममा अध्यक्षमार्फत् संविधानसभामा पेश गरेका थिए ।

विषयगत समितिहरूले व्यवस्थित रूपमा कार्य गर्नको लागि उपसमितिको गठन गरेर कार्यविभाजन गर्ने, विशेषज्ञहरूसँग परामर्श गर्ने, सकभर विषयहरूमा सर्वसम्मति कायम गर्ने र कुनै सदस्यको फरक दृष्टिकोण भए नियमावली बमोजिम त्यस्तो फरकमतलाई प्रतिवेदनमा समावेश गर्ने विधिबाट कार्यसम्पादन गरेका

थिए । हरेक समितिमा उपसमिति गठनको अवस्था, विशेषज्ञ आमन्त्रणको अवस्था र निर्णय प्रक्रिया सम्बन्धमा स्पष्ट होस् भनी समितिगत रूपमा देहायको संक्षिप्त विवरण प्रस्तुत गरिएको छ :-

१. **राष्ट्रिय हितको संरक्षण समिति**

**सभापतिः** मा० श्री अमिक शेरचन

**उपसमिति गठनः** ६ वटा

- क) नेपालको राष्ट्रिय हितको पहिचान र परिभाषा तथा राष्ट्रिय प्राकृतिक सम्पदाको संरक्षण उपसमिति,
- ख) सार्वभौमसत्ता, अखण्डता र राष्ट्रिय एकताको संवैधानिक संरक्षणका उपायहरु तथा नेपालको अन्तर्राष्ट्रिय सिमाना व्यवस्थापन उपसमिति,
- ग) अन्तर्राष्ट्रिय सम्बन्ध तथा अन्तर्राष्ट्रिय सन्धि-सम्झौता उपसमिति,
- घ) राष्ट्रिय सुरक्षा तथा नेपाली सेनाको कर्तव्य र यसको सञ्चालन उपसमिति,
- ङ) समितिको कार्यविधि निर्माण उपसमिति,
- च) सन्दर्भ सामग्री सङ्कलन तथा क्षमता अभिवृद्धि उपसमिति ।

**सहभागी विशेषज्ञहरू वा सङ्घ/संस्थाः** २६ जना विज्ञ र ४ जना सरकारी पदाधिकारीहरु ।

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/२/८

**प्रतिवेदनको अवस्थाः** सर्वसम्मत रूपमा प्रतिवेदन पेश गरिएकोमा विरोध जनाउंदै सदनमै फरक मत प्रस्तुत ।

२. **प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समिति**

**सभापतिः** मा० श्री अमृता थापा मगर

**उपसमिति संख्याः** ४ वटा

- क) समितिको बैठकबाट समितिको कार्यक्षेत्र, कार्यविवरण, आचारसंहिता, प्रश्नावली तयार गर्न गठित उपसमिति,
- ख) प्राकृतिक स्रोत उपसमिति,
- ग) आर्थिक अधिकार तथा राजस्व बाँडफाँड उपसमिति,
- घ) प्रारम्भिक मस्यौदा तयारी उपसमिति ।

**सहभागी विशेषज्ञहरूको संख्याः** ७ जना

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/८/१२

**प्रतिवेदनको अवस्थाः** फरक मत सहितको प्रतिवेदन प्रस्तुत ।

३. **व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समिति**

**सभापतिः** मा० श्री रमेश रिजाल

उपसमिति गठनः २ वटा

- क) कार्यतालिका निर्माण उपसमिति,
- ख) प्रारम्भिक मस्यौदा निर्माण उपसमिति ।

**सहभागी विशेषज्ञहरूको संख्याः** ८ जना

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/४/१४

**प्रतिवेदनको अवस्थाः** फरक मत सहितको प्रतिवेदन प्रस्तुत ।

४. **न्यायप्रणाली सम्बन्धी समिति**

**सभापतिः** मा० श्री प्रभु शाह

**उपसमिति संख्याः** १ वटा उपसमिति ५ वटा कार्यदल

क) कार्यतालिका तयारी उप-समिति,

ख) प्रश्नावली मस्यौदा कार्यदल,

ग) समितिको कार्यविवरण (कार्यसूची) तयारी कार्यदल (क),

घ) समितिको कार्यविवरण (कार्यसूची) तयारी कार्यदल (ख),

ङ) राय-सुझाव व्यवस्थापन र प्रतिवेदन तयारी कार्यदल,

च) अवधारणा-पत्र र प्रारम्भिक मस्यौदा तयारी कार्यदल ।

**सहभागी विशेषज्ञहरूको संख्याः** २६ जना

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/५/१७

**प्रतिवेदनको अवस्थाः** फरक मत सहितको प्रतिवेदन प्रस्तुत ।

५. **राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समिति**

**सभापतिः** मा० श्री लोकेन्द्र विष्ट

**उपसमिति संख्याः** ३ वटा उपसमिति र ८ वटा कार्यदल

क) समितिको कार्यतालिका तथा कार्यविवरण निर्माण उपसमिति,

ख) जनताको राय सुझाव सङ्कलन गर्ने प्रयोजनका लागि प्रश्नावली तयार उपसमिति,

ग) समितिको कार्यक्षेत्रभित्र पर्ने अवधारणापत्रको बुदाँहरु तयार गरी प्रारम्भिक मस्यौदा तयार उपसमिति,

घ) परिच्छेद १ र ५ को अवधारणापत्रको मस्यौदा तयार कार्यदल,

ङ) परिच्छेद २ र ३ को अवधारणापत्रको मस्यौदा तयार कार्यदल,

च) परिच्छेद ६ र ७ को अवधारणापत्रको मस्यौदा तयार कार्यदल,

छ) परिच्छेद ८ र ९ को अवधारणापत्रको मस्यौदा तयार कार्यदल,

ज) परिच्छेद ४ को अवधारणापत्रको मस्यौदा तयार कार्यदल,

झ) कार्यदलले तयार गरेको अवधारणापत्रको मस्यौदामा रहनु पर्ने विषयहरूको छनौट, वर्गीकरण, सम्पादन, परिमार्जन गरी मस्यौदा सम्पादन कार्यदल,

ञ) समितिको कार्यक्षेत्रभित्र पर्ने विषयमा संविधानको प्रारम्भिक मस्यौदा कार्यदल,

ट) प्रदेशको संख्या, सिमाना र नामाकरण सम्बन्धमा अध्ययन कार्यदल ।

**सहभागी विशेषज्ञहरूको संख्याः** ७ जना

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/१०/१२

**प्रतिवेदनको अवस्थाः** फरक मत सहितको प्रतिवेदन प्रस्तुत ।

६. **मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समिति**

**सभापतिः** मा० श्री विन्दा पाण्डे

**उपसमिति संख्याः** ८ वटा

क) कार्यसूची तथा कार्यतालिका निर्माण उपसमिति,

ख) मौलिक अधिकार उपसमिति,

ग) निर्देशक सिद्धान्त र नीति उपसमिति,

घ) नागरिकता सम्बन्धी उपसमिति,

ङ) लैङ्गिक तथा यौनिक विषय उपसमिति,

च) सामाजिक न्याय, समावेशीकरण र विशेष संरक्षण उपसमिति,

छ) अवशिष्ट विषय तथा अन्तर समिति समन्वय उपसमिति,

झ) संविधानको अवधारणापत्र र मस्यौदा उपसमिति ।

**सहभागी विशेषज्ञहरूको संख्याः** ३७२ जना

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/७/२२

**प्रतिवेदनको अवस्थाः** फरक मत सहितको प्रतिवेदन प्रस्तुत ।

७. राज्यको शासकीय स्वरूप निर्धारण समिति

**सभापतिः** मा० श्री शम्भुहजरा दुसाध

**उपसमिति संख्याः** ४ वटा

क) शासनप्रणालीको प्रकृति र स्वरूप, विभिन्न तहमा कार्यकारिणी अङ्गको ढाँचा र अधिकारको बाँडफाँड एवं विभिन्न तहका सरकार बीचको अन्तरसम्बन्ध सम्बन्धी अवधारणापत्र तथा प्रारम्भिक मस्यौदा उपसमिति,

ख) निर्वाचनप्रणाली, सरकारी सेवाको गठन र सञ्चालनविधि तथा सुशासनका आधार र अन्य सम्बद्ध विविध प्रावधान सम्बन्धी अवधारणापत्र तथा प्रारम्भिक मस्यौदा उपसमिति,

ग) प्रश्नावली निर्माण उपसमिति,

घ) राय सुझाव सम्पादन उपसमिति ।

**सहभागी विशेषज्ञहरूको संख्याः** २१ जना

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/१०/७

**प्रतिवेदनको अवस्थाः** कुनै पनि प्रस्तावले बहुमत प्राप्त गर्न नसकेको प्रतिवेदन, फरक मत सहित प्रस्तुत ।

८. **सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समिति**

**सभापतिः** मा० श्री नवोदिता चौधरी

**उपसमिति संख्याः** २ वटा

क) भाषा सम्बन्धी उपसमिति,

ख) सांस्कृतिक र सामाजिक ऐक्यबद्धता सम्बन्धी उपसमिति ।

**सहभागी विशेषज्ञहरूको संख्याः** १८ जना

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/३/३

**प्रतिवेदनको अवस्थाः** फरक मत सहितको प्रतिवेदन प्रस्तुत ।

९. **अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समिति**

**सभापतिः** मा० श्री लालबाबु पण्डित

**उपसमिति संख्याः** ४ वटा उपसमिति र एउटा कार्यदल

क) कार्यविवरण र कार्यतालिका निर्माण उपसमिति,

ख) स्थलगत अध्ययन भ्रमण उपसमिति,

ग) अवधारणापत्र तयारी उपसमिति,

घ) मस्यौदा तयारी उपसमिति,

ङ) राय सुझाव अध्ययन विश्लेषण कार्यदल ।

**सहभागी विशेषज्ञहरूको संख्याः** १० जना

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/१/८

**प्रतिवेदनको अवस्थाः** सर्वसम्मत प्रतिवेदन प्रस्तुत ।

१०. **संवैधानिक निकायको संरचना निर्धारण समिति**

**सभापतिः** मा० श्री गोविन्द चौधरी

**उपसमिति संख्याः** ७ वटा उपसमिति एउटा कार्यदल

क) समितिको विस्तृत कार्यतालिका निर्माण उपसमिति,

ख) राष्ट्रिय मानव अधिकार आयोग उपसमिति,

ग) निर्वाचन आयोग उपसमिति,

घ) लोकसेवा आयोग उपसमिति,

ङ) अख्तियार दुरूपयोग अनुसन्धान आयोग उपसमिति,

च) महालेखापरीक्षक उपसमिति,

छ) अन्य आयोगहरु उपसमिति,

ज) अन्य आयोगहरूका विषयमा छलफल गरी निष्कर्षमा पुग्नको लागि सहयोग गर्न गठित अनौपचारिक कार्यदल ।

**सहभागी विशेषज्ञहरूको संख्याः** ५० जना

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/३/८

**प्रतिवेदनको अवस्थाः** फरक मत सहित प्रतिवेदन प्रस्तुत ।

११. **संवैधानिक समिति**

**सभापतिः** मा० श्री माधवकुमार नेपाल (२०६६/२/११ सम्म)
मा० श्री नीलाम्बर आचार्य (२०६६/०५/१२ देखि)

**उपसमिति संख्याः** ६ वटा

क) प्रस्तावना उपसमिति,

ख) संविधानको नाम उपसमिति,

ग) संविधान संशोधन उपसमिति,

घ) राजनीतिक दल र विविध उपसमिति,

ङ) सङ्कटकालीन व्यवस्था उपसमिति,

च) मस्यौदा उपसमिति ।

**सहभागी विशेषज्ञहरूको संख्याः** ३७ जना

**सदनसमक्ष प्रतिवेदन पेशः** २०६६/९/१९

**प्रतिवेदनको अवस्थाः** ९८ वटा विवादलाई समितिमा मतदानबाट टुङ्गो लगाइएको । बहुमतको प्रतिवेदन पेश गरिएको । धेरै फरकमत पेश भएका ।

१२. **नागरिक सम्बन्ध समिति**

**सभापतिः** मा० श्री मीना पाण्डे

**उपसमिति संख्याः** एउटा

क) मिडिया (सञ्चार) परिचालन सम्बन्धी उपसमिति ।

**सहभागी विशेषज्ञहरूको संख्याः** २१ जना

**महत्वपूर्ण अन्य विषय कुनै भएः** संविधानसभाको गतिविधि नामक बुलेटिन ३ अङ्क प्रकाशित ।

१३. **जनमत सङ्कलन तथा समन्वय समिति**

**सभापतिः** मा० श्री प्रमोदप्रसाद गुप्ता

**उपसमिति संख्याः** ७ वटा

क) कार्यतालिका निर्माण उपसमिति,

ख) गोष्ठी, अन्तक्रिया, कार्यशाला, सार्वजनिक सुनुवाइ व्यवस्थापन उपसमिति,

ग) प्रचार-प्रसार उपसमिति,

घ) प्रचार-प्रसार सामग्री परिमार्जन उपसमिति,

ङ) समन्वय तथा अनुगमन उपसमिति,

च) प्रचार-प्रसार सामग्री निर्माण उपसमिति,

छ) जिल्लास्थित सर्वदलीय/सर्वपक्षीय संयन्त्र निर्माण पूर्वाधार तयारी उपसमिति ।

**सहभागी विशेषज्ञहरूको संख्याः** २१

१४. **क्षमता अभिवृद्धि तथा स्रोत व्यवस्थापन समिति**

**सभापतिः** मा० श्री मृगेन्द्रकुमारसिंह यादव (२०६६/०३/०९ सम्म)

**उपसमिति संख्याः** ५ वटा

क) कार्यक्रम व्यवस्थापन उपसमिति,

ख) कार्यक्रम तर्जुमा तथा स्रोत एंव पाठ्य सामग्री पहिचान उपसमिति,

ग) कार्यतालिका निर्माण उपसमिति,

घ) अध्ययन अनुसन्धान उपसमिति,

ङ) स्रोत व्यवस्थापन उपसमिति ।

## ३.४. समितिहरुको बैठक संख्या, खास कार्यमा व्यतीत भएको समय सम्बन्धी विवरण

| समितिको नाम | बैठक संख्या | व्यतीत समय |
|---|---|---|
| संवैधानिक समिति (अवधारणापत्र र प्रारम्भिक मस्यौदा निर्माणको पहिलो चरण) | ७९ | २०५ घण्टा |
| संवैधानिक निकायको संरचना निर्धारण समिति | ५४ | १९१ घण्टा |
| अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समिति | २३ | १९२ घण्टा |
| मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समिति | ४८ | ४७८ घण्टा ३० मिनेट |
| राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समिति | १२७ | ३७३ घण्टा ५० मिनेट |
| राज्यको शासकीय स्वरुप निर्धारण समिति | ७७ | १८३ घण्टा ५५ मिनेट |
| न्यायप्रणाली सम्बन्धी समिति | ५० | २५३ घण्टा ४५ मिनेट |
| व्यवस्थापिकीय अङ्गको स्वरुप निर्धारण समिति | ५० | २०९ घण्टा ४५ मिनेट |
| प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समिति | ६५ | २०२ घण्टा ३० मिनेट |
| राष्ट्रिय हितको संरक्षण समिति | ६२ | ३३७ घण्टा |
| सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समिति | ४८ | १३८ घण्टा ३८ मिनेट |

# भाग ४

# विषयगत समितिहरूका प्रतिवेदनहरूमा विद्यमान आधारभूत विशेषताहरू

## ४.१. राष्ट्रिय हितको संरक्षण समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा नेपालको राष्ट्रिय हितको पहिचान र परिभाषा, सार्वभौमसत्ता, अखण्डता र राष्ट्रिय एकताको संवैधानिक संरक्षणका उपायहरु, नेपालको अन्तर्राष्ट्रिय सिमाना व्यवस्थापन, राष्ट्रिय प्राकृतिक संपदाको संरक्षण, अन्तर्राष्ट्रिय सम्बन्ध, अन्तर्राष्ट्रिय सन्धि-सम्झौता, राष्ट्रिय सुरक्षा, नेपाली सेनाको कर्तव्य र यसको सञ्चालन लगायतका विषयहरु समावेश गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५।९।१ देखि २०६६।०२।०८ को बीचमा ७० वटा बैठक सम्पन्न गरी समितिले १५४ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र २१ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार गरिएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण अनुसूचीमा राखिएको छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । समितिको प्रतिवेदन सर्वसम्मत निर्णयको आधारमा तयार गरिएको भनिए पनि उक्त प्रतिवेदन संविधानसभाका अध्यक्षसमक्ष पेश भएपछि केही सदस्यहरूले फरक मत पेश गर्नु भएको थियो । उक्त प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- सार्वभौमसत्ता, राष्ट्रिय स्वतन्त्रता, लोकतान्त्रिक व्यवस्था, समानुपातिक र समावेशी सहभागिता, विकास र समानतालाई समेत राष्ट्रिय हितका आधारभूत अन्तर्वस्तुको रूपमा स्वीकार गरिएको,
- स्वास्थ्य, शिक्षा, आवास, वातावरण, व्यापार र समानता लगायतका विषयको समग्रतामा राष्ट्रिय सुरक्षा र राष्ट्रिय हितको आधुनिक खाका तयार पारिएको,
- राष्ट्रिय हित विपरीतको आचरण गर्ने कूटनीतिक व्यक्तिहरूलाई समेत कारवाही हुने व्यवस्था गरिएको,
- आवश्यक पर्दा १८ वर्ष उमेर पूरा भएका नागरिकलाई राज्यले सैनिक तालिमको लागि आव्हान गर्न सक्ने व्यवस्था प्रस्तावित गरिएको,
- प्रधानसेनापतिको नियुक्ति र पदमुक्ति मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रप्रमुखबाट हुने व्यवस्था रहेको । नेपाली राष्ट्रिय सेनाको सञ्चालन, व्यवस्थापन र नियन्त्रणको सिफारिश गर्न राष्ट्रिय सुरक्षा परिषद्को व्यवस्था गरिएको,

- नेपाली सेनाको साथै नेपाल प्रहरी, अर्ध सैनिक बल र राष्ट्रिय अनुसन्धान विभाग सम्बन्धी आधारभूत विषय संविधानमा नै राख्ने, लोकतान्त्रिक विधिबाट निर्वाचित सरकारप्रति जवाफदेही हुने र त्यस्ता निकायको व्यावसायिक विकास गर्ने महत्वपूर्ण विषय संविधानमा राख्ने सिफारिश गरिएको,
- सन्धि-सम्झौता गर्ने अधिकार केन्द्रको हुने । प्रदेशको सरोकार भएका विषयमा सन्धि-सम्झौता गर्दा केन्द्रले प्रदेशको सहमति लिनु पर्ने, प्रदेशले पनि विदेशी राज्यसँग व्यापारिक र करारजन्य सम्झौता गर्न सक्ने,
- नेपालको सिमाना व्यवस्थापन, राष्ट्रप्रतिको नागरिकको दायित्व, राष्ट्रिय आवश्यकता र जनचाहना बमोजिमका सन्धि-सम्झौताको निर्माण लगायतका विषयमा सुझाव दिएको ।

## ४.२. अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा अल्पसंख्यक तथा सीमान्तकृत समुदायको परिभाषा, पछाडि पारिएका वा एक्लिएका वा वहिष्करणमा परेका जातजाति लगायतका वर्ग र समुदायको पहिचान, अल्पसंख्यक तथा सीमान्तकृत समुदायको संरक्षण व्यवस्था, राज्य व्यवस्थामा समावेशीकरणका उपायहरु लगायतका विषयहरु समावेश गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५।९।१ देखि २०६६।०२।०७ को बीचमा २३ वटा बैठक सम्पन्न गरी समितिले ७८ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र १३ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार भएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण प्रतिवेदनको अनुसूचीमा राखिएको छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । समितिको सर्वसम्मत निर्णयको आधारमा तयार गरिएको उक्त प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- विभेदमा र उत्पीडनमा पारिएका, कम जनसंख्या भएका जातीय, धार्मिक र भाषिक समुदायलाई अल्पसंख्यकको रूपमा परिभाषित गरिएको,
- आर्थिक, सामाजिक, शैक्षिक, राजनीतिक, जातीय, धार्मिक, भाषिक, लैङ्गिक वा यौनिक रूपमा पछाडि पारिएका समुदायलाई सीमान्तकृत समुदायको रूपमा परिभाषित गरिएको,
- जातीय विभेद र छुवाछूतमा पारिएको, आर्थिक, सामाजिक, धार्मिक, सांस्कृतिक, भाषिक, लैङ्गिक वा यौनिक वा क्षेत्रीय विभेद वा शारीरिक वा मानसिक अशक्तता वा अपाङ्गता भएका समुदायलाई वहिष्करणमा पारिएको समुदायको रूपमा परिभाषित गरिएको,
- अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएको समुदायलाई सम्मानपूर्वक बाँच्न पाउने, धर्म, संस्कृति र भाषाको संरक्षण र उपयोग गर्न पाउने, मौलिक पहिचानको संरक्षण गर्न पाउने, आफ्नो मौलिक कला, ज्ञान सीप र दक्षतालाई आफ्नो समुदायको हितमा उपयोग गर्न पाउने, राज्यको हरेक तहमा समानुपातिक सहभागिताको हक हुने व्यवस्था गरिएको,
- विगतको विभेद र उत्पीडन बापत समानुपातिकता माथि थप अधिकारको विशेष व्यवस्था गर्नुपर्ने सुनिश्चितता,
- अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएको समुदायको पहिचान र अधिकारको संरक्षणको लागि गर्नुपर्ने उपायको सिफारिश गर्न उच्चस्तरीय आयोगको व्यवस्था गरिएको,

- आर्थिक स्रोत साधनको न्यायोचित वितरण गरी अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएका समुदायलाई आत्मनिर्भर बनाउने राज्यको निर्देशक सिद्धान्त हुनुपर्ने प्रस्ताव गरिएको,
- अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएका समुदायका नागरिक बीच एकता र भातृत्वको आधारमा आपसी सौहार्दता र सामाञ्जस्यपूर्ण सम्बन्ध स्थापना गर्ने राज्यको सामाजिक उद्देश्य हुनुपर्ने व्यवस्था,
- अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएका समुदायका व्यक्तिलाई शिक्षा, स्वास्थ्य, यातायात, आवास, खाद्यान्न र रोजगारीको व्यवस्था गर्ने नीति राज्यले अवलम्बन गर्ने व्यवस्था ।

## ४.३. सांस्कृतिक तथा सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा विभिन्न तहका सङ्घीय एकाइहरूमा सरकारी कामकाजको भाषा, अन्य राष्ट्रभाषा र संस्कृतिको संरक्षण, भाषा सम्बन्धी अन्य विषय, सामाजिक ऐक्यबद्धताको आधार निर्धारण लगायतका विषयहरु समावेश गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५।९।१ देखि २०६७।०३।२१ को बीचमा ५२ वटा बैठक सम्पन्न गरी समितिले १०७ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र १७ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार भएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण अनुसूचीमा राखिएको छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । समितिको बहुमत निर्णयको आधारमा तयार गरिएको उक्त प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- सामाजिक र सांस्कृतिक ऐक्यबद्धताको सम्बन्धमा संविधानको प्रस्तावनामा नै उल्लेख गर्नुपर्ने समितिले सुझाव दिएको,
- मातृभाषामा शिक्षा सम्बन्धी हक, संस्कृति तथा भाषा सम्बन्धी हक, आदिवासी/जनजातिको हक, छुवाछूत तथा जातीय भेदभाव विरूद्धको हक, सामाजिक न्यायको हक, सामाजिक सुरक्षाको हक गरी सामाजिक सांस्कृतिक सम्बन्धमा टेवा दिने ६ वटा मौलिक हकको व्यवस्था गर्ने सुझाव दिएको,
- राज्यको दायित्व, निर्देशक सिद्धान्त तथा नीतिहरूमा समितिसँग सम्बन्धित विषयमा राखिनु पर्ने व्यवस्थाको किटानी सहितको सान्दर्भिक र समसामयिक सुझाव दिइएको छ । छुवाछूत, जातीय विभेद र सबै किसिमका भेदभावको अन्त्य गर्ने कुरा राज्यको निर्देशक सिद्धान्त हुनुपर्ने प्रस्ताव रहेको,
- महिला र दलितको अधिकारको विशेष संरक्षण, र मूलप्रवाहीकरणमा विशेष पहल गर्न अलग संवैधानिक आयोगहरु हुनुपर्ने प्रस्ताव गरिएको,
- केन्द्रीय सरकारको सरकारी कामकाजको भाषा हाललाई एक भाषा (देवनागरि लिपिको नेपाली भाषा) हुने भने पनि भविष्यमा भाषा आयोगको सिफारिशमा केन्द्रीय विधायिकाले पारित गरेमा अन्य भाषा पनि सरकारी कामकाजको भाषा हुन सक्ने प्रावधान रहेको,
- भाषा निर्धारणका आधारहरु, औचित्य र कारण, मातृभाषाको परिचय, तिनको विद्यमान अवस्था, चुनौतीहरु तथा सुझावहरु प्रतिवेदनमा समेट्नुका साथै लोपोन्मुख भाषाहरूको संरक्षण र विकासको सम्बन्धमा समेत प्रतिवेदनमा चर्चा गरिएको,

- केन्द्रीय सरकारको सरकारी कामकाजको भाषा बहुभाषिक हुन सक्ने प्रावधानको साथै प्रदेश/प्रान्त/राज्यको सरकारी कामकाजको भाषा बहुभाषिक हुने प्रस्ताव गरिएको,
- प्रतिवेदनमा देवनागरि लिपिका खस भाषा र हिन्दी भाषा केन्द्रीय सरकारको सरकारी कामकाजको भाषाको मान्यता पाउनु पर्ने फरक मतलाई प्रतिवेदनमा उल्लेख गरी सबै सदस्यको मतको सम्मान समितिले गरेको ।

## ४.४. व्यवस्थापिकीय अङ्गको स्वरुप निर्धारण समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा विभिन्न सङ्घीय एकाइमा विधायिकाको स्वरूप र गठन विधि, विभिन्न तहका सङ्घीय एकाइका विधायिकाहरु बीचको अन्तरसम्बन्ध, व्यवस्थापन कार्यविधि, आर्थिक व्यवस्थापन विधि लगायतका विषयहरु समावेश गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५।९।१ देखि २०६६।०४।१६ को बीचमा ५२ वटा बैठक सम्पन्न गरी समितिले ७८ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र ८ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार भएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण अनुसूचीमा राखिएको छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । समितिको बहुमत निर्णयको आधारमा तयार गरिएको उक्त प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- व्यवस्थापिकाको स्वरूप मूलतः संसदीय प्रणालीमा आधारित भएर प्रतिवेदन तयार पारिएको,
- सङ्घीय व्यवस्थापिका र प्रादेशिक व्यवस्थापिकाको ढाँचा, व्यवस्थापन कार्यविधि, आर्थिक कार्यप्रणालीको सम्बन्धमा स्पष्ट व्यवस्था गरिएको,
- केन्द्रमा दुई सदनात्मक र प्रदेशमा एक सदनात्मक व्यवस्थापिकाको प्रावधान तथा सङ्घीय प्रतिनिधिसभामा सदस्य संख्या १५१, सङ्घीय राष्ट्रियसभामा सदस्य संख्या ५१ र प्रदेशसभामा सदस्य संख्या बढीमा ३५ जना हुने व्यवस्था गरिएको,
- मुख्यरूपमा प्रतिवेदनले व्यवस्थापन विधि र आर्थिक कार्यप्रणालीको सम्बन्धमा नेपाल अधिराज्यको संविधान २०४७ मा गरिएको प्रावधानहरूको निरन्तरता दिएको देखिएको,
- प्रतिवेदनले फरक मतलाई पूर्ण रूपमा समेटेर समितिमा रहेका अल्पमतलाई यथोचित सम्मान गरेको,
- नेपालको अन्तरिम संविधान, २०६३ ले अङ्गीकार गरेको मिश्रित निर्वाचनप्रणालीबाट प्रभावित भई सोही निर्वाचनप्रणालीलाई स्वीकार गरिएको,
- सङ्घीय र प्रादेशिक तह गरी दुई तहको व्यवस्थापिकाको प्रावधान गरिएकोबाट दुई तहको सङ्घीय सरकारको अवधारणालाई स्वीकार गरेको,
- प्रतिवेदनले वैकल्पिक सरकार गठन हुने संभावना नरहेमा मात्र निर्वाचित प्रतिनिधिसभा र प्रदेशसभा विघटन हुन सक्ने प्रावधान राखिएको ।

## ४.५. संवैधानिक निकायको संरचना निर्धारण समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा शासन सञ्चालनमा आवश्यक पर्ने संवैधानिक अङ्गको पहिचान र तिनको स्वरूप निर्धारण, संवैधानिक अङ्गहरूको गठन, काम, कर्तव्य तथा अधिकार, संवैधानिक अङ्गहरूको विभिन्न तहका सरकारहरूसँगको सम्बन्ध लगायतका विषयहरु समावेश गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५।९।१ देखि २०६६।०४।०६ को बीचमा ५५ वटा बैठक सम्पन्न गरी समितिले १२८ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र १८ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार भएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण अनुसूचीमा राखिएको छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । समितिको बहुमत निर्णयको आधारमा तयार गरिएको उक्त प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- वर्तमान नेपालको अन्तरिम संविधान, २०६३ मा भएको अख्तियार दुरूपयोग अनुसन्धान आयोग, लोकसेवा आयोग, निर्वाचन आयोग, मानव अधिकार आयोगलाई निरन्तरता दिइको छ भने महालेखापरीक्षकलाई तीन सदस्यीय लेखापरीक्षण आयोगको रूपमा रूपान्तरण गर्ने प्रस्ताव गरिएको,
- हाल कानूनी निकायका रूपमा रहेका महिला आयोग, दलित आयोग, आदिवासी/जनजाति प्रतिष्ठानलाई प्रतिवेदनमा संवैधानिक निकायको रूपमा स्थान दिइएको,
- अपाङ्गता भएका व्यक्ति, अल्पसंख्यक एवं सीमान्तकृत समुदाय तथा पिछडिएको वर्ग र क्षेत्रको हित संरक्षण आयोग, मधेसी आयोग र मुस्लिम आयोग नयाँ प्रकृतिका आयोगहरु संवैधानिक निकायको रूपमा समेटिएको,
- संवैधानिक आयोगहरूलाई संसदमार्फत् जनताप्रति उत्तरदायी बनाउने व्यवस्था गरिएको,
- संवैधानिक आयोगका अध्यक्ष र सदस्यहरूको नियुक्ति कार्यकारी प्रमुखबाट हुने भए संसदीय सुनुवाइ हुने र संवैधानिक परिषद्बाट हुने भए संसदीय सुनुवाइको व्यवस्था नहुने प्रावधान राखिएको,
- संवैधानिक निकायका अध्यक्ष एवं सदस्यहरूलाई सर्वोच्च अदालतको न्यायाधीश सरह पदमुक्त गर्न सकिने प्रावधान राखिएको,
- संवैधानिक निकायको अध्यक्ष तथा सदस्यको नियुक्ति समानुपातिक समावेशी सिद्धान्तको आधारमा गरिनुपर्ने व्यवस्था गरिएको,
- संवैधानिक निकायको अध्यक्ष/सदस्य भइसकेको व्यक्ति अन्य सरकारी सेवाको नियुक्तिको लागि ग्राह्य नहुने प्रावधान गरिएको,
- प्रतिवेदनले फरक मत पनि समेटेको छ । सदस्यको वैयक्तिक विचार र अल्पमतको सम्मान भएको,
- अन्य मुलुकको संविधानमा रहेको संवैधानिक निकाय सम्बन्धी व्यवस्थाको तुलनात्मक अध्ययन गरेर त्यसको संक्षिप्त विवरण प्रतिवेदनमा समेटिएको,
- संविधानवाद र सीमित सरकारको अवधारणा अनुरूप लोकतान्त्रिक व्यवस्थामा स्वतन्त्र संवैधानिक निकायहरूको औचित्यको बृहत् चर्चा प्रतिवेदनमा गरिएको,

- वहिष्करणमा पारिएका वर्ग, समुदायको पहिचान गर्ने समितिबाट उल्लेखनीय प्रयास भएको, त्यसका आधारमा छुट्टाछुट्टै आयोगहरूको प्रस्ताव गरिएको ।
- राज्य, शासन, संविधान, संविधानवाद तथा शक्तिपृथकीकरण र शक्तिसन्तुलन आदि सिद्धान्तको सम्बन्धमा सैद्धान्तिक, व्यावहारिक र अन्तर्राष्ट्रिय अभ्यासको अध्ययनको आधारमा प्रतिवेदन तयार भएको,

## ४.६. न्यायप्रणाली सम्बन्धी समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा न्यायिक संरचनाको ढाँचा, न्यायालयको तह, स्वरूप र अधिकारक्षेत्र, न्यायाधीशहरूको नियुक्ति, बर्खासी, सेवाका अन्य शर्त, काम, कर्तव्य तथा अधिकार र अन्य कुराहरु, महान्यायाधिवक्ताको संवैधानिक स्थिति, काम, कर्तव्य र अधिकार लगायतका विषयहरु समावेश गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५।९।१ देखि २०६६।०८।१२ को बीचमा ५० वटा बैठक सम्पन्न गरी समितिले १२६ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र १३ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार भएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण अनुसूचीमा राखिएको छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । समितिको बहुमत निर्णयको आधारमा तयार गरिएको उक्त प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- सङ्घीय प्रणालीअनुरूपको उपयुक्त न्यायपालिकाको संरचना तयार होस् भन्ने मनसाय समितिले राखेको र दक्षिण एसियाको क्षेत्रीय र हाम्रो आन्तरिक परिवेशलाई मध्यनजर गरेर एकल श्रृङ्खलायुक्त ३ तहको एकीकृत न्यायपालिकाको व्यवस्था गर्ने प्रस्ताव गरिएको,
- न्यायिक स्वतन्त्रताको साथमा न्यायिक उत्तरदायित्व र न्यायिक निष्पक्षताको आवश्यकताको बारेमा विवेचना गरिएको,
- न्यायमा सहज पहुँच पुर्‍याउन र सानातिना मुद्दा हेर्नको लागि स्थानीय अदालतभन्दा तल प्रादेशिक कानूनमा व्यवस्था गरी आवश्यकता अनुसार लोक अदालत, जन अदालत वा मेलमिलाप केन्द्र वा गाउँ वा नगरस्तरीय स्थानीय अदालतको व्यवस्था गर्न सकिने संवैधानिक मान्यतालाई आत्मसात् गरिएको,
- सर्वोच्च अदालतको मातहतमा रहने उच्च अदालतहरूलाई सबै प्रकारका रिटहरु हेर्ने क्षेत्राधिकार दिएको,
- सबै तहका अदालतका न्यायाधीशको नियुक्ति गर्दा समानुपातिक समावेशी सिद्धान्तको आधारमा गर्नुपर्ने मान्यतालाई स्वीकार गरिएको,
- सरकारको मुख्य कानूनी सल्लाहकारको रूपमा रहने महान्यायाधिवक्ताको सङ्घीय पद्धतिमा हुन सक्ने कार्यबोझ र कार्य विस्तारलाई मध्यनजर गरी अभियोजनको कार्यमा महान्यायाधिवक्ताको सामान्य नियन्त्रण र निर्देशनमा केन्द्रित भई काम गर्ने महाअभियोजन कर्ताको नवीन व्यवस्था प्रस्ताव गरिएको,
- प्रादेशिक र स्थानीयतहका अदालत सम्बन्धी व्यवस्था गर्ने कानून प्रादेशिक संसदबाट बन्न सक्ने र महान्यायाधिवक्ता र महाअभियोजनकर्ताको व्यवस्था प्रत्येक प्रादेशिक तहमा पनि रहने व्यवस्था गरिएको,

- स्वतन्त्र न्यायपालिकाको सैद्धान्तिक आधार तथा अन्तर्राष्ट्रिय मापदण्डको राम्रो विश्लेषण र विवेचना अवधारणापत्रमा समेटिएको,
- अन्य मुलुकको संविधानमा रहेको न्यायपालिका र महान्यायाधिवक्ता सम्बन्धी व्यवस्थाको तुलनात्मक अध्ययन गरेर त्यसको संक्षिप्त विवरण प्रतिवेदनमा समेटिएको ।

## ४.७. मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा मौलिक अधिकारको पहिचान, मौलिक अधिकारमा बन्देजका आधारहरु, मौलिक अधिकारको कार्यान्वयन सम्बन्धी व्यवस्था, राज्यका निर्देशक सिद्धान्त तथा नीतिहरु, महिला, बालबालिका, युवा, मजदुर, किसान, मधेसी, आदिवासी/जनजाति, दलित, पिछडिएको क्षेत्र, अपाङ्ग, मुस्लिम लगायत सबै अल्पसंख्यक समुदायको हक हितको विशेष संरक्षण सम्बन्धी व्यवस्था, नागरिकता सम्बन्धी व्यवस्था लगायतका विषयहरु समावेश गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५।९।१ देखि २०६६।०७।१८ को बीचमा ४८ वटा बैठक सम्पन्न गरी समितिले ४१५ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र १४ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार भएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण अनुसूचीमा राखिएको छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । मूल व्यवस्थाको साथमा सबैको फरक दृष्टिकोणलाई पनि प्रतिवेदनमा समायोजन गरी प्रतिवेदन दिने अन्य समितिको भन्दा फरक निर्णय पद्धतिको आधारमा तयार गरिएको उक्त प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- नेपाली नागरिकता, नागरिकका मौलिक हक, मौलिक कर्तव्य तथा राज्य नीतिका निर्देशक सिद्धान्तहरु जस्ता संविधानका अति महत्वपूर्ण अन्तर्वस्तुहरूमा बृहत् अध्ययन गरी प्रतिवेदन प्रस्तुत गरिएको,
- सङ्घीय सरकारले प्रदान गर्ने गरी प्रादेशिक पहिचान सहितको एकल सङ्घीय नागरिकताको व्यवस्था गरिएको,
- अङ्गीकृत नागरिकता प्रदानमा लैङ्गिक विभेद नहोस् भनी नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएका विदेशीले चाहेमा नेपालमा कानूनी रूपमा १५ वर्ष बसोबास गरेको र विदेशी नागरिकता त्यागेको अवस्थामा महिला पुरूष दुबैलाई समान रूपमा अङ्गीकृत नागरिकता प्रदान गरिने व्यवस्था गरिएको,
- नेपाली नागरिक आमाबाट नेपालमा जन्म भई नेपालमा नै बसोबास गरेको र बाबुको पहिचान नभएको व्यक्तिले प्रचलित कानूनबमोजिम अङ्गीकृत नागरिकता प्राप्त गर्न सक्ने प्रावधान गरिएको,
- प्रत्येक नागरिकलाई निजको आमा वा बाबुको वंशको आधारमा लैङ्गिक पहिचान सहितको नागरिकताको प्रमाणपत्र दिने व्यवस्थाले पहिलो पटक आमालाई पनि वंशको आधार मानिएको र तेस्रो लिङ्गीको अधिकारलाई पनि मान्यता प्रदान गरिएको,
- गैरआवासीय नेपालीहरूलाई नेपालमा सामाजिक, आर्थिक र सांस्कृतिक सम्बन्ध जोड्न सकुन् भन्ने उद्देश्यले मताधिकारको प्रयोग र सार्वजनिक पदमा बहाल रहन नपाउने, अन्य कानूनबमोजिमका अधिकार प्रयोग गर्न पाउने गरी परिचयपत्र दिन सकिने व्यवस्था गरिएको,

- राष्ट्रप्रमुख, उपप्रमुख, सङ्घीय र राज्यस्तरको व्यवस्थापिका, कार्यपालिका र न्यायपालिका प्रमुख, संवैधानिक अङ्ग वा सुरक्षानिकायको प्रमुख पदमा नियुक्त वा निर्वाचित हुन वंशजको आधारमा नागरिकता प्राप्त गरेको हुनुपर्ने प्रावधान रहेको,
- आर्थिक, सामाजिक र सांस्कृतिक अधिकारसँग सम्बन्धित विषयहरु मौलिक हकको रूपमा थप भई मौलिक हकको संख्या ३१ पुगेको,
- अपराध पीडितको हक, आवास सम्बन्धी हक, परिवार सम्बन्धी हक, उपभोक्ता सम्बन्धी हक, दलित समुदायको हक, खाद्य सम्प्रभूता, मौलिक हकको कार्यान्वयनको हकजस्ता विषयहरु पहिलो पटक मौलिकहकका रूपमा प्रत्याभूत गरिएको,
- मौलिक हकको प्रचलनका लागि निर्माण गर्नुपर्ने कानून संविधान जारी भएको २ वर्षभित्र निर्माण गरिसक्नु पर्ने व्यवस्था भएको,
- मौलिक हकको साथमा नागरिकले निर्वाह गर्नुपर्ने मौलिक कर्तव्यको पनि व्यवस्था भएको छ । खासगरी नेपालको राष्ट्रियता, सार्वभौमसत्ता र अखण्डताको रक्षा गर्ने, संविधान र कानूनको पालना गर्ने, सार्वजनिक र राष्ट्रिय सम्पत्तिको संरक्षण गर्ने विषयलाई नागरिकको मौलिक कर्तव्यको रूपमा सूचीकृत गरिएको,
- राज्य सञ्चालनकालागि मार्गनिर्देश गर्ने ४ वटा सिद्धान्त र १३ वटा नीति तय गरिएको,
- राज्यका नीति निर्देशक सिद्धान्तको कार्यान्वयन गर्न चालिएका कदम र प्राप्त उपलब्धि सहितको प्रतिवेदन प्रत्येक वर्ष राष्ट्रप्रमुखले सङ्घीय व्यवस्थापिकामा पेश गर्न लगाउने व्यवस्था रहेको । यी नीति तथा सिद्धान्तको कार्यान्वयनपक्षको अनुगमन गर्न सङ्घीय व्यवस्थापिकामा एक समिति रहने व्यवस्था गरिएको,
- प्रत्येक मौलिक हकको विधिशास्त्रीय आधार, अन्तर्राष्ट्रिय कानूनको व्यवस्था र अन्य मुलुकको संविधानमा रहेको अवस्था बारेको बृहत् विश्लेषण प्रतिवेदनमा समेटिएको ।

## ४.८. प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा आर्थिक स्रोतको विषयवस्तु विभाजन, आयस्रोतको बाँडफाँड गर्ने सम्बन्धी मापदण्ड, विभिन्न तहका सरकार बीचको आर्थिक सम्बन्ध लगायतका विषयहरु समावेश गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५।९।१ देखि २०६६।०८।१२ को बीचमा ६६ वटा बैठक सम्पन्न गरी समितिले ११५ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र ५१ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार भएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण अनुसूचीमा राखिएको छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । समितिको बहुमत निर्णयको आधारमा तयार गरिएको उक्त प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- समितिको प्रतिवेदनमा प्राकृतिक स्रोत सम्बन्धी विश्वमा प्रचलित सिद्धान्तहरु, आर्थिक अधिकार एवं राजस्वको बाँडफाँड सम्बन्धी प्रचलित मान्यताहरु, प्राकृतिक स्रोत सम्बन्धी अन्तर्राष्ट्रिय सन्धिहरू, नेपालको प्रतिबद्धता र विश्वका केही सङ्घीय मुलुकहरूको व्यवस्थाहरूलाई समेटिएको,

- आर्थिक अधिकार सम्बन्धी मौलिक हकहरु, आर्थिक कार्यप्रणाली र बजेट निर्माणका सिद्धान्त प्रतिवेदनमा विस्तृत रुपमा उल्लेख भएका छन् । तीन तहका सरकारले आ-आफ्नो बजेट निर्माण गर्ने व्यवस्था रहेको,
- जैविक विविधताको संरक्षण, प्राकृतिक स्रोतको दिगो उपयोग, आर्थिक समृद्धिलाई प्रस्तावनामा नै समेटनु पर्ने समितिको सुझाव रहेको,
- प्राकृतिक स्रोतहरूको बाँडफाँड, राजस्वका स्रोतहरूको पहिचान र बाँडफाँड, सङ्घीय मुलुकको उपयुक्त अभ्यास र अनुभव, विधायिकी उत्तरदायित्व, सङ्घीय, प्रान्तीय र स्थानीय सरकार बीच जिम्मेवारीको बाँडफाँड, सार्वजनिक सेवा प्रदायकहरूको जिम्मेवारी बाँडफाँडको स्पष्ट खाका बनाई अनुसूची १ र २ मा प्रस्तुत गरिएको,
- सहवर्ति अधिकारको विषयमा सङ्घीय सरकारले Framework Legislation बनाई प्रान्त र स्थानीयतहको अधिकार निर्धारण गर्न सक्ने व्यवस्था गरिएको,
- सङ्घीय सरकारले प्रान्तीय र स्थानीय सरकारको खर्चको आवश्यकता, आर्थिक क्षमता र प्रयासको आधारमा समानीकरण अनुदान दिने व्यवस्था गरिएको,
- प्राकृतिक स्रोतको बाँडफाँड र सोसँग सम्बन्धित वातावरणको विषयमा उठ्न सक्ने सम्भावित विवादहरु पहिल्याई, अनुसन्धानसमेत गरी सरकारलाई सिफारिश गर्न विशेषज्ञहरु रहेको तीन सदस्यीय राष्ट्रिय प्राकृतिक स्रोत आयोगको व्यवस्था गरिएको,
- राष्ट्रिय सर्वसञ्चित कोषबाट सङ्घीय, प्रादेशिक र स्थानीय सरकारहरूलाई राजस्वको बाँडफाँड गर्ने आधार, समानीकरण अनुदानको मापदण्ड निर्धारणमा सिफारिश गर्न विशेषज्ञहरु रहेको तीन सदस्यीय राष्ट्रिय वित्तीय आयोगको व्यवस्था गरिएको,
- अनुसूची २७ मा प्राकृतिक स्रोत, आर्थिक अधिकार र राजस्वको बाँडफाँडसँग सम्बन्धित अन्तरिम संविधानका व्यवस्थाहरु पनि राखिएकोले सङ्घीय तहको आर्थिक कार्यप्रणाली तय गर्न मार्गदर्शन गरेको,
- विभिन्न अनुसूचीहरूमा नेपालको वनक्षेत्रको यथार्थ अवस्था, विकासक्षेत्र अनुसार वनक्षेत्रको विवरण, वनक्षेत्रबाट हुने कूल आम्दानी, समुदायमा आधारित वनक्षेत्रको स्थिति, निकासीयोग्य जडीबुटी, वन्यजन्तु, भूमि सम्बन्धी तथ्याङ्क उपयोगी र सान्दर्भिक रहेका,
- प्रतिवेदनको अनुसूची ४२ मा स्थानीय निकाय र विभिन्न सरकार बीचको जिम्मेवारी बाँडफाँड, स्थानीय निकायका राजस्वका आधारहरु एवं सरकारले स्थानीय निकायहरूलाई प्रदान गरी आएको अनुदानको विवरणसमेत प्रस्तुत गरिएकोले नेपाल सङ्घीयतामा प्रवेश गर्न लागेको सन्दर्भमा संविधान निर्माण गर्दा आर्थिक स्रोतहरूको बाँडफाँड गर्न सहज हुने देखिएको ।

## ४.९. संवैधानिक समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा विषयगत समितिहरूले आफ्नो कार्यक्षेत्रभित्रका विषयको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन संविधानसभामा पेश गरिसकेपछि त्यस्ता समितिहरूबाट प्राप्त प्रतिवेदन सभामा छलफल भई सभाले दिएको सुझाव र निर्देशन समेतका आधारमा संविधानको मस्यौदा तयार पारी संविधानसभामा पेश गर्नु समितिको प्रमुख कर्तव्य र संविधानको प्रस्तावना र कुनै पनि विषयगत समितिहरूको कार्यक्षेत्रभित्र नपरेका तर संविधानमा समावेश गर्नुपर्ने विषयको पहिचान गरी त्यसको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा तयार पारी संविधानसभामा पेश गर्ने लगायतका विषयहरु

समावेश गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५ ।९ ।१ देखि २०६६।०९।१९ को बीचमा जम्मा ७९ वटा बैठक सम्पन्न गरी समितिले १२२ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र ९ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार भएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण अनुसूचीमा राखिएको छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । समितिको बहुमत निर्णयको आधारमा तयार गरिएको उक्त प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- प्रस्तावनाको मस्यौदामा जनताको बलिदान र विगतमा भएका अन्यायलाई स्मरण गर्ने नवीनता आत्मसात् गरिएको,
- संविधानको स्रोत, संविधान निर्माण गर्नुको उद्देश्य र राज्यको राजनीतिक विशेषता प्रस्तावनाबाट नै स्पष्ट होस् भन्ने दृष्टिकोण लिइएको,
- संविधान संशोधन प्रक्रियामा सङ्घ र प्रदेशको समेत भूमिकालाई स्वीकार गरिएको,
- राजनीतिक दलको नियमित दर्ता र निर्वाचन प्रयोजनको लागि गरिने दर्तालाई संविधानले नै अलग–अलग मान्यता दिनु पर्ने नयाँ अवधारणा ल्याइएको,
- निर्वाचन प्रयोजनको लागि गरिने राजनीतिक दल दर्ताको सन्दर्भमा वार्षिक लेखापरीक्षण प्रतिवेदन पनि आवश्यक पर्ने भएकोले दललाई जनता र राष्ट्रप्रति जवाफदेही बनाउन कोशिश भएको,
- प्राकृतिक विपत्ति वा महामारीको कारणले पनि देशमा सङ्कट सृजना हुन सक्ने र सोको निवारण गर्न सङ्कटकालीन अवस्थाको घोषणा गर्न सकिने नयाँ व्यवस्था गरिएको,
- राष्ट्रप्रमुखबाट कुनै अदालतबाट भएको सजायलाई माफी मुल्तवी दिने आधार कानून निर्माण गरेर स्पष्ट र वस्तुनिष्ठ बनाउनु पर्ने व्यवस्था प्रतिवेदनमा रहेको,
- संविधानमा बाधा अड्काउ फुकाउने अधिकार सङ्क्रमणकालको लागि मात्र राख्ने प्रस्ताव गरिएको छ । यसले विगतमा भएका यस सम्बन्धी व्यवस्थाको दुरूपयोग पछि दोहोरिन नपाउने अवस्थाको सृजना हुने ।

## ४.१०. राज्यको शासकीय स्वरुप निर्धारण समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा शासनप्रणालीको प्रकृति र स्वरूप, निर्वाचनप्रणाली, विभिन्न तहमा कार्यकारिणी अङ्गको ढाँचा, विभिन्न तहमा कार्यकारिणी अधिकारको बाँडफाँड, विभिन्न तहका सरकार बीचको अन्तरसम्बन्ध, सरकारी सेवाको गठन र सञ्चालन विधि, सुशासनका आधारहरु लगायतका विषयहरु समावेश गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५।९।१ देखि २०६६।१०।१४ को बीचमा ७७ वटा बैठक सम्पन्न गरी समितिले १५९ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र १७ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार भएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण अनुसूचीमा राखिएको

छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । यस समितिको प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- तीन तहको शासकीय स्वरूपको व्यवस्था यो समितिको प्रतिवेदनको विशेषता हो । केन्द्र, प्रदेश र स्थानीयतह गरी शासकीय स्वरूपका तीन तह हुने व्यवस्था रहेको,
- शासकीय स्वरूपको सम्बन्धमा स्थानीयतह र प्रदेश तहको हकमा सहमतिको मस्यौदा आए पनि सङ्घीय शासनप्रणालीको हकमा बहुमतको प्रतिवेदन समेत बन्न सकेको छैन । मतदानमा राखिएको सबै विकल्पलाई प्रतिवेदनमा राखी पेश गरिएको,
- कुनै पनि शासकीय स्वरूपमा सहमति नभएको कारण समितिमा मतदान हुँदा सहमतीय राष्ट्रपतीय प्रणाली र बहुसदस्यीय निर्वाचनप्रणालीको पक्षमा १८ मत, संवैधानिक राष्ट्रपति सहित कार्यकारी प्रधानमन्त्री रहने शासनप्रणाली र मिश्रित सदस्य समानुपातिक निर्वाचनप्रणालीको पक्षमा १६ मत र व्यवस्थापिकाबाट निर्वाचित कार्यकारी राष्ट्रपतीय शासनप्रणाली र मिश्रित निर्वाचनप्रणालीको पक्षमा ३ मत प्राप्त भएको,
- शासनप्रणालीको सम्बन्धमा मतदानमा राखिएका उल्लिखित ३ अवधारणाको अतिरिक्त प्रत्यक्ष निर्वाचित प्रधानमन्त्रीय पद्धति हुनुपर्ने भनी राखिएको फरक मतलाई पनि प्रतिवेदनमा समेटिएको,
- प्रदेशमा संसदीय शासनप्रणालीसँग मिल्दो शासनप्रणाली र स्थानीयतहमा अध्यक्षात्मक प्रणाली अनुरूपको ढाँचामा सहमति भएको,
- सङ्घीय मन्त्रिपरिषद्मा सङ्घीय व्यवस्थापिकाको १० प्रतिशत र प्रान्तीय मन्त्रिपरिषद्मा प्रदेशसभाको २० प्रतिशतभन्दा बढी संख्यामा मन्त्री नियुक्त गर्न नपाइने व्यवस्था प्रस्ताव गरिएको,
- समितिको प्रतिवेदनमा सरकारी सेवाको गठन र सञ्चालनविधि, सुशासनका आधारहरु पनि स्पष्ट रूपमा औंल्याइएको छ । व्यावसायिक नैतिकता, पारदर्शी र मितव्ययी प्रशासन, विकासमुखी प्रशासन, जवाफदेही एवं उत्तरदायी प्रशासन, सहभागितामूलक, समानुपातिक समावेशी र कार्यसम्पादनमा आधारित राजनीतिक हस्तक्षेपमुक्त प्रशासनलाई सार्वजनिक प्रशासनका आधारभूत मार्गदर्शक सिद्धान्तको रूपमा राखिएको,
- कार्यकारी अधिकारको बाँडफाँड र विभिन्नस्तरका कार्यकारी अङ्गको अन्तरसम्बन्धको संवैधानिक संयन्त्रको लागि स्पष्ट सुझाव रहेको,
- अवधारणा खण्डमा विश्वमा प्रचलित सबै शासकीय स्वरूप र निर्वाचनपद्धति तथा तिनका सकारात्मक पक्ष र कमजोर पक्षहरु बुँदागत रूपमा उल्लेख गरिएको ।

## ४.११. राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिले निर्माण गरेको प्रतिवेदन र त्यसले समेटेका आधारभूत विषयहरु

यस समितिको कार्यक्षेत्रमा राज्यको सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक स्वरूपमा हुने संरचना, सङ्घीय एकाइहरूको क्षेत्रनिर्धारण गर्ने सिद्धान्त तथा आधारहरु, प्रत्येक सङ्घीय एकाइको क्षेत्रनिर्धारण र तिनको नामाकरण, विभिन्न तहका सङ्घीय एकाइका सरकार बीच विधायिकी, कार्यकारिणी र न्यायिक अधिकारको बाँडफाँड, विभिन्न तहका सङ्घीय एकाइको अधिकारक्षेत्र सम्बन्धी विषयसूची र साझा विषयसूचीको निर्धारण, सङ्घीय एकाइ बीच व्यवस्थापिकीय, कार्यकारिणी र न्यायिक अधिकारको अन्तरसम्बन्ध निर्धारण, सङ्घीय एकाइहरु बीच उत्पन्न हुन सक्ने विवादको समाधान सम्बन्धी संयन्त्र लगायतका विषयहरु समावेश

गरिएको थियो । यस समितिको गठन भएपछि मिति २०६५।९।१ देखि २०६६।१०।०६ को बीचमा १२७ वटा बैठक सम्पन्न गरी समितिले १५७ पृष्ठको प्रारम्भिक मस्यौदा सहितको अवधारणापत्र र १५ वटा अनुसूची सहितको प्रतिवेदन तयार गरी संविधानसभामा पेश गरेको थियो । उपलब्ध भएसम्मका विशेषज्ञहरूलाई समितिमा आमन्त्रण गरी सुझाव लिइएको र सोही सुझावमा आधारित भएर प्रतिवेदन तयार भएको देखिन्छ । जनताले विभिन्न माध्यमबाट दिएका सुझावहरूको अध्ययन गरी त्यसबाट निस्केको निष्कर्षको संक्षेपीकरण अनुसूचीमा राखिएको छ । यसले निर्मित संविधानमा जनस्वामित्व स्थापित गर्न समिति निकै सजग रहेको प्रमाणित हुन्छ । समितिको बहुमत निर्णयको आधारमा तयार गरिएको उक्त प्रतिवेदनमा मुख्य रूपमा देहायका विषयहरु समेटिएको पाइन्छ :-

- समितिले नेपालमा सङ्घ, प्रदेश र स्थानीय गरी तीनतहको राज्य संरचना प्रस्ताव गरेको छ । यी तीनै तहमा राज्यका विधायिकी, कार्यकारिणी र न्यायिक अधिकार निहित रहने, राज्यसत्ता सङ्घ, प्रदेश, स्थानीयतह र विशेष संरचनामार्फत् प्रयोग गरिने प्रस्ताव गरिएको,
- समितिले नेपालको एकात्मक राज्यको स्वरूपलाई पुनर्संरचना गरी सङ्घीय लोकतान्त्रिक गणतन्त्र नेपाललाई १. लुम्बिनी–अवध–थारूवान, २. मिथिला–भोजपुर–कोच–मधेस, ३. खप्तड, ४. कर्णाली, ५. जडान, ६. मगरात, ७. तमुवान, ८. तामसालिङ्, ९. नेवा, १०. नारायणी, ११. सुनकोशी, १२. शेर्पा, १३. किराँत र १४. लिम्बुवान समेत गरी १४ स्वायत्तप्रदेशमा विभाजन गर्ने प्रस्ताव गरेको,
- प्रदेशको निर्माणको प्रस्ताव गर्दा पहिचानलाई प्राथमिक आधार र सामर्थ्यलाई सहायक आधारको रूपमा लिएको पाइन्छ । कुनै प्रदेशको नाम वा सिमाना फेरवदल गर्नुपरेमा सम्बन्धित प्रदेशको व्यवस्थापिकाको दुईतिहाई बहुमतको निर्णयबाट गरिएको सिफारिश सङ्घीय व्यवस्थापिकाको दुईतिहाई बहुमतबाट अनुमोदन हुनुपर्ने र सङ्घीय विधायिकाबाट पारित हुन नसकेमा सम्बन्धित प्रदेशको जनमतसङ्ग्रहबाट निर्णय गर्न सकिने व्यवस्था रहेको,
- समितिको प्रतिवेदनमा सङ्घको राजधानी सङ्घीय सरकारले तोकेको स्थानमा रहने र प्रदेशको राजधानी अनुसूची १ मा प्रस्तावित गरे बमोजिम हुने व्यवस्था गरेको छ । राजधानी हेरफेर गर्नुपरेमा सम्बन्धित व्यवस्थापिकाले निर्धारण गरे बमोजिम हुने व्यवस्था रहेको,
- प्रादेशिक सरकार गठन भएको मितिले एक वर्षभित्रमा उच्चस्तरीय आयोग गठन गरी सङ्घीय सरकारले तोकेको मापदण्डको आधारमा स्थानीयतह अन्तर्गतका गाउँपालिका र नगरपालिकाको नाम, संख्या र क्षेत्रनिर्धारण गरिसक्नुपर्ने र उक्त व्यवस्था कार्यान्वयन नभएसम्म विद्यमान स्थानीयतह कायम रहने व्यवस्था गरेको,
- मुख्य संरचनाका अतिरिक्त स्वायत्तक्षेत्र, संरक्षितक्षेत्र र विशेषक्षेत्र लगायतका विशेष संरचना पनि रहनसक्ने व्यवस्था गरेको छ । तीमध्ये कुनै खास जातजाति वा भाषिक समूहको बाहुल्यता रहेको क्षेत्रलाई स्वायत्तक्षेत्र, कुनै जातजाति समुदाय, सांस्कृतिक समूह, अल्पसंख्यक वा सीमान्तकृत समूहलाई लक्षित गरी संरक्षितक्षेत्र र त्यस्ता क्षेत्रमा नपरेका आर्थिक वा सामाजिक रूपमा पछाडि परेका समुदायलाई लक्षित गरी विशेषक्षेत्र प्रस्ताव गरिएको छ । समितिले प्रतिवेदनमा २३ वटा स्वायत्तक्षेत्र प्रस्ताव गरेको,
- प्रदेश, स्थानीयतह र स्वायत्तक्षेत्रमा बसोबास गर्ने आदिवासी जनताको पहिचान, स्व-शासन र स्वायत्तता प्रत्याभूत गरिएको,
- देशको सार्वभौमसत्ता, स्वतन्त्रता, एकता र क्षेत्रीय अखण्डतामा खलल नपर्ने गरी आदिवासी, आदिवासी जनजाति र मधेसीलाई राजनीति, संस्कृति, धर्म, भाषा, शिक्षा आदिमा आत्मनिर्णयको अधिकार प्रदान गरिएको,

- जातीय आधारमा निर्माण हुने प्रदेशमा दुई निर्वाचन अवधिसम्म राजनीतिक दलहरूले निर्वाचनको समयमा र प्रदेश सरकार गठनको क्रममा सम्बन्धित प्रदेशमा बाहुल्य रहेको जाति/समुदायको सदस्यलाई मुख्य नेतृत्व तहमा प्राथमिकता दिनुपर्ने व्यवस्था गरिएको छ । विशेष संरचना अन्तर्गतका स्वायत्तक्षेत्रमा बाहुल्य रहेको जाति/समुदायको त्यस्तो स्वायत्तक्षेत्रको प्रमुख नेतृत्व तहमा राजनीतिक अग्राधिकार हुने प्रस्ताव रहेको,
- अवशिष्ट अधिकार सङ्घमा राखिएको छ । सङ्घीय प्रदेशहरु बीच समन्वय हुनुपर्ने कुरामा निर्देशन जारी गर्ने अधिकार पनि सङ्घलाई प्रदान गरिएको छ । कुनै प्रदेशले राष्ट्रिय सार्वभौमसत्ता, अखण्डता, एकता, शान्ति र व्यवस्थामा खलल पार्ने कार्य गरेमा सङ्घीय सरकारको सिफारिशमा राष्ट्रप्रमुखले त्यस्तो प्रदेशको सरकार र विधायिकालाई चेतावनी दिन, निलम्बन गर्न वा विघटन गर्न सक्ने व्यवस्था छ । त्यसरी विघटन गरेकोमा ६ महिनाभित्र प्रदेशसभाको निर्वाचन गर्ने गरी सङ्घीय शासन लागू गर्न सकिने व्यवस्था गरिएको,
- समितिको प्रतिवेदनले सङ्घ र प्रदेश, प्रदेश-प्रदेशहरु बीच र स्थानीयतह र प्रदेशहरु बीच उत्पन्न हुने राजनीतिक विवादको समाधान अन्तर प्रादेशिक परिषद्, सङ्घीय व्यवस्थापिकाबाट समाधान गर्ने र संवैधानिक वा अधिकारको सूचीसँग सम्बन्धित विवादलाई समाधान गर्नको लागि संवैधानिक अदालतको प्रस्ताव गरिएको,
- अवधारणापत्रमा विश्वमा अभ्यास गरिएको सङ्घीय पद्धतिका विविध पक्षमा गहिरो अध्ययन गरेर त्यसको विवरण प्रस्तुत गरिएको,
- बहुमतको प्रतिवेदनको साथमा ६ प्रदेश निर्माण गर्नुपर्ने अल्पमतको प्रस्ताव, एक स्वायत्त मधेस प्रदेश हुनुपर्ने भन्ने केही दलहरूको प्रस्ताव, अग्राधिकारको व्यवस्था र आत्मनिर्णयको अधिकारबारे संविधानमा बोल्न नपर्ने भन्ने केही सदस्यहरूको प्रस्तावलाई समेत प्रतिवेदनमा स्थान दिइएको,
- संवैधानिक आयोगको निर्धारण गर्ने कुरा समितिको कार्यक्षेत्रमा नपर्ने भए पनि महिला आयोग, दलित आयोग र मधेसी आयोगको प्रस्ताव पनि प्रतिवेदनमा गरिएको ।




# विषयगत समितिहरूका समितिका प्रतिवेदनहरूमाथि संविधानसभामा छलफल र अन्तर्वस्तुहरूमा रहेका दलीय मतभिन्नताहरूको पहिचान

## ५.१. विषयगत समितिहरुका प्रतिवेदनहरुमाथि संविधानसभामा छलफल र अन्तर्वस्तुहरुमा रहेका दलीय मतभिन्नताहरुको पहिचान

संविधानसभाको संविधान निर्माणकार्य र सोसँग सम्बद्ध अन्य प्रक्रियागत कार्यमा सहयोग पुऱ्याउन संविधानसभा अन्तर्गत संवैधानिक समिति, विषयगत समितिहरु र प्रक्रियागत समितिहरूले आफ्ना कार्यक्षेत्रभित्रका विषयको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्यक्षमार्फत् संविधानसभामा पेश गर्ने व्यवस्था मिलाइएको थियो । त्यसरी समितिहरूबाट प्रतिवेदन पेश भएपछि सोमाथि सभामा छलफल भई सभाले दिएको सुझाव र निर्देशनसमेतका आधारमा संविधानको मस्यौदा तयार पारी संविधानसभामा पेश गर्नुपर्ने नियमावलीको व्यवस्था रहेको थियो । हरेक समितिको प्रतिवेदनमाथि संविधानसभामा दिनको ६ घण्टाको दरले ५ दिन गरी जम्मा ३० घण्टा छलफल भएको थियो । प्रत्येक समितिको छलफल र त्यसमा उठेका मुख्य विषयको सारांश यो भागमा राख्ने प्रयास गरिएको छ ।

### ५.१.१. राष्ट्रियहितको संरक्षण समिति

राष्ट्रियहितको संरक्षण समितिको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदाको प्रतिवेदन र अवधारणापत्रमा आधारित व्याख्यात्मक टिप्पणी सहितको प्रारम्भिक मस्यौदाको प्रतिवेदन, २०६६ माथि संविधानसभामा २०६६ जेठ १७, १९, २०, २१ र २२ गते भएको छलफलमा १५६ जना मा० सदस्यहरूले भाग लिनु भएको थियो । उक्त समितिको छलफलमा २७ घण्टा ५५ मिनेट समय लागेको थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा दिइएका सुझावको सारांश यस प्रकार छ :-

- संविधान र कानूनबमोजिम नेपाल राज्यको कार्यकारिणी अधिकार प्रत्येक तहका जननिर्वाचित निकायबाट प्रयोग हुने, नेपाल एक स्वतन्त्र, अविभाज्य र सार्वभौमसत्तासम्पन्न, धर्मनिरपेक्ष राष्ट्र हुने, नेपालको राष्ट्रिय एकताको आधार बहुजातीय, बहुधार्मिक, बहुसांस्कृतिक र विविधतायुक्त समाजको राष्ट्रियहित तथा सम्वृद्धिप्रति आस्थावान् रही एकताको सूत्रमा आबद्ध सबै नेपाली जनता समष्टि रूपमा राष्ट्र हुनुपर्ने कुरा उठाइएको थियो ।

- सङ्घीय, प्रादेशिक र स्थानीय सरकारको साझा एकाइका रूपमा नेपाल एक स्वतन्त्र, अविभाज्य, सार्वभौमसत्तासम्पन्न, धर्मनिरपेक्ष, समावेशी र लोकतान्त्रिक गणतन्त्रात्मक राज्य हुने र नेपालको क्षेत्र अन्तर्गत नयाँ संविधान प्रारम्भ हुँदाका बखतको क्षेत्र, उक्त संविधान प्रारम्भ भएपछि प्राप्त हुने क्षेत्र भनेर उल्लेख गर्नु पर्ने ।
- 'राष्ट्रभाषा' सम्बन्धमा नेपालमा बोलिने सबै भाषाहरू राष्ट्रभाषा हुनुपर्ने र देवनागरि लिपिमा नेपालीभाषा सङ्घीय, प्रादेशिक र स्थानीय सरकारको सरकारी कामकाजको भाषा बनाई अङ्ग्रेजी भाषालाई अन्तर्राष्ट्रिय सम्पर्क भाषाको रूपमा सबै तहका सरकारमा लागू गर्नुपर्ने र सरकारी कामकाजको भाषा नेपाली र अन्तर्राष्ट्रिय सम्पर्क भाषा अङ्ग्रेजीबाहेक प्रादेशिक र स्थानीय सरकारको अन्य कामकाजको भाषा तोक्ने अधिकार प्रादेशिक र स्थानीय सरकारलाई हुने सुझाव आएका थिए ।
- मौलिक अधिकारको रक्षा र सरकारको दायित्व सम्बन्धमा मौलिक अधिकारको स्वतन्त्रताको हक अन्तर्गत नेपाल राज्यको जुनसुकै भागमा व्यक्ति, सेवा वा वस्तुको निर्बाध आवागमनमा वा नागरिकका मौलिक अधिकारको उपभोगमा रोक लगाउने वा विभेद गर्ने गरी प्रदेश र स्थानीय सरकारले कुनै कानून बनाउन, सिद्धान्त र प्रक्रिया तोक्न तथा यस प्रतिकूलका कुनै पनि संरचना बनाउन रोक लगाउने गरी कानून बनाउन रोक लगाएको मानिने छैन भन्ने प्रतिबन्धात्मक वाक्यांश थप गर्न सुझाइएको थियो ।
- राज्यको दायित्वमा हरेक नागरिकका लागि आर्थिक, सामाजिक र खाद्यको अधिकार पूरा गर्ने दायित्व, विश्वव्यापीरूपमा स्वीकृत आधारभूत मानव अधिकार, बहुदलीय प्रतिस्पर्धात्मक लोकतान्त्रिक प्रणाली, जनतामा निहित सार्वभौमसत्ता, बहुलवादी खुला समाज, आवधिक निर्वाचन, निर्वाचित शासनसत्ता, संवैधानिक सर्वोच्चता, स्वतन्त्र न्यायपालिका, कानूनको शासन, प्रेस स्वतन्त्रता, सूचनाको हक, जनसहभागितामूलक स्थानीय स्वायत्त शासनप्रणाली, पारदर्शिता, जवाफदेहिता, निष्पक्षता, स्वच्छ र सक्षम प्रशासनयन्त्रको व्यवस्था गरी सुशासन कायम गर्ने आदि विषयवस्तुहरू र नेपालको स्वतन्त्रता, भौगोलिक अखण्डता, अविभाज्यता, राष्ट्रिय एकता, शान्ति र स्थायित्व, लोकतन्त्र, जनतामा निहित सार्वभौमसत्ता, नेपाली जनताको सम्वृद्धिप्रति प्रतिबद्ध रहनु राज्यको दायित्व हुने, आफ्नो अधिकारक्षेत्रको प्रयोग र कार्य जिम्मेवारी सम्पादन गर्दा एक अर्को प्रदेश र स्थानीय सरकारको भूगोल, कार्य अधिकारक्षेत्र तथा संस्थागत प्रबन्धको परस्पर सम्मान गर्नु सबै तहका सरकारको साझा दायित्व हुने विषयहरू थप गर्नु पर्ने सुझावहरू प्राप्त भएका थिए ।
- राज्यका निर्देशक सिद्धान्त अन्तर्गत स्थानीय स्वायत्त शासन सम्बन्धी सिद्धान्त तथा नीतिहरूमा स्थानीय स्वायत्त शासन र सरकारका माध्यमबाट शासन र विकास प्रक्रियामा अधिकाधिक मात्रामा सम्मिलित हुने अवसर जुटाई आमजनताले स्थानीयस्तरदेखि नै सार्वभौमसत्ताको प्रयोग गर्ने र लोकतन्त्रका लाभहरूको उपभोग गर्नसक्ने व्यवस्था कायम गर्नु राज्यको मूलभूत उद्देश्य हुने, जनतासँगको परिपूरकता र सन्निकटताको सिद्धान्त अनुसार निर्वाचित स्थानीय स्वायत्त सरकारमा अधिकार र कार्यजिम्मेवारीको निक्षेपणका साथै यसको वहनका लागि संस्थागत संरचनाको निर्माण र विकास गर्दै आवश्यक प्रशासनिक जनशक्ति स्रोत-साधनहरू परिचालन गर्ने अधिकार निक्षेपण गरिने विषयहरू थप गर्नुपर्ने ।
- राज्यका नीतिहरूमा सरकारी, सहकारी र निजी क्षेत्रको माध्यमबाट मुलुकको अर्थतन्त्रलाई सुदृढ गर्ने नीति राज्यले अवलम्बन गर्ने, कृषि उत्पादकत्वमा वृद्धि गरी किसानको जीवनस्तरमा सुधार ल्याउन र कृषि औद्योगीकरण गरी खाद्य सम्प्रभूताको व्यवस्था गर्न र राष्ट्रिय अर्थतन्त्रलाई मजबुत बनाउन किसानहरूलाई प्रोत्साहित गर्ने कुरा थप गर्ने ।

- सन्धि-सम्झौता सम्बन्धमा प्रदेशले करारजन्य सम्झौता गर्दा स्थानीय सरकारसँगको परामर्शको आधारमा गर्ने, आत्मनिर्णयको अधिकार प्रयोग गर्दा राष्ट्रिय एकता, अखण्डता, अविभाज्यता, राष्ट्रिय सुरक्षा, सामाजिक सद्भाव र शान्तिमा प्रतिकूल असर पर्ने कार्य भएमा तहगत माथिल्ला सरकारबाट हस्तक्षेप गर्न कानून बनाउन सकिने, जनमतसङ्ग्रहको व्यवस्थामा स्थानीय स्वायत्त सरकारहरूले गम्भीर सार्वजनिक महत्वका स्थानीय विषयमा जनमतसङ्ग्रहको माध्यमबाट प्रत्यक्ष लोकतन्त्रको अभ्यास गर्न सकिने कुरा थप गर्ने विषयहरु पनि सुझाइएका थिए ।
- राष्ट्रिय सुरक्षानीति सम्बन्धमा नेपालको एक राष्ट्रिय सुरक्षानीति रहने, देशको विशिष्ट भूगोल, ऐतिहासिकता, सुरक्षा सम्बन्धी विश्वव्यापी मान्यता समेतलाई ध्यानमा राखी मुलुकलाई बाह्य सीमाअतिक्रमण र आन्तरिक विखण्डनको खतराको रक्षा, प्राकृतिक सम्पदाको जगेर्ना, सामाजिक सद्भाव र जनताको जीउधनको रक्षा एवं कुनै कारणबाट आन्तरिक गोलमालको स्थितिबाट मुलुकको रक्षाको पूर्ण प्रत्याभूति हुने राष्ट्रिय सुरक्षानीति तयार गर्ने, हरेक नागरिकले राष्ट्रको सुरक्षाप्रति चेतनशील एवं जिम्मेदार बन्न औपचारिक तथा अनौपचारिक राष्ट्रिय सुरक्षाशिक्षाको व्यवस्था बृहत् राष्ट्रिय सुरक्षानीतिमा समावेश गर्ने, मानव अधिकार, अन्तर्राष्ट्रिय मानवीय कानून र कानूनको पूर्णप्रत्याभूति दिलाउने सुरक्षानीति अपनाइने, सुरक्षानिकायभित्र जनगुनासो सुन्न अम्बुडसम्यानको स्थायी व्यवस्था हुने र राष्ट्रिय सुरक्षा परिषद्‌मा कार्यकारिणी प्रमुख - अध्यक्ष, रक्षामन्त्री र कार्यकारिणी प्रमुखले तोकेको मन्त्री सदस्यहरु, कार्यकारिणी प्रमुखको सुरक्षा सल्लाहकार स्थायी आमन्त्रित सदस्य रहनेगरी आवश्यकता अनुसार प्रधानसेनापति, सशस्त्र प्रहरी महानिरीक्षक, प्रहरी महानिरीक्षक, गुप्तचर विभागको प्रमुख तथा अन्य व्यक्तिहरूलाई बैठकमा आमन्त्रण गर्न सकिने व्यवस्था गर्ने ।
- राष्ट्रिय हितको पहिचान र परिभाषा पर्याप्त नभएको, राज्य र राष्ट्रको परिभाषा नगरिएको, राष्ट्र र राज्यको परिभाषामा वर्गीय दृष्टिकोणको अभाव रहेको कुरा औंल्याइएको छ । राष्ट्रिय झण्डा, गान र सार्वभौमसत्ता र अखण्डताको विरूद्ध क्रियाकलाप गर्नेलाई कानूनद्वारा दण्ड गर्ने व्यवस्था गर्नु उचित हुन्छ, यसलाई संविधानमै उल्लेख गरिरहनु नपर्ने, राष्ट्रिय झण्डा र राष्ट्रिय गान मात्र नभई राष्ट्रिय पोशाक पनि राखिनु पर्ने । सार्वभौमसत्ता, एकता र अखण्डताविरूद्धका कार्यहरूलाई दण्डित गर्ने कुरा स्वाभाविक नै भएको ।
- अन्य सुझावहरूमा भूपरिवेष्ठित राष्ट्रको अधिकारबारेको महासन्धिको कुरा अवधारणामा उल्लेख नभएको, प्रधानसेनापति र अर्धसैनिक बलको व्यवस्थामा अस्पष्टता रहेको, नागरिकता जन्मको आधारमा वा वंशजको आधारमा दिने भन्ने स्पष्टता नभएको । अङ्गीकृत नागरिकताप्राप्त व्यक्ति राजदूत र संवैधानिक निकायको पदाधिकारी हुन सक्छन् सक्दैनन् उल्लेख नभएको, राष्ट्रिय सुरक्षा परिषद्‌को व्यवस्था गरिएकोमा यो कोप्रति उत्तरदायी हुन्छ ? यसले कहाँ उल्लिखित प्रतिवेदन दिन्छ भन्नेबारे कुनै उल्लेख नभएको, राष्ट्रिय सुरक्षा परिषद्‌ले वार्षिक प्रतिवेदन राष्ट्रपतिसमक्ष पेश गर्ने र संसदमा पठाउनु पर्ने कुरा उल्लेख गर्नु पर्ने, सुरक्षानीति रक्षामन्त्रालयले नभई सुरक्षा परिषद्‌ले बनाउनु पर्ने, नेपाली जनताको एकता नै राष्ट्रियता भएकोले सङ्घीयतालाई छोडेर हैन जोडेर हेर्नु पर्ने, राज्यलाई जनहितैषी र जनमैत्री बनाउनु पर्ने, प्रान्तीय व्यवस्थापिकाको मागमा पनि जनमतसङ्ग्रहमा जाने व्यवस्था राख्नुपर्ने, प्रान्तले सन्धि गर्दा सङ्घीय सरकारलाई जानकारी दिए हुन्छ भन्ने राख्नुपर्ने आदि सुझावहरु छन् ।
- दक्षिणको सीमालाई वैज्ञानिक तवरले सीमाङ्कन गर्नुपर्छ । नेपाल भारत बीच राहदानीको व्यवस्था गर्नु पनि अव्यावहारिक हुनेछ । पासपोर्ट लागू गर्न नसकिएपनि परिचयपत्र लागू गरिनुपर्छ । हामी समसामीप्य वा समदूरीको अवधारणाबाट होइन राष्ट्रियहितबाट निर्देशित

हुनुपर्दछ । कुनै विदेशी व्यक्ति वा संस्थालाई जलस्रोतमा लगानी गर्न दिने नदिने भनी टुङ्ग्याउन संसदमा ल्याउने कुरा व्यावहारिक छैन । यो कार्यकारिणीको अधिकार भित्रको हो ।

- राष्ट्रिय जनावर, पंक्षी, पोशाकको कुरा गर्न सकेन र समिति पन्छियो । भूपरिवेष्ठित राष्ट्रको अधिकारको विषयलाई समावेश गर्नुपर्छ । राष्ट्रियताको सन्दर्भमा चर्चा गर्दा दुई कोणबाट हेर्नु पर्छ । राष्ट्रियतालाई आन्तरिक र बाह्य रूपमा हेरिनु पर्छ । निजामती, सेना, प्रहरी आदि सञ्चालन गर्ने एउटै अङ्ग बनाए हुन्छ । प्रस्तावनामा सङ्घीय लोकतान्त्रिक समानुपातिक र समावेशी देश भन्नु पर्दछ । संविधानमा धर्मनिरपेक्ष भनी रहनु नपर्ने । गाईलाई राष्ट्रिय चिन्ह कायम गरिनुपर्छ । राजनीतिक र प्राकृतिक सम्पदा सम्बन्धी विषयमा आत्मनिर्णयका अधिकारबारे स्पष्ट गरी संविधानमै उल्लेख हुनुपर्ने ।
- भाषिक विविधतालाई सम्बोधन गरौं । मुद्रामा सबैको मातृभाषाले ठाउँ पाओस् । लैङ्गिक तटस्थता अँगाली राष्ट्रप्रमुख भन्ने शब्द प्रयोग गरेको राम्रो । गैर आवासीय भन्दापनि नागरिकता नगुमाएका नेपालीमात्रै भनौं । प्रादेशिक सरकारलाई अग्राधिकार दिनुपर्छ । प्रादेशिक लोकसेवा आयोगको गठन र प्रदेशको भाषामा जाँच दिन पाउने व्यवस्था गर्नुपर्छ । लोकतान्त्रिक शब्दको सट्टा गणतान्त्रिक शब्द राखिनुपर्छ । राष्ट्रका आधारहरु जनता, भूगोल, पूर्वाधार प्रणाली, अन्तर्राष्ट्रिय मैत्रीभावना, वातावरण संरक्षण र जलवायु परिवर्तनबारे ध्यान दिदैं वातावरणलाई क्षति पुऱ्याउनेबाट क्षतिपूर्ति पाउने व्यवस्था तथा वातावरण प्रदूषणबाट सुरक्षित हुनपाउने हक समेत राख्नुपर्छ । वातावरण संरक्षणका लागि सम्पूर्ण नदीनालामा फोहरमैला मिसाउन नपाउने व्यवस्था अवधारणापत्रमा थपिनुपर्छ । भौगोलिक रूपमा नेपाल हिमाल तथा पहाडको देश हो उल्लेख गरिएको छ ।

अन्तमा, मा० सभापति श्री अमिक शेरचनले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.१.२. अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक, अधिकार संरक्षण समिति

अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक, अधिकार संरक्षण समितिको अवधारणापत्र र प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदनमाथि संविधानसभामा २०६६ जेठ २४, २५, २६, २७ र २८ गते भएको छलफलमा १६२ जना मा० सदस्यहरूले भाग लिनुभएको थियो । उक्त समितिको छलफलमा २५ घण्टा २५ मिनेट समय लागेको थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा उठेका मुख्य बुँदाहरूको सारसंक्षेप यस प्रकार रहेको छ :-

- यस प्रतिवेदनमा सकारात्मक पक्षहरु धेरै भए पनि यसका कमजोर पक्ष पनि छन् । अवधारणापत्र र प्रारम्भिक मस्यौदा बीचमा तादात्म्यता छैन । अवधारणापत्रभन्दा धेरै बाहिर गएर मस्यौदा तयार भएको छ । यस समितिसँग सम्बन्धित विभिन्न उपसमिति गठन गरेको भए योभन्दा राम्रो प्रतिवेदन आउन सक्थ्यो ।
- नागरिकता सम्बन्धमा नेपाल सरहदमा जन्मेकाले पनि (जन्मसिद्ध) नागरिकता पाउने भनियो अनि वंशजको आधारमा पनि भनियो । हाम्रो सन्दर्भमा वंशजबाट नागरिकता दिनेमा जानु पर्छ । नेपाली नागरिकले विदेशी नागरिकसँग वैवाहिकसम्बन्ध जोडेको कारण दिइनुपर्ने कुरालाई समेत ध्यान दिई कानूनमा छुट्टै व्यवस्था हुनुपर्दछ । तेस्रो लिङ्गीलाई पहिचान सहित नागरिकता दिने भन्ने त हुनसक्छ तर नागरिकताको प्रकार नै तेस्रो लिङ्गी नागरिकता भन्ने हुन सक्दैन । यसलाई सच्याइनु पर्छ । नागरिकता वंशज कि जन्मसिद्ध के आधारमा हो स्पष्ट गरी संविधानमा अङ्गीकृत नागरिकताको व्यवस्था राख्छौं या राख्दैनौं ? हामीले अङ्गीकृत नागरिक स्वीकार्न सक्दैनौ जस्तो लाग्छ तर वैवाहिकसम्बन्धको कारणले दिइने अङ्गीकृत नागरिकताको विषय बेग्लै हो । यस सम्बन्धमा भेदभाव नहुने गरी व्यवस्था गर्नुपर्दछ ।

महिलाको नागरिकतामा एउटै थर होस् । दोहोरो नागरिकता- केन्द्र र प्रदेशको नागरिकताको प्रावधान राख्नुपर्छ ।

- आमनागरिकलाई उच्चतहसम्मको निःशुल्क शिक्षा भनियो यसलाई सच्याई अल्पसंख्यक सीमान्तकृत र वहिष्करणमा परेकालाई विशेष अधिकार र निःशुल्क शिक्षा दिनुपर्छ । प्राविधिक लाइनको शिक्षा पनि निःशुल्क दिनुपर्छ । संस्कृति सम्बन्धी हकमा रहेको शिक्षाको हक हुनु राम्रो हो । आदिवासी, सीमान्तकृत, अल्पसंख्यक समुदायले समेत आ-आफ्नै भाषामा शिक्षा दिन पाउने व्यवस्था गरिनुपर्छ तर उच्चशिक्षाको व्यवस्था गरीब, दलित, सीमान्तकृतको लागि छ छैन ? उच्चशिक्षाको मापदण्ड तोकिनुपर्छ ।
- राष्ट्रभाषा अत्यन्त जटिल मुद्दा हो । देवनागरि लिपिमा नेपाली भाषा सरकारी कामकाजको भाषा र प्रान्तीय राज्यसँगको सम्पर्क भाषा हुने भन्दै त्रिभाषिक नीति लिएको देखिन्छ । त्रिभाषिक सट्टा बहुभाषिक नीतिमा जानु पर्छ । सांस्कृतिक रूपमा खुलेका भाषागत संस्थाहरूमा पनि होलान् । यस समितिको कार्यक्षेत्र नभए पनि सरकारी कामकाजको भाषा वा राज्यको कामकाजको भाषा नेपाली खसभाषाभन्दा राम्रो हुन्छ । लोप हुन लागेका भाषालाई संरक्षण गर्ने विशेष व्यवस्था गर्नुपर्छ ।
- प्रतिवेदनले अल्पसंख्यक, सीमान्तकृत तथा वहिष्करणमा परेका समुदायको परिभाषा राम्रो तवरले गरेको छ तर यिनीहरूको पहिचानको लागि आयोग बनाउने भनियो । पहिचान गर्न आयोग बनाउने भन्नु ठीक होइन । यहाँ त सबै लेखिएकै छ त किन फेरि आयोग बनाउने ? भोलिको लागि आयोग चाहिएला तर आजको लागि आयोगको कुरा गर्नु जरूरी छैन । अल्पसंख्यक, सीमान्तकृत तथा लोपोन्मुख समुदायको संरक्षण कसरी गर्ने ? यी समुदायलाई कसरी माथि उठाउने ? आरक्षण कोटा प्रदान गर्ने वा अरू अधिकारहरु कहाँ-कहाँ दिने भनी किटान हुनुपर्छ । बसाईसराईको कारणले पनि अल्पसंख्यकमा पार्दछ । जातीय, भाषिक, धार्मिक, क्षेत्रीय, लैङ्गिक, उमेर, अशक्तता समेतको आधारमा अल्पसंख्यकको किटान गरौं । दलितका अधिकार संवैधानिक रूपमा ग्यारेन्टी गर्नुपर्छ । दलित, महिला, मुस्लिम आदिको बारेमा यहाँ स्पष्ट किटान नगरे कहाँ गर्ने ? मस्यौदा पुनर्लेखन गरिनुपर्छ ।
- प्रस्तावनामा छुवाछूत मानवताविरूद्धको जघन्य अपराध हो भनी नयाँ संविधानमा लेख्नु पर्छ । सीमान्तकृत र अल्पसंख्यकलाई एउटै बास्केटमा राखेर हेर्न सकिदैन । सीमान्तकृत जीवन धान्न नसक्ने अवस्थामा छ । सीमान्तकृतमा राउटे, वनकरिया जस्ता जाति पर्दछन् । अल्पसंख्यक थामी, जिरेल, सुरेल हुन् । के कारणले अल्पसंख्यकमा झर्दै गए, त्यसको उचित निराकरण हुनुपर्छ । मुक्त कमैयालाई सीमान्तकृतको रूपमा हेर्नुपर्दछ । बधुवा मजदुर पनि सीमान्तकृतमा पर्छ । परिभाषा अत्यन्त बृहत् छ । अल्पसंख्यक, सीमान्तकृत समुदायको वा वर्गको पहिचान गर्न उच्चस्तरीय आयोग गठन गर्ने बारेमा सबभन्दा गम्भीर ध्यानाकर्षण भएको छ । यी समुदायको आयोग बनेर मात्र पहिचान हुने भयो । संविधानमा स्पष्ट पहिचान नहुने भयो । सीमान्तकृत अल्पसंख्यक र वहिष्करणमा परेका भनेका को हुन् भनेर संविधानमा पहिचान नहुने भयो । आयोगलाई अधिकार दिने कुरा ठीक भएन । अहिले पहिचान भएकालाई राख्नु पर्छ । पहिचान हुन नसकेकालाई पछि थप्न सकिन्छ । अहिले २ वटा कुरा गर्न पर्ने हुन्छ । अल्पसंख्यक, सीमान्तकृत, वहिष्करणमा परेका भनी हाल पहिचान भएकाको किटान गरिनुपर्छ र पहिचान भएका बाहेक अरूको पहिचान गर्न आयोग गठन गर्नुपर्छ । अहिले नै अल्पसंख्यक, सीमान्तकृत, वहिष्करणमा पारिएकाको बारेमा को-को हुन् किटान गरी हक अधिकार स्पष्ट लेखिनु पर्छ ।
- हाम्रो देशको सन्दर्भमा अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएको समुदाय कुन-कुन हुन् भन्ने सम्बन्धमा समितिले आफ्नो कुनै धारणा दिन सकेको देखिएन । कति संख्याभन्दा

कम संख्यामा रहेको समुदाय अल्पसंख्यक हो, कुन शैक्षिकस्तर, हैसियत वा आर्थिक सूचकाङ्कभन्दा तल रहेको व्यक्ति वा समुदाय सीमान्तकृत मानिने हो तथा कुन-कुन सेवा वा सुविधामा पँहुच नभएका समुदायलाई वहिष्करणमा परेको मान्ने भन्ने सम्बन्धमा कुनै पनि निष्कर्ष अवधारणापत्रमा पाइएन । अमूर्त र बृहत् रूपमा अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा परेका समुदायलाई समान व्यवहार, भेदभावको अन्त र पहिचान सहित बाँच्न पाउने अधिकारको सुनिश्चितता र विशेष व्यवस्था गर्नुपर्ने सुझाव दिएको देखिन्छ तर त्यसको ग्यारेण्टी कसरी हुन सक्छ र त्यसको अनुगमन गर्ने संयन्त्र के हुन सक्छ भन्ने सम्बन्धमा कुनै विचार आउन सकेको पाइएन । अल्पसंख्यकको कुरागर्दा जातीय आधारमा अल्पसंख्यक छुट्याउन सकिन्न । अल्पसंख्यकलाई पिछडिएको शब्द राख्नु पर्छ ।

- धर्म सम्बन्धी हकमा भौतिकवादी हुन सक्ने नसक्ने ? वा नास्तिक हुने अधिकार र सोको प्रचार गर्ने अधिकार दिने नदिने ? यस्तो हक दिनुपर्छ । धर्मसंस्कृति आदि के आधारमा स्पष्टता हुन पऱ्यो । अल्पसंख्यक, वहिष्करणमा पारिएकाको अधिकार सुनिश्चितता हुनुपर्छ । जातीय भेदभाव तथा छुवाछूतविरूद्धको हक सम्बन्धी सुझाव अन्तर्गत उल्लेख गरिएझैं कसैको जाति वा उत्पत्तिको आधारमा कुनै भेदभाव गरिने छैन भन्ने कुरा सर्वस्वीकृत कुरा हो तर यस अवधारणाको विपरीत राज्यले कानूनी व्यवस्था गरी नेपालको झण्डै १८ प्रतिशतको संख्यामा रहेको आदिवासी खस क्षेत्रीलाई राज्यले प्रदान गर्ने कतिपय सेवा सुविधाबाट बञ्चित गर्ने गरी गरेको व्यवस्था जातीय भेदभावविरूद्धको हक सम्बन्धी अवधारणा विपरीत छ । अल्पसंख्यक, सीमान्तकृत तथा वहिष्करणमा परेका समुदायलाई राष्ट्रियहितमा असर नपर्ने गरी आफ्नो मौलिक पहिचानसँग समानता भएको कुनै विदेशी समुदायसँग स्वतन्त्र एवं शान्तिपूर्ण रूपमा सम्बन्ध स्थापना गर्ने र सरीक हुने हक हुनेछ भन्ने कुरा कुन अर्थ र सन्दर्भमा उल्लेख गरिएको हो स्पष्ट छैन । कुनै पनि नागरिकले एउटा स्वतन्त्र देशको कानून र मर्यादाको अधीनमा रहनै पर्ने हुन्छ । यो कुनै अल्पसंख्यक वा बहुसंख्यकलाई भिन्नाभिन्नै रूपमा लागू हुने विषय होइन ।
- पछिल्लो जनगणना अनुसार पहिचान भएका १०३ जातजातिमध्ये देशको कूल जनसंख्याको एक प्रतिशतभन्दा कम जनसंख्या भएका ८५ जातजाति रहेका छन् । अर्कोतर्फ यी जातजाति मिश्रित र छरिएर रहेको अवस्था छ । हालै गरिएको एक अध्ययन अनुसार नेपालको सबैभन्दा कम कालीकोट जिल्लामा पहिचान भएका ३४ जातजाति समूह छन् भने सबैभन्दा बढी काठमाण्डौ जिल्लामा पहिचान भएका ९७ जातजाति समूह छन् । एघार जिल्लाहरूमा पहिचान भएका ३४ देखि ५० जातजाति समूह, अर्को ११ जिल्लामा ५१ देखि ६० जातजाति समूह, २४ जिल्लामा ६१ देखि ७० जातजाति समूह, २२ जिल्लामा ८० भन्दा बढी जातजाति समूह रहेका छन् ।
- सबै जनजाति आदिवासी हुन् । सबै आदिवासी जनजाति होइनन् । आदिवासीपछि जनजाति थपौं । हरेक जातिमा वर्ग छन् । धनी र गरीब छन् । जातिभित्रको वर्गीय समस्या हल गर्नुपर्छ । जाति-जाति बीचको विभेद अन्त्य गर्न यो समस्यालाई हल गर्नुपर्छ । धर्मका आधारमा हिन्दुधर्म मान्ने ८० प्रतिशतभन्दा बढी छन्, तीबाहेक अरू अल्पसंख्यक छन् । मुस्लिम बाहेक प्रतिवेदनमा अरू धर्मको उल्लेख गरिनु पर्दछ । महिला बहुसंख्यक हुँदाहुँदै पनि अल्पसंख्यक भएका छन् । लैङ्गिक भेदभावमुक्त भनी राष्ट्रको परिभाषामा समावेश गर्नु पर्छ । सबैले आत्मसम्मानका साथ वाँच्न पाउने अधिकार व्यवस्था हुनुपर्छ ।
- राज्यको निर्देशक सिद्धान्त अन्तर्गत सार्वजनिक निजी तथा सार्वजनिक उद्यमलाई प्राथमिकता र प्रश्रय दिई भन्ने कुरामा आजको अर्थतन्त्र खुला, प्रतिस्पर्धी एवं तुलनात्मक लाभमा निर्भर हुन गएको छ । यस अवस्थामा सबैलाई अवसर प्रदान गर्न यतिले मात्र पुग्न सक्दैन । उनीहरूको

मानव विकास, कार्य क्षमताको विकास, स्वरोजगार वा उद्यमशीलताको विकासको लागि के आधार हुने भन्ने कुरा प्रारम्भिक मस्यौदाले समेत खुलाउदैन । त्यस्तै व्याख्यात्मक टिप्पणीमा समेत आर्थिक स्रोत र साधनमा केही सीमित व्यक्तिहरूको मात्र पहुँच एवं नियन्त्रण भन्ने कुरा पूर्णरूपमा गलत भएको र कानूनबमोजिम यसमा कसैलाई प्रवेश रोकटोक नभएको व्यहोरा यहाँ भन्नै पर्छ ।

- एकल महिला, एड्स रोगीलाई पनि सीमान्तकृत समुदायमा थप्नु पर्छ । पर्यटकहरू अब बच्चा जन्माउन पनि नेपाल आउँछन् र नेपालीहरूलाई अल्पसंख्यकमा पार्दछन् । ब्रेल लिपिलाई आधिकारिकता दिनुपर्छ । दिइएका अधिकार पनि बन्देज लगाउने गरी व्यवस्था गरिएको छ । उत्पीडित वर्गलाई दिएको अधिकारमा बन्देज लगाउनु हुन्न । अन्तर्राष्ट्रिय अभिसन्धिको व्यवस्था आन्तरिक कानूनमा राखी कार्यान्वयन गरियोस् । जनसंख्याको आधारमा समानुपातिक समावेशी आरक्षण गरियोस् । आर्थिक, सामाजिक, शैक्षिक, धार्मिक रूपले तल परेकाहरूलाई आवश्यक व्यवस्था गरी माथि ल्याउनु पर्दछ । समानताको हकमा क्षतिपूर्ति सहित सकारात्मक विभेद उल्लेख छ । विभेद सिधै नकारात्मक हो । समानता भनेको अवसर पहुँचको समानता हो, शब्दको होइन । ५० प्रतिशतभन्दा कम जनसंख्या भएकालाई अल्पसंख्यक मान्नुपर्छ । राज्यले जमीन वितरण, खाद्यान्न वितरण गर्नेजस्ता कामलाई व्यवस्थित गरिनुपर्छ । राज्यले धनीबाट लिएर गरीबलाई वितरण गर्ने हो, गरीबबाट लिएर धनीलाई वितरण गर्ने होइन । अन्तर्राष्ट्रिय श्रम सङ्गठनको अभिसन्धि नं. १६९ ले आदिवासीलाई दिएको अधिकार सम्बन्धी व्यवस्था अनुरूप उल्लेख गरी मिलाउने । सानो एकाइमा स्वायत्तता दिंदा गा.वि.स. वा नगरको अधिकार दिनुपर्छ । वर्गीय आधारमा संरक्षण र आरक्षण गर्नुपर्छ जातीय आधारमा होइन । विभिन्न पदमा योग्यताको कदर गरिनुपर्छ । राज्यको नीतिमा औद्योगीकरण गर्ने छुट छ । यसलाई अन्त्यमा राज्यको नीति हुने उल्लेख गरौं । अवधारणामा विशेषाधिकारको लक्षित समुदायले माग र टाठाबाठाले फाइदा लिन नपाउने लाभ लिन सक्ने बनाउनु पर्छ भने तापनि मस्यौदामा स्पष्ट आएन ।
- महिला दलित आदिको लागि आरक्षणको विशेष व्यवस्था गरेरमात्र पुग्दैन । हालसम्म पछाडि पारिएबापत र विभेद गरेबापत क्षतिपूर्तिको विशेष व्यवस्था समेत गरिनुपर्छ । दलित भन्ने शब्दलाई नै निषेध गर्नु पर्छ । अविभेदमा तराईवासी पर्छ भने हिमालीचांहि किन लेखिदैन ? महिलाका फरक अवस्थाको आधारमा हुने विभेदबारे उल्लेख छैन । प्रतिवेदनमा राष्ट्रको परिभाषा अमूर्त र सतही छ । राष्ट्रका आधारभूत विशेषताहरूलाई समेटेर परिभाषित गरिनुपर्छ । कति संख्यासम्मको समूहलाई अल्पसंख्यक मान्ने हो निश्चित हुनुपर्छ । यस्ता समुदायलाई दिइने सुविधाहरू किटानीपूर्वक उल्लेख हुनुपर्छ । सीमान्तकृत र वहिष्करणलाई एकै ठाउँमा राख्नु हुँदैन । अवसरबाट वञ्चित परेको वर्गलाई भुल्नु हुँदैन । जल, जमीन, भूमि र प्राकृतिक स्रोतमाथि सीमान्तकृत र लोपोन्मुख समुदायको हक मौलिक पहिचान सहित मौलिक हकको रूपमा नै राखिदिनुपर्छ । विशेष संरक्षण र आरक्षण गर्दा मानव विकास सूचकाङ्कको आधारमा गरिनुपर्छ । महिला जनसंख्याको हिसाबले पुरूषभन्दा बढी भए पनि शासनप्रणालीमा उनीहरूको पहुँच कम छ । जन्मको आधारमामात्र नागरिकता दिनु हुँदैन । तराईका आदिवासीलाई मस्यौदामा सूचीकरण गर्न छुटेको छ । तेस्रो लिङ्गीको विषयमा ठोस नीति लिनु पर्छ । तेस्रो लिङ्गीको खोलमा समलिङ्गी पनि आउने हो कि भन्ने तर्फ ध्यान दिनुपर्छ । जनसंख्याको आधारमा सबै निकायमा पूर्ण समानुपातिक प्रतिनिधित्व हुने व्यवस्था राख्नु पर्छ । प्रस्तावनामा महिला र यौनिक अल्पसंख्यक थप हुनुपर्छ । पछाडि परेका होइन पारिएका वर्ग वा समुदाय भन्नु पर्छ । धामी, नाथ, योगीलाई खस क्षेत्रीभित्रको अल्पसंख्यकभित्र राखिनु पर्छ । नेपालको एउटा जटिल समस्या यो हो कि राज्यले केही वर्ग र समुदायलाई पछाडि पार्‍यो, जसका कारण मुलुकले ठूलो क्षति व्यहोर्नु पर्‍यो । अव त्यस्तो अवस्थाको अन्त्य गर्नु पर्छ । पिछडावर्ग

भन्ने शब्द छुटेको छ थप गर्नु पर्छ, मधेसी शब्दप्रति आपत्ति छ मूल निवासीलाई राज्यका कुनै पनि ठाउमा विभेद गरिने छैन भनेर लेखिनु पर्छ ।

अन्तमा, मा० सभापति श्री लालबाबु पण्डितले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.१.३. सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समिति

सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदनमाथि संविधानसभामा २०६६ असार ११, १२, १४, १७ र १८ गते भएको छलफलमा २०४ जना मा० सदस्यहरूले भाग लिनुभएको थियो । उक्त समितिको छलफलमा ३० घण्टा १५ मिनेट समय लागेको थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा उठेका मुख्य बुँदाहरूको सारांश यस प्रकार छ :–

- भाषा सम्बन्धमा ४२ मध्ये २४ जना सदस्यको फरक मत हुँदा पनि १८ जना सदस्यको मतलाई आधिकारिक रूपमा प्रस्तुत गरिएको छ । अतः यसको प्राविधिक पक्षतर्फ विचार गरियोस् । नेपालमा ऐतिहासिक विकासको क्रममा नेपाली भाषा देशभरिका जनताले बोल्दै र लेख्दै आएका छन् । यस भाषाले माध्यमभाषाको स्थान हाँसिल गरिसकेको छ । यो भाषा नेपाललाई एक राष्ट्रको रूपमा अघि बढ्न सहयोगी हुने देखिन्छ । सरकारी कामकाजको भाषा नेपाली भाषा हुनेछ भनी अन्तरिम संविधान, २०६३ मा उल्लेख भएको छ, दुई वर्षअघि राखिएको यो प्रावधानलाई हाल परिवर्तन गर्नु आवश्यक छ र ? सरकारी कामकाजको भाषा धेरै हुने हो भने जटिलतातिर जान सक्छ । नेपालमा बोलिने अन्य मातृभाषाहरु पनि राष्ट्रिय भाषाहरु हुन् । तिनको संरक्षण, विकास र सम्मान हुनुपर्दछ । तर लामो समयको अभ्यासमा माध्यम भाषाको स्थान नेपाली भाषाले प्राप्त गरिसकेको हुनाले त्यसलाई सरकारी कामकाजको भाषा बनाउन हिच्किचाउनु पर्ने कुनै कारण देखिन्न । प्रान्तीय वा स्थानीयस्तरमा सम्बन्धित स्थानका बासिन्दाहरूले बोल्ने मातृभाषालाई ध्यानमा राखेर त्यसको प्रयोगलाई निश्चित गर्नसकिन्छ । सबै भाषालाई राष्ट्रभाषाको मान्यता दिई सकेपछि एउटै भाषालाई मात्र सरकारी कामकाजको भाषा हो भनिंदा सोही भाषाको अधिनस्थ रहने हुँदा यसको अन्त्य गरी विगतको परम्परा तोड्नुपर्छ । बहुभाषिक नीतिमा जानुपर्छ । ९२ वटा भाषाको सूची बनाइनुपर्छ । यद्यपि ती सबै भाषा हुन् वा भाषिका हुन् भन्ने कुरा भाषा आयोगले सिफारिश गर्नेछ । १% भन्दा बढी जनताले बोल्ने भाषालाई केन्द्रीय सरकारी कामकाजको भाषाको रूपमा मान्यता दिइनुपर्छ । मातृभाषामा आधारभूत शिक्षा पाउने हक सराहनीय छ । मातृभाषामा उच्चशिक्षा दिने कुरा संभव नहोला । बहुभाषिक जनता रहेकोले बहुभाषा नीति बनाइनुपर्छ । मातृभाषामा शिक्षा दिने संवैधानिक बन्दोवस्तलाई कार्यान्वयन गर्नेतर्फ जोड दिनुपर्छ । उदारनीति अपनामदा यति उदार नहोऊँ कि भोलि प्रान्त-प्रान्त बीच र केन्द्र एवं प्रान्तहरु बीच संवाद नै हुन नसकोस् । भाषानीति तय गर्दा प्रत्येक प्रान्त-प्रान्त बीच द्वन्द्व नहुने गरी निर्धारण गर्नुपर्छ । केन्द्रीय सरकारको सरकारी कामकाजको भाषाको रूपमा नेपालीका साथै हिन्दीलाई पनि मान्यता दिइनुपर्छ । १% भन्दा कम जनसंख्याले बोल्ने भाषाहरूको संरक्षणको लागि पनि विशेष नीति बन्नुपर्छ । केन्द्र, सङ्घ र स्थानीयतहमा पनि बहुभाषिक नीति अवलम्बन गर्नुपर्छ ।
- मधेसमा सम्पर्क भाषाको रूपमा हिन्दी भाषा स्थापित छ । यसलाई सरकारी कामकाजको भाषाको मान्यता हुनुपर्छ । प्रत्येक समुदायलाई भन्ने शब्दको सट्टा जनजातिलाई शब्द लेख्नु पर्छ । किनकि भाषा जातिसँग सम्बन्धित छ । ब्रेल लिपि र साङ्केतिक भाषाको प्रयोग गर्न पाउने कुरालाई राज्यको दायित्व अन्तर्गत राखिनुपर्छ । तीव्र भूमण्डलीकरण तथा विज्ञान–

प्रविधिको दिशामा अघि बढिरहेको वर्तमान विश्वमा अङ्ग्रेजी भाषा सर्वव्यापी रूपमा फैलिएको छ । त्यसलाई कसैले पनि अङ्ग्रेजहरूको भाषा भनेर दुत्कारेको छैन । बरू त्यसको आवश्यकता अनुसार अत्यधिक उपयोग गर्दै आफ्नो राष्ट्रिय सन्दर्भमा आवश्यकता अनुसार आफ्नो मौलिक भाषाको उपयोग गरेको पाइन्छ । भाषाको उपयोगको सन्दर्भमा यो कुरा मननीय छ । सबै दलितले नेपाली भाषा बोल्छन् उनीहरूको उत्थानको लागि पनि नेपाली भाषालाई मान्यता दिनुपर्छ । पञ्चशीलको सिद्धान्तको कुरा सामाजिक ऐक्यबद्धताको आधारको रूपमा उल्लेख हुनुपर्थ्यो तर अवधारणामा सो कुरा उल्लेख भएको छैन । ठाउँ-ठाउँमा रहेका केन्द्र शब्दको सट्टा सङ्घ शब्द राख्नुपर्छ । समानुपातिक र समावेशी आधारमा सामाजिक न्याय सुनिश्चित हुनुपर्छ । धार्मिक विषयलाई पनि सामाजिक ऐक्यबद्धताको आधारको रूपमा उल्लेख गरिनुपर्छ । प्रतिवेदनमा धर्मनिरपेक्षता, झण्डा, गान आदि कुरामा चर्चा गरिनु पर्थ्यो । सार्वभौमसत्ता र राजकीयसत्ता जनतामा निहित हुने कुरा उल्लेख गर्नुपर्छ ।

- कुनै पनि भाषालाई विशेष अधिकार दिनु हुँदैन । गणराज्यहरूको निर्माणको आधार भाषा पनि हुन्छ । सूची निर्माण गर्न सकिन्छ । भाषिक र सांस्कृतिक बहुलता शब्द प्रयोग गर्न सकिन्छ । सबै भाषा समानमहत्वका भए पनि राज्यले भाषाको सामाजिक र राजनीतिक प्रयोगलाई निर्धारण गर्दा यसका वक्ता कति छन् ? कति जनसंख्याले कुन भाषा प्रयोग गरेका छन् ? भन्ने कुरालाई ध्यानमा राख्नु पर्छ । सम्पर्क भाषा ऐच्छिक र अनौपचारिक रूपलेपनि तय गर्न सकिन्छ तर सरकारी कामकाजको भाषा भने औपचारिक रूपमा तय गरिनु जरूरी छ । यस्तो सम्पर्कको भाषा कतिवटा तय गर्ने भन्ने कुरा भाषानीतिमा भरपर्दछ । प्रान्तीय कामकाजको भाषा प्रान्तले तय गर्ने विषय हो । भाषा समयसापेक्ष हुनुपर्दछ । दोभाषेहरूको व्यवस्था गर्ने कुरा उल्लेख गरिनुपर्छ । लोप भईसकेको भाषा संस्कृतिको उत्थानमा राज्यले विशेष जोड दिनेछ भन्नुपर्छ । मातृभाषाको लिपि तयार गर्दै जानेछ भन्ने व्यवस्था गर्नुपर्छ । भाषा जड कुरा होइन । यो परिवर्तनशील हुन्छ । भाषा समाज विकाससँगै परिमार्जित हुँदै जान्छ । मातृभाषामा पढाउने स्कूल स्थापित हुँदा सो स्कूल वरिपरिका अरू समुदायका बालबालिकाहरूलाई पठन-पाठन गर्न कठिन हुनसक्छ । आफ्नो मातृभाषामा राज्यको सार्वजनिक सूचना पाउने हक राख्नुपर्छ । लोपोन्मुख भाषाको सूची तयार गरी राज्यले संरक्षणको नीति लिनुपर्छ । भाषा प्रतिष्ठानको गठन गर्नुपर्छ । राजवंशी लगायत अन्य भाषाहरूको संरक्षण र प्रवर्द्धन गर्नुपर्छ । नेपालको बहुभाषिकताको कदर र सम्मान गरिनुपर्छ । भाषिक विवादका कारण देशको अखण्डता नै खण्डित भएका अन्य देशका उदाहरणलाई ध्यानमा राख्नु पर्छ । समाज र नेपाललाई एकीकृत राख्ने हो भने भाषाको सम्बन्धमा कुनै विवाद हुनु हुँदैन । संविधानमा सरकारी कामकाजको भाषा यो हो भनेर कुनै पनि भाषालाई इंगित गर्नु जरूरी छैन । त्यस्तै अङ्ग्रेजी, स्पेनिस, चिनियाँ, हिन्दी भाषाको लागि हामी देशभरिका जनताका लागि औपचारिक कक्षा नै आवश्यक छ । तसर्थ अङ्ग्रेजी, हिन्दी हाम्रा लागि अन्तर्राष्ट्रिय भाषा हुन् । मैथली, भोजपुरी, धिमाल, सतार, थारू, राजवंशी आदि जनताले के बोल्ने भन्ने कुरा विदेशी सरकार र विदेशी विश्वविद्यालयले निर्णय गर्ने होइन । हिन्दीभन्दा मैथिली, अवधी, भोजपुरी नै कामकाजको भाषा मान्न सकिन्छ । नेपालमा बोलिने सबै मातृभाषाहरु राष्ट्रभाषा हुन । बहिरा नागरिकहरूले सञ्चारको लागि प्रयोग गरिने नेपाली साङ्केतिक भाषा राष्ट्रभाषा हुन् । राज्यले नेपाली साङ्केतिक भाषालाई मातृभाषासरह समान व्यवहार गर्नु पर्छ । भाषा, धर्म, संस्कृतिले सामाजिक ऐक्यबद्धता कायम गर्छ । अग्राधिकार भाषा र संस्कृतिमा हुन सक्छ तर राज्यशक्तिमा अग्राधिकार भन्नु लोकतान्त्रिक मान्यता विपरीत हुन्छ । विविध जातिको संस्कृति र सीपको लोप भएको छ । संस्कृति भनेको भाषा मात्रै होइन । सामाजिक र सांस्कृतिक परिवर्तन नगरेसम्म राजनीतिक परिवर्तनले मात्र आफ्नो उद्देश्य प्राप्त गर्न सक्दैन । आज सबैले आफ्नो भेषभूषा, भाषा, संस्कृतिको पहिचान खोजेका छन् । अहिलेको युग पहिचानको युग हो । विविधता नेपालको

गौरव हो । तर एउटै भाषा, धर्म, संस्कार, संस्कृतिलाई वढावा दिइएको छ र असमानता कायम छ, यसलाई अन्त्य गर्नुपर्छ ।

- समाजमा व्याप्त कुरीति र कुसंस्कार र सबै विभेदको अन्त्य नगरेसम्म ऐक्यबद्धता हुन सक्दैन । राष्ट्रको पहिचान र गौरव कायम राख्नको लागि धर्म, संस्कृति र भाषा आदिले योगदान पुऱ्याएका हुन्छन् । विविधतामा एकता र सार्वभौमसत्ता मजबुत गर्न सामाजिक, सांस्कृतिक ऐक्यबद्धता जरूरी हुन्छ । प्रादेशिक क्षेत्रभित्रका संस्कृतिलाई सम्मान गर्ने सम्बन्धमा स्पष्ट उल्लेख भएको छैन । धार्मिक विषयलाई पनि सामाजिक ऐक्यबद्धताको आधारको रूपमा उल्लेख गरिनुपर्छ । संस्कृतिको सन्दर्भमा चर्चा गर्दा विश्व सम्पदा सूचीमा परेका हाम्रा सम्पदाहरूको संरक्षण गर्ने कुरालाई ध्यान दिनुपर्छ । त्यसका साथै यहाँका तन्त्रसाधनाजस्ता कुराहरूको संरक्षण हुनुपर्छ ।
- दलित र महिला सबैको लागि एउटा महिला आयोग गठन गर्ने कुरा मिलेन, छुट्टै रूपमा दुई वटा आयोग हुनुपर्छ । नीतिमा राखेर हुँदैन, संवैधानिक आयोगको रूपमा स्थापना गर्नुपर्छ । राष्ट्रिय पोशाकबारे उल्लेख हुनुपर्छ । औपचारिक समारोहमा राष्ट्रिय पोशाक अनिवार्य लगाउने व्यवस्था हुनुपर्छ । पृथ्वीनारायण शाहले भौगोलिक रूपमा त एकताबद्ध गराए तर सामाजिक र सांस्कृतिक रूपमा भने एकताबद्ध हुन सकेन । विविधतामा एकता नेपालको पहिचान हो, यसको लागि सह-अस्तित्व आवश्यक छ । सबै नेपालीलाई जोड्न सक्ने साझा तत्वहरूको खोजी गरिनुपर्थ्यो । राज्य र जनताको बीच सम्बन्ध प्रगाढ बनाउने हुनुपर्छ । राष्ट्रलाई एकताबद्ध राख्ने आधार मन र भावना पनि हो । माटो र भूगोलमात्र होइन । विगतमा भूगोलको एकीकरण भए पनि भावनाको एकीकरण हुन सकेन । वर्तमान अवस्थामा विद्यमान सामाजिक अन्तर्विरोध, अन्याय र विभेदको अन्त्य गरेर मात्र ऐक्यबद्धताका आधार तयार गर्न सकिन्छ । ऐक्यबद्धता गर्ने कुरा गर्दा महिलाको विषयलाई पनि जोडदिनुपर्छ । दाइजो प्रथा, बोक्सीप्रथा, झुमाप्रथाजस्ता कुसंस्कार र कुरीति उन्मूलन गर्ने कुरो लेख्नुपर्छ । पुराना विकृति, विसंगति एवं जनता र देशका लागि काम नलाग्ने मूल्य मान्यताको अन्त्य हुनुपर्छ । देश र जनताको उन्नतिका लागि नयाँ मूल्य मान्यता र आदर्श स्थापित हुनुपर्छ ।
- लैङ्गिक दृष्टिबाट यो समितिले कुनै विषय उठाएको पाइएन । दाइजो प्रथामा प्रतिबन्ध लगाउनु पर्छ । व्यवहारमा लागू हुनुपर्छ । वृद्ध एकल पुरूषलाई पनि भत्ता दिने व्यवस्था हुनुपर्छ । सङ्घ, प्रदेश र स्थानीय सरकारमा अन्तर्जातीय, अन्तःसांस्कृतिक मान्यतालाई वढावा दिने कुरा थप्नुपर्छ । महिला आयोगको बारेमा विस्तृत चर्चा हुनुपर्छ र महिला र दलित आयोगको कुरा अन्य समितिको क्षेत्रमा पर्ने हुँदा यसबाट हटाइनुपर्छ । कानूनद्वारा व्यवस्था गरेवमोजिम भन्नेलाई हटाउनुपर्छ । विविधताभित्रबाट पनि हाम्रो राष्ट्रिय पहिचान खोज्न सकिने आधारहरु प्रतिवेदनले दिनुपर्थ्यो तर त्यो कार्य हुन सकेको पाइएन । मौलिक हक, दायित्व, नीति लगायत आयोगहरूको विषय अन्य समितिको कार्यक्षेत्रका विषय हुन्, यहाँ पनि आएको छ । आर्थिक, सामाजिक र राजनीतिक दृष्टिले पछि पारिएका अपाङ्गहरूसमेतलाई समानुपातिक समावेशी आधारमा राज्य संयन्त्रमा समावेश हुन पाउने हक हुनुपर्छ ।
- असमान सन्धि-सम्झौता खारेज हुनुपर्छ । सहअस्तित्व नस्वीकार्ने प्रवृत्तिले सामाजिक ऐक्यबद्धतामा असर पुऱ्याएको छ । सर्वधर्म राष्ट्र हुनुपऱ्यो । सबैले आफ्नो धर्म मान्न पाउने सुनिश्चितता हुनुपऱ्यो । विगतमा एउटा धर्ममात्र संरक्षण गरियो । राज्यले आर्थिक वितरणमा भेदभाव गर्दा जनताहरु सामाजिक वहिष्करणमा परेका हुन् । आर्थिक रूपमा सुदृढ बनाउनुपर्छ । अनाथ बालबालिका र सडक बालबालिकालाई शिक्षा दिई रोजगारी पनि दिइने कुरा उल्लेख हुनुपर्छ । हिंसा घटाउन जन्मकैद र मृत्युदण्ड दिने कानून ल्याउनुपर्छ । प्रान्तको सट्टा स्वायत्त गणराज्य शब्द लेख्नुपर्छ । निजी गुठीहरु राज्यले लिएको तर परम्परागत क्रियाकलाप सञ्चालनको लागि

अनुदान घटाएको हुँदा यसका लागि पर्याप्त अनुदान दिनुपर्छ । समस्याको पहिचान राम्रोसँग भएको छ तर मस्यौदा तयार गर्दा सो अनुरूप लिपिबद्ध गर्न सकेको देखिदैन । आत्मनिर्णय र अग्राधिकारको कुरा नगरेसम्म न्याय र स्वतन्त्रता कायम हुन सक्दैन । सामाजिक ऐक्यबद्धताका ४ वटा आधार छन् : सर्वनिरपेक्षता, सामाजिक र आर्थिक न्याय, अधिकारको निक्षेपण र बहुलताको पहिचान ।

- बालबालिका आयोग गठन गर्ने कुरा पनि उल्लेख गर्नुपर्छ । सामाजिक विभेद निरूपण आयोग गठन गरिनुपर्छ, नकि दलित आयोग । दलित आयोगको सट्टा दलितपरिषद्को गठन हुने कुरा उल्लेख गर्नुपर्छ । अन्तर धार्मिक र अन्तर सांस्कृतिक आयोग गठन गर्नुपर्छ । दलितको समानुपातिक प्रतिनिधित्व हुने कुरा सुनिश्चित गरिनुपर्छ । सबैको अधिकार संरक्षण गर्दा राष्ट्रियताको संरक्षण हुन्छ । श्रम गर्ने आधारमा उँचनीचको व्यवस्था छ । तसर्थ छुवाछूत हटाउन श्रमलाई सम्मान गर्ने संस्कृतिको विकास गर्नु पर्छ । सङ्घीय प्रणाली नेपालमा उपयुक्त हुँदैन । परम्पराको संरक्षण गर्ने नाममा नराम्रा परम्परा कुरीति र कुसंस्कारहरूलाई निरन्तरता दिनु हुँदैन । सामाजिक न्यायलाई सर्वसुलभ तुल्याउने कुरा उल्लेख गर्नुपर्छ । वंशवादको अन्त्य गरेर अगाडि बढ्नुपर्छ । नैतिक शिक्षा, व्यावहारिकता र मानवमूल्य महत्वपूर्ण हुन् । यी कुरालाई आउँदो संविधानमा स्थान दिइनुपर्छ । हाल गएको दुई वर्षदेखि पहिचानको द्वन्द्व बढेर गएको छ । यसको उदाहरण मधेस आन्दोलन, आदिवासी आन्दोलन हुन् । यी आन्दोलनको भावनालाई सम्बोधन गरियोस् । अर्थतन्त्रको पनि महत्वपूर्ण भूमिका हुन्छ, यसलाई पनि ध्यान दिनुपर्छ । प्राकृतिक सम्पदालाई नाश गर्ने छुट कसैलाई दिनु हुन्न । मौलिक हकलाई कानूनले सङ्कुचित गर्न सक्ने खालको व्यवस्था राखिनु हुन्न । धर्म, संस्कृतिबाट निर्मित कुरीति अन्त्य गर्ने र दण्डनीय बनाई पीडितलाई क्षतिपूर्ति दिनुपर्छ । सबैखालका जातीय विभेद अन्त्य गर्न कडा कानून तर्जुमा गरिनुपर्छ ।

अन्तमा, मा० सभापति श्री नवोदिता चौधरीले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.१.४. संवैधानिक निकायको संरचना निर्धारण समिति

संवैधानिक निकायको संरचना निर्धारण समितिको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा प्रतिवेदनमाथि संविधानसभामा २०६६ साउन १, २, ४, ५ र ६ गते भएको छलफलमाथि १५८ जना मा० सदस्यहरूले भाग लिनुभएको थियो । उक्त समितिको छलफलमा २५ घण्टा ५० मिनेट समय लागेको थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा उठेका मुख्य बुँदाहरूको सारसंक्षेप यस प्रकार छ :-

- कार्यपालिका स्वेच्छाचारी हुन नपाओस् भनी स्वतन्त्र संवैधानिक निकायहरूको व्यवस्था गरिने हो र सरकारका मुख्य अङ्गको कामलाई खवरदारी गर्न यस्ता अङ्ग बनाउने हो । जस्तो : भ्रष्टाचार नहोस् भनी अख्तियार दुरुपयोग अनुसन्धान आयोग, स्वतन्त्र रूपमा निर्वाचन सम्पन्न गर्न निर्वाचन आयोगको र निष्पक्ष रूपमा कर्मचारीको नियुक्ति गर्न लोकसेवा आयोगको स्थापना गरिन्छ । सरकारका अङ्गबाट हुने अनियमितता रोक्न पनि आयोगहरु चाहिन्छ । यिनलाई अधिकारसम्पन्न बनाइनुपर्छ । सरकारको नियन्त्रण र सन्तुलनको रूपमा नयाँ आयोगले काम गर्न सक्नुपर्छ । शक्तिपृथकीकरण र सन्तुलनको अवधारणामा आधारित भएर आयोगहरूको गठन गरिने हो । तर पनि महिला, दलित, मुस्लिम, अपाङ्ग, असक्त आयोगहरु, उनीहरूलाई मूलप्रवाहीकरण गर्न र सशक्तीकरण गर्न गठन गरिएका हुन्, जनताको पहुँच, नियन्त्रण र निगरानी हुन सक्ने गरी सरकारका संरचनाहरु निर्धारण गरिनु उपयुक्त हुन्छ ।

- आयोगका पदाधिकारीहरूको नियुक्तिको सन्दर्भमा संवैधानिक परिषद्को सिफारिशमा गर्ने प्रस्ताव आएकोमा सोको सट्टा कार्यकारिणीले नियुक्तिको सिफारिश गर्ने र जनप्रतिनिधिसभाबाट अनुमोदन गर्ने खालको व्यवस्था राख्नु उपयुक्त हुन्छ । संवैधानिक परिषद्मा भएका व्यक्तिले आफ्ना नजिकका व्यक्तिमात्र नियुक्ति गर्ने भएकाले व्यवस्थापिकाबाट नियुक्ति गर्ने व्यवस्था उचित छ । निष्पक्ष र स्वतन्त्र रूपले कार्य गर्न सक्ने, अनुभव भएको राष्ट्रिय व्यक्तित्वलाई आयोगको सदस्यमा नियुक्ति गरिनुपर्छ । आयोगहरू निष्पक्ष हुनुपर्छ । योग्य र अनुभवी व्यक्तिहरू आयोगको सदस्यमा नियुक्त हुनुपर्छ । नियुक्ति गर्दा संवैधानिक परिषद्को सिफारिशमा गर्ने पद्धति नै उपयुक्त हुन्छ किनकि त्यहाँ कार्यपालिका, व्यवस्थापिका, न्यायपालिका र विपक्षी दलका नेता पनि रहन्छन् । सबै आयोगमा सम्बन्धितक्षेत्रमा १० वर्षको अनुभव भएकालाई नियुक्ति गर्दा राम्रो हुन्छ । आयोगको सदस्यमा नियुक्ति पाउन उमेरको हद ३५ वर्ष कायम राख्नुपर्छ । पाँच वर्ष पदावधि कायम राखी पुनःनियुक्ति हुन नसक्ने व्यवस्था राख्नुपर्छ । नियुक्तिमा नागरिक सुनुवाइको व्यवस्था थप हुनुपर्छ । अख्तियार दुरूपयोग अनुसन्धान आयोगको सदस्य हरेक प्रदेशबाट एक जना रहने व्यवस्था गर्नुपर्छ । लेखापरीक्षण आयोगको सदस्यमा प्राध्यापन गरेको व्यक्ति पनि नियुक्त हुन सक्ने व्यवस्था गर्नुपर्छ । सार्वजनिक संस्थानको कर्मचारी पनि लोकसेवा आयोगबाट नियुक्त हुने व्यवस्था राख्नुपर्छ । सदस्यहरूको पुनर्नियुक्ति हुनु हुँदैन । नियुक्तिका लागि उमेर ४० वर्षको सट्टा ३५ वर्ष राख्नुपर्छ । राष्ट्रप्रमुखबाट आयोग पदाधिकारीको नियुक्ति हुनुपर्छ । नियुक्ति सन्दर्भमा धेरै शक्तिकेन्द्रहरु बनाइनु हुन्न ।
- अख्तियार दुरूपयोग अनुसन्धान आयोगमा नियुक्ति गर्दा राजनीतिबाट प्रभावित नभई स्वतन्त्र रूपमा हुनुपर्छ । अख्तियार दुरूपयोग अनुसन्धान आयोगको कार्य अनुसन्धान गर्ने प्रकृतिको भएकोले इन्जिनियरजस्ता प्राविधिक मानिस पनि प्रमुख आयुक्त हुन सक्ने व्यवस्था राखिनु हुँदैन । अख्तियार दुरूपयोग अनुसन्धान आयोगले मुद्दा चलाउँदा महान्यायाधिवक्ताको अनिवार्य राय लिने प्रावधान राखिनु हुँदैन । सेना र न्यायाधीशलाई अख्तियार दुरूपयोग अनुसन्धान आयोगको क्षेत्राधिकार बाहिर राखिनु हुँदैन । बहालवाला न्यायाधीशले भ्रष्टाचार गरेमा अख्तियारले छानविन गर्न पाउनुपर्छ । अख्तियार दुरूपयोग अनुसन्धान आयोगलाई प्रधानमन्त्रीसम्मलाई कारवाही गर्न सक्ने गरी अधिकारसम्पन्न तुल्याउनुपर्छ । मानव अधिकार आयोगलाई सेनाभित्र पनि कारवाही गर्न सक्ने गरी व्यवस्था गरिनुपर्छ । महालेखापरीक्षकबाट देखिएको वेरूजु फछ्र्यौट गर्ने र आर्थिक अनुशासन कायम राख्ने सशक्त संयन्त्रको व्यवस्था गर्नुपर्छ । वित्तीय आयोगलाई दीर्घकालीन आयोगको रूपमा स्थापना गर्नुपर्छ । सैनिक ऐनको क्षेत्राधिकारभित्रको विषयमा मानव अधिकार आयोगको क्षेत्राधिकार नरहने भन्ने उल्लेख छ । यसले आयोगको अधिकारक्षेत्रमा संकुचन ल्याएको छ । यस्तो प्रावधान राख्नु हुँदैन । मानव अधिकार आयोगलाई सामाजिक सुरक्षाका विषयमा समेत सम्बन्धित निकायबाट प्रगति लिन र बुझ्न सक्ने अधिकार दिनुपर्छ । मानवअधिकार आयोगलाई अपहेलनामा कारवाही गर्न सक्ने अधिकार दिइनुपर्छ । मानव अधिकारका सवालको लागि महासङ्घको रूपमा एउटै आयोगको स्वरूप दिई बनाउन सकिन्छ । मानव अधिकार आयोग संवैधानिक भएरपनि प्रभावकारी छैन, यस्ता आयोग गठन गर्नुको औचित्य रहँदैन ।
- सबै आयोगका सदस्यको पदावधि छ वर्ष राखेको पाइन्छ यसमा पुनर्विचार गर्नुपर्छ । आयोगहरूमा राखिएको उमेरको हद हेर्दा उदीयमान र युवा पुस्तालाई निषेध गर्ने खालको छ । माथिल्लो हद ६० वर्षसम्म राखिनु पर्नेमा ६५ वर्ष राखिएको छ । ३५ वर्ष उमेर पुगेकाले आयोगका सदस्यमा नियुक्ति पाउने र ६० वर्षसम्ममात्र कार्यरत रहने व्यवस्था हुनुपर्छ । आयोगसमक्ष उपस्थित गराउने जानकारी लिने, वकपत्र गराउने समेतका अर्धन्यायिक अधिकार

हुनुपर्छ । खानतलासी र छानविन गर्ने अधिकार हुनुपर्छ । मुद्दा चलाउने नचलाउने अधिकार महान्यायाधिवक्तालाई नै हुनुपर्छ । आयोगको संरचना हरेक प्रान्तमा हुनपर्छ । महिलाको समानुपातिक सहभागिता सुनिश्चित गर्ने अधिकार पनि आयोगमा हुनपर्छ । अपाङ्गता अधिकार सम्बन्धी संविधान र कानूनमा भएका व्यवस्थाको कार्यान्वयन भए नभएको अनुगमन गर्ने, अन्तर्राष्ट्रिय सन्धि-सम्झौता कार्यान्वयन भए नभएको प्रतिवेदन दिनेसमेतको अधिकार हुनुपर्छ ।

- आयोगहरूमात्र गठन गरेर हुँदैन महत्वपूर्ण कुरा त लोकतान्त्रिक चरित्र र आचरणको प्रदर्शन सबैबाट हुनु जरूरी छ । विगतमा भईरहेका आयोगहरूको निर्णयहरु र सिफारिश प्रभावकारी कार्यान्वयन भए नभएको भन्नेबारेमा अध्ययन र मूल्याङ्कन हुनुपर्थ्यो त्यो भएको छैन । संवैधानिक निकायमा कार्य गर्ने कर्मचारीहरूको लागि छुट्टै कानूनद्वारा व्यवस्थित गरिनुपर्छ । सरकारको प्रभावमा उनीहरु पर्नु हुँदैन । आयोगहरु धेरै गठन गरियो भने एकातर्फ सरकारका कार्यहरु प्रभावकारी हुँदैनन् भने अर्कोतर्फ आयोगका सिफारिशहरु कार्यान्वयन हुन नसक्ने स्थिति रहन्छ ।
- संवैधानिक आयोगमा निजामती कर्मचारी नै राखिने व्यवस्थाले प्रभावकारी हुन सकेको अवस्था छैन । आयोगमा आयोगकै कर्मचारी रहने व्यवस्था हुनुपर्छ । यी निकायहरूको काम सम्बन्धमा गुनासो सुन्ने व्यवस्थाका लागि अम्वुड्सम्यान राखिनुपर्छ । लोकसेवा आयोगले नै प्रदेश र स्थानीय कर्मचारीको नियुक्तिको सिफारिश गर्ने व्यवस्था हुनुहुन्न । त्यसको लागि त्यहीस्तरमा छुट्टै निकाय हुनुपर्छ । यी निकायमा सर्वसञ्चित कोषबाट व्ययभार हुने व्यवस्था राख्नुपर्छ । केही आयोगहरूलाई छाता आयोग अन्तर्गत राख्न सकिन्छ । केन्द्र, प्रदेश र स्थानीय सरकार बीच राजस्व बाँडफाँड गर्नेसमेत छुट्टै आयोग हुनुपर्छ । आयोगहरूले उजुरी लिने निकायको रूपमा व्यवस्थित गरिनुपर्छ । यसो भएमा उद्देश्य पूरा हुन सक्छ । निर्वाचनप्रणालीमा जनसंख्याको आधारमा प्रतिनिधित्व गराउने व्यवस्था गरे आयोग धेरै चाहिन्छ भन्ने लाग्दैन । अधिकार र प्रतिनिधित्व सुनिश्चित गराए दलित, मुस्लिम, जनजाति लगायतका आयोग चाहिन्छ भन्ने लाग्दैन । एउटै आयोग बनाए हुन्छ । लोकसेवा आयोग प्रदेशस्तरमा हुने नहुने स्पष्ट हुनुपर्छ ।
- मुस्लिम आयोगको व्यवस्था गरिएको तर अरू धार्मिक समुदायको आयोगको व्यवस्था छैन । अतः यस्तो व्यवस्था राख्नु उपयुक्त हुँदैन । देश सङ्घात्मक संरचनामा गएपछि यति धेरै आयोगहरु चाहिन्छन् जस्तो लाग्दैन । दलित, आदिवासी जनजाति, अपाङ्गता, अल्पसंख्यक, मधेसी र मुस्लिम आयोगहरूलाई अधिकारसम्पन्न र कामकाजी आयोग बनाउनुपर्छ । धेरै आयोगहरु बनाउँदा राज्यको स्रोत-साधनलाई पनि हेर्नु पर्छ । आयोग बनाएरमात्र समस्या समाधान हुने होइन । आयोग साना र प्रभावकारी होउन् र अधिकार पनि सुनिश्चित होस् । आयोगहरूको स्वतन्त्रता र निष्पक्षता कामय गर्ने कुरामा ध्यान दिनुपर्छ । आयोगहरु लाई संवैधानिक, कानूनी र तदर्थ गरी ३ प्रकारमा वर्गीकरण गरिनुपर्छ । सबै कुरा संविधानमा राख्न सकिंदैन । कानूनबाट पनि गर्नुपर्ने हुन्छ । अस्थायी प्रकृतिका आयोगलाई संविधानमा राख्नु पर्दैन । जनप्रतिनिधिसभालाई शक्तिसम्पन्न तुल्याई अन्य आयोगलाई यसै सभाको मातहत रहने गरी व्यवस्था गर्नुपर्छ । जनताबाट झण्डै सयवटा आयोग हुनुपर्ने सुझाव आएका थिए, ११ वटा आयोग प्रस्ताव गरेको उपयुक्त छ । आयोगका सदस्यहरूको योग्यतालाई स्नातकोत्तर हुने गरी समानस्तर कायम गरिनुपर्छ ।
- वर्तमान अवस्थामा कायम रहेका ५ वटा आयोगहरु पनि कामयावी र प्रभावकारी रूपले कार्यसम्पादन गर्न नसकी रहेको अवस्थामा अरू बढी आयोग थपिनुको औचित्य के हो प्रष्ट हुनपर्छ । सरकारबाट प्राप्त गर्न नसकेको कुरा आयोगहरूका माध्यमबाट पनि प्राप्त गर्न सकिन्छ । सरकारको कामकारवाहीलाई कमजोर तुल्याउने गरी आयोग गठन गरिनु हुँदैन । सम्बन्धित वर्ग समुदायको अवस्थामा सुधार भएपछि ती सम्बन्धित आयोग नरहने

व्यवस्था गर्नुपर्छ । जुन वर्ग र समुदायको आयोग बनाइएको छ तिनको हितको लागि काम गरेका व्यक्तिहरु नियुक्ति हुने व्यवस्था गरिनुपर्छ । सरकार जनताप्रति उत्तरदायी भए र जनताको लागि काम गरे धेरै आयोग नै चाहिन्न । यहाँ सरकार उत्तरदायी नभएकाले यी धेरै आयोग प्रस्तावित भएका हुन् । सूचना आयोगलाई संवैधानिक मान्यता दिनुपर्छ । यसको हैसियतबारेमा प्रतिवेदन मौन छ । यसमा गम्भीर रूपमा विचार गरियोस् । निर्वाचन आयोग, अख्तियार दुरूपयोग अनुसन्धान आयोग, लेखापरीक्षण आयोग, मानव अधिकार आयोग, महिला आयोग, दलित आयोग स्थापना गरिनु पर्याप्त हुन्छ ।

- समाजमा उत्पन्न हुने द्वन्द्वसमाधानको लागि विभिन्न आयोगहरूको गठन गरिने हो । कार्यपालिकाले दैनिक कार्यसम्पादन गर्दा ध्यान पुऱ्याउन नसक्ने विषयहरूलाई समाधान गर्न आयोग जरूरी छ । केन्द्र र प्रदेशमा अलग-अलग आयोग रहने हो भने कार्यक्षेत्र स्पष्टसँग उल्लेख गरिनुपर्छ । प्रान्तको अधिकारको चर्चा गर्दा केन्द्रबाट कानूनबमोजिम दिइने कुरा गरिन्छ जुन स्वायत्तताको मान्यता विपरीत हुन्छ । ठाउँ ठाउँमा रहेको राष्ट्रपति भन्ने शब्दको सट्टा राष्ट्राध्यक्ष शब्द राखिनु पर्ने । योजना आयोगबाहेक अन्य आयोगका सदस्यहरु संवैधानिक परिषद्को सिफारिशमा राष्ट्रपतिबाट नियुक्ति हुने व्यवस्था हुनुपर्छ । मानव अधिकार आयोगमा पनि दलको सदस्यहरु नहुने व्यवस्था होस् । हाल कायम रहेका ५ वटा आयोग र थप गरिएका ६ वटा आयोगको उद्देश्य र कार्यप्रकृतिमा व्यापक अन्तर छ । ५ वटा आयोगलाई स्वतन्त्र, निष्पक्ष र सरकारी हस्तक्षेपबाट मुक्त राख्नु पर्छ । यस्ता आयोगहरूमा समानुपातिक र समावेशी नियुक्ति संम्भव हुन्छ जस्तो लाग्दैन, यस्तो व्यवस्था नराखौं । परम्परावादी शैलीमा नै आयोग गठनको प्रस्ताव गरिएको छ । सम्भ्रान्त वर्गको व्यक्ति नै आयोगको सदस्य हुने हो भने महिला वर्गको हित हुन सक्दैन ।
- प्रस्तावनामा वृद्ध, बालबालिका र तेस्रो लिङ्गी भन्ने शब्दहरु थपिनुपर्छ । आयोगको अधिकार र कर्तव्यमा स्पष्टताका साथ लेखिनु पर्छ । आयोगहरु राजनीतिमुक्त हुनुपर्छ । सङ्घीयतामा जाने अवधारणाप्रति असहमति छ । जनजाति, भाषा, धर्मका आधारमा आयोग गठन गरिनु हुँदैन । छाता आयोग बनाएर विभिन्न विषयको महाशाखा बनाउन सकिन्छ । प्रस्ताव गरिएका ११ वटा आयोग गठन गर्ने हो भने देशलाई ठूलो आर्थिक भार पर्दछ । आयोगको अध्यक्षको पुनर्नियुक्ति हुन नसक्ने व्यवस्था राख्नुपर्छ । हरेक आयोगहरूलाई जनप्रतितिधि सभाको मातहतमा राख्नुपर्छ । समानान्तर शक्ति केन्द्रको रूपमा रहने गरी आयोग गठन गर्नु हुँदैन । आयोगहरु आवश्यकताको आधारमा राखिनुपर्छ । आयोगका कामकारवाहीको अनुगमन गर्ने व्यवस्था पनि राख्नुपर्छ । हाल कायम रहेका ५ वटा आयोग र महिला आयोग संवैधानिक बनाई अरू आयोगहरूलाई कानूनी आयोग बनाउनु उपयुक्त हुन्छ । नेपाल उत्पीडितहरूको देश हो । सबैका धर्म, भाषा, संस्कृतिको संरक्षण र संम्वर्द्धन जरूरी छ । सम्बन्धितक्षेत्रको विशेषज्ञलाई आयोग प्रमुखमा नियुक्ति गर्नुपर्छ ।

अन्तमा, मा० सभापति श्री गोविन्द चौधरीले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.१.५. व्यवस्थापिकीय अङ्गको स्वरुप निर्धारण समिति

व्यवस्थापिकीय अङ्को स्वरूप निर्धारण समितिको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा प्रतिवेदनमाथि संविधानसभामा २०६६ साउन २३, २६, २७, २८ र ३२ गते भएको छलफलमा १२१ जना मा० सदस्यहरूले भाग लिनुभएको थियो । उक्त समितिको छलफलमा २८ घण्टा १० मिनेट समय लागेको

थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा उठेका मुख्य बुँदाहरूको सारांश यसप्रकार रहेको छ :-

- राष्ट्रप्रमुख राष्ट्रपति कि प्रधानमन्त्री हुने यसमा स्पष्ट हुनुपर्छ । सङ्घीय जनप्रतिनिधिसभालाई शक्तिशाली बनाइनु पर्छ । सबै कुराहरु जनताद्वारा निर्वाचित प्रतिनिधि संस्थाको नियन्त्रणमा हुनुपर्छ । व्यवस्थापिकाको नाम सङ्घीय जनप्रतिनिधिसभा नामाकरण गरिनु उपयुक्त हुन्छ । राज्यका सबै निकाय र आयोगहरु जनप्रतिनिधिसभामातहत राखिनुपर्छ । यसो भएमा मात्र जनप्रतिनिधिसभा वास्तवमा सार्वभौम हुन सक्छ । व्यवस्थापिकामा प्रतिनिधित्व गर्ने सदस्यको संख्या सकेसम्म कम राखिनु उपयुक्त हुन्छ । १५१ सदस्यीय व्यवस्थापिका रहने कुरा ठीक छ । तर हाल कायम रहेका जिल्लाहरूमध्ये कम जनसंख्या रहेका जिल्लाहरूबाट प्रतिनिधित्वको सुनिश्चितता गर्न सकिन्छ कि सकिदैन यसतर्फ ध्यान दिइनुपर्छ । जनसंख्याको अतिरिक्त, भौगोलिक, जातीय, भाषिक आदि पहिचानको आधारमा समेत प्रतिनिधित्वको सुनिश्चितता हुनुपर्छ ।
- व्यवस्थापिकाले कार्यपालिका र न्यायपालिकालाई नियन्त्रण, निगरानी एवं शक्तिसन्तुलन राख्नको लागि कानूनी व्यवस्था गर्नुपर्छ र व्यवस्थापिका सदस्यले भ्रष्टाचार, राष्ट्रघात वा जनविरोधी काम गरे प्रत्याह्वान गर्ने कानूनी व्यवस्था गर्नुपर्छ । प्रतिनिधिसभामा निर्वाचित प्रतिनिधित्वको हुने बन्दसूची राष्ट्रिय आधारमा हुनुपर्छ, प्रदेशको आधारमा होइन । प्रारम्भिक मस्यौदापत्रमा संसद शब्दको ठाउँमा व्यवस्थापिका सदन राख्ने किनकि संसद शब्दले जननिर्वाचित सदस्यको अपमान भएकोछ । अब बन्ने संसदका सदस्यलाई विधिनिर्माणमा मात्र लगाउने व्यवस्था गर्नु राम्रो हुन्छ । केन्द्रमा दुई सदनात्मक र प्रदेशमा एक सदनात्मक व्यवस्थापिका हुनुपर्छ । उत्पीडित जाति, दलित, महिला, मधेसी, सीमान्तकृत सबैलाई समेटेर एउटै सदनमा लैजानु पर्दछ । त्यसो भएमा सबै वर्गको प्रतिनिधित्व हुन सक्छ । राष्ट्रप्रमुख र सरकारप्रमुख एउटै व्यक्ति हुने व्यवस्था गरिनु पर्दछ । प्रधानमन्त्रीको चयन कसरी हुने हो ? भन्नेबारेमा केही चर्चा भएको भए राम्रो हुन्थ्यो ।
- सभामुख र उपसभामुखलाई बहुमतबाट हटाउन सक्ने व्यवस्था राख्नुपर्छ । राष्ट्रियसभाको अध्यक्ष उपराष्ट्रपतिलाई बनाइनुपर्छ । सभामुख, उपसभामुख, अध्यक्ष, उपाध्यक्ष लिङ्गको दृष्टिबाट फरक हुनुपर्ने स्वागत योग्य हुँदाहुँदै पनि यसमा फरक-फरक दल र फरक-फरक प्रदेशबाट हुनुपर्ने व्यवस्था समेत राखिनुपर्छ । एक कार्यकाल महिला भए अर्को कार्यकाल पुरूष अनि फेरि महिला हुने गरी सभामुख, उपसभामुख, अध्यक्ष, उपाध्यक्षको व्यवस्था गर्नुपर्छ । सभामुख, उपसभामुख, राष्ट्रियसभाको अध्यक्ष, उपाध्यक्ष महिला र पुरूष हुने व्यवस्था ठीकै छ । सभामुख र उपसभामुख एउटै दलबाट नहुने व्यवस्था गरिनुपर्छ ।
- ७६ जना प्रतिनिधि जनसंख्याको आधारमा चुनिने व्यवस्था राखिनुपर्छ । प्रदेशहरूलाई आत्मनिर्णयको अधिकार सहितको स्वायत्तता दिइनुपर्छ । प्रदेशको व्यवस्थापिकामा बढीमा ३५ सदस्य रहने भनिएको छ, तर न्यूनतम कति हुने भन्ने पनि तोकिनुपर्छ । प्रदेशबाट राष्ट्रियसभामा प्रतिनिधित्व गराउँदा पनि जनसंख्याको आधारमा नै हुनुपर्छ । स्थानीय स्वायत्त शासन सहितको एकात्मक शासन व्यवस्था हुनुपर्छ । प्रदेशमा संवैधानिक अङ्ग हुनेभए संचित कोषमा व्ययभार हुनुपर्ने व्यवस्था राखौं । प्रदेश व्यवस्थापिकामा यसको आकार अनुसार न्यूनतम ३५ देखि १०० सम्म सदस्य हुनुपर्छ ।
- प्रदेशसभाको सदस्य हुने योग्यतामा नेपाली नागरिक हुनुपर्ने व्यवस्था छुटेको छ । शैक्षिक योग्यतामा कम्तिमा स्नातकतहको शिक्षाप्राप्त भनी योग्यता तोक्न आवश्यक छ । सदस्यको अयोग्यता सम्बन्धमा निर्वाचन आयोगले निर्णय गर्ने व्यवस्था राख्नु उपयुक्त हुन्छ । नैतिकताको

आधारमा फौज्दारी अपराधमा सजाय पाएकोलाई सदस्य हुन नपाउने गरी सदस्यको लागि योग्यता थप्नुपर्छ । प्रदेशसभाका सदस्यहरु नेपालको नागरिक हुनुपर्ने भन्ने कुरा थप गर्नुपर्ने । नेपाली नागरिक जुनसुकै प्रदेशमा पनि चुनाव लड्न पाउने गरी प्रदेशमा बसेको हुनुपर्ने भन्ने व्यवस्था हटाउनुपर्छ । सदस्य हुने योग्यतामा अङ्गीकृत नागरिकता प्राप्त गरेको २५ वर्षपछि मात्र हुन सक्ने व्यवस्था थप गर्नुपर्छ । जघन्य अपराध गरेमा व्यवस्थापिकाको सदस्यता खारेज हुने व्यवस्था हुनुपर्छ । राज्य प्रदेशमा विभाजन भई सङ्घीयतामा गएपछि धेरै प्रतिनिधि कायम गर्दा देशको अर्थतन्त्रले धान्न सक्दैन ।

- बहुपदीय समानुपातिक प्रत्यक्ष निर्वाचनप्रणाली अपनाउनु उपयुक्त हुन्छ । एउटा सदनका प्रतिनिधि प्रत्यक्ष रूपमा जनताबाट निर्वाचन हुने व्यवस्था गर्नु उचित हुन्छ । दुई किसिमको भन्दा एकै किसिमले निर्वाचित हुने प्रतिनिधिको व्यवस्था गर्नु उचित हुन्छ । महिलाको एकतिहाई प्रतिनिधित्व सुनिश्चित भए पनि प्रत्यक्ष निर्वाचनतर्फ कति उम्मेदवारी हुने भन्नेमा सुनिश्चित गर्न सकेको पाइएन । लिङ्ग तटस्थ शब्द प्रयोग गरेर जानुपर्छ । प्रत्यक्ष निर्वाचन हुने प्रतिनिधिको संख्या २४० जना हुनुपर्छ । जसले सबैको प्रतिनिधित्व गर्न सक्छ । दुई सदनात्मक प्रादेशिक व्यवस्थापिका हुनुपर्दछ । विधानसभा ५१ र जातीयसभा २७ सदस्य हुनुपर्छ । सङ्घीय एकाइमा एक सदनात्मक विधायिका रहने हुनुपर्छ । ५१ हजार जनसंख्या बराबर १ सदस्य कायम गरी सदस्य संख्या निर्धारण गरिने गर्नु पर्छ । प्रस्तावित मस्यौदा र अवधारणापत्रलाई साझा सहमतिको दस्तावेज बनाइनु पर्दछ र राज्यको पुनर्संरचना नभई यहाँबाट प्रतिनिधित्व हुने सदस्य संख्या तोक्न कठिन भएको छ ।
- व्यवस्थापिका जनताको सार्वभौमसत्ताको प्रयोग गर्ने महत्वपूर्ण अङ्ग भएकोले त्यहाँ सबै किसिमका विषयमा छलफल गर्न पाउने वातावरण बनाउनुपर्छ । व्यवस्थापिकालाई खासखास विषयहरु जस्तै : राजनीतिक विषयहरूमा संवैधानिक पदसँग जोडिएको विषय र संविधानसँग बाझिए/नबाझिएको विवादमा संविधानको व्याख्या गर्ने अधिकार रहनुपर्छ । कार्यकारी प्रमुखलाई संसद विघटन गर्ने अधिकार दिनु हुँदैन । यसको गलत प्रयोग हुन सक्ने संभावना रहन्छ । विधायिकाले कानूनको व्याख्या गर्ने व्यवस्था गर्ने हो भने स्वतन्त्र न्यायपालिका र कानूनको शासनमाथि प्रहार हुन जान्छ । प्रतिनिधिसभाको कार्यकाल ४ वर्ष हुनुपर्छ । यसको विघटन हुन नसक्ने व्यवस्था हुनुपर्छ । एक व्यक्तिले जनप्रतिनिधिसभा विघटन गर्न पाउने व्यवस्था राखिनु हुँदैन । अर्थ विधेयक प्रतिनिधिसभामा मात्र पेश गर्दा प्रतिनिधिसभा विघटन भए राष्ट्रियसभामा विधेयक पेश गर्न पाउने र राष्ट्रियसभाले दिएको सुझाव प्रतिनिधिसभाले मान्नु पर्ने बाध्यात्मक व्यवस्था गर्नुपर्छ । माथिल्लो सभा विविधतालाई समेट्ने गरी जातीयसभाको रूपमा बनाउनु पर्दछ । यसमा तल्लो सभामा प्रतिनिधित्व हुन नसकेका वर्ग र जातिलाई लैजाने र प्राकृतिक स्रोतको बाँडफाँड र प्रदेश बीचका विवाद हेर्ने लगायतका कार्य दिनु पर्दछ ।
- तल्लो सदनले सरकारको नीतिगत प्रश्नमा केन्द्रित हुने र माथिल्लो सदनले सरकारका नियुक्ति लगायत कार्यान्वयनका कुरालाई हेर्ने गरी व्यवस्था गर्नु पर्छ । प्रदेश-प्रदेश बीचका विवाद सुल्झाउने थलो माथिल्लो सदनलाई बनाउन सकिन्छ । प्रतिनिधिसभा र राष्ट्रियसभाको सदस्य हुन शैक्षिक योग्यता तोकिनुपर्छ । विशेषज्ञता विज्ञताको आधारमा राष्ट्रियसभामा चुनिनुपर्छ । राष्ट्रियसभामा दलितको प्रतिनिधि उल्लेख छैन । कम्तिमा १५% सदस्यमा दलितको प्रतिनिधित्व गराउनुपर्छ । मस्यौदामा स्थानीयस्तरको ठोस खाका आएको छैन । स्थानीयतहलाई अधिकार प्रत्यायोजन गर्नु पर्दछ । राजनीतिक प्रकृतिका विषयहरूमा बहसमा बन्देज लगाइनु हुँदैन । यसो हुँदा नागरिक सर्वोच्चता वा लोकतन्त्रकै प्रतिकूल हुन्छ ।
- शक्तिपृथकीकरणको नाममा कुनै पनि निरङ्कुशता स्वीकार्य हुँदैन । हरेक अङ्गहरूमा जनताले अङ्कुश लगाउन पाउनु पर्दछ । शक्तिपृथकीकरण र शक्तिसन्तुलनको दृष्टिबाट वहसमा

बन्देज लगाउने व्यवस्था गरिएको हो । अदालतमा विचाराधीन सबै खाले मुद्दामा नभई केही खासखास मुद्दाहरूमा संसदमा छलफल गर्न पाइने गरी व्यवस्था गर्न सकिन्छ । संविधानको व्याख्या सर्वोच्च अदालतबाट नै हुनुपर्छ । यसो नहुँदा मनलागि व्याख्या हुने अवस्था आउँछ र अराजकता सिर्जना हुन्छ । न्यायलाई प्रभावपार्ने गरी अथवा न्यायपालिकालाई प्रभावित गर्ने गरी नजीर बनाउनु हुँदैन । सांसदहरूको अयोग्यता सम्बन्धी विवाद प्रधानन्यायाधीशले नै हेर्नुपर्छ । प्रधानन्यायाधीशले पुनः तोक्ने गरी अधिकार दिनु हुँदैन । व्यवस्थापिकालाई संविधानको व्याख्या गर्न दिइनु शक्तिपृथकीकरणको सिद्धान्त प्रतिकूल हुनजान्छ । केन्द्र र प्रदेश पछि जिल्लाको संरचना कस्तो हुने ? भन्नेबारेमा प्रतिवेदनमा केही उल्लेख भएको पाइदैन । स्थानीय सरकार तोकिए बमोजिम निर्धारण हुने भनिएको छ । यो सङ्घ वा केन्द्रले नभई प्रदेशले निर्धारण गर्ने भन्नुपर्छ । राष्ट्रपति, उपराष्ट्रपति, सभामुख, उपसभामुख, प्रधानमन्त्री, उपप्रधानमन्त्री, प्रदेश मुख्यमन्त्री हुनका लागि अङ्गीकृत नागरिकता प्राप्त गरेको २० वर्षपछिमात्र हुन सक्ने व्यवस्था गर्नु उपयुक्त हुन्छ । अपाङ्गता भएका व्यक्तिहरु र यौनिक अल्पसंख्यकहरूको प्रतिनिधित्व गराउने कुरा छुटेको छ त्यसलाई पनि समावेश गरिनुपर्छ ।

- बहुप्रतिनिधित्वको आधारमा चुनिने व्यवस्थाले जनता र प्रतिनिधि बीचको प्रत्यक्ष सम्बन्धलाई खण्डित तुल्याउँछ । मतदाता र प्रतिनिधि बीच प्रत्यक्ष सम्बन्ध हुनुपर्छ । मताधिकार दिने उमेर सम्बन्धमा अन्तर्राष्ट्रिय मापदण्ड पनि विचार गरौं । अरू प्राविधिक कुरापनि विचार गर्नुपर्छ । सहमति गरेर जान सकिन्छ । मताधिकार १६ वर्ष उमेर पुगेको व्यक्तिलाई दिनुपर्छ र कतिपय मा० सदस्यले मताधिकारको उमेर १८ वर्ष नै हुनुपर्छ भनिएको छ । साथै व्यवस्थापिकाको सदस्य हुने उमेर पनि घटाएर युवा पुस्तालाई अवसर दिनुपर्छ । विदेशमा रहेका नेपालीहरूलाई पनि मत दिने अधिकार हुनुपर्छ । नागरिकता दिने र मतदान गर्ने उमेर एउटै राख्नुपर्छ ।
- बढीमा एक हप्ताभित्र सभामुख, उपसभामुख चयन गर्ने व्यवस्था हुनुपर्छ । सभा नहुँदा सभामुख राख्ने व्यवस्था हुनु हुँदैन । सदस्यको आचारसंहिता बनाउनुपर्छ । राजनीतिक अन्तर्वस्तु भएमा वा ५०% सदस्यले चाहेमा सदनमा वहस गर्न पाउने हुनुपर्छ । निर्धारित समयमा चुनाव नभएमा स्वतः संसद ब्युँतिने व्यवस्था गर्नुपर्छ ।
- बहुप्रतिनिधि व्यवस्था कहींपनि नभएकाले सहमत हुन सकिएन । विघटन सम्बन्धी व्यवस्था राखिनु पर्दथ्यो । विधायिकाको अधिवेशन प्रारम्भ र अन्त्य निश्चित गर्नुपर्छ । हाम्रो मौलिकतामा आधारित भएर संविधान लेख्नुपर्छ । सबै जाति, भाषा, धर्म, लिङ्गको प्रतिनिधित्व गराउने सुनिश्चितता हुनुपर्छ । युवाहरूको प्रतिनिधित्व पनि सुनिश्चित गरिनुपर्छ । संचितकोषबाट राष्ट्रिय महिला आयोगको व्ययभार भुक्तानी हुनुपर्दछ । यस प्रतिवेदनले विभिन्न जनआन्दोलनलाई समेट्न सकेको छैन र गणतन्त्रको परिणामलाई आत्मसात् गर्न सकेको छैन । यो यथास्थितिवादी छ । नीति र कार्यक्रम राष्ट्रपतिले होइन निर्वाचित प्रधानमन्त्रीले ल्याउन सक्ने व्यवस्था हुनुपर्छ । सङ्घीयतामा जाँदा हाल विद्यमान जिल्ला, गाउँ, नगरको संरचना के हुने स्पष्ट हुनुपर्दछ । कार्यसञ्चालन समितिमा महिलाको सहभागिता ५०% हुनुपर्छ ।

अन्तमा, मा० सभापति श्री रमेश रिजालले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.१.६. न्यायप्रणाली सम्बन्धी समिति

न्यायप्रणाली सम्बन्धी समितिको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा प्रतिवेदन, २०६६ माथि संविधानसभामा २०६६ भदौ २८, २९, ३०, ३१ र असोज १ गते भएको छलफलमा १३१ जना मा० सदस्यहरूले भाग लिनुभएको थियो । उक्त समितिको छलफलमा २७ घण्टा ४५ मिनेट समय लागेको

थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा उठेका मुख्य बुँदाहरूको सारांश यस प्रकार छ :-

- न्यायाधीशको पुनर्नियुक्तिले नयाँ प्रतिभाहरूलाई मौका प्रदान गर्दछ । नेपाल बारको धनकुटा परिषद्ले पनि पुनर्नियुक्ति हुनुपर्छ भनेर प्रस्ताव पारित गरेको थियो । नयाँ संविधान लागू भएपछि ३ महिनाभित्र पुनर्नियुक्ति हुनुपर्ने व्यवस्थाले न्यायालयमा अस्थिरता पैदा गर्छ । सङ्क्रमणकाल सम्बन्धी व्यवस्था संवैधानिक समितिको क्षेत्रभित्र पर्ने हो । न्यायालयमा भ्रष्टाचार विसङ्गति र विकृति छ । राज्यको पुनर्संरचना गर्ने क्रममा यसको अन्त्य गरिनुपर्छ । पुनर्नियुक्तिले यसलाई स्वच्छ बनाउन सकिन्छ । यसको साथै न्यायपालिकालाई समावेशी तुल्याउनको लागि पनि पुनर्नियुक्ति जरूरी छ । नयाँ संविधान जारी भएको ३ महिनाभित्र न्यायाधीशको पुनर्नियुक्ति हुने व्यवस्था राख्नु हुँदैन । २०४७ सालको संविधान जारी भएपछि पनि न्यायाधीशको पुनर्नियुक्ति भएको छ । वर्तमानमा पनि पुनर्नियुक्ति गर्नुपर्छ । प्रधानन्यायाधीश, न्यायाधीशहरूमध्येबाट र बाहिरबाट पनि गर्न सकिने प्रावधान राख्नुको आशय बाहिरका योग्य र सक्षम व्यक्तिलाई पनि गर्न सकियोस् भन्ने हो । न्यायाधीशको अनुभव नभएको व्यक्ति प्रधानन्यायाधीश हुन उपयुक्त हुँदैन । न्यायाधीश नियुक्तिमा समानुपातिक समावेशीतालाई स्वीकार गरिनुपर्छ । न्यायाधीशको नियुक्तिको संयन्त्र खुला रूपको हुनुपर्छ । एकात्मक नभई समावेशी प्रकारको हुनुपर्छ । खुला रूपले प्रतिस्पर्धा गराएर गर्नुपर्छ ।
- मुख्यन्यायाधीश र अन्य न्यायाधीशहरूको पदावधि कम भयो सो बढाउनु पर्छ । न्यायाधीशहरूको नियुक्ति कुनै पनि सम्पर्क र सम्बन्धको आधारमा गरिनु हुँदैन । बरू न्यायसेवामा काम गरी अनुभव हासिल गरेका व्यक्तिलाई नियुक्ति गरिनुपर्छ । प्रधानन्यायाधीशको पदमा नियुक्ति हुने व्यक्ति नेपाली नागरिक हुनुपर्ने कुरा योग्यतामा राखिनुपर्छ । न्यायाधीशको पदमा नियुक्ति पाउने व्यक्तिले राजनीतिज्ञको मुख हेरेर निर्णय गर्नुपर्ने अवस्था भयो भने स्वतन्त्र न्याय हुँदैन । अतः न्यायाधीशको नियुक्ति र बर्खास्तगी गर्ने कार्य एउटा स्वतन्त्र निकायबाट हुनुपर्छ नकि व्यवस्थापिकाबाट । न्यायाधीशको पदावधि समाप्त नभएसम्म सेवाको सुरक्षा हुनुपर्छ । प्रान्तबाट मात्रै न्यायाधीश नियुक्ति हुँदा समावेशी सिद्धान्तको घाँटी रेटिन्छ । उनीहरु अन्यत्र सरूवा हुन सक्ने अवस्था रहन सक्दैन । उनीहरु माथिल्लो तहमा जाने बाटो रोकिन्छ । उनको वृत्ति विकासमा अवरोध आउँछ । यसरी सक्षम न्यायाधीशको कल्पना गर्न सकिन्न । सङ्घीय संरचनामा प्रधानन्यायाधीशको भूमिका बढेर जान्छ । त्यसैले अनुभवी र दक्ष प्रधानन्यायाधीश आवश्यक हुन्छ । बाहिरबाट प्रधानन्यायाधीश नियुक्ति गर्नु हुँदैन । विगतको प्रधानन्यायाधीशको नियुक्ति बढुवा प्रकृतिको थियो जुन गलत थियो, यसलाई सच्याउँदै प्रधानन्यायाधीशको नियुक्ति गर्ने कुरा सुनिश्चित गरेको छ र बाहिरबाट पनि नियुक्ति गर्न सकिने व्यवस्थाले नयाँ ढोका खोलेको छ ।
- प्रधानन्यायाधीश नियुक्ति गर्ने हालको संवैधानिक परिषद्मा कार्यकारिणी न्यायपालिका, व्यवस्थापिका र विभिन्न पार्टीको प्रतिनिधित्व रहेको छ जुन उपयुक्त छ । यसले योग्यताको आधारमा चयन गर्न सक्छ । केन्द्रमा न्यायाधीश पदमा २५% निर्वाचित र ७५% पदोन्नतिबाट हुनुपर्छ । मतदाता कानूनले निर्धारण गरे बमोजिम हुनुपर्छ । प्रदेशमा न्यायाधीश पदमा ५०% निर्वाचित र ५०% पदोन्नतिबाट गरिनुपर्छ । वर्तमानमा कायम रहेको न्यायपरिषद् कतै पनि उत्तरदायी नभएकोले त्यसको सट्टा व्यवस्थापिकामा न्यायिक समिति कायम राखी यसै संस्थाले न्यायाधीशको नियुक्ति गर्ने प्रस्ताव गरिएकोले न्यायालय जनउत्तरदायी हुन्छ । संसारमा ३ तवरले न्यायाधीशको नयाँ नियुक्ति हुन्छ । जापान र क्यानडामा क्याबिनेटले नियुक्ति गर्छ, अमेरिकामा राष्ट्रपतिले र राज्यमा चुनाव नै हुन्छ । व्यवस्थापिकाबाट पनि हुन्छ तर

संसदबाट धेरै प्रतिनिधि हुन्छन् । बहुसंस्थागत प्रक्रियाबाट नियुक्ति हुने पनि छ जस्तो जर्मनी, स्विट्जरल्याण्ड आदि । त्यहाँ अधीनायकवादको कुरा उठ्दैन ।

- व्यवस्थापिकासभाबाट न्यायाधीश नियुक्ति हुनु नै वैज्ञानिक र वस्तुवादी हुन्छ । सोझै प्रधानन्यायाधीश नियुक्ति गर्ने व्यवस्था जुन गरिएको छ । यसले समावेशी र समानुपातिक प्रतिनिधित्वको कुरा हुन सक्दैन । सोझै नियुक्ति हुँदा राजनीतिक आग्रहबाट नियुक्ति भएको न्यायालय धराशायी हुन जान्छ । न्यायिक संस्कृतिको अनुभव भएको व्यक्ति प्रधानन्यायाधीश नियुक्ति हुन उपयुक्त हुन्छ । राजनीतिक केन्द्रको रूपमा रहेको व्यवस्थापिकाबाट प्रधानन्यायाधीश र न्यायाधीश नियुक्ति हुँदा न्यायालय स्वतन्त्र र सक्षम हुन सक्दैन । यसबाट हुनसक्ने दुष्परिणामको आँकलन गर्नु जरूरी छ । यस्तो व्यवस्था न्यायिक स्वतन्त्रताको सिधै विपरीत हुन्छ । एकै निकायले नियुक्ति र वर्खास्ती गर्नु प्राकृतिक न्यायको सिद्धान्त विपरीत हुन्छ । न्यायालय कार्यकारी र विधायिकाको हस्तक्षेपमुक्त हुन सक्दैन । न्यायालय स्वतन्त्र र सक्षम हुन सक्दैन । शक्तिसन्तुलन र नियन्त्रण विपरीत हुन्छ । बहुमतप्राप्त दलका समर्थकको केन्द्रमात्र हुन्छ । नियुक्तिमा न्यायपरिषद् र संवैधानिक परिषद्लाई विश्वकै नमुना र अनुपम संयन्त्रको रूपमा लिइएको छ । यसलाई अन्य देशहरूले पनि अनुसरण गरेका छन् । असल र राम्रा कुरालाई भत्काउन सकिन्न ।
- प्रान्तीय न्यायाधीश प्रान्तीयसभाले गर्दा पनि जटिलता हुन्छ । एक प्रान्तको न्यायाधीश अर्को प्रान्तमा जान सक्छ सक्दैन । एक प्रान्तको न्यायाधीश अर्कोमा जान पाउनुपर्छ । नत्र उ कसरी सर्वोच्चमा कामगर्न सक्छ । मुद्दा फैसला, न्यायाधीश नियुक्ति र वर्खास्ती सबै कुरा गर्ने गरी शक्ति केन्द्रीकृत गरेर कसरी लोकतन्त्र सुदृढ गर्न सक्छौं । यसले निरङ्कुश र अधिनायकवादी व्यवस्था आउने सङ्केत गर्छ । शक्तिपृथकीकरण र विधिको शासनलाई आत्मसात् नगरी कसरी लोकतन्त्र सुदृढ हुनसक्छ । न्यायाधीश नियुक्तिको संयन्त्र अहिलेकै उचित छ । बरू त्यसमा सुधार गर्न सकिन्छ । सबै प्रकारका मुद्दाहरूमा व्यवस्थापिकाबाट व्याख्या हुने गरी प्रस्ताव गरिएको नभई राजनीतिक विवादका विषयहरु, प्रमुख पदहरूसँग सम्बन्धित विषय र संविधानसँग कानून बाझिएको जस्ता विषयहरूमा मात्र त्यस्तो व्याख्या गर्ने अधिकार दिइएको हो । व्यवस्थापिकाको काम कानून र नीतिको निर्माण गर्नेमात्र हो कार्यपालिकाले कार्यान्वयन गर्ने र न्यायपालिकाले संविधान र कानूनको व्याख्या गर्ने हो । शक्तिपृथकीकरणको सिद्धान्तको यही मान्यता हो । पहिलेको संविधानको धारा १०७(२) को व्यवस्थालाई यथावत् राख्नुपर्छ । बाझिएको कानून खारेज गर्ने अधिकार सर्वोच्च अदालतलाई हुनुपर्छ । न्यायिक पुनरावलोकन र संविधान र कानूनको व्याख्या न्यायालय वा सर्वोच्च अदालतबाट हुनुपर्छ । प्रान्त र सङ्घ बीच विवाद उत्पन्न भएको अवस्थामा सङ्घीय व्यवस्थापिकाले नै व्याख्या गर्दा कस्तो निष्कर्ष आउला ? उसले सङ्घकै पक्षमा निर्णय गर्छ । यो व्यवस्था सङ्घीयता विरोधी हुन जान्छ ।
- प्रदेशको अदालतमा केन्द्रबाट न्यायाधीश नियुक्ति हुने व्यवस्था गर्नु सङ्घीयताविरूद्ध हुन्छ । सङ्घीय प्रणालीमा सङ्घ र केन्द्र बीचको विवाद हेर्ने, जनताका हक सुरक्षित गर्ने, न्यायालय हुनुपर्छ । संयुक्त राष्ट्रसङ्घले न्यायालयको स्वतन्त्रता सम्बन्धी पारित प्रस्तावलाई नेपालले पनि अनुमोदन गरेको छ । स्वीकृत सिद्धान्त र भएका सम्झौता तथा अन्तर्राष्ट्रिय मापदण्डभन्दा विपरीत संविधान निर्माण हुन सक्दैन । आफ्नै मापदण्ड र सिद्धान्त लाद्न हुँदैन । दुई प्रान्तको बीचको विवादको फैसला सर्वोच्च अदालतले गर्छ तर त्यसलाई प्रदेशको अदालतले मानेन भने के हुन्छ ? यस्तो व्यवस्था सङ्घीय प्रणाली विपरीत छ । राज्यको न्यायधीश राज्यबाटै नियुक्ति गर्ने कुरा सङ्घीयताको अवधारणा विरूद्ध हुन्छ भन्नु हास्यास्पद हो । यसले त सङ्घीयतालाई झन् राम्रो र मजबुत बनाउँछ । प्रधानन्यायाधीशको नियुक्ति सङ्घीय सर्वोच्च अदालतका न्यायाधीशहरु मध्येबाट मात्र गर्न सकिने व्यवस्था हुनुपर्छ ।

- न्यायपालिकालाई स्वतन्त्र, सक्षम र निष्पक्ष तुल्याइनुपर्छ । उदारवादी लोकतान्त्रिक व्यवस्थामा न्यायपालिकालाई स्वतन्त्र र निष्पक्ष बनाउने विश्वव्यापी मान्यता स्थापित छ । न्यायालय स्वतन्त्र र सक्षम हुनुपर्छ । नियन्त्रण र सन्तुलन राख्न सक्ने न्यायपालिका हुनुपर्छ । स्वतन्त्र न्यायपालिका लोकतन्त्रको आधारशिला हो । न्यायाधीशहरु नियुक्ति र वर्खास्ती व्यवस्थापिकाबाट हुँदा न्यायालय स्वतन्त्र हुँदैन । संविधानवादको सिद्धान्त अनुसार संविधानको सर्वोच्चता, शक्तिपृथकीकरण, मौलिक हक, कानूनको शासन र स्वतन्त्र न्यायापालिकाको संरक्षण हुनुपर्छ । स्वतन्त्र न्यायपालिका न्यायाधीशको लागि नभई न्यायको लागि हो । विगतमा कमजोरी हुँदाहुँदै पनि न्यायालय स्वतन्त्र रहेर फैसला गरेको कारण न्याय दिएको थियो । त्यहाँको विकृति विसङ्गतिको अन्त्य गर्नुपर्छ । तर यस नाममा स्वतन्त्रता मार्न सकिन्न । न्यायाधीशको सम्पत्ति र खराब आचरणको छानविन हुनुपर्छ । न्यायालय स्वतन्त्र रहनु भनेको जनताको मौलिक हक सुरक्षित हुनु हो । स्वच्छ, सक्षम र पारदर्शी न्यायालय हुँदा नै जनताले न्याय पाउन सक्छन् । मस्यौदामा प्रस्तुत गरिएका कुराहरु न्यायपालिकाको स्वतन्त्रता सम्बन्धी सिद्धान्तको प्रतिकूल छन् । यस सम्बन्धी अन्तर्राष्ट्रिय मापदण्डहरूले पनि स्वतन्त्र न्यायपालिकाको संरक्षण हुनुपर्नेमा जोड दिएका छन् । बहुमतबाट पारित भएका कतिपय प्रावधानहरूले स्वतन्त्र न्यायपालिकाको मर्ममाथि प्रहार गरेको छ । लोकतान्त्रिक शासन व्यवस्थाको आधारभूत चरित्र स्वतन्त्र न्यायालयको स्थापना गर्नु हो, यसलाई कायम राखिनुपर्छ । अर्धन्यायिक निकायले ६ महिनासम्म कैद गर्ने गरी यति धेरै अधिकार दिनु हुँदैन । यो अधिकार न्यायालयलाई दिइनुपर्छ । २७ वर्षसम्म न्याय नपाउने प्रणाली न्यायप्रणाली हुन सक्दैन । फूलबेञ्चबाट निर्णय हुने परिपाटी बसाल्दा अदालतबाट हुने कमजोरीमा सुधार आउन सक्छ ।
- विगतमा न्यायाधीशविरूद्धमा परेका उजुरी उपर प्रभावकारी छानविन हुन नसकेको वा कैयौं घूस प्रकरणका कुरा पनि सुनिएकै छन्, तर यिनलाई सुधार गर्ने नाममा वर्तमानमा प्रस्ताव गरिएको पद्धति उपयुक्त हुँदैन । अदालतमा मुद्दाको संख्या हेरेर न्यायाधीशको संख्या निर्धारण हुनु उपयुक्त हुन्छ, संविधानमा संख्या किटान गरिनु हुँदैन । वर्खास्तीको व्यवस्थाले नियुक्ति हुनासाथ वर्खास्ती हुने हो कि भन्ने डरमा रहने अवस्था छ । यस्तो व्यवस्था राख्नु हुन्न । महाभियोग सम्बन्धी व्यवस्था राख्नुपर्छ । आचरणको अनुगमन गर्न एक अलग समिति बन्नुपर्छ । अपाङ्ग र सपाङ्ग बीच मुद्दा चलेमा अपाङ्गको तर्फबाट सरकारले मुद्दा गर्ने व्यवस्था गर्नुपर्छ । न्याय ढिलो दिनु भनेको न्याय नदिनु हो भनिन्छ । आदिवासी जनजातिको परम्परागत न्यायप्रणालीलाई पनि अगाडि बढाइनुपर्छ । न्यायाधीशको पदमा संसदको दुई तिहाई मतले पदमुक्त गर्ने गरी सच्याइनुपर्छ । कम गल्ती गर्नेलाई पनि सजाय हुने व्यवस्था हुनुपर्छ । सबैलाई महाभियोग लगाउने कुरा ठीक हुँदैन । न्यायाधीश सार्न नसक्ने तर मुद्दा सार्न सक्ने व्यवस्था गरियो । उसले अनुभव बटुल्नु पर्छ, केन्द्रमा आउनु पर्छ, तर एक प्रदेशले नियुक्ति गरेको न्यायाधीश अर्को प्रदेशले कसरी स्वीकार्छ । त्यसैले नियुक्ति प्रक्रिया उपयुक्त छैन ।
- सङ्घीयता र विकेन्द्रीकरणको कुरा गर्ने तर एउटा न्यायाधीशको नियुक्ति गर्ने अधिकार प्रान्तलाई दिनु हुँदैन भन्नु परस्पर विवादास्पद कुरा हुन् । यो केन्द्रीकृत मानसिकता हो । बहुमतले प्रस्तुत गरेझैं संविधान बनाइयो भने नयाँ अधिनायकवादको जन्म हुन्छ र न्याय हराउँछ । स्वेच्छाचारिता निम्तन्छ, अधीनस्थ न्यायालय हुन्छ, व्यक्तिको स्वतन्त्रता अपहरण हुन्छ । सन्तुलनलाई विगार्नु हुँदैन । हिजो अदालतले धेरैको प्राण बचाइदिएको कुरालाई पनि ख्याल गरौं । जनता निरीह भएको अवस्थामा न्यायालयको संरक्षणमा पुग्नुपर्ने यथार्थतालाई विचार गरेर यस सम्बन्धी व्यवस्था गरौं । यो समितिको प्रतिवेदन देशको न्याय संरचनालाई पुनर्सरचना गर्ने गरी आएको छ । यो असाध्य अग्रगामी छ । न्यायालय जनताप्रति उत्तरदायी हुनु जरूरी छ । यसले मात्र न्यायालयले जनताको विश्वास प्राप्त गर्छ ।

- सङ्घीयता विरोधी कोणबाट प्रतिवेदन आएको छ । सङ्घीयतामा संविधानको सर्वोच्चता सुनिश्चित हुन्छ । तर यहाँ त्यस्तो व्यवस्था छैन । न्यायाधीशको नियुक्ति व्यवस्थापिकाबाट गर्दा अन्य संवैधानिक निकायका पदाधिकारीहरूको नियुक्तिबारेमा पनि जटिलता उत्पन्न हुन्छ । व्यवस्थापिकाको विशेष न्यायिक समितिबाट नियुक्ति हुने सङ्घीय सर्वोच्च अदालतका न्यायाधीशहरूले सङ्घ र प्रदेश बीचको मुद्दामा निष्पक्ष न्याय दिन सक्दैनन् । सरकारी वकिलको सेवा सुविधा न्यायाधीश सरह हुनु हुँदैन, निजामती सेवाका अन्य कर्मचारीसरह नै हुनुपर्छ । प्रधानन्यायाधीशभन्दा तल रहने अध्यक्षको समितिले कसरी प्रधानन्यायाधीश नियुक्ति गर्छ । यसमा सच्याउनुपर्छ । न्याय माग्न वकिल खोज्नु पर्ने अवस्थाको अन्त्य गरी मौखिक रूपमा भनेकै आधारमा पनि न्याय दिइनुपर्छ । गाउँ, नगर र स्थानीय अदालतको बारेमा र तीनको अधिकारक्षेत्रका बारेमा यसै संविधानमा लेखिनुपर्छ । स्पष्ट अधिकारक्षेत्रको व्यवस्था गरिनुपर्छ । अवधारणापत्रमा केन्द्र र प्रदेशको कानून बाझिएमा कुन कानून लागू हुने भन्ने स्पष्टता छैन । विभिन्न तहका अदालतको क्षेत्राधिकारहरूबारे कानूनद्वारा अझ बढी प्रष्ट गर्न आवश्यक छ । जिल्लाभन्दा तल्लो निकायमा पनि न्यायालयलाई लाने प्रस्ताव सकारात्मक छ । महिला र असहायलाई निःशुल्क कानूनी सहायता हुनुपर्छ । जातीय छुवाछूतका मुद्दा सरल रूपमा हेर्ने विशेष इजलासको व्यवस्था हुनुपर्छ । राज्यका अदालतलाई सर्वोच्च अदालत नभनी उच्च अदालत नामाकरण गरिनुपर्छ । अदालतले अहिलेसम्म उत्पीडकलाई न्याय दिने र उत्पीडितहरूलाई अन्याय दिने गरेको छ । यसलाई उल्ट्याउनु पर्छ । छुवाछूतको मुद्दा, महिला हिंसाको मुद्दा, अल्पसंख्यक र सीमान्तकृतको मुद्दा हेर्न छुट्टै इजलास हुनुपर्छ । विशेष न्यायिक समितिमा संसदमा उपस्थित सबै दलको समानुपातिक आधारमा प्रतिनिधित्व हुनुपर्छ । श्रमिकलाई लक्षित गरेर कुनै व्यवस्था गरेको देखिएन । श्रम बजार सम्बन्धी न्यायव्यवस्थामा सुधार गरेर जानुपर्छ । महिला बालबालिकाको लागि छुट्टै अदालतको व्यवस्था हुनुपर्छ ।
- प्रतिवेदनले जातविशेषको लागि छुट्टै अदालतको परिकल्पना गरेको छ, त्यसो गरिनु हुँदैन । कानूनको दृष्टिमा सबैलाई समान व्यवहार गरिनुपर्छ । लोक अदालतलाई समेट्यौं भने सुलभ, छिटो, छरितो न्याय दिन सक्छौं । अदालतका तहहरु ४ वटा कायम गरी जिल्लाभन्दा तल पनि एउटा तह राख्नु उपयुक्त हुन्छ । घुम्ति न्यायालयबाट स्थानीयस्तरमै न्याय दिन सकियो भने त्यो प्रभावकारी हुन सक्छ । त्यहाँभित्र हुने भ्रष्टाचार र विसङ्गतिहरूलाई अन्त गरेर जानुपर्छ । श्रमिक अदालत हरेक औद्योगिक क्षेत्रभित्र हुनुपर्छ । लोककल्याणकारी जनअदालत, उपभोक्ता अदालत, अर्थ वाणिज्य, अर्थ राजस्व अदालत स्थापना गर्नु पर्दछ । केन्द्रमा सर्वोच्च न्यायालय, प्रादेशिक न्यायालय र इलाका न्यायालय हुनुपर्छ । विशेष न्यायालय र विशेष वर्गको लागि अदालतमा छुट्टै इजलाशको व्यवस्था गरिनुपर्छ । गाउँ नगर र टोलमा पनि न्याय समितिहरु गठन गर्नु पर्छ । नेपालमा संवैधानिक अदालतको आवश्यकता छैन । समितिले तल्लो तहसम्म अदालत र इजलाश कायम गर्ने गरी ल्याएको अवधारणा सकारात्मक छ । स्थानीयतहमा महिला र बालबालिकाका मुद्दा हेर्न बन्द इजलासको व्यवस्था हुनुपर्छ । सङ्घीय सर्वोच्च अदालतमा प्रस्तावित न्यायाधीशको संख्या ११ को सट्टा १५ गर्नु पर्छ । नजीर सिद्धान्तलाई मान्यता दिइएको छैन । अदालतलाई सहयोग गर्नुपर्ने कुरा पनि छुटेको छ । मजदुर, किसान, महिला, दलितले लामो समयसम्म न्याय पाउन सकेका छैनन् । आजको महंगो न्यायप्रणालीमा परिवर्तन हुन जरूरी छ । अदालत समानान्तर सत्ता केन्द्रको रूपमा स्थापित छ । वर्तमानमा यो संस्था स्वतन्त्र छैन । न्यायाधीश र कर्मचारी अलग अलग हो । आली, धुर, कूलो, पानी, गौचर, ज्यालामजदुरी, लुटपाट, चोरी नियन्त्रण गर्ने अदालत टोल टोलमा बनाउनु पर्दछ । मुद्रा, परराष्ट्र र सेना केन्द्रको मातहतमा हुनुपर्छ ।

अन्तमा, मा० सभापति श्री प्रभु साह तेलीले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.१.७. मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समिति

मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिको विषयगत अवधारणापत्र तथा प्रारम्भिक मस्यौदा प्रतिवेदनमाथि संविधानसभामा २०६६ मार्ग ३, ७, ११, १२ र १४ गते भएको छलफलमा १७९ जना मा० सदस्यहरूले भाग लिनुभएको थियो । उक्त समितिको छलफलमा ३१ घण्टा १० मिनेट समय लागेको थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा उठेका मुख्य सारांश यस प्रकार रहेको छ :-

- मधेसी, पिछडिएका क्षेत्रका समुदायका लागि पनि मौलिक अधिकार चाहिन्छ त्यस्तो भएमात्र मौलिक अधिकार पूर्ण हुन्छ । राज्य धर्मनिरपेक्ष रहनु पर्ने समितिको मत रहेको छ । यो कुरा संवैधानिक समितिले प्रस्तावना लेख्दा विचार गर्नुपर्ने देखिन्छ । विचारका आधारमा कसैलाई प्रतिबन्ध लगाइनु हुन्न । कुनै पनि नागरिकको सम्पत्तिलाई राज्यले बलात् अपहरण गर्न सक्दैन । प्रजातन्त्रमा कुनै पनि व्यक्तिको सम्पत्ति क्षतिपूर्ति दिएरमात्र अधिग्रहण गर्ने व्यवस्था गरिनुपर्छ । व्यक्तिले आर्जन गर्ने सम्पत्तिमा सीमा लगाइनु हुँदैन । गैरकानूनी र हदबन्दीभन्दा बढी राखिएको जग्गा जफत गरेर सुकुम्वासी र भूमिहीनलाई बाँडनुपर्छ । यस्तो जग्गा विनामुआब्जा जफत गरिनुपर्छ ।
- हालसम्म सूचीकरण नभएका आदिवासी जनजातिलाई मान्यता दिनुपर्छ । आदिवासी जनजातिले राजनीतिक अधिकार निश्चित अवधिका लागि पाउनु पर्छ । आदिवासी जनजातिको अधिकारलाई छुट्टै धारामा व्यवस्थित गर्नु पर्छ । जसमा आत्मनिर्णय, स्वशासन, स्रोतमाथिको अग्राधिकार, पूर्व सूचित हुने अधिकार समेत समावेश हुनुपर्छ । उत्पीडित जाति, क्षेत्र, वर्ग र समुदायलाई अधिकारसम्पन्न बनाउन विशेष अधिकारको व्यवस्था गरिएको छ । जाति, जनजाति र आदिवासीलाई स्वशासन, स्वायत्तता र आत्मनिर्णयको अधिकार प्रदान गरिएको छ । राज्यले सम्बोधन गर्न सक्ने र पूरा गर्न सक्ने हकलाई मात्र मौलिक हकको स्थान दिनुपर्ने र अन्य हकलाई पनि सुनिश्चित गर्नुपर्ने फरक-फरक विचार आएकोमा सन्तुलन मिलाई तीनै पुस्ताका हक सुनिश्चित गरिएको छ ।
- नेपालका नागरिकलाई एकै किसिमको नागरिकता दिइनुपर्छ । वंशज, अङ्गीकृत, सम्मानार्थ आदि होइन । देश सङ्घीयतामा गएपछि प्रान्तको पहिचान सहितको नागरिकता प्रदान गरिनुपर्छ । लोकसेवा आयोगमा पनि सोही पहिचानको आधारमा प्रतिस्पर्धा हुनसक्छ । भू-राजनीतिक अवस्था हेरी नागरिकताको शर्त कडा हुनुपर्ने गरी व्यवस्था हुनुपर्छ । यसलाई खुकूलो बनाउँदा अरू देशका नागरिकको आगमन हुने खतरा रहेको र हामी अल्पसंख्यकमा पर्ने अवस्था हुन्छ । नागरिकता छानविन गरी गलतलाई बदर गर्न सकिने व्यवस्था गरिएको छ । मौलिक हकमा लिङ्गको आधारमा भेदभाव नगरिने कुरा उल्लेख छ तथापि नागरिकताको महलमा आमा वा बाबु भन्ने उल्लेख भएकोले यी एक आपसमा बाझिएका छन् । सम्मानार्थ नागरिकता के कसरी दिने स्पष्ट परिभाषा/व्यवस्था गरिनु पर्दछ । सम्मानार्थ नागरिकता ख्यातिप्राप्त व्यक्तिलाई मात्र नभई योगदानको आधारमा पनि दिने व्यवस्था गरिनुपर्छ । राष्ट्रप्रमुख तथा उपप्रमुख, सङ्घीय वा राज्यस्तरको व्यवस्थापिका, कार्यपालिका र न्यायपालिकाको प्रमुख संवैधानिक अङ्ग तथा सुरक्षानिकायका प्रमुखको पदमा वंशजको नागरिक मात्र निर्वाचित वा नियुक्त हुने व्यवस्था गरेको उपयुक्त छ । नागरिकताको सन्दर्भमा अङ्गीकृत नागरिकता बसोबासको आधारमा दिनाले एउटा परिस्थिति सृजना हुन्छ । अङ्गीकृत नागरिकता दिंदा गरीब देशको नागरिक समाप्त हुन्छ । गरीब आमाको बच्चालाई नागरिकता नदिने, धनी बाबुको बच्चालाई नागरिकता दिने व्यवस्था गर्नु गरीबमाथि कुठाराघात भएको ठहर्छ । बसोवासको आधारमा नागरिकता दिने कुरा सच्याइनुपर्दछ । नागरिकतामा प्रादेशिक पहिचानको कुरा राख्दा नागरिकताको महत्व कमजोर

हुन जान्छ । कुनै प्रदेशसभामा अङ्गीकृतहरूको बहुमत भएमा के हुन्छ ? वरू नागरिकता दिने व्यवस्था कडा बनाउने हो कि ? बाबु आमा नभएको बच्चाले वंशजको आधारमा नागरिकता पाउने तर नेपाली नागरिक महिलाबाट जन्मेको बच्चाले वंशजको आधारमा नागरिकता नपाउने विषयमा थप छलफल गर्नुपर्छ ।

- नागरिकतालाई बस र सिनेमाको टिकट जस्तै वितरण गरियो भने भोलि नेपालभित्रै नेपालीहरु अल्पमतमा पर्नेछन् र शरणार्थी जीवन विताउन बाध्य हुनुपर्नेछ । प्रतिवेदनमा नेपाली महिलाले विदेशी पुरूषसँग विहे गरेमा त्यो पुरूषले पनि नेपाली नागरिकता पाउने व्यवस्था गरिएको छ । विदेशी नागरिकता प्राप्त व्यक्ति पुनः नेपालमा आई पाँचवर्ष बसोवास गरेमा पहिले जुन किसिमको नागरिकता दिइएको हो त्यस्तै नागरिकता दिइने व्यवस्था अनुचित छ । त्यस्ता व्यक्तिलाई पुनः वंशजको आधारमा नागरिकता दिइनु हुँदैन । संविधानले विदेशीलाई नागरिकता र स्वदेशीलाई परिवार नियोजनको व्यवस्था गर्नु हुँदैन । रोजगारको सन्दर्भमा यहाँ बसोवास गर्ने अनि नागरिकता प्राप्त गर्ने कुरा हुनुहुँदैन । आर्थिक स्वतन्त्रताको अधिकार विना सामाजिक समावेशीताको अधिकार पूर्ण हुन सक्तैन । यसलाई समेटिनु पर्छ । दल खोल्ने स्वतन्त्रता र त्यसको प्रतिबन्धात्मक व्यवस्था नै ठीक छ । यस उपरका फरकमत अनावश्यक हुन् । विश्वव्यापी मान्यताको आधारमा धार्मिक स्वतन्त्रताको उपयोग गर्ने व्यवस्था राखिनुपर्छ ।
- सार्वजनिक प्रयोजनको लागि व्यक्तिको जग्गा अधिकरण गर्दा उचित र पर्याप्त क्षतिपूर्ति दिइनेछ भनेर उल्लेख गरिनुपर्छ । भूमिको सुधार, कृषिको उत्पादकत्व वृद्धि गर्ने कार्य सङ्घीय एकाइलाई हुनेछ भनी उल्लेख गर्नुपर्छ । बालबालिका सम्बन्धी हकमा बालकले बाबु वा आमामध्ये एकको थर रोजेर राख्न सक्ने व्यवस्था हुनुपर्छ । ट्रेड युनियनको नाममा पार्टीको भातृ सङ्गठनको रूपमा सङ्गठन खोल्न नपाउने गरी एउटा सङ्गठनको एउटा मात्र ट्रेड युनियन खोल्न पाइने व्यवस्था गर्नु पर्छ । सामाजिक विभेदलाई अपराधको रूपमा लिई दण्डनीय व्यवस्था गरिनु पर्दछ । सार्वजनिक सेवा पछि निजी सेवा पनि थपिनु पर्छ । कार्यान्वयनको र उपचारको हकमा राज्यले उचित व्यवस्था गर्ने भन्ने व्यवस्था गरेको हुँदा अगाडिको व्यवस्थालाई कमजोर बनाएको छ । राज्यले व्यवस्था नगरेमा कार्यान्वयन नहुने अवस्था आउँछ । यस्तो व्यवस्थालाई हटाउनुपर्छ । मौलिक हकमा आर्थिक सामाजिक रूपले पिछडिएकोलाई उत्थानका लागि विशेष कानून बनाउन रोक लगाएको मानिने छैन लेख्नुपर्छ । हिन्दु धर्मले महिला, जनजातिलाई उत्पीडित गरेको छ । भाषा संस्कृति, जातीय आधारमा उत्पीडितलाई केही समयका लागि विशेष अधिकार प्रदान गरिनुपर्दछ । किसानको लागि छुट्टै हक अधिकारको व्यवस्था गरिनुपर्छ । जमीनको उत्पादकत्व वृद्धि गर्न जग्गाको हदबन्दी तोकी बढी भएको जग्गा विनामुआब्जा गरीबलाई वितरण गरिनु पर्दछ । भाषा-संस्कृति सम्बन्धी हकमा जात्रा पर्व थप्नुपर्छ । पुर्ख्यौली सम्पत्तिमा मोहियानी हक प्राप्त गराउन लैङ्गिक भेदभाव नहुने विषय उल्लेख गर्नु पर्दछ ।
- दम्पत्ती बीचमा लैङ्गिक विभेद अन्त्य गर्ने कुरा उल्लेख गर्नु पर्दछ । गर्भधारण गर्ने व्यक्तिको निजी विषय हो । थुनाबाहिर रहेर यातना पाएमा क्षतिपूर्ति पाउनु पर्दछ । बौद्धिक अपाङ्गता छुटेको छ अपाङ्गको सहायक सामग्री छुटेको छ । बेपत्ता पार्ने र अपहरण गर्नेलाई कारवाही गर्ने व्यवस्था गरिनुपर्छ । बच्चाको संरक्षण गर्नु प्रत्येकको कर्तव्य हुने कुरा उल्लेख गर्न आवश्यक छ । सार्वजनिक जग्गामा सम्बन्धित प्रदेशको हक हुने कुरा उल्लेख हुनुपर्छ । दाइजो प्रथा अन्त्यको लागि आयोगको व्यवस्था हुनुपर्छ । मौलिक हकमा मुलुकको चरित्र जस्तो छ त्यसै अनुरूपका हकहरूलाई समावेश गरिनुपर्छ । व्यक्तिको स्वस्थरूपमा बाँच्न पाउने अधिकारलाई सुनिश्चित गरिनुपर्छ । पुँजी र सम्पत्तिको अधिकार वस्तु सेवाको अधिकार भन्ने कुरा उल्लेख गरिनुपर्छ । रोजगारीको हकमा कानूनबमोजिम हुनेछ भनेर उल्लेख गरिनु हुँदैन । न्याय सम्बन्धी हक अन्तर्गत भूतप्रभावी कानून बनाएर कारवाही गर्न रोकेको छ । अतः मानवता विरोधी अपराध, युद्ध

अपराध, मानव नरसंहारका अपराधजस्ता विषयमा भूतप्रभावी कानून बनाएर कारवाही गर्न सक्ने व्यवस्था राखिनुपर्छ । अपराधपीडितको हक राखिएको छ जुन उपयुक्त छ । शोषणविरूद्धको हकमा रहेको सार्वजनिक प्रयोजन भनेको के हो भन्ने स्पष्ट गर्न स्पष्टीकरण राख्नु उपयुक्त हुन्छ ।

- भाषा तथा संस्कृति सम्बन्धी हकमा मातृभाषामा आधारभूत शिक्षा पाउने हक उल्लेख गरिनुपर्छ । प्राथमिक शिक्षा मातृभाषामा लिने व्यवस्था राख्नुपर्छ । मौलिक हक नागरिकको जन्मसिद्ध हक हो यसलाई अपरिवर्तनीय बनाइनुपर्छ । समानताको हक अन्तर्गत पुर्ख्यौली चल तथा अचल सम्पत्ति भनेर राखिनुपर्छ । महिलाको घरेलु कामलाई सम्मान गर्ने व्यवस्था संविधानमा नै स्पष्ट रूपमा उल्लेख गरिनुपर्छ । युवा र खेलकूदको कुरा संविधानमा स्पष्टसँग उल्लेख गरिनुपर्छ । श्रम सम्बन्धी हकको व्यवस्था गर्दा महिलाले वैदेशिक रोजगारीमा जाँदा उनीहरूको सुरक्षातर्फ विशेष ध्यान दिनुपर्ने कुरा उल्लेख हुनुपर्छ । अल्पसंख्यक र सीमान्तकृतको अधिकार छुट्टै धारामा लेखिनु आवश्यक छ । दलमाथि प्रतिबन्ध लगाउने व्यवस्था राखिनु हुन्न । वृद्धवृद्धाको हक छुट्टै धारामा राखिनुपर्छ । शिक्षा, स्वास्थ्य र खाद्य सम्प्रभूतालाई विशेष मौलिक अधिकारको रूपमा राखिनुपर्छ । निवारक नजरवन्दको कुरा हटाइनु पर्छ । धेरै अधिकार राख्दा राज्यले कतिको कार्यन्वयन गर्छ, राज्य कति उत्तरदायी हुन्छ, स्रोत-साधनको अवस्था कस्तो छ भन्ने विषय पनि उत्तिकै महत्वपूर्ण छ । अपराधका पीडितको हकभित्र अपराधी पत्ता नलागेका पीडितलाई समेत क्षतिपूर्ति पाउने अधिकार हुनुपर्छ । कानून बनाएर लागू गरिने भन्ने सबै वाक्य हटाइनु पर्छ ।
- अवधारणापत्रको पृष्ठ ३३८ को प्यारा (२) मा मुस्लिम समुदाय हिन्दमहासागर र भारतको बाटो हुँदै आएको हो भनिएको छ, अन्य समुदायको हकमा यस्तो उल्लेख गरिएको छैन । यस्तो व्याख्याले मुस्लिम समुदायलाई शरणार्थीको रूपमा कायम राख्न खोजिएकोले यो व्यवस्थाप्रति आपत्ति छ । मौलिक हकमा धारा ३२ र ३३ थप गर्नुपर्छ, धारा ३२ मा मुस्लिम समुदायको विशेष अधिकारको हक र धारा ३३ मा मुस्लिम समुदायको समानुपातिक सहभागिताको हक उल्लेख गर्नुपर्छ । महिलाका सबैप्रकारका हिंसाविरूद्धको हक, महिलाविरूद्धका प्रथागत र संस्कारजन्य हकहरू पनि सुनिश्चित गर्नु पर्छ । मौलिक हकको समानताको हकमा महिलाको हकमा छोरा र छोरीको स्पष्ट हक उल्लेख गरिनु पर्दछ । पुर्ख्यौली सम्पत्तिमा छोराछोरीलाई समान हक हुनेछ भन्ने उल्लेख गरिनु पर्दछ । असहाय र एकल महिलालाई रोजगारीको व्यवस्था गरिनु पर्दछ । प्राथमिक तहमा बहिरा व्यक्तिलाई साङ्केतिक भाषामा पढ्न पाउने व्यवस्था हुनुपर्छ । बहिरा व्यक्तिले साङ्केतिक भाषाको प्रयोग गर्न पाउने हक थप गर्नुपर्छ । अपाङ्गता भएका व्यक्तिको खेलकूदमा सहभागिता, सूचनामाथिको पहुँच आदि अधिकार हुनुपर्छ । सुस्तमनःस्थिति र लैङ्गिक अपाङ्गता भएका व्यक्तिको अधिकार संरक्षण गरिनुपर्छ । मौलिक हकहरू असहाय र गरीबहरूको उत्थानप्रति केन्द्रित हुनु जरूरी छ । सम्मानपूर्वक बाँच्न पाउने हक, रोजगारीको हक, वेरोजगार भत्ताको अधिकार आदि कार्यान्वयन हुन सक्छन ? के मस्यौदामा उल्लेख भएझैं आवासको हक सुनिश्चित गर्न संभव छ ? छुवाछूत सम्बन्धी प्रस्तावित व्यवस्था प्रगतिशील छ तर व्याख्यात्मक टिप्पणीमा सार्वजनिक स्थलमामात्र भेदभाव नगरिने अवस्था छ । जातिको आडमा कुनै पनि स्थानमा कुनै पनि भेदभाव नगरिने लेख्नुपर्छ । क्षतिपूर्तिबापत जनसंख्याको आधारमा समानुपातिक सहभागिता गराउने व्यवस्था संवैधानिक रूपमा सुनिश्चित गर्नुपर्छ । दलितको हकमा केन्द्र, प्रदेश र स्थानीयस्तरमा समानुपातिक प्रतिनिधित्व र क्षतिपूर्ति सहित ७% सहभागिता गराउनु पर्छ । दलितलाई पण्डित बन्न पाउने अधिकार दिइनुपर्छ र गम्भीर अपराधीलाई मृत्युदण्डको सजाय दिने व्यवस्था हुनुपर्छ ।

- उत्पादनका मुख्य-मुख्य साधनहरूलाई राष्ट्रियकरण गर्नुपर्छ । स्वच्छ खानेपानीको अधिकारलाई मौलिक हकमा छुट्टै धारामा राखिनुपर्छ । गैर आवासीय नेपालीलाई परिचयपत्र दिन सक्ने नयाँ व्यवस्था राखिएको छ । सन्तुलित वातावरण र दिगो विकासको हकसमेत हुनुपर्छ । राजनीतिक दललाई प्रतिबन्ध लगाउने व्यवस्था कहीं छैन, यो व्यवस्था राख्नु हुन्न । निःशुल्क कानूनी सहायता अन्तर्गत कस्तो अवस्थालाई असमर्थता मान्ने हो स्पष्ट गरिनुपर्छ । निवारक नजरबन्दमा खास अवस्थामा परिवारलाई जानकारी दिन नसकिने भन्ने व्यवस्थामा विचार गर्नुपर्छ । झुठा व्यक्ति परेमा यस्तो व्यवस्था ठीक हुँदैन । समानतामा अविभेदको हकमात्र भनेर हुँदैन यो उल्लङ्घन हुँदा क्षतिपूर्तिको व्यवस्था राखिनुपर्छ । न्याय सम्बन्धी हकमा लैङ्गिक न्यायको पनि सुनिश्चित गर्नुपर्छ । यातनाविरूद्धको हकलाई अनुसन्धान र तहकिकातमा मात्र सीमित गर्नु हुन्न । राज्य धर्म र धार्मिक क्रियाकलापबाट अलग रहनु पर्दछ । तीर्थयात्रा, धार्मिक स्कूल खोल्न राज्यले लगानी गर्नु पर्दैन । विदेशीले नेपालमा छोडेको बच्चाले अधिकार पाउने व्यवस्था गरिनुपर्छ ।
- राज्यको निर्देशक सिद्धान्त, नीति तथा दायित्व सम्बन्धी अनुच्छेदमा राज्यले सबै नेपालीलाई रोजगारी दिने र बेरोजगारीलाई बेरोजगारी भत्ता दिनको लागि हरेक वर्ष उत्पीडित वर्ग, जाति, महिला, दलित, जनजाति र पिछडिएका क्षेत्रका नागरिकलाई निश्चित कोटाको संख्या तोकेर रोजगारी दिने र बेरोजगारिलाई भत्ता दिने कानूनी व्यवस्था गर्नेछ भनी उल्लेख गर्नुपर्छ । बेरोजगार भत्ता राज्यले दिन सक्ने अवस्था छैन । बरू श्रमको हकमा नेपालीलाई रोजगारी दिने कुरामा जोड दिउँ । घरेलु हिंसा र दहेज प्रथा संविधानबाट उन्मूलन गरी स्थानीयस्तरमा न्यायिक संयन्त्र बनाउने संविधानमा व्यवस्था गर्नुपर्दछ । एक भाषा र धर्मलाई मात्र संविधानले मान्यता दिएकोले अन्य भाषाभाषी हच्किएका छन् । प्रतिवेदनमा सामाजिक अधिकारको कुरा महत्वाकांक्षी देखिन्छ । यसमा राज्यको ठूलो स्रोत-साधन खर्च हुन्छ । द्वन्द्वमा मारिएका सबै नागरिकहरूलाई शहीद परिवारमा पार्ने गरी परिमार्जन गरियोस् । रोजगारी सुनिश्चित गर्ने भनेपछि बेरोजगार भत्ता दिइने भन्ने कुरा एकआपसमा बाझिंदैनन् र ? अपराधपीडितको हकमा निरपराधी भएमा उसले क्षतिपूर्ति पाउने छ भन्ने कुरा छुटेको छ । सीमान्तकृत छुटेको छ, त्यसमा थप्नु पर्छ । गलत तवरले न्याय सम्पादनकार्य गर्नेलाई कठोर सजाय गरिने छ भनेर लेख्नु पर्छ ।
- सम्बन्धित व्यक्तिको इच्छाविरूद्ध काममा लगाउन नपाउने कुरा शोषणविरूद्धको हकमा र मौलिक कर्तव्यमा अनिवार्य सेवा गर्नुपर्ने कुरा राखिएको छ । यो विवादास्पद भयो । मौलिक कर्तव्यका व्यवस्थाहरु सराहनीय छन् । यसमा सार्वजनिक र राष्ट्रिय सम्पत्तिको संरक्षण नगरेमा कस्तो सजाय हुन्छ सो पनि उल्लेख हुनुपर्छ ।

अन्तमा, मा० सभापति श्री विन्दा पाण्डेले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.१.८. प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समिति

प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको अवधारणापत्र सहितको संविधानको प्रारम्भिक मस्यौदा प्रतिवेदन, २०६६ माथि संविधानसभामा २०६६ मार्ग १९, २२, २३, २६ र २९ गते भएको छलफलमा १४२ जना मा० सदस्यहरूले भाग लिनुभएको थियो । उक्त समितिको छलफलमा २८ घण्टा ४५ मिनेट समय लागेको थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा उठेका मुख्य बुँदाहरूको सारांश यस प्रकार छ :-

- प्राकृतिक स्रोतको उपयोगमा दिगो व्यवस्थापनको अभाव रहेको कुरालाई ध्यानमा राखी यो विषयलाई प्रस्तावनामा राखिएको छ । त्यस्तै गरी विभिन्न ६ वटा विषयलाई प्रस्तावनामा

समेट्नु पर्ने समितिको निष्कर्ष रहेको छ । प्राकृतिक स्रोत-साधनको उपयोग गर्दा दिगो व्यवस्थापन हुने गरी र भविष्यका सन्ततिहरूको लागि हानी नपुग्ने गरी गरिनुपर्छ भन्ने अवधारणामा सहमति भएको थियो । यसलाई ध्यानमा राखी ४० प्रतिशत भूभागमा जङ्गल रहनुपर्ने निष्कर्ष निकालिएको छ । प्राकृतिक स्रोतको उपयोगको क्रममा स्थानीय जनताको सहभागिता र हितको विषयमा राज्यले ध्यान दिनुपर्ने र उनीहरूले परम्परागत रूपमा उपयोग गरिरहेको विषय राज्यले प्रयोग गर्दा उनीहरूलाई त्यसबाट आउने लाभ सुनिश्चित गर्नुपर्ने व्यवस्था गरिएको छ । प्राकृतिक स्रोत भन्नाले भूगर्भ र भू-आकाश समेत पर्दछ । प्राकृतिक स्रोत-साधनको लाभको समान वितरण गरिनुपर्छ, त्यस्ता स्रोत र साधनमाथि कब्जा गर्ने होइन । जलस्रोतको सन्दर्भमा खानेपानी र बिजुलीलाई सञ्चालन गर्ने अधिकार छुट्टाछुट्टै निकायलाई दिनुपर्दछ ।

- वित्तीय आयोग र प्राकृतिक स्रोत आयोगमा आदिवासी लगायतको अग्राधिकार सुनिश्चित गरिएको छ तर के हो प्राकृतिक स्रोत भन्ने स्पष्ट हुनुपर्छ । जलवायुपरिवर्तनबाट प्रत्यक्ष प्रभावित हिमालीक्षेत्रका जनताहरूको संरक्षण गर्ने कुरामा पनि स्पष्टता हुनुपर्छ । प्रस्तावित २ वटा आयोगहरूमा महिलाहरूसमेतको सहभागिता हुने व्यवस्था सुनिश्चितता गरिनु पर्दछ । मस्यौदामा आदिवासी, जनजातिपछि तराईवासी, दलित र अन्यलाई पनि समावेश गरिनुपर्दछ । प्राकृतिक स्रोतको आयोग बनाउदा ३ जना सदस्यको ठाउँमा बढाई महिलालाई अनिवार्य रूपमा समावेश गर्ने व्यवस्था गरिनुपर्छ । विज्ञको योग्यतालाई घटाउनु पर्दछ । साधन र विकासको हिसाबले पछाडि परेका प्रान्तहरूलाई केन्द्रले सहयोग गर्ने व्यवस्था मिलाउनको लागि केन्द्रमा वित्तीय आयोगको परिकल्पना गरिएको छ । यसले आर्थिक साधनको वस्तुपरक मापदण्डको आधारमा वितरण गर्न सघाउ पुर्‍याउँछ । राष्ट्रिय प्राकृतिक स्रोत आयोगका पदाधिकारीको पदावधि ५ वर्षभन्दा बढी हुनु हुँदैन । त्यस्तै व्यवस्था वित्तीय आयोगको हकमा पनि गर्नुपर्छ । प्राकृतिक स्रोत-साधनका धेरै विषयलाई सहवर्ती अधिकारको रूपमा राखिएका छन् । राष्ट्रिय वित्तीय आयोग र प्राकृतिक स्रोत आयोगले प्रदेशहरूको अवस्था अनुरूप समान रूपले अनुदान वितरण गर्ने व्यवस्था मिलाउँछ । उदार अर्थतन्त्रलाई दह्रो बनाउनुपर्छ । सबै नागरिकको दह्रो आर्थिक अवस्था होस् र विपन्नको अवस्थामा सुधार होस् भन्नेमा जोड दिनुपर्छ । वित्तीय आयोगमा प्रत्येक राज्यबाट प्रतिनिधि राख्नुपर्छ र तिनको छनौट राज्य सरकारले गर्ने व्यवस्था हुनुपर्छ । आयोगहरु तीन सदस्यीय बनाउँदा समावेशीकरण हुन सक्तैन, त्यसका लागि प्रत्येक प्रान्त र स्वशासित उपक्षेत्रको समेत सहभागिता गराउनु पर्दछ । प्राकृतिक स्रोत आयोगमा सङ्घको प्रतिनिधिलाई समेत सहभागी गराउनुपर्छ । प्रकृतिक स्रोत र वित्तीय आयोगको सदस्य संख्या कम्तिमा ७ बनाइनुपर्छ । राष्ट्रिय वित्त आयोग र प्राकृतिक स्रोत आयोगका पदाधिकारीहरूको नियुक्ति समानुपातिक सहभागिताको आधारमा गरिनुपर्छ । आयोगहरु गठन गर्दा लिङ्गीय, जातीय, क्षेत्रीय रूपमा समावेशी बनाउनुपर्छ । महिलामुखी सवालमा यो प्रतिवेदन मौन रहेको छ, आयोगहरूमा महिलाहरूको प्रतिनिधित्व गराउनुपर्दछ ।
- सामन्ती, जमीनदार र भू-माफियाको अकुत सम्पत्ति लिंदा विनामुआब्जा जग्गा कब्जा गरिनुपर्छ । क्षतिपूर्ति दिने सन्दर्भमा वर्गीकरण गरिनु जरूरी छ । भूमिसुधार किन गर्छौ, हदबन्दी किन लागू गर्छौ भन्ने कुरामा समितिको प्रतिवेदनमा कुनै उल्लेख हुन सकेन । भूमिको न्यायोचित वितरण गर्ने कुरातर्फ कुनै ध्यान गएको पाइएन । राज्यले वैज्ञानिक भूमिसुधार लागू गर्नुपर्ने गरी अनिवार्य बनाउन सकिएको छैन । भूमिसुधार केन्द्रीकृत रूपमा गरिनु हुन्न प्रदेशलाई अधिकार दिनुपर्दछ । भूक्षय, बाढी, पहिरो रोकथाम गरिनु पर्दछ । चुरे पहाडको पर्यावरण रोक्न उचित कदम चालिनु पर्दछ । जमीनदारसँग रहेको जमीन र मठ मन्दिरसँग रहेको जमीन किसानलाई बाँड्नुपर्छ । भूमिको न्यायोचित वितरण हुनु जरूरी छ । क्षतिपूर्ति

नदिई जमीन अधिग्रहण गर्ने कुरामा सोच्नुपर्छ । कृषि क्षेत्रमा आधुनिकीकरणतर्फ जानुपर्दछ । सुकुम्वासी समस्या समाधानका लागि जहाँको सुकुम्वासी हो, त्यहीं जमीन दिनुपर्दछ ।

- खाद्य सम्प्रभूता भनेको आममानिसले कस्तो उत्पादन गर्ने, कस्तो बिउ उत्पादन गर्ने भन्ने अधिकार पनि हो । आममानिसले खानपाउने अधिकार पनि सबभन्दा ठूलो कुरा हो । कहाँ बेच्ने कस्तो उत्पादन गर्ने, कस्तो मल प्रयोग गर्ने भन्ने कुरापनि यसभित्र पर्दछ । भूमिसुधार गर्नु यो मुलुकको आवश्यकता छ । मुआब्जा दिएर भूमिसुधार गर्न सक्ने अवस्था छैन । राज्यसँग पर्याप्त स्रोत-साधन छैन । भूमिसुधार भनेको भूमिमा सुधार गरी उत्पादकत्व वृद्धि गर्ने कार्य हो । हदबन्दीको कुरा गरेर केही उपलब्धि हुँदैन । हदबन्दीको व्याख्या हुनु जरूरी छैन । यस सन्दर्भमा सङ्घ र प्रदेशको के अवस्था हुन्छ यो सबै जिम्मेवारी प्रदेशलाई छोड्नु पर्दछ । भूमिको व्यवस्थापनमा मतान्तर अनौठो छ । भूमिको व्यवस्थापन प्रदेशले गर्दागर्दै पनि सङ्घीय अधिकार पनि स्थापित गर्नु पर्दछ । भूमिको सही अर्थमा स्थानीय निकायको अधिकार हुन्छ । भूमिसुधारको सन्दर्भमा प्राकृतिक स्रोत, साधन व्यक्तिका हुन सक्तैनन, यी प्रकृतिका उपहार हुन् । जमीन पनि प्रकृति प्रदत्त वस्तु हो । जमीन व्यक्तिको निजी हुन सक्तैन । जङ्गललाई विनाशबाट नजोगाउने हो भने यसले राम्रो गर्दैन ।
- कृषिलाई औद्योगीकरण गर्ने, ग्रामीण प्रविधिको विकास गर्ने, क्रान्तिकारी भूमिसुधार लागू गर्ने कुरा राज्यको नीतिको रूपमा राख्नुपर्छ । भूमि राज्यको हो, अतः चाहेको बखत राज्यले अधिग्रहण गर्न सक्ने व्यवस्था स्पष्टताका साथ राख्नुपर्छ । राज्यले भूमि समुचित रूपमा वितरण गरिनु पर्दछ । जमीनमाथि श्रमिकको स्वामित्व स्थापित गराउनु पर्दछ । व्यवस्थित बस्ती बसाउन राज्य लाग्नुपर्दछ । ठूला-ठूला उद्योग, बाँध आदि निर्माण गरिंदा विस्थापित हुने जनतालाई जमीनको सट्टा जमीन नै दिने र रोजगारीमा प्राथमिकता दिइनेछ भनेर राख्नुपर्छ । भूमिसुधार होइन कृषि सुधारका कुराहरु गरिनुपर्छ । शहरी जग्गा र गाउँको जग्गाको मूल्यांङ्कन गरी सो आधारमा हदबन्दी निर्धारण गर्नुपर्छ । सामन्ती भू-स्वामित्व समाप्त गर्ने नाममा भूमिको उत्पादकत्व घटाउनु हुँदैन ।
- केन्द्र र प्रदेश बीचको राजस्व बाँडफाँडमा पनि स्पष्टता भई दिए राम्रो हुने थियो । ठूला-ठूला उद्योग स्थापना गरी प्रदूषण बढाएर उद्योगपतिले फाइदा लिने, राज्यले कर लिने तर स्थानीय वासी र गरीबहरूले पीडित हुनुपर्ने अवस्थाको अन्त्य हुनुपर्छ । राजस्व स्रोतको बाँडफाँडको कुरा गर्दा राज्यको लागि खर्च आवश्यक पर्छ । खर्च व्यहोर्नको लागि राजस्वका स्रोत के कस्ता हुन्छन् र तिनको वितरणका कुरा अगाडि आउँछन् । यस सम्बन्धमा विभिन्न व्यवस्थाहरु गरिएको छ । ८०% राजस्व १० जिल्लाबाट आउने अवस्था छ । यसको समुचित वितरण हुनुपर्ने अवस्था आउंछ । खर्च, राजस्व र वितरण प्रणालीलाई व्यवस्थित गर्नुपर्ने हुन्छ । आर्थिक अधिकारको सन्दर्भमा तीनवटा सरकारलाई स्रोतको बाँडफाँड गरिएको छ र उनीहरूको कर्तव्य के हुने भनेर सूचीमा व्यवस्थित गरिएको छ । कुन राजस्व कुन सरकारले उठाउने भन्ने कुरा अन्तर्राष्ट्रिय प्रचलन, दक्षता, प्रशासनिक सक्षमता र आवश्यकताको सिद्धान्तको आधारमा तय गरिएको छ र ती विषयमा खासै विमति रहेको पनि छैन ।
- आदिवासी जनजातिहरूसँग सरोकार रहने विषयमा सन्धि-सम्झौता गर्नुपर्दा उनीहरूको सहमति लिएर मात्र गरिने व्यवस्था राख्नुपर्छ । सन्धि-सम्झौता गर्दा स्थानीय प्रान्तले सो विषयलाई असहमति जनाएमा सन्धि-सम्झौता गरिनु हुँदैन भन्ने व्यवस्था राख्नुपर्छ । आदिवासी जनजातिको अग्राधिकार कति प्रतिशत हुने हो, हरेक स्थानमा उनीहरूले पाउने प्रतिशत किटानी गरिनु पर्दछ । दलित जाति र पिछडा वर्गको अधिकार सुनिश्चित गर्नका लागि राज्यको स्रोत र साधनमाथि उनीहरूको पहुँच हुनु जरूरी छ । आदिवासी जनजातिको प्रथा र परम्पराको अवलम्बनमा रोक लगाइनु हुँदैन । सार्वजनिक हितको लागि आदिवासी जनजातिको

जग्गा प्राप्त गर्दा राज्यले उनीहरूको सहमति लिने कुरा सम्पत्तिको हकमा राख्नु पर्छ । खानेपानीको हकको व्याख्यात्मक टिप्पणीमा खानेपानीका स्रोतमा जनताको अधिकार हुनेछ भनेर लेखिनुपर्छ । आवास र रोजगारीको हकको मस्यौदाको भाषालाई परिमार्जन गर्न सकेको भए राम्रो हुन्थ्यो । संवैधानिक परिषद्को परिकल्पना कस्तो हुने हो सो पनि स्पष्ट हुनुपर्ने हो । भोकविरूद्धको हकको व्यवस्था स्पष्ट छैन । जातीय भेदभाव, लैङ्गिक भेदभावसमेत रहेको कुरालाई स्वीकार गर्दै यसलाई निर्मूल गर्ने कुरा लेख्नुपर्छ । श्रमिकको ज्याला र परिवारिक संरक्षण हुनुपर्छ ।

- प्रस्तावनामा रहेको पहिलो अधिकारको सट्टा न्यायोचित अधिकार भन्नुपर्छ । सम्पत्तिको हक सुनिश्चित गर्दा जमीनमाथिको हक पनि सुनिश्चितता गराउनु पर्दछ । रोजगारी कानूनबाट पाउन सक्दैन । आनुवंशिक स्रोत व्यक्तिविशेष जातिविशेषको हुँदैन । श्रमिकको अधिकार लेखिएकोमा पुनः उद्योगपतिको अधिकार लेखिनु पर्दैन । आदिवासीले परम्परागत रूपमा उपभोग गर्दै आएको जमीनमा उनीहरूको हक हुने व्यवस्था मौलिक हकमा थपिनु पर्दछ । स्रोतमाथिको अधिकार आदिवासी, दलित, जनजाति लगायतलाई दिनुपर्दछ । यस प्रतिवेदनमा केन्द्रलाई बढी अधिकार प्रदान गरेको छ । सहयोगी सङ्घीयताको खोजी हामीले गर्नु पर्दछ । सम्पत्तिलाई मौलिक अधिकारको रूपमा मौलिक हक समितिको प्रतिवेदनमा स्वीकार गरिएकोमा पुनः यस समितिको प्रतिवेदनले त्यसको विरोधमा भूमिसुधार सम्बन्धी व्यवस्था प्रस्तावित गरेको छ । खानेपानीको हकमात्र नभई अन्य उपभोगका वस्तुको हकपनि सुनिश्चित गरिनुपर्छ । आवासको हकमात्र नएर गाँस, बास र कपासको हक समेत सुनिश्चित हुनुपर्छ । आदिवासी जनजातिलाई रोजगारीमा पहिलो प्राथमिकता दिइने कुरा उल्लेख गरिनुपर्छ । वैज्ञानिक भूमिसुधार गर्न आदिवासी जनजातिलाई प्राथमिकता दिइनुपर्छ ।
- प्रस्तावनामा प्रतिस्पर्धात्मक लोकतन्त्रको ठाउँमा जनताको सङ्घीय लोकतन्त्र र जैविक विविधता शब्द थप गर्नु उपयुक्त हुन्छ । अघिल्लोले व्यक्तिको इच्छा अनुसार पेशा व्यावसाय र लगानी गर्ने स्वतन्त्रता दिन्छ भने पछिल्लोले कानूनबमोजिम बन्देज लाग्न सक्ने अवस्था दर्शाउँछ । खोलानाला व्यक्तिले ओगट्ने प्रथाको अन्त्य गर्नुपर्छ । खस क्षेत्रीहरु नेपालका आदिवासी हुन् । सामूहिक बसोवास प्रदेशले गर्नसक्छ । सम्पत्ति आर्जन गर्ने, बेचविखन गर्ने, उपयोग गर्ने अधिकार दिनुपर्छ । भाषा, धर्म, जातिका आधारमा व्यक्तिहरूलाई विकास गर्ने कार्यमा प्रतिबन्ध लगाउने प्रावधान राखिनु हुँदैन । श्रमिक महिला र पुरूषको ज्याला बराबर हुनुपर्दछ । वातावरण, खानेपानी र खाद्य सम्बन्धी हक मौलिक हक समितिको क्षेत्राधिकारभित्र पर्दछ । यसलाई कसरी समायोजन गरिन्छ, त्यो हेर्न बाँकी नै छ । खाद्य सम्बन्धी हक पूरा गर्ने सामर्थ्य राज्यसँग हुनुपर्छ । मौलिक हकलाई राज्यले पूरा गर्ने सामर्थ्य राखेमामात्र मौलिक हकमा समावेश गर्न उचित हुन्छ ।
- अपाङ्गता भएका व्यक्तिलाई विशेष शिक्षा दिने व्यवस्था गरिनु पर्दछ । अपाङ्गताहरूको अधिकार सुनिश्चित गर्ने संविधान निर्माण गरिनु पर्दछ । आवासको हकमा वृद्ध, अपाङ्ग र महिलालाई पहिलो प्राथमिकता रहनेछ भनेर उल्लेख हुनुपर्छ । दलितहरूको गाँस, बास, कपास, शिक्षा र रोजगारीको ग्यारेण्टी गरिनुपर्छ । मुस्लिम, महिला, दलितको आनुवंशिक स्रोतको संरक्षणमा हक हुने व्यवस्था गरिनुपर्छ । सम्पत्तिको हकको कुरा गर्दा हदबन्दी नै तोकेर जानुपर्छ । अवधारणाले आर्थिक अधिकारलाई फेरिपनि केन्द्रमा नै राखेको छ । रोजगारीको हकमा रोजगारी दिन नसकिएकाहरूलाई बेरोजगारी भत्ता दिने व्यवस्था राख्नुपर्छ । आदिवासी जनजातिलाई रोजगारीको प्रथम हक हुने, उनीहरूलाई श्रम सङ्गठन खोल्ने र सामूहिक सौदावाजीको हक हुनुपर्छ । आदिवासी जनजातिको जग्गा अधिग्रहण गर्दा उनीहरूलाई पूर्व सुसूचित गराइनुपर्छ । महिलामाथिको शोषण अन्त्य गर्ने कुरा स्पष्टताको साथ उल्लेख गर्नुपर्छ । श्रमिकको हक

सुनिश्चित गर्दा लगानीकर्ताको पनि हक सुनिश्चित गरिनुपर्दछ । रोजगारी कानूनद्वारा व्यवस्था गरे बमोजिम हुनेछ नभनी सुनिश्चित गरिनुपर्छ । आदिवासीलाई श्रम सङ्गठन निर्माण, सामूहिक सौदावाजी, रोजगारीको हक हुनेछ । जन्म, मृत्यु दर्ता गर्ने अधिकार स्थानीय सरकारलाई दिनुपर्छ ।

- हाम्रोजस्तो भू-बनोट र स्रोत भएको ठाउँमा मिश्रित शासनप्रणाली उपयुक्त हुन्छ भन्ने आधारमा प्रतिवेदन तयार गरेका छौं । यसमा तीन तहको कल्पना गरिएको छ । यदि राज्य पुनर्संरचना समितिले चार तहको संरचना बनाएको अवस्थामा प्रतिवेदन पुनरावलोकन गर्नुपर्ने अवस्था हुन्छ । बढी प्रान्तहरू स्थापित भएमा राजस्वको स्रोतको बाँडफाँड र प्राकृतिक स्रोतको बाँडफाँडमा जटिलता आउने अवस्था रहन्छ । यी विषयहरूमा प्रष्ट विचार हुनुपर्छ । नीति, नियम र ऐन, कानून प्रष्ट रूपमा बनाइनु जरूरी छ । यस प्रतिवेदनमा उल्लिखित सङ्घीयता सम्बन्धी व्यवस्थामा हाम्रो असहमति छ । केन्द्रको अधिकार के कस्तो रहन्छ ? राष्ट्रिय महत्वको स्रोत-साधनमा केन्द्रको अधिकार हुनुपर्छ । पिछडिएका आदिवासी जनजातिको अधिकार सुनिश्चित हुने गरी लेखिनुपर्छ । सङ्घ र प्रदेशको कानून बाझिएमा सङ्घको कानून लागू हुने व्यवस्था राख्नुपर्छ । प्रदेशलाई बढी आर्थिक अधिकार दिइनुपर्छ । सङ्घले प्रदेशलाई र प्रदेशले स्थानीयस्तरमा दिने गरी व्यवस्था हुनु पर्दछ । यस सन्दर्भमा पनि प्रदेशलाई बलियो बनाउनु पर्छ ।
- जैविक स्रोत र प्रविधिको संरक्षण र प्रवर्द्धन गरिनुपर्छ । प्राकृतिक स्रोतको परिभाषा हुनु जरूरी छ । राजस्वका स्रोतहरू अधिकांश केन्द्रलाई दिएको देखिएको छ जुन उपयुक्त भएन । यसले केन्द्रलाई मात्र बलियो बनाउँछ, प्रदेश र स्थानीय निकायहरू कमजोर हुन्छन् । मुद्रा, सुरक्षा र परराष्ट्रनीतिका विषयबाहेक अन्य सबै कुरा तल्लो निकायलाई दिइनु पर्छ । प्रान्त र स्थानीय निकायलाई स्थानीय स्रोत-साधनको प्रयोग गर्ने अधिकार दिइनुपर्छ । २ वा २ भन्दा बढी प्रदेशले सञ्चालन गर्ने आयोजनाहरूको प्रयोगको विषयमा पनि संविधानमा नै किटानी साथ लेखिनु पर्दछ । प्रदेशहरूको संख्या धेरै भयो भने आर्थिक रूपले सम्पन्न नहुन सक्छ, यस विषयमा गम्भीरतापूर्वक टुङ्गोमा पुग्नु आवश्यक छ । प्रतिवेदनले केन्द्रलाई बलियो बनाउन खोजेको देखिन्छ । समितिको फरकमतमा आएको विषय वास्तवमा यो समितिको कार्यक्षेत्रभित्र पर्ने विषय नै थिएन ।
- सूची - १ मा स्वास्थ्य अन्तर्गत परम्परागत उपचार सेवालाई व्याख्यात्मक टिप्पणीमा उल्लेख गरिएको छ । तर स्थानीयतहमा राखिएको छैन । वातावरण अन्तर्गत जैविक विविधता पनि स्थानीय सरकारको दायित्वभित्र राखिएको छैन । व्याख्यात्मक टिप्पणीमा उल्लेख भएकोले स्थानीय सरकारको दायित्वभित्र राख्नुपर्छ । भूगर्भभित्रको प्राकृतिक स्रोत २ वटा प्रदेशको क्षेत्रभित्र परे तिनीहरूको अधिकार कसरी सुनिश्चित गर्ने स्पष्ट गर्नु पर्दछ । परम्परागत उपचार सेवामा स्थानीयस्तरको अधिकार रहनुपर्छ । भू-उपयोगको अधिकार स्थानीय निकायमा हुनुपर्छ । नेपालमा दिगो र दह्रो केन्द्र तथा अधिकारसम्पन्न स्थानीय निकाय हुनु आवश्यक छ । अधिकारलाई विकेन्द्रित गरिनुपर्दछ । प्रान्तीय सरकारलाई बढी अधिकार दिनुपर्दछ । सङ्घीयतामा जलस्रोतको उपयोग गर्दा सम्झौतामा कार्य गर्नुपर्दछ । ढुंगा, खानी, बालुवा, माटो बचाउने गरी स्पष्ट गरिनु पर्दछ । इन्धन वैकल्पिक उपायहरूको, स्थानहरूको विकासको आधार खोज्ने कार्य राज्यको हुनुपर्दछ । भूगोलको आधा भाग जङ्गलक्षेत्रमा राख्नुपर्दछ । प्राकृतिक प्रकोप मानवीय कारणले हुने भएकोले त्यस्ता कार्य राज्यले रोक्न आवश्यक व्यवस्था लेखिनुपर्दछ ।

अन्तमा, मा० सभापति श्री अमृता थापा मगरले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.१.९. संवैधानिक समिति

संवैधानिक समितिको अवधारणापत्र र प्रारम्भिक मस्यौदा सहितको प्रतिवेदन, २०६६ माथि संविधानसभामा २०६६ पुस २८, २९, माघ ३, ४ र ७ गते भएको छलफलमा १७१ जना मा० सदस्यहरूले भाग लिनुभएको थियो । उक्त समितिको छलफलमा ३० घण्टा २० मिनेट समय लागेको थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा उठेका मुख्य बुँदाहरूको सारांश यस प्रकार छ :-

- प्रस्तावनाले जनताका भावनाहरु समेटेको छ । यसमा धेरै स्वागतयोग्य कुराहरु छन् । अहिलेको राष्ट्रिय झण्डा उचित छ । राष्ट्रियगान पनि यथावत् राखिनुपर्छ । राष्ट्रिय प्रतीकहरूमा डाँफे हिन्दुवादीको मात्र होइन, गाईलाई पनि धर्मविशेषको रूपमा हेर्नु हुँदैन । सहमतिका आधारमा आगामी दिनमा राष्ट्रिय प्रतीक राख्नु उचित नै हुन्छ । सशस्त्र सङ्घर्ष राख्ने सहमति भयो, तर २ वटा आन्दोलनमात्र प्रस्तावनामा उल्लेख हुन पुग्यो । कि सबै राखौं कि साझा शब्द राखौं । प्रस्तावना राख्ने संविधानको विगतको परम्परा यथावत् छ । बहुलवाद प्रस्तावनाबाट हटेपनि संविधान संशोधनमा समावेश हुन पुग्यो । बहुलवाद भन्ने शब्द हटाइनुपर्दछ । ऐतिहासिक सशस्त्र सङ्घर्ष उल्लेख गरिरहनु जरूरी छैन । विगतमा गरिएको सबै शान्तिपूर्ण आन्दोलन र सशस्त्र आन्दोलन भनिनुपर्छ । जसले सबै आन्दोलनहरु समेट्दछ । हाम्रो राज्यलाई के आधारमा बहुराष्ट्रिय भन्ने हो ? यसलाई सच्याइनुपर्छ । बहुजातीय राज्य भन्न सकिन्छ । अथवा अन्तरिम संविधान अनुसार राख्न सकिन्छ । किनभने यो कुरा असंशोधनीय चरित्रमा समेत रहेको छ । राजनीतिक दल सम्बन्धी व्यवस्थाले समेत बहुलवादको अवधारणालाई स्वीकारेको हुँदा यो राख्नु उचित हुन्छ । निषेधको राजनीति स्वीकार गर्नु हुन्न । बहुलवाद नस्वीकारिनु भनेको ०६२।०६३ को आन्दोलनको भावना नमान्नु हो । प्रस्तावनाको अनुच्छेद ३ मा मधेस आन्दोलन राख्दा अन्य असंख्य आन्दोलन राखिनु पर्ने भएकोले सशस्त्र सङ्घर्ष, शान्तिपूर्ण जनआन्दोलन राखी मधेस आन्दोलन भन्ने शब्द झिक्नुपर्दछ ।
- प्रस्तावनामा ध्यान दिंदादिंदै पनि केही विवादास्पद विषय मस्यौदामा आएको छ । प्रस्तावनामा निरङ्कुश शब्दपछि राजतन्त्र शब्द थप्नुपर्छ । लोकतन्त्रको मूल्य र मान्यतापछि मुलुकलाई समुन्नत राज्य बनाउने शब्द थप्नुपर्छ । प्रस्तावनाको चौथो अनुच्छेदमा स्मरण गर्दै भन्ने शब्द पछि समूल नष्ट गर्ने प्रण गर्दै भन्नुपर्छ । प्रस्तावनामै महिला अधिकार शब्द राख्नुपर्छ । बहुजातिहरूको देश भएकाले नेपाल बहुराष्ट्रिय राज्य हो । समानुपातिक समावेशी भन्ने शब्दहरु हटाउने भनी आएको फरकमत ठीक छैन । यो शब्द राख्नुपर्छ । प्रस्तावनामा आन्दोलनको विवाद गरिनु हुँदैन । जनताको सङ्घीय गणतन्त्र नेपालको संविधान भनेर लेखिनुपर्छ । प्रस्तावनामा रहेको जनताको शब्द ठीक छ । नेपालभूमिका मालिक नेपाली जनता हुन् भन्ने शब्द थप्नुपर्छ । त्यसैगरी नेपालको राष्ट्रिय सुरक्षा नेपाली जनताले गर्ने व्यवस्था थप्नुपर्छ । प्रस्तावनामा जनताको शब्द हटाई समानुपातिक अगाडि पूर्ण शब्द राख्नुपर्छ । प्रस्तावनामा जैविक विविधता, खाद्य सम्प्रभूता, समाजवादउन्मुख मिश्रित अर्थव्यवस्था उल्लेख गर्नुपर्छ । पुरानै चिन्तन, सोचाइ र व्यवहारबाट नयाँ नेपाल बन्न सक्दैन, विगतको अन्याय अत्याचार समाप्त हुन सक्दैन । राज्यको परिभाषामा सङ्घीय लोकतान्त्रिक पदावली रहनुपर्छ ।
- प्रस्तावनाको छैटौं हरफपछि देशको सार्वभौमसत्ता, क्षेत्रीय अखण्डता, राष्ट्रिय स्वतन्त्रता र स्वाभिमानलाई अक्षुण्ण राख्दै राष्ट्रहरूको स्वतन्त्रता, सार्वभौमिकता र समानताको सम्मान गर्दै विश्वशान्तिको प्रवर्द्धन र विकासको साथै विश्वमा लोकतन्त्र र मानव अधिकारको प्रवर्द्धन र संरक्षणप्रति पूर्ण समर्थन र सहयोग गर्दै स्वतन्त्र राष्ट्रहरूले भोग्दै आएका आन्तरिक द्वन्द्व, कलह र युद्धका सम्बन्धित पक्षहरूलाई शान्तिपूर्ण समाधानको लागि द्वन्द्वसमाधानमा नेपालले हासिल

गरेको अनुभव र उपलब्धिहरूलाई संयुक्त राष्ट्रसङ्घ र अन्तर्राष्ट्रिय निकायहरूको माध्यमबाट उपयोग गराउन तथा नेपालबाहिर रहेका नेपाली नागरिकहरूको हक हित र सुरक्षाका साथै मातृभूमिसँग आर्थिक र सामाजिक सम्बन्ध कायम गराउन नेपालको परराष्ट्रनीतिको उद्देश्य कायम गर्ने प्रतिबद्धता व्यक्त गर्दै भन्ने वाक्याश राखियोस् जसले परराष्ट्रनीतिलाई पनि स्पष्ट गरोस् ।

- संविधानसभा अगाडि ऐतिहासिक शब्द राख्नु उपयुक्त हुन्छ । प्रस्तावना बोझिलो ढङ्गले लेखिएको छ । मधेस आन्दोलन लेख्नमा मतदान गर्नेलाई धन्यवाद दिन चाहन्छु । प्राप्त भएका सबै फरकमत अनुसार प्रस्तावनामा राख्न उचित छ । प्रस्तावनामा धेरै विषयवस्तुहरू अमूर्त राखिएको छ । प्रतिवेदनको प्रस्तावनामा कुनै आन्दोलनलाई बढी महत्व दिने र कुनै आन्दोलनलाई कम महत्व दिनु उपयुक्त हुँदैन । प्रस्तावनामा धर्मनिरपेक्ष शब्द उल्लेख नहुनु परिवर्तनलाई आत्मसात् गर्न हिचकिचाउनु हो । बहुलवादलाई विचारको विविधतालाई स्वीकार गरिने मान्यताको आधारमा प्रस्तावनामा समावेश गरिनु आवश्यक छ । बहुलवादको सट्टा बहुविचारलाई स्वीकार गर्ने कुरा उल्लेख गर्न सकिन्छ । सङ्घर्षको शुरूदेखिको नाम उल्लेख गर्नुपर्छ । अन्यथा सबै आन्दोलनलाई उल्लेख गर्नुपर्छ । सार्वभौमसत्ता र राजकीयसत्ताको प्रयोग विधि उल्लेख नगरी यसलाई सीमित गर्न खोजेको देखिन्छ । बहुलवाद जस्तो दार्शनिक विषयलाई असंशोधनीय विषयको रूपमा राख्नु उपयुक्त हुँदैन ।
- संविधानको नाम गणतन्त्र नेपालको संविधान, २०६७ राखिनुपर्छ । श्रमजीवी जनतालाई केन्द्रबिन्दु बनाएर आउनुपर्नेमा कमिकमजोरी रहेको छ । जनताको सङ्घीय गणतन्त्र नेपालको संविधान भनी नाम राख्नुपर्छ । आत्मनिर्णयको अधिकारलाई आफ्नो अनुकूलतामा व्याख्या गर्न त जाँदैनौं ? आत्मनिर्णयले राजनीतिक विभाजनलाई पनि निम्त्याउँछ । आत्मनिर्णय भन्ने शब्दमा स्थानीय स्वायत्तता र स्वशासन भन्ने शब्द लेखिनुपर्दछ । प्रस्तावनामा विभेद र उत्पीडनलाई स्मरण गर्ने भनी उल्लेख गरिएको छ, स्मरण सकारात्मक कुराको मात्र गरिने हुँदा यो उपयुक्त छैन । जातीय, क्षेत्रीय, लैङ्गिक विभेद नहुने विषय संविधानमा प्रष्ट रूपमा उल्लेख गरिनुपर्दछ । लोकतन्त्रमा जनताको आत्मनिर्णयको अधिकार हुनुपर्छ । जसलाई प्रतिवेदनले स्वीकारेको पनि छ । त्यसले जनतालाई सार्वभौम बनाउँछ । जनतालाई स्वायत्तता र स्वशासन दिइनुपर्छ । यो अधिकार नदिंदा चाहिं विद्रोह हुनसक्छ । वर्गीय हक हितका कुरा संविधानको दायराभित्र पारिनुपर्दछ । ट्रेड युनियनहरूले दिएका सुझावहरू सम्बन्धित विषयगत समितिमा नपुगेकाले हो कि के हो ? यस विषयमा खाका प्रष्ट रूपमा आउनुपर्दछ । पछि संविधानको एकीकृत मस्यौदा गर्दा संविधानमा ट्रेड युनियनद्वारा प्रस्तुत सुझावहरूलाई समावेश गरियोस् । बहुदलीय प्रतिस्पर्धालाई स्वीकार गरिसकेपछि बहुलवाद लेखिराख्नु पर्दैन ।
- जनताको आत्मनिर्णयको अधिकारजस्ता शब्दहरू प्रस्तावनामा राख्नु हुँदैन, सो शब्द हटाइनु पर्छ । जातीय स्वशासनको अवधारणालाई स्वीकार गरी वास्तविक रूपमा विकेन्द्रीकरण लागू गरिनुपर्छ । सङ्घीयता र सोसँग सम्बन्धित सबै प्रावधानहरू प्रति असहमति रहेको छ । आत्मनिर्णयको अधिकार सम्बन्धमा राज्यको शासकीय स्वरूप निर्धारण समितिको प्रतिवेदन आएपछि छलफल गर्नु उचित हुन्छ । विगतदेखि उठेका जातीय मुक्ति आन्दोलनहरूबारे प्रस्तावनामा उल्लेख गरिनुपर्छ । स्वायत्त गणराज्यहरूले संविधानसँग नबाझिने गरी आफ्नो संविधान बनाउन सक्ने कुरा उल्लेख हुनुपर्छ । संविधानमा लेख्दैमा स्वाधीनता कायम हुँदैन, यसका लागि सबै राजनीतिक दल एकाकार हुनुपर्दछ । आत्मनिर्णयको अधिकार राज्यबाट छुट्टिने अधिकार होइन । पुर्ख्यौली सम्पत्तिमा संरक्षण गर्ने र उत्पीडनविरूद्ध विद्रोह वा आन्दोलन गर्ने अधिकार हुने भएकोले आत्मनिर्णयको अधिकार राखिनुपर्दछ । उपर्युक्त ठाउँमा छुट्टै परिच्छेद वा धारा थपेर आजसम्म दमन उत्पीडनमा पिल्सिएका राज्यको हरेक सुविधाबाट

वञ्चित भएका समुदायहरूको पहिचान हुने गरी महिला आदिवासी, जनजाति, दलित, मधेसी, मुस्लिम, तराई, पिछडाक्षेत्र, अल्पसंख्यक, सीमान्तकृत, लोपोन्मुख, तेस्रो लिङ्गी, अपाङ्ग लगायत हरेक क्षेत्र जस्तैः राजनीतिक, आर्थिक, शैक्षिक, न्यायपालिका, कार्यपालिका, व्यवस्थापिका लगायतमा समानुपातिक समावेशी सहभागिताको लागि संविधानले नै ग्यारेन्टी गरिनुपर्दछ ।

- स्थानीय स्वायत्तता र स्थानीय स्वशासनलाई पनि प्रस्तावनामा समावेश गरिएको छैन । जनतालाई मालिक बनाउनका लागि स्थानीय स्वायत्तता र स्थानीय स्वशासनलाई उल्लेख गरिनुपर्छ । नेपाल राज्यभित्र स्थानीय स्वायत्त एकाइ र सङ्घीय एकाइ अनुसूचीमा रहे बमोजिम हुने व्यवस्था राखिनुपर्छ । स्थानीय स्वशासनलाई अपरिवर्तनीय बनाउनुपर्छ । स्थानीयस्तरको सीमा हेरफेर गर्दा स्थानीय सरकारको सहमति लिनुपर्ने प्रावधान राखिनुपर्छ । स्वायत्तता र स्वशासन उल्लेख भई सकेपछि आत्मनिर्णयको अधिकार उल्लेख गर्नु आवश्यक छैन । मधेस आन्दोलनबाट देशमा सङ्घीयता आएको हो । सङ्घीयता स्थापित गर्ने मधेस आन्दोलनलाई विस्थापित गर्न सकिन्न । बाधा अड्काउ फुकाउने अधिकार प्रादेशिक व्यवस्थापिकाबाट अनुमोदन गराउने व्यवस्था गरिनुपर्छ । सङ्घीयताको विषयमा नहेरी विरोध नगरौं । सङ्घीयताको विरोध गर्नु जनभावनाको प्रतिकूल हुन्छ । प्रदेशको संख्या र सिमाना परिवर्तनको विषय दुईतिहाई बाट नभई साधारण बहुमतबाट गर्न सकिने व्यवस्था राख्नु उपयुक्त हुन्छ ।
- संविधानमा अपरिवर्तनीय भन्ने प्रावधान राख्नु हुन्न । यो गतिशील चिन्तन प्रवृत्ति होइन । समाज गतिशील हुन्छ र सोही अनुसार संविधान संशोधन हुनुपर्छ । असंशोधनीय राखिएका मान्यताहरू उचित छन् । संविधानलाई जीवित बनाउने ठाउँ दिइनुपर्छ । यसैले संशोधन सम्बन्धी व्यवस्थामा यसलाई उचित व्यवस्था गर्नुपर्छ । केही आधारभूत मूल्य मान्यतालाई असंशोधनीय बनाउन सकिन्छ । दुईतिहाई वा तीनचौथाई बहुमतबाट पनि संशोधन गर्न सकिन्छ । प्रस्तावित संशोधन सम्बन्धी व्यवस्थामा समग्र रूपमा विचार गरी राख्न सकिन्छ । सङ्घीयता पनि असंशोधनीय हुने कुरा उल्लेख गरिनुपर्दछ । सङ्घीय गणतन्त्र हाम्रो अपरिवर्तनीय व्यवस्था हो । राष्ट्रिय झण्डाले सामन्तवादको प्रतिनिधित्व गरेको छ, यो सामन्तवादको प्रतीक हो । त्यसैले फेर्नेतर्फ सोचिएन । सबै भाषा जाति र धर्मको प्रतिनिधित्व गर्ने गरी राष्ट्रिय झण्डा फेर्नुपर्दछ । राष्ट्रिय प्रतीकलाई फेर्नुपर्दछ, राष्ट्रिय जनावर गाई हटाउनुपर्दछ । सबै नेपालीको प्रतिनिधित्व हुने गरी नयाँ राष्ट्रिय झण्डा तय गरिनु पर्दछ । राष्ट्रिय चिन्हहरु थपिनुपर्छ । नेपालको राष्ट्रिय गौरव महात्मा गौतम बुद्ध हुन् भनी थपिनुपर्छ । राष्ट्रिय गानमा वीराङ्गना शब्द थपिनुपर्ने सङ्घीयता, गणतन्त्र र नयाँ परिवेश अनुसार झण्डामा परिमार्जन गर्दा राम्रो हुन्छ ।
- सङ्क्रमणकालीन व्यवस्थामा संविधानसभालाई व्यवस्थापिकाको रूपमा निरन्तरता दिने तर राष्ट्रपति, सर्वोच्च अदालतको न्यायाधीश, संवैधानिक निकायका पदाधिकारीहरूको विषयमा अन्यथा व्यवस्था गर्ने जस्ता कुरा आफ्नो हकमा एउटा अर्कोको हकमा अर्कै व्यवस्था गर्नु दोहोरो मापदण्ड भएन ? राष्ट्रप्रमुखबाट माफी दिने व्यवस्था राखिनु हुँदैन । सङ्क्रमणकालीन व्यवस्था अन्तर्गत हालकै राष्ट्रपति र मन्त्रिपरिषद्लाई निरन्तरता दिने कुरा रहनु हुँदैन । नयाँ संविधानले व्यवस्था गरे अनुसारको ढाँचा तयार गर्न संविधानसभालाई अधिकार दिनुपर्छ । १ महिनाभित्र राष्ट्रपति र मन्त्रिपरिषद् सम्बन्धी व्यवस्था हुनुपर्छ । संवैधानिक अङ्ग र पदाधिकारीका हकमा ३ महिनाभित्र व्यवस्था हुनुपर्छ । सङ्क्रमणकालीन अवधिको बारेमा पनि अन्तरिम व्यवस्था हुनुपर्छ । राष्ट्रपति, मन्त्रिपरिषद्, संवैधानिक निकायका पदाधिकारी सम्बन्धी अन्तरिम व्यवस्था गर्नुपर्छ । यसबारेमा संविधानसभाले निर्णय गर्ने व्यवस्था राखिनुपर्छ । सङ्क्रमणकाल सम्बन्धी व्यवस्था अहिले नै पूर्ण हुन सक्दैन ।

- मानिसहरूको समूहलाई राज्य भन्नु उपयुक्त हुन्न । राज्यको परिभाषामा रहेको बहुराष्ट्रिय राज्यले अन्यौल खडा गरेको छ । के हो बहुराष्ट्रिय राज्य भनेको ? स्थानीय निकाय जनप्रतिनिधिविहीन छ, अर्को बन्दोवस्त नभएसम्म विगतको स्थानीय निकायलाई पुनःस्थापना गरी हाल प्रतिनिधित्व नभएको दलको पनि समावेश गर्नुपर्छ । राष्ट्रको निशाना छाप एउटै हुन्छ, प्रदेशको छुट्टै निशानाछाप हुने कुरा लेखिनु उपयुक्त हुन्न । अल्पसंख्यकहरू बसोबास गरेको मुलुक बहुराष्ट्रिय राज्य हुनै सक्दैन । अवधारणापत्रको पेज ७६ मा राज्यमा मानिसहरू निश्चित प्रदेश अन्तर्गत कानूनको निमित्त सङ्गठित भएका हुन्छन् भन्नेमा प्रदेशको सट्टा क्षेत्र भन्नुपर्दछ । सङ्घीयता, समानुपातिकमा बोल्ने तर मत दिनेमा फरक रहेको पाइन्छ ।
- राजनीतिक दल दर्ता गर्ने सम्बन्धी सबै विषय संविधानमा नै उल्लेख गर्नुपर्छ । धर्म, जात, लिङ्गको आधारमा दल खोल्न दिइनु हुन्न । राजनीतिक दललाई बन्देज लगाउन नपाउने स्पष्ट व्यवस्था गर्नुपर्छ । दल सधैंभरि दर्ता भई राख्नको लागि निश्चित प्रतिशत मत प्राप्त हुनुपर्ने व्यवस्था राख्न उचित हुन्छ । संविधानको नामले संविधानको विशेषतालाई झल्काउनु पर्छ । राजनीतिक दललाई समानुपातिक समावेशी बनाउनु पर्छ, क्षेत्रीय पार्टीलाई कसरी समानुपातिक बनाउने स्पष्ट गरिनुपर्छ । राजनीतिक दल सम्बन्धी व्यवस्था लामो भयो यसलाई छोटो गरी राख्नुपर्छ । धर्मसम्बन्धमा जनताले आन्दोलन गरेका छैनन् । धर्मनिरपेक्ष हुने नहुने भन्नेमा जनमतसङ्ग्रह हुनुपर्छ । जनमतसङ्ग्रहबाट संशोधन हुने कुरालाई स्वीकार्छौं । तर जनमतसङ्ग्रहबाट अनुमोदन भएपछि पनि विधिवत रूपमा संविधानमा अङ्कित गर्ने प्रक्रिया आवश्यक पर्छ । सो अनुसार मस्यौदामा सच्याइनु पर्छ । संविधान निर्माण गर्नु पूर्व हिन्दुराष्ट्र, राजसंस्था एवं सङ्घीयता जस्ता विषय प्रस्तावनामा राख्नु पूर्व जनमतसङ्ग्रह गरी सोको राय अनुरूप संविधानमा राखिनु पर्दछ । अन्तरिम संविधानको धारा १५७ मा राष्ट्रिय महत्वका विषयमा जनमतसङ्ग्रहबाट निर्क्यौल गर्ने विषय सुनिश्चित गरिएको छ । जनमतसङ्ग्रहको माध्यमबाट अनुमोदन भएको व्यवस्था अनुसार संशोधन गर्न विधेयक प्रस्तुत गर्ने व्यवस्था राखिनुपर्छ । जनमतसङ्ग्रहबाट पारित विषयमा संसदबाट संविधान संशोधन गर्न सकिन्छ, तर जतिखेर चाह्यो उतिखेर प्रक्रिया बेगर स्वतः संशोधन हुन सक्दैन, संसदीय बाटोबाट मात्र संविधान संशोधन गर्न पाउनुपर्छ ।
- राजदूत नियुक्तिमा समानुपातिक सिद्धान्त हुबहु कार्यान्वयन हुन सक्दैन । समावेशी सिद्धान्तको आधारमा राजदूत नियुक्ति गर्ने कुरा लेख्दा हुन्छ । राजदूत नियुक्तिमा समावेशीमात्र राखे हुन्छ । संवैधानिक परिषद् अनिवार्य भए अन्य समितिबाट आएपनि नआएपनि यसको प्रतिवेदनमा आउनुपर्थ्यो । समानुपातिक समावेशी सिद्धान्तको दुरूपयोग नगरौं र राजदूत नियुक्ति गर्दा समानुपातिक समावेशी हुनुपर्छ भनी संविधानमा लेख्नु हुँदैन । यो राज्यको नीतिको कुरा हो । राजदूत नियुक्तिमा समानुपातिक पद्धति अवलम्बन गरिनु हुँदैन । संविधानसभामा भएका सबै दलको प्रतिनिधित्व संवैधानिक समितिमा भएको हुनाले पनि यस समितिको प्रतिवेदनमा धेरै फरकमत आएका छन् ।
- संविधानका कतिपय प्रावधानहरू एकै पटक लागू गर्न नसकिने अवस्था भएमा पटक-पटक लागू हुने गरी कतिपय व्यवस्थाहरू राख्न सकिन्छ । राष्ट्रिय गानको संगीतलाई यथावत् राखी विभिन्न भाषामा गाउन सक्ने बनाउनु पर्छ । राष्ट्रिय चिन्हका बारेमा लेखिएको भए राम्रो हुन्थ्यो । राज्य धर्मका सन्दर्भमा तटस्थ हुनुपर्छ । राष्ट्रिय चरा डाँफे, जनावर गाई, फूल लालीगुरास हो, यसो हुँदा कसलाई आघात पुग्छ । देशभरका जनताले चिन्ने जनावरलाई राष्ट्रिय जनावर राख्न हिच्किचाउनु हुन्न । राष्ट्रिय बहसबाट नयाँ झण्डा निर्माण गर्नुपर्छ । नेपाल सम्वत्‌लाई राष्ट्रिय सम्वत्‌को रूपमा मान्नुपर्छ । प्रस्तावित संविधानको नाम जे भए पनि नेपाल सम्वत् ११३० उल्लेख गर्नुपर्छ । राज्यको परिभाषामा समाजवादउन्मुख भन्ने शब्द राख्नु आवश्यक छैन ।

- संविधान संशोधनको प्रक्रिया लचिलो हुनु बेस हुन्छ । मस्यौदामा सैद्धान्तिकभन्दा पनि शाब्दिक विवाद रहेको देख्दछु । वास्तविक लोकतन्त्रको सुनिश्चितता गर्ने किसिमका प्रावधानहरू राखिनुपर्छ । विविधतालाई प्रतिविम्बित गर्ने गरी समावेशी सहभागिता ... पछि ... र लिङ्गको आधारमा समानुपातिक सहभागिता थप गरिनुपर्छ । संविधानको कार्यान्वयन गर्न कुनै बाधा अड्चन परेमा एक महिनाभित्र सङ्घीय व्यवस्थापिकाबाट अनुमोदन गर्ने गरी मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रप्रमुखले आदेश जारी गर्न सक्नेछ भन्ने व्यवस्था गरिनुपर्छ । संविधानसँग बाझिने कानून तुरुन्तै निष्क्रिय हुने व्यवस्था राख्नुपर्छ ।
- सङ्कटकाल घोषणा गर्दा सङ्घीय एकाइको दुईतिहाई बहुमतले पारित गर्नुपर्ने अनिमात्र घोषणा गर्नुपर्ने व्यवस्था गर्नुपर्छ । राजनीतिक र गैरराजनीतिक सङ्कटकाललाई छुट्याउनुपर्छ । गैरराजनीतिक सङ्कटकाल घोषणा गर्न प्रान्तलाई पनि अधिकार दिइनुपर्छ । सङ्क्रमणकालीन प्रबन्धको प्रस्तावित व्यवस्था व्यावहारिक छ । सङ्कटकाल घोषणा भएकोबेला संसद विघटन नगरिने व्यवस्था राख्नुपर्छ । सङ्क्रमणकालको व्यवस्थापनका लागि संविधानसभालाई अधिकार दिइनुपर्छ । सङ्कटकालको घोषणाबाट मर्का पर्नेले उजुरी दिन सक्ने व्यवस्था गरिनुपर्छ । बाधा अड्काउ फुकाउने अधिकारमा व्यवस्थापिका-संसदबाट अनुमोदन गर्ने कुरालाई राख्नुपर्छ । युद्ध, वाह्य आक्रमण र प्राकृतिक विपत्तिबाट लाग्ने सङ्कटकाललाई एउटै रूपमा राख्नु हुन्न । यिनीहरूलाई छुट्टाछुट्टै व्यवस्थित गर्नुपर्छ । सङ्कटकालबाट पीडितले कति समयमा क्षतिपूर्ति पाउने हो भन्ने कुरा स्पष्ट हुनुपर्छ । सङ्कटकालको अवधि थप्न सदनको दुईतिहाई बहुमत आवश्यक पर्छ ।

अन्तमा, मा० सभापति श्री नीलाम्बर आचार्यले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.१.१०. राज्यको शासकीय स्वरुप निर्धारण समिति

राज्यको शासकीय स्वरूप निर्धारण समितिको अवधारणापत्र र प्रारम्भिक मस्यौदा सहितको प्रतिवेदन, २०६६ माथि संविधानसभामा २०६६ माघ १०, ११, १२, १३ र १४ गते भएको छलफलमा १३३ जना मा० सदस्यहरूले भाग लिनुभएको थियो । उक्त समितिको छलफलमा ३१ घण्टा ४० मिनेट समय लागेको थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा उठेका मुख्य बुँदाहरूको सारांश यस प्रकार रहेको छ :-

- विगतको इतिहास हेर्दा प्रधानमन्त्रीय पद्धतिको पर्याप्त अभ्यास भएको हो । तर यो हामीकहाँ असफल भएको छ । देशको सामाजिक आर्थिक रूपान्तरणका लागि एकदुई दशकसम्म सबैले मिलेर काम गर्नुपर्छ । त्यसो गर्न पनि राष्ट्रपतिप्रणाली जरूरी छ । द्वैधसत्ता कायम रहनु हुँदैन । अर्थात् शासनमा दुईवटा शक्ति केन्द्र रहनु हुन्न । राष्ट्रपति र प्रधानमन्त्री गरी दुई केन्द्र हुनु हुन्न । यस स्थितिको अन्त्यको लागि राष्ट्रपतीय प्रणाली आवश्यक छ । आर्थिक दृष्टिकोणबाट हेर्दा पनि दुई प्रकारका संयन्त्र र संरचना जरूरी छैन, यो खर्चिलो हुन्छ । यसलाई सम्बोधन गर्न पनि राष्ट्रपतीय प्रणाली नै जरूरी छ ।
- नेपाल जस्तो बहुजातीय, बहुभाषिक देशमा राष्ट्रपति साझा व्यक्तित्व हुनुपर्छ । प्रत्यक्ष निर्वाचित राष्ट्रपतिका अवगुण हेर्दा दलको आदेश पालन गर्नुपर्ने, दलको हस्तक्षेप बढ्ने, राष्ट्रपति साझा व्यक्तित्व नहुन सक्ने तर राष्ट्रपति संविधानको संरक्षक हुन नसक्ने, यसैले ऊ दलसँग आबद्ध हुन सक्ने, प्रशासकीय निर्णय गर्नबाट टाढा हुन नसक्ने । राष्ट्रपतीय प्रणालीका सकारात्मक पक्षहरूमा शक्तिपृथकीकरण तथा नियन्त्रण र सन्तुलन कायम हुने, उन्नत लोकतन्त्रको अभ्यास हुने, शीघ्र निर्णय हुने, तुरुन्त जनतामा सेवा पुग्ने, राजनीतिक स्थायित्व प्राप्त हुने स्थिति देखिन्छ । यसकारण यी कुरा प्राप्तिको लागि राष्ट्रपतीय प्रणाली आवश्यक हुन्छ ।

महाभियोगको व्यवस्था, प्रत्याव्हानको व्यवस्था, पार्टीबाट नियन्त्रण गर्ने र दुई कार्यकालसम्मको लागि मात्र राष्ट्रपति हुन पाउने आदि जस्ता प्रावधानहरू राखेपछि यो प्रणाली निरङ्कुश हुन सक्दैन ।

- विजय गरेको राष्ट्रपतिले उपराष्ट्रपति मनोनित नगरी दुबै पदमा एउटै प्रक्रियाबाट निर्वाचन गर्ने व्यवस्था गरिनुपर्छ । हाम्रोमा अस्थिरताको चुनौती धेरै ठूलो छ । त्यसलाई समेत सम्बोधन गर्न प्रत्यक्ष निर्वाचित कार्यकारी प्रधानमन्त्री जरूरी छ । सङ्घीयतामा गइरहेको सन्दर्भमा पनि यो आवश्यक हुन्छ । आलङ्कारिक राष्ट्रपति हुनुपर्छ । कल्याणकारी उद्देश्य छ भने तानाशाही रूपमा राष्ट्रपतिले काम गरेपनि देशको लागि राम्रै हुन्छ । राष्ट्रपति जतिचोटि पनि निर्वाचित हुन पाउनुपर्छ । राष्ट्रपतिको निर्वाचन जनताको प्रत्यक्ष निर्वाचनबाट हुने, निर्वाचनमा ५१% मत प्राप्त गरेको हुनुपर्ने, निजले आफ्नो अनुकूलतामा मन्त्रिपरिषद् गठन गर्ने, प्रतिनिधिसभा र राष्ट्रियसभाका सदस्यहरू मन्त्री बन्न नसक्ने तथा राष्ट्रपति सरकारप्रमुख र सेना प्रमुख हुनुपर्छ । देशको भू-अखण्डतामा आँच आउने कार्य भएमा राष्ट्रपतिले सम्बन्धित प्रान्तीय सरकार र प्रान्तीय विधान सभालाई भङ्ग गरी राष्ट्रपतीय शासन लागू गर्न सक्ने । राष्ट्रपतिको निर्वाचनमा सङ्घीय विधायिका र स्थानीय निकायका प्रतिनिधिसमेत मतदाता हुनुपर्छ । राष्ट्रपति आलङ्कारिक र प्रधानमन्त्री कार्यकारी हुनुपर्छ । हाम्रो सन्दर्भमा प्रधानमन्त्री सरकारको प्रमुख हुने व्यवस्था र राष्ट्रपति केन्द्रीय र प्रादेशिक सभाका सदस्यबाट चुनिने आलङ्कारिक प्रकृतिको हुनु राम्रो हुन्छ । व्यवस्थापिका र प्रान्तबाट निर्वाचित सम्मानित राष्ट्रपति र कार्यकारी अधिकारसम्पन्न मन्त्रिपरिषद्को गठन गरिनुपर्छ ।
- विश्वका दुईतिहाई मुलुकले संसदीय पद्धति अवलम्बन गरेका छन् । अस्थिर सरकार र संसद रोक्नका लागि मिलीजुली संस्कृति विकास गर्नुपर्ने आवश्यकता छ । सङ्घीय सरकार ९ जना, प्रादेशिक सरकार ७ जना र स्थानीय सरकारको संवैधानिक व्यवस्था गरिनु पर्दछ । मुख्यमन्त्री नभनी गभर्नर वा अध्यक्ष भनिनुपर्छ । प्रदेशप्रमुख प्रदेश सरकारको लागि घातक हुने गरी प्रस्ताव ल्याइएको छ । सरकार स्थिर हुनुपर्ने, छरितो प्रकारको सरकार हुनुपर्ने जस्ता भावनालाई सबै मतले ध्यान दिन खोजेको देखिन्छ । समावेशी समानुपातिक प्रणाली अपनाउने भनेको हो । यसमा सधैं त्रिशंकु संसद हुन्छ । सरकार अस्थिर हुन्छ । तसर्थ स्थिरता र स्थायित्व दिने नेतृत्वको चयन भई कार्यकारिणी जिम्मेवारी निर्वाह गर्न दिनुपर्छ । विषयविज्ञलाई राष्ट्रपतिले मन्त्री बनाउन सक्छ, व्यवस्थापिका सदस्य मन्त्री हुन नपाउने व्यवस्था गर्नु पर्दछ । शासनप्रणालीमा प्रक्रियागत कानून, विपक्षीको भूमिका, अदालतको स्वतन्त्रता र शक्तिपृथकीकरणलाई ध्यान दिनुपर्छ । प्रादेशिक सरकारलाई सबै अधिकार हुने गरी स्वायत्तता दिनु पर्दछ । सम्बन्धित देशको वस्तुगत अवस्था, आर्थिक अवस्था र जनचाहना अनुसार शासकीय प्रणाली निर्धारण गर्नु पर्छ ।
- सुधारिएको संसदीय व्यवस्थाले स्थिरता दिन सक्दैन । भ्रष्टाचार यो प्रणाली सँगै गाँसिएरै आउँछ । मन्त्रिपरिषद्मा कार्यकारिणी अधिकार राख्नु राम्रो हुन्छ । हामीकहाँ देखिएको विकृति र विसंगतीलाई विचार गर्दा संसदीय व्यवस्था ठीक छैन । व्यवस्थापिकामा ५% मत ल्याउनेलाई मन्त्रिपरिषद्मा समावेश गर्न पाउने अधिकार राष्ट्रपतिलाई दिने व्यवस्था गरिनुपर्छ । प्रतिनिधित्वको कुरागर्दा जनसंख्याको मात्र कुरा आउँदैन । भूगोल, साधन-स्रोत र व्यक्तित्वको विचार गरेर प्रतिनिधित्व सुनिश्चित गर्नु पर्छ । अधिकृतमूलक र तटस्थ प्रशासन हुनुपर्छ । संसदीय व्यवस्था संसारका धेरै देशमा सफलता प्राप्त गर्न सकेको छ । नेपालमा असफल भएको होइन सफल हुन नदिइएको हो । यसका कमीकमजोरीलाई न्यून गराउन आवश्यक प्रबन्ध गर्न सकिन्छ । नेपालको परिवेश, भूगोल र माटो अनुसारको शासन व्यवस्था हुनुपर्दछ । मन्त्रिपरिषद्को गठन व्यवस्थापिका बाहिरबाट गरिनु पर्दछ । प्रदेशमा मुख्यमन्त्री भएपछि प्रदेश प्रमुख रहनु पर्ने आवश्यकता छैन ।

- बहुसदस्यीय प्रत्यक्ष समानुपातिक निर्वाचनप्रणालीले महिला, दलित समेतलाई प्रतिनिधित्वको सुनिश्चित गर्दछ । बहुसदस्यीय प्रत्यक्ष समानुपातिक निर्वाचनप्रणाली अपनाएमा प्रक्रियाका साथै परिणामसमेत प्रत्याभूत गर्छ । यसले सबैको प्रतिनिधित्वलाई सुनिश्चित गर्दछ । अहिलेको सन्दर्भमा बहुसदस्यीय प्रत्यक्ष निर्वाचनप्रणाली आवश्यक छ । बहुसदस्यीय प्रत्यक्ष समानुपातिक निर्वाचनप्रणाली कार्यान्यन सम्भव छ ? जाति, भाषा, धर्म, सांस्कृतिक विभाजनलाई कायम राख्ने, विभेदलाई कायम गर्ने किसिमका व्यवस्था गरेर जान सकिन्न । उल्लिखित निर्वाचनप्रणाली कुनै पनि हालतमा उपयुक्त छैन । यसले आधुनिक प्रजातन्त्रका मान्यतालाई लत्याउँदछ । नागरिकका लोकतान्त्रिक अधिकारलाई कायम राखी समानुपातिक समावेशीलाई कायम गर्न मिश्रित निर्वाचनप्रणाली उपयुक्त हुन्छ । असमावेशी राज्यलाई समावेशी बनाउन निर्वाचनप्रणालीमा व्यापक परिवर्तन जरूरी छ ।
- पूर्ण समानुपातिक व्यवस्था उचित छ । यसका दुईटा फाइदा छन् जहींतहीं अति राजनीतिकरणबाट मुक्त हुने र निर्वाचनप्रणाली सहज हुन्छ । उपराष्ट्रपति संसद सदस्य र प्रादेशिक विधायिकाबाट चयन गर्नु राम्रो हुन्छ । प्रदेशको मुख्यमन्त्री प्रत्यक्ष निर्वाचित हुनुपर्छ । शासनप्रणाली केन्द्र र तलसम्म एउटै हुनुपर्छ । मिश्रित समानुपातिक निर्वाचनप्रणाली उपयुक्त हुन्छ । मुख्यमन्त्री पनि प्रत्यक्ष निर्वाचनबाट चयन हुनुपर्छ । वास्तविक लोकतन्त्रमा जनताको सहभागितालाई ध्यान दिइनु जरूरी छ । यस प्रकार जनताको प्रत्यक्ष सहभागितालाई सुनिश्चित गर्नको लागि बहुसदस्यीय समानुपातिक प्रत्यक्ष निर्वाचनप्रणालीको अवलम्बन गर्नु उपयुक्त हुन्छ । बहुसदस्यीय समानुपातिक प्रत्यक्ष निर्वाचनप्रणालीमा दलित–दलित बीचमा निर्वाचन हुन्छ । कुनै निर्वाचन प्रणाली आफैमा उचित र अनुचित हुँदैन । वस्तुगत अवस्थामा भरपर्छ । हाम्रो देशका लागि बहुसदस्यीय समानुपातिक प्रत्यक्ष निर्वाचनप्रणाली उचित छ । यो नै वैज्ञानिक र वस्तुवादी छ । यसले सबै समुदायको प्रतिनिधित्व सुनिश्चित गर्छ । हाम्रो विविधताको प्रतिनिधित्वलाई सुनिश्चित गर्नका लागि बहुसदस्यीय समानुपातिक निर्वाचनप्रणाली ठीक छ । यसमा जटिलता छ तर कसरी कार्यान्वयन गर्ने भन्नेमा गम्भीर छलफल गरौं । प्रतिनिधित्व सुनिश्चित गर्न पूर्ण समानुपातिकमा जान पनि सकिन्छ । राजनीतिक दलले ३ प्रतिशतमत प्राप्त गरेको हुनुपर्छ भन्ने प्रावधान राखिनु हुँदैन । एकजाति एक प्रतिनिधित्वको व्यवस्था हुनु राम्रो हुन्छ । स्थानीय निकाय प्रादेशिक सरकारको मातहतमा हुनुपर्छ, दुई स्थानीय निकायको विवाद दुई प्रादेशिक सरकारबाट समाधान गरिनुपर्छ । निर्वाचन प्रणालीमा समानुपातिक समावेशीमा लक्षित वर्ग नदेखिएको हुँदा लक्षित वर्ग तोकी पूर्णता दिनुपर्छ । महिला, दलित र जनजातिलाई क्षतिपूर्ति सहितको मिश्रित निर्वाचनप्रणाली अपनाउनु पर्छ ।

अन्तमा, मा० सभापति श्री शम्भु हजरा दुसाधले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.१.११. राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समिति

राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समितिको अवधारणापत्र र प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन, २०६६ माथि संविधानसभामा २०६६ माघ १७, १८, १९, २० र २१ गते भएको छलफलमा २३४ जना मा० सदस्यहरूले भाग लिनुभएको थियो । उक्त समितिको छलफलमा ३६ घण्टा ५० मिनेट समय लागेको थियो । मा० सदस्यहरूले उक्त समितिको प्रतिवेदनमाथि संविधानसभाको बैठकमा गर्नुभएको छलफल र छलफलमा उठेका मुख्य बुँदाहरूको सारांश यस प्रकार छन् :–

- राज्य पुनर्संरचनाको विषय गम्भीर र पेचिलो विषयको रूपमा रहेको छ । यसमा गम्भीर ध्यान दिनु पर्ने देखिन्छ । भूगोल, साधनस्रोत, जनसंख्या, संस्कृति, भाषाका आधारमा पुनर्संरचना हुनुपर्छ । सङ्घीय एकाइमा नेपालको विविधता झल्किनुपर्छ । प्रदेश निर्माण गर्ने कुरा

बाहेकका अवधारणा लगायत मस्यौदाका धेरै पक्षहरूमा समितिमा एकमतबाट निर्णय भएको छ । सङ्घीयताको उद्देश्य राष्ट्रको पहिचान र संरक्षण गर्नु हो । जनताले ठूलो संख्यामा प्रदेश चाहेका छैनन् । एकात्मक देश सङ्घीयतामा गएको हो । प्रदेश सम्बन्धमा जसले प्रस्ताव ल्यायो उ नै विश्वस्त नभएको, जनतालाई भ्रममा पारिएको छ । यो प्रस्ताव हचुवापाराले निहित स्वार्थको लागि ल्याइएको छ । जुन दर्शन सिद्धान्तमा अडेर ल्याइएको छ, त्यसको जग नै कमजोर छ ।

- प्रदेशको संख्या हिमालीक्षेत्रलाई तीन वटा प्रदेशमा विभाजन गर्नुपर्छ । हिमालमा ३, पहाडमा ७ र तराईमा ३ वटा प्रदेश बनाउनु पर्छ । १४ प्रदेशमध्ये कुनैको पनि आर्थिक आधार खुलाइएको छैन, जनसंख्याको आधार पनि छैन, त्यसैगरी भूगोलको पनि छैन । १४ प्रदेशको खाकाले विविधतालाई समर्थन गर्छ । जातीय आधारमा १४ वटा प्रदेशको निर्माण अव्यावहारिक छ । १४ वटा प्रदेशले पहिचानलाई ध्यान दिएको छ तर पहिचानले मात्र हुँदैन बाँच्ने आधार पनि दिनुपर्छ । १४ प्रान्त आर्थिक र सामाजिक रूपमा पनि संभव छैन । यो अवैज्ञानिक र अव्यावहारिक छ । १४ प्रदेशको प्रस्ताव उपयुक्त र सही छ । १४ प्रदेश र २३ वटा स्वायत्तक्षेत्रहरूको प्रस्तावले यहाँको वस्तुगत यथार्थतालाई आत्मसात् गरेको देखिन्छ । यसले सामन्ती एकाधिकारवादको अन्त गर्ने संकेत गरेको छ । तराईलाई २ वटा मात्र प्रदेश र पहाडमा १२ वटा प्रदेश बनाइएको छ । यो भेदभावपूर्ण छ । प्रदेशको सीमा मिलेको छैन । सङ्घीयतामा जाँदा ७ वटा भन्दा बढी प्रान्त बनाउनु हुँदैन । १४ वटा प्रदेश जातीय, वर्गीय, क्षेत्रीय, प्राकृतिक स्रोत-साधनको आधारमा निर्माण गरिएको छ । ४ वटासम्म प्रदेश बनाउनु उपयुक्त हुन्छ । १४ प्रदेशको प्रस्तावप्रति पनि सीमाङ्कनका विषयमा केही कमजोरी रहेको कुरा उठेको छ ।
- १४ प्रदेशको प्रस्तावले नेपाली जनताको सङ्घीयताप्रतिको उत्साहलाई कमजोर बनाएको छ । १४ वटा प्रदेशको खाका बहुमतबाट पारित भएर आएको हो । यसले धेरै सकारात्मक कुराहरु ल्याएको छ । १४ प्रदेशमा ७ चाहिं जातिको आधारमा नामाकरण गर्ने अरू चाहिं किन नगरेको ? प्रतिवेदनले समानताको उल्लङ्घन गरेको छ । उपसमितिबाट प्रस्तुत ६ र १४ प्रदेशका दुबै नक्सामाथि छलफल गर्नुपर्छ । १४ प्रदेशको प्रस्तावनालाई समसामयिक मानिएको छ । १४ प्रदेशको चित्र देखेपछि जनतामा उत्साह जागेको छ । यो राष्ट्रिय पहिचानका साथ आएको छ । मधेसमा २ प्रदेश भए पहाड र हिमालमा पनि २/२ प्रदेश बनाउनुपर्छ । हाम्रो देश विविधतायुक्त छ, १४ वटा सङ्घीय प्रदेशले राष्ट्रियतालाई र पहिचानलाई मजबुत पार्छ । ५ वटा विकासक्षेत्रलाई ५ वटा सङ्घमा विभाजन गर्न उचित हुन्छ ।
- लिम्बुवानको राजधानी धरानको विजयपुरलाई तोकिनु पर्छ । किराँत, लिम्बुवान, तमुवान आदि जाति होइनन्, जातीय नामाकरण गरियो भन्नु भ्रममात्र हो । किराँत प्रदेशमा पूर्वाञ्चलका १४ जिल्ला कायम राखी राजधानी धनकुटामा राख्नुपर्छ । लिम्बुवानको सिमाना अरूण पूर्वको भाग हुनुपर्छ । धनकुटाका सबै गा.वि.स.लाई लिम्बुवान भन्नुपर्छ । संखुवासभा जिल्लाको सीमाङ्कन गर्दा यसलाई किराँत प्रदेशमा राखिनु पर्दछ । लिम्बुवानको राजधानी इलाम हुन सक्दैन । झापा, मोरङ्ग समेतका अरूणपूर्वका सबै जिल्ला लिम्बुवान प्रदेशमा हुनुपर्छ । सुनकोशी प्रदेशलाई वल्लो किराँत बनाइनुपर्छ सहजता हेरिनुपर्छ । शेर्पा राज्यको नक्सा त्रुटिपूर्ण छ ।
- जडान पश्चिम नेपाली हिमालको क्षेत्रमा पर्छ । जडानको नक्साले प्रशासनिक सुगमता हुन सक्तैन । जडानको जनसंख्या अत्यन्त न्यून छ । इतिहास र संस्कृतिको ख्याल नगरी जडान राखियो, नेपालमा जडान कहीं पनि छैन । जडान प्रदेश, शेर्पा प्रदेश कसरी हुन सक्छ, सामर्थ्य कसरी हुन सक्छ भन्ने प्रश्न उठ्न सक्छ । शेर्पा र सुनकोशी प्रदेशको सीमाङ्कन मिलेको

छैन । शेर्पा र जडान प्रदेश हिमालीक्षेत्रमा बस्ने जनताको लागि जरूरी छ । जडान क्षेत्रमा भोटे समुदाय ३५% र ब्राम्हण, क्षेत्री पनि ३५% छन्, त्यो प्रदेश प्रशासनिक सुगमताले पनि अव्यावहारिक छ, राजनीतिक ढङ्गले प्रेरित भएर यो क्षेत्र बनाइएको छ । जडानको नाम भोटे राज्य राख्नु पर्छ । कोचहरूको छुट्टै राज्य हुनुपर्छ । जडान राज्य धानिन सक्दैन । जडान नाम दिइनु वैज्ञानिक छैन । १४ प्रदेशको परिकल्पना सहितको प्रतिवेदन अत्यन्त हतारमा आएको छ । जस्तो जडान प्रदेशको परिकल्पना नत जनसंख्याको हिसाबले न विकासको हिसाबले नै संभाव्य छ ।

- तान्सालिङ्भित्र धादिङ्को सबै भू-भाग राखियोस् । तामसालिङ्को सिमाना मिलेको छैन । ९ वटा जिल्ला तामसालिङ्मा समावेश गरिनुपर्छ । अखण्डित तामसालिङ प्रदेश बनाइनु पर्छ । ताम्सालिङ्मा पर्न सक्ने सुनकोशी र नारायणीका केही भागहरूलाई ताम्सालिङ्मा हालिनुपर्छ । ताम्सालिङ् राज्यलाई टुक्राउनु हुँदैन । ताम्सालिङ् प्रदेशको भूमि बढाउनुपर्छ । यस प्रदेशको क्षेत्र अरू क्षेत्रमा परेको छ । काठमाडौं वरिपरिको ९ वटा जिल्लालाई ताम्सालिङ् प्रदेश बनाइनु पर्दछ । ताम्सालिङ्को पाँच वटा जिल्लाको सदरमुकाम नै छैन । यसको सीमावारे पुनर्विचार गर्नुपर्छ । मधेस लगायतका तामसालिङ्को सीमाङ्कन मिलेको छैन । जातीय आधारमा नामाकरण गर्ने हो भने अगाडिपट्टि बहुजातीय शब्द जोड्नु आवश्यक छ । जस्तै बहुजातीय तामसालिङ् गोसाईकुण्ड प्रदेश ।
- कोच, झापा, मोरङ्, सुनसरीलाई कोचिला भन्नुपर्छ । राजधानी विराटनगर हुनुपर्छ । झापा, मोरङ्, सुनसरीलाई कोचिला प्रदेश कायम गरिनुपर्छ । झापा, मोरङ् र सुनसरीलाई मिलाएर कोच विराट प्रदेश नामाङ्कन गरिनुपर्छ । सुनकोसीलाई पल्लो किराँत प्रदेश नामाकरण गर्नुपर्छ । कोच राजवंशीको अधिकार राज्य स्थापना हुनुपर्छ ।
- मधेसमा केही भू-भागहरु थप्नुपर्छ । मधेसले खोजेको समग्र मधेस एक प्रदेश हो । नवलपर ासीको सबै भागलाई एउटै प्रदेशमा समावेश गरियोस् । थरूहट स्वायत्तप्रदेश बनाइनु पर्छ । थारूलाई बहुप्रदेश दिनुपर्छ । उदयपुर र चितवनका थारूहरूलाई भोलि विस्थापित गर्ने त होइन ? तराईमा २ वटा र पहाडमा १२ वटा प्रदेश विभाजन गरिएको पाइन्छ । यसबाट तराईतिर द्वन्द्व गराउने त होइन ? थरूहटलाई पछाडि राखेर तराईका मूलवासीको अस्तित्व त सखाप हुने होइन । चितवनमा थारूको जनसंख्या १५% छ तर उनीहरूलाई छुट्याइयो । यसलाई मधेस प्रदेशमा राख्नु पऱ्यो । चुरेभावर मधेसमा पर्दैन मधेसमा धेरै राज्य बनाउनु उपयुक्त छैन । मधेस आन्दोलनले सङ्घीयता ल्याएको हो, त्यसको भावना समग्र मधेस एक प्रदेश भन्ने थियो । तर समितिले बेइमानी गरेको छ । मधेसी र थारू मिलेर आज मधेस टुक्रिनु हुँदैन भनी आन्दोलन भईरहेको छ । तराई प्रदेश, थारू प्रदेशभन्दा केही फरक पर्दैन । थारू बाहुल्यता भएको चितवन थारूको अल्पसंख्यक भएर बसेको छ । त्यो पनि थारूको प्रदेश हुन सकेन । मधेसी, आदिवासी जति राष्ट्रियताप्रति चिंतित छन्, त्यति अरू छैनन् । मधेस होइन तराई भन्नुपर्छ । थरूहट शब्द राख्न उचित छैन ।
- थारूवान लेखिएको उचित छ । एक मधेस स्वायत्तप्रदेश कुनै पनि हालतमा हुन सक्दैन । मधेस प्रदेशमा पर्नुपर्ने मोरङ्का केही गा.वि.स. उदयपुरमा परेका छन्, चितवनलाई छुट्याइएको छ । यसलाई किन अलग गरियो ? तराई मधेस एउटै प्रदेश बनाइनु पर्दछ तर मधेसलाई जातीय, भाषाको आधारमा एक नहुने गरी सङ्घीयतामा सबै मधेसलाई टुक्रा-टुक्रा पारिएको छ । समग्र मधेस एक प्रदेश मधेसी जनताको चाहना र आन्दोलनलाई खण्डित तुल्याइएको छ । यसप्रति असहमति छ । जनआन्दोलन र मधेस आन्दोलन लगायतका यथार्थतालाई यस प्रतिवेदनले स्वीकार गरेको छ । एक मधेस एक प्रदेश दिने भनी विगत सरकारले सम्झौता गरेको छ, यसबाट अहिले मधेसमा गृहयुद्ध भएमा त्यसको जिम्मेवारी कसले

लिने ? लुम्बिनी-अवध-थारूवान प्रदेशको सट्टामा थारूवान मात्र भन्नुपर्छ । थारूवान प्रदेश कञ्चनपुरदेखि चितवनसम्मलाई बनाउँदा हुन्छ । नवलपरासीदेखि कन्चनपुरसम्मको क्षेत्रलाई थारूवान भन्नुपर्छ ।

- कर्णालीका ५ जिल्ला र त्यसको वरपरका केही जिल्लासमेत मिलाएर स्वायत्त कर्णाली प्रदेश गठन गर्नुपर्छ । सेती महाकालीलाई खप्तड प्रदेशले समेट्न सक्दैन । दैलेखका केही अरू गा.वि.स.हरु कर्णाली प्रदेशमा राख्नुपर्छ । कर्णाली अंचललाई विभाजन गरिएको छ । यसको नाम सेती-महाकाली नै राख्नुपर्छ । खप्तडक्षेत्रको नाम सेती-महाकाली राखिनुपर्छ । खप्तड प्रदेशलाई सेती-महाकाली प्रदेश बनाएर लैजानुपर्छ । प्रस्तावित खप्तड प्रदेशलाई डोटी खप्तडक्षेत्र पनि बनाइयोस् । हिमाल, पहाड र तराई तीन राज्य बनाउनु पर्छ । कर्णालीलाई ध्यान दिएर प्रतिवेदन आएन । राजधानी सुर्खेतमा राखिनु ठीक छैन, कर्णालीमै हुनुपर्छ । प्रतिवेदनले पहिचान, पहुँच र सम्मानलाई कर्णाली अञ्चलको जनताको सन्दर्भमा मान्यता दिएको छैन, यसलाई सच्याइनुपर्छ । कर्णाली अञ्चललाई छुट्टै प्रान्त गठन गरिनुपर्छ । कर्णाली विशेष गणराज्य घोषणा गरियोस् । उत्पीडित र उत्पीडक खसलाई एकै ठाउँमा राखेर हेरिनु हुँदैन । स-साना प्रदेश पनि हुनुपर्छ । खप्तड प्रदेशलाई खस प्रदेश नामाकरण गर्नु उपयुक्त हुन्छ । सेन प्रदेश, डोटी प्रदेश पनि भन्न सकिन्छ ।
- तमुवान, मगरात, नेवा र तामसालिङ्ग बीचमा धेरै विवाद छ । अन्य पनि धेरै विवाद रहेका छन् । तमुवानका केही भू-भागहरु नारायणीमा परेका छन्, तिनलाई तमुवानमै राख्नुपर्छ । तमुवानको सीमाङ्कन वैज्ञानिक छैन । गोरखा, लमजुङ्ग, तनहुँ, कास्की आदि जिल्लाका केही गा.वि.स. नारायणीमा परेका छन् तिनलाई तमुवानमा नै राख्नुपर्छ ।
- चाँदनी र दोधारालाई केन्द्रशासित प्रदेशको रुपमा कायम राख्नुपर्छ । मधेसी नाम पहिचानको रुपमा स्थापित भई सकेको हुँदा यसलाई खोसिनु हुँदैन । स्वायत्तक्षेत्रहरु यहाँ उल्लेख गरेका मात्र अन्तिम होइन । प्रदेश निर्माण भएको एक वर्षभित्र अरू पनि घोषणा हुन सक्छन् ।
- मुस्ताङ्ग स्वायत्तक्षेत्र स्थापना गरिनु आवश्यक छ । चेपाङ्ग विशेष स्वायत्तक्षेत्र घोषणा गरिनुपर्छ । जातीय स्वायत्त इकाइको गठन अवैज्ञानिक छ । दलित र मुस्लिमको लागि आरक्षित वा विशेषक्षेत्र राखिनुपर्छ । संरक्षितक्षेत्र र विशेषक्षेत्र बनाउने राम्रो कुरा हो यसले सीमान्तकृत वर्गलाई अगाडि ल्याउँदछ । वराम जातिको स्वायत्तक्षेत्रको नक्सालाई स्पष्ट पारिनु पर्छ । जातीय स्वायत्तता र क्षेत्रीय स्वशासनमा आधारित सङ्घीयता कायम गरिनुपर्छ । स्वायत्तक्षेत्रहरूको टुङ्गो आयोग गठन गरेर गर्ने भनिएको छ । तर अनुसूचीमा त्यस्तो सूची किन राखिएको हो । स्वायत्तक्षेत्रको घोषणा आयोग गठन गरेर गरिनेछ भनी मस्यौदामा उल्लेख गरेकोमा अनुसूची राखी २३ वटा स्वायत्तक्षेत्रको नाम उल्लेख भएको छ, यो कसरी भएको हो ? स्वायत्तक्षेत्रको परिभाषा मिलेको छैन । राना थारूको सवाललाई सम्बोधन गरियोस् । दनुवार जातिलाई स्वायत्तता दिइनुपर्छ । ३ प्रदेशमा विभाजन गरेर त्यस अन्तर्गत विभिन्न स्वायत्तक्षेत्र वा उप-प्रदेश गठन गर्न सकिन्छ । विनाछलफल २३ वटा स्वायत्तक्षेत्रहरूको सूची प्रस्तुत गरिएको छ । कतिपय संरक्षितक्षेत्रमा रहनुपर्ने जातिहरु पनि स्वायत्तक्षेत्रमा पर्न गएको देखिन्छ । संविधान जस्तो महत्वपूर्ण दस्तावेज त्यसरी हचुवा तरीकाले पारित गर्नु हुने थिएन । स्वायत्त इलाकामा प्रशासनिक संरचना कस्तो हुन्छ भन्नेमा स्पष्ट हुनुपर्छ । सरदार बाँतरको पनि प्रदेश चाहिएको छ । मुस्लिमको पनि प्रदेश चाहियो । दलितको खोई ?
- प्रतिवेदनले दुई किसिमका नागरिक बनायो । अग्राधिकार प्राप्त र अग्राधिकार अप्राप्त । यसले जनजाति बीच द्वेष र द्वन्द्व सिर्जना गर्छ । जनताले राजनीतिक अग्राधिकार र आत्मनिर्णयको अधिकार पाउनुपर्छ र आत्मनिर्णयको अधिकार सुरक्षित हुनुपर्छ । आत्मनिर्णय र अग्राधिकारका कुरा ठीक छ । प्रत्येक व्यक्तिलाई आत्मनिर्णयको अधिकार हुनुपर्छ । आत्मनिर्णयको अधिकारको

व्याख्या गर्नु पर्छ । क्षतिपूर्ति कसरी गर्ने ? स्पष्ट गर्नुपर्छ । आत्मनिर्णयको अधिकारमा विद्रोह गरेर छुट्टिन पाइन्छ कि पाइदैन ? आत्मर्निणय र राजनीतिक अग्राधिकारको राम्रो व्यवस्था छ । आदिवासी जनजाति भनी प्रतिवेदनमा लेखिएको ठाँउबाट आदिवासी शब्द हटाउनु पर्छ । आत्मनिर्णय भनेको जनताले आफ्नो विषयमा आफैँ निर्णय गर्न पाउने हो । आत्मनिर्णयको अधिकार हटाइनुपर्छ । राजनीतिक अग्राधिकार दिइनु हुन्न, लोकतन्त्रविरूद्ध हुन्छ । आत्मनिर्णयको अधिकार शिक्षा, स्वास्थ्य लगायतका क्षेत्रमा हो तर छुट्टिने अधिकार राज्यलाई प्रदान गरिएको छैन । आत्मनिर्णयको अधिकारलाई विकृत रूपमा बुझ्नु हुन्न ।

- आत्मनिर्णयको अधिकारले देश टुक्रिन सक्छ । आत्मनिर्णयको अधिकार सम्बन्धमा थप छलफल आवश्यक छ । आत्मनिर्णयको अधिकारलाई देशले स्वीकार गरेको छ जुन राम्रो छ । समानहरु बीच प्रतिस्पर्धा कायम गर्नको लागि पनि अग्राधिकारको व्यवस्था गर्नु उपयुक्त हुन्छ । यसले वास्तविक प्रजातन्त्रको प्रत्याभूति गराउँदछ । आत्मनिर्णयको सिद्धान्तलाई छोटो रूपमा लेखिनुपर्छ । आत्मनिर्भर सङ्घीयता बनाउनु पर्छ । आत्मनिर्णयको अधिकारमा असहमति छ । अग्राधिकार दिने कुरा सम्भव छैन । अग्राधिकारको अवधारणा उत्पीडनमा परेको जातिको उत्थानसँग सम्बन्धित रहेको छ । सङ्घीयता साधन हो, साध्य होइन । हामी धेरै भावनात्मक भएका छौं व्यवहारमा हेरिनुपर्छ । प्राविधिक व्यक्तिहरूको सहयोगमा सिद्धान्तलाई व्यवहारमा लिएर जानुपर्छ । सबैलाई समान अधिकार दिने गरी वैज्ञानिक आधारमा यो मस्यौदा गरिएको छ । नक्साङ्कन र सीमाङ्कनमा कमजोरी छ । प्रतिवेदन हचुवा छ । सामन्ती जन्माउने प्रकृतिको छ । यसमा धेरै विषयहरु सराहनीय छन् । केही कमजोरी छन् । साँधसिमानामा त्रुटि छ । जातजाति अल्पसंख्यक शब्दको प्रयोग ठीक ढङ्गले गर्नुपर्छ ।
- एक प्रदेशले अर्को प्रदेश घेर्नेगरी प्रदेश निर्माण गरिनु हुन्न । प्रदेशहरु कमभन्दा कम बनाउनु पर्छ । अहिलेको सूची अपूर्ण छ । विज्ञ सहितको उच्चस्तरीय राज्यपुनर्सरचना आयोग बनाई प्रतिवेदनलाई पूर्णता दिने कार्य गर्नुपर्छ । वर्गीय मुद्दालाई पहिलो प्राथमिकता दिनुपर्छ । भाषा, संस्कृति र प्रशासनिक सुगमताको हिसाबले पनि यो उपयुक्त छैन । स्वायत्तक्षेत्रहरूको सूचीमा छुटेका विषयहरु थप गर्नुपर्छ । २३ वटा स्वायत्तप्रदेशप्रति समर्थन छैन । खवासको लागि छुट्टै प्रदेश बनाइनुपर्छ । पहिचानको आधारमा सङ्घ निर्माण गर्दा उत्पीडनमा परेको आधार पनि हेरिनु पर्छ । उत्तर दक्षिण आधारमा प्रदेश बनाइनु पर्छ र साझा नामाकरण गरिनुपर्छ । जातिको आधारमा प्रदेशको सीमाङ्कन र नामाङ्कन गर्नु हुँदैन । काठमाडौंलाई प्रशासकीय, विराटनगरलाई औद्योगिक, चितवनलाई प्राज्ञिक र पोखरालाई पर्यटकीय राजधानी बनाउन सकिन्छ । ऐतिहासिक र भौगोलिक निरन्तरतालाई छोड्नु हुँदैन । सिमाना निर्धारणको कार्य हतारमा गरिएको छ । सीमाङ्कन र नामाङ्कनको लागि प्राविधिक आयोग गठन गरिनुपर्छ । यस प्रतिवेदनले हाम्रो देशभित्रको विविधता र विशेषतालाई समेटेको छ । पिछडिएको जातिलाई माथि उचाल्ने किसिमले यो प्रतिवेदन आएको छ । यो प्रतिवेदन सबै जनतालाई शक्ति वितरण गर्ने गरी आएको छ । प्रशासनिक सुगमता छैन । नामाङ्कन, नक्साङ्कन, सीमाङ्कन गर्ने कार्य विशेषज्ञलाई दिनुपर्छ । प्रतिवेदनले जातीय भाषिक द्वन्द्व निम्त्याउने देखिन्छ । पहिचानका आधारहरु के हुने भनी समितिबाट तय भएको आधारमै प्रदेशको नामाङ्कन गरेको पाइन्छ । यो प्रतिवेदन वैज्ञानिक र वस्तुनिष्ट हुन नसकेकोले यो पूर्ण हुन सकेको छैन । जातीय, क्षेत्रीय उत्पीडन अन्त्य गर्न छुट्टै राज्य चाहिने हो । आवश्यकता भएपछि नयाँ भौतिक संरचनाहरु निर्माण हुन्छन् । प्रदेशको विभाजन भूगोलको आधारमा गरिनु उपयुक्त हुन्छ । केन्द्रीय सरकारको मुख्यालय दाङ्मा रहनुपर्छ । हिमाल तराई र पहाडको अन्तरसम्बन्धलाई कायमै राख्नु पर्छ । जाति-जातिमा विभाजन गरी राज्य निर्माण नगरौं ।

- दलित राज्यको घोषणा हुनुपर्छ । प्रतिवेदनले दलितलाई विशेष अधिकार र लोपोन्मुख समुदायको प्रतिनिधित्व र विकासको सुनिश्चितता प्रदान गरेको छ । नयाँ संविधानमा मुस्लिम समुदायलाई राज्यका हरेक तहमा समानुपातिक समावेशी गराइने व्यवस्था सुनिश्चित गरिनुपर्छ । आदिवासी र पिछडिएकालाई अग्राधिकार नदिएसम्म लोकतन्त्रको कुरा गर्नु बेकार हुन्छ । अग्राधिकार दिनुपर्छ । प्रस्तावनामा दलित शब्द छुटाउनु हुँदैन । दलित जनजातिलाई अग्राधिकार दिने विषय तिनीहरूलाई समाजमा उभिन सक्ने अवस्था सृजना नभइञ्जेल दिनुपर्छ । मुस्लिमका अधिकारलाई पनि सम्बोधन गर्नुपर्छ । विगतमा उत्पीडन भोगेका जातिलाई अग्राधिकार दिइनुपर्छ भनेर नै प्रस्ताव गरिएको छ । महिला, दलित, जनजातिहरूलाई शासनमा समावेश गराउने महत्वपूर्ण कुरा आएको छ । महिला र दलितलाई विशेषाधिकार/अग्राधिकार क्षतिपूर्ति सहित दिने कुरा स्वीकार गरेको छ । महिला र दलितलाई विशेषाधिकार नदिन यिनीहरूलाई छुट्टै प्रदेश चाहिन्छ भनी उल्लेख गरिएको छ ।
- जनसंख्याको आधारमा प्रदेश मिलेको छैन । आर्थिक सामर्थ्यलाई ध्यान दिएर प्रदेश बनाइनुपर्छ । कतिपय प्रदेशको आम्दानीको स्रोत कमी देखिएको छ । त्यस्तै जडान प्रदेश केन्द्रमा निर्भर हुनुपर्ने अवस्था छ । सामर्थ्य र पहिचानका आधारहरूमा प्रदेश निमार्ण गर्ने भन्नु समितिको प्रतिवेदनका राम्रा पक्षहरू हुन् तर जातीय आधारमा बढी महत्व दिएको हो कि जस्तो पनि देखिन्छ । आर्थिक रूपमा प्रदेश चल्न सक्दैन । प्राकृतिक स्रोत-साधनको न्यायिक वितरण हुनेगरी प्रदेश निर्माण गरिनु पर्दछ । १४ प्रदेशको विभाजन आर्थिक रूपले सम्भाव्य हुँदैन । ६ वटा प्रदेश बन्ने सम्भावना ज्यादै छ । सामर्थ्यको आधारमा यस्तो बन्न सक्छ । प्रदेशहरूलाई आत्मनिर्भर अर्थतन्त्रको आधारमा स्वाधीन बनाउने गरी सिर्जना गर्नुपर्छ ।
- प्रतिनिधित्वको सवाल सबैको पहिचान सहितको समानुपातिक प्रतिनिधित्व गराइनु आवश्यक छ । अपाङ्गता भएका व्यक्तिलाई राज्यका सबै संयन्त्रमा जनसंख्याको आधारमा प्रतिनिधित्वको सुनिश्चितता गरिनुपर्छ । सङ्घीय तहमा आदिवासी जनजातिको समानुपातिक समावेशी प्रतिनिधित्व र सहभागिताको सुनिश्चितता गरिनु पर्दछ । तराई प्रदेशमा जनजातिको पहिचान सुनिश्चित गरिनुपर्छ । अल्पसंख्यक र सीमान्तकृत वर्ग र समुदायले पनि नेतृत्व गर्न पाउने गरी व्यवस्था गर्नुपर्छ ।
- सीमाङ्कन र नामाङ्कनमा जनमतसङ्ग्रहका लागि पनि तयार हुनुपर्छ । यस विषयमा जनमतसङ्ग्रहबाट फैसला गरियोस् । आयोग गठन गरेर विशेषज्ञहरु समेतको राय लिएर प्रदेशको नामाङ्कन र सीमाङ्कन गर्नुपर्छ । यो अवधारणाले राज्य पुनर्संरचना आयोगको अधिकार कटौती गरिनु हुन्न । मस्यौदा तयार भईसकेपछि आयोग बनाइनु औचित्यपूर्ण छैन । संविधानसभालाई भङ्ग गर्ने उद्देश्य सहित राज्य पुनर्संरचना आयोग गठन गर्ने कुरा उठाइएको त होइन ? भन्ने आशंका उठेको हो । विशेषज्ञहरु रहेको पुनर्संरचना आयोग गठन गरेर अध्ययन गर्नु आवश्यक छ ।

अन्तमा, मा० सभापति श्री लोकेन्द्र विष्ट मगरले छलफलमा उठेका प्रश्नहरूको जवाफ दिनुभएको थियो ।

## ५.२. विषयगत समितिका प्रतिवेदनमा रहेका फरक मत, विरोधाभास, दोहोरिएका विषय र छुटेका विषय पहिचान गर्ने अवधारणापत्र र प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्ययन समितिको गठन

संविधानसभा नियमावली, २०६५ को नियम ८२ को उपनियम (९) मा संवैधानिक समिति र विषयगत समितिहरूबाट पेश भएको संविधानको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदनमाथि सभामा छलफल समाप्त भएपछि सभाको कुनै सुझाव र निर्देशन भए सो सहित सबै प्रतिवेदन सभाले एकै पटक वा अलग अलग पारित गरी संवैधानिक समितिमा पठाउनु पर्ने व्यवस्था गरेको र सो अनुरूप सबै विषयगत समिति र संवैधानिक समितिबाट पेश भएका अवधारणापत्र र प्रारम्भिक मस्यौदा अध्ययन गर्ने, सबै प्रतिवेदनमाथि सभामा भएको छलफलमा उठेका विषयहरूको टिपोट गर्ने, परस्पर बाझिएका, एकभन्दा बढी समितिको प्रतिवेदनमा दोहोरिएका विषय र बुँदाहरू पहिचान गर्ने, समितिहरूका प्रतिवेदनमा समावेश गर्न छुट भएका कुनै विषय भए सोको पहिचान गर्ने, सभामा भएको छलफल र समितिका माननीय सभापतिले दिएको जवाफका आधारमा कुनै समितिको प्रतिवेदनमा कुनै विषयमा परिमार्जन गर्नुपर्ने भए सोको सुझाव सम्माननीय अध्यक्षज्यूलाई दिने, सबै समितिका मस्यौदा एकीकरण गर्दा संवैधानिक समितिले ध्यान दिनु पर्ने कुनै विषय भए सोको कारण सहितको प्रतिवेदन तयार गरी सम्माननीय अध्यक्षज्यूसमक्ष पेश गर्न एउटा प्रभावकारी संयन्त्रको आवश्यकता महशुश गरी संविधानसभा नियमावली, २०६५ को नियम ८९ बमोजिम संविधानसभाको मिति २०६६।२।१३ मा बसेको २९औं बैठकमा मा० श्री पोष्टबहादुर बोगटी प्रस्तावक र मा० श्री लक्ष्मणप्रसाद घिमिरेसमेत समर्थक भई समितिको कार्यक्षेत्र र समितिमा रहनु हुने १५ जना माननीय सदस्यहरूको नामावली सहितको प्रस्ताव पेश गर्नु भएकोमा उक्त प्रस्ताव सर्वसम्मतिले पारित भई यस समितिको गठन भएको हो । समिति गठन भएपश्चात् मिति २०६६।२।१९ मा बसेको समितिको पहिलो बैठकले समितिका मा० सदस्य श्री लक्ष्मणलाल कर्ण समितिको संयोजकमा चयन भई उहाँको नेतृत्वमा समितिले आफ्नो कार्यसम्पादन गरी आएको अवस्थामा मिति २०६६।५।१७ मा उहाँ नेपाल सरकारको मन्त्रीपदमा नियुक्त हुनु भएपछि समितिको मिति २०६६।५।१९ मा भएको बैठकबाट समितिको संयोजकमा मा० सदस्य श्री अग्निप्रसाद खरेल चयन हुनु भई उहाँको नेतृत्वमा समितिले आफ्नो कार्यसम्पादन गरेको थियो ।

जस अनुसार उक्त समितिको मिति २०६६।१०।२० को ७३ औं बैठकको निर्णयानुसार प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको प्रतिवेदन, समितिको मिति २०६६।११।१८ को ८१ औं बैठकको निर्णयानुसार संवैधानिक निकायको संरचना निर्धारण समितिको प्रतिवेदनको सम्बन्धमा दिनु पर्ने सुझाव र निर्देशन सहितको प्रतिवेदन र मिति २०६६।१२।१५ को ९२ औं बैठकको निर्णयानुसार अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समितिको प्रतिवेदनको सम्बन्धमा दिनु पर्ने सुझाव र निर्देशन सहितको प्रतिवेदन सम्माननीय अध्यक्षज्यू मार्फत् सम्मानित सभामा प्रस्तुत गरेको थियो ।

संविधानसभा नियमावली, २०६५ बमोजिम विषयगत समितिहरूको तहबाट निर्णय भई संविधानसभामा पेश गरिएका विषयहरूमा सम्बन्धित समितिबाटै टुङ्गो लाग्न बाँकी भई भिन्न मतको रूपमा रहेका र सम्बन्धित प्रतिवेदनमाथि संविधानसभामा छलफल हुँदा मतैक्यता हुन नसकेका सबै विषयहरूलाई संविधानसभाले नै अन्तिम टुङ्गो गरी संवैधानिक समितिमा पठाउन वाञ्छनीय भए पनि संविधानसभाको गठन भई यसको पहिलो बैठक बसेको २७ महिनाको लामो अवधि व्यतीत भइसकेको यस अवस्थामा आइपुग्दा पनि संविधानमा रहने धेरै अन्तर्वस्तुहरूको सम्बन्धमा कैयौं फरक मतहरू कायमै रही रहेको र त्यसमा सहमति कायम गर्ने दिशामा अपेक्षाकृत रूपमा वाञ्छित उपलब्धि हासिल गर्न नसकिएको ले मिति २०६७।२।१४

मा नेपालको अन्तरिम संविधान,२०६३ मा आठौं संशोधन गरी संविधानसभाको कार्यावधि एक वर्ष थप भएपछि पनि संविधान निर्माणको कार्यलाई अपेक्षित गतिकासाथ अगाडि बढाउन नसकिएको सन्दर्भमा राज्यको शासकीय स्वरूप निर्धारण समितिको प्रतिवेदन, व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समितिको प्रतिवेदन, न्यायप्रणाली सम्बन्धी समितिको प्रतिवेदन, मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदन, राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदन, सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको प्रतिवेदन र संवैधानिक समितिको प्रतिवेदनमा सहमति कायम हुन सकेका विषयहरु र सहमति कायम हुन बाँकी रहेका विषयहरूलाई छुट्टाछुट्टै रूपमा प्रस्तुत गर्दै समितिले राज्यको पुर्नसंरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदनउपर मतमतान्तर रहेका विषयहरूमा सहमति कायम गर्नको लागि समितिमा छलफल भई केही विषयमा सहमति कायम गरेको र ती सहमति कायम भएका र समितिको प्रतिवेदनउपर सभामा छलफल हुँदा माननीय सदस्यहरूले उठाउनु भएका विषयहरूको संक्षिप्त बुँदा टिपोट प्रतिवेदनमा समेत समावेश गर्दै समितिको मिति २०६७।५।१४ को ११३ औं बैठकबाट सभासमक्ष प्रतिवेदन पेश गरेको थियो ।

उक्त प्रतिवेदनले विषयगत समितिका प्रतिवेदनमा फरक मत, एक अर्को समितिको प्रतिवेदनमा विरोधाभास रहेका विषय, दोहोरिएका विषय, छुटेका विषयहरु र समितिमा मतैक्यता कायम हुन नसकेका विषयहरु पहिचान गरेको थियो । त्यसपछि हरेक समितिको प्रतिवेदनलाई एकरूपतापूर्ण बनाउन, छुटेका विषय थप गर्न, दोहोरिएका विषयलाई उपयुक्त एक ठाउँमा राख्न र विवादित विषयमा सहमति कायम गर्न समितिगत रूपमा छुट्टाछुट्टै सुझाव तयार पारेको थियो । समितिले सहमति कायम गर्न नसकेका विषयमा संविधानसभाबाट निर्णय गर्न सजिलो होस् भनी प्रश्नावली निर्माण गरी यो समितिको प्रतिवेदनमा राखिएको थियो । यो समितिले प्रत्येक समितिको प्रतिवेदन सम्बन्धमा तयार पारेको सुझाव जस्ताको तस्तै यहाँ राखिएको छ । कुल ११४ वटा बैठक बसी समितिले आफ्नो बृहत् प्रतिवेदन तयार पारेको थियो ।

*(यो समितिको प्रतिवेदनलाई हेरफेर गर्न वा सम्पादन गर्न उपयुक्त नहुने भएकोले हुबहु राखिएको हो । तलको विवरण बुझ्नको लागि हरेक समितिको प्रतिवेदन साथैमा लिई भिडाएर हेर्नु पर्ने अवस्था छ । यसबाट पाठक वर्गमा पर्न जाने असुविधाको लागि हामी क्षमाप्रार्थी छौं -सम्पादक )*

## २.१ प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको प्रतिवेदन सम्बन्धमा

### २.१.१. प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरू

- संविधानसभा नियमावली, २०६५ ले निर्धारण गरेको उक्त समितिको कार्यक्षेत्रभित्रका कुनै पनि विषय छुटेको देखिदैन ।

### २.१.२. अर्को समितिको कार्यक्षेत्रभित्र परेका विषय यस समितिको प्रतिवेदनमा दोहोरिएको:

प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको दृष्टिकोणबाट प्रतिवेदनमा समावेश भएका तर अरू समितिको कार्यक्षेत्रसँग समेत दोहोरिएका विषय र शीर्षकहरु :

**संवैधानिक समिति**

- सि.नं. १ को प्रस्तावना

**मौलिक अधिकार तथा राज्यको निर्देशक सिद्धान्त समिति**

- सि.नं. २ को आर्थिक अधिकार अन्तर्गत

| | |
|---|---|
| १. स्वतन्त्रताको हक | २. वातावरणको हक |
| ३. खानेपानीको हक | ४. खाद्य सम्बन्धी हक |
| ५. सम्पत्तिको हक | ६. शोषणविरूद्धको हक |
| ७. आवासको हक | ८. रोजगारीको हक |

- सि.नं. ३ मौलिक कर्तव्य
- सि.नं. ४ राज्यको दायित्व, सिद्धान्त र नीति

  १०. राज्यको दायित्व, निर्देशक सिद्धान्त तथा नीतिहरु

  ११. राज्यको दायित्व

  १२. राज्यको निर्देशक सिद्धान्त

  १३. राज्यका नीतिहरु

**व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समिति**

- सि.नं. ८ राष्ट्रिय सर्वसंचित कोष । सि.नं. ९ अर्थ विधेयक, सि.नं. १० राष्ट्रिय सर्वसञ्चित कोषबाट व्यय, सि.नं. ११ राष्ट्रिय सर्वसंचित कोषमाथि व्ययभार, सि.नं. १२ राजस्व र व्ययको अनुमान, सि.नं. १३ विनियोजन ऐन, सि.नं. १४ पूरक अनुमान, सि.नं. १५ पेश्की खर्च, सि.नं. १६ राजस्व र व्यय सम्बन्धी विशेष व्यवस्था, सि.नं. १७ उधारो खर्च, सि.नं. १८ आकस्मिक कोष, सि.नं. १९ आर्थिक कार्यविधि सम्बन्धी ऐन ।

**राष्ट्रियहितको संरक्षण समिति**

- सि.नं. २७ सन्धि वा सम्झौताको अनुमोदन, सम्मिलन, स्वीकृति वा समर्थन

## २.१.३. समितिको प्रतिवेदनमा आएका फरकमतहरू र मतैक्यता हुन नसकेका विषयहरू:

**क) प्रारम्भिक मस्यौदातर्फः**

सि.नं. १ प्रस्तावना

- पहिलो बुँदामा जैविक विविधताको संरक्षणको व्याख्यात्मक टिप्पणीमा नेपालका जैविक विविधताको दर्ता र संरक्षण गरिनेछ भन्ने कुरा उल्लेख हुनुपर्ने । दोस्रो बुँदामा 'दिगो विकास र संरक्षण' भन्ने शब्द थप गर्नुपर्ने । चौथो बुँदामा रहेको 'प्रतिस्पर्धात्मक लोकतन्त्र' भन्ने शब्दको सट्टा 'जनताको सङ्घीय लोकतन्त्र' भन्ने शब्द राख्नुपर्ने । (फरकमत) चौथो बुँदामा रहेको 'प्रतिस्पर्धात्मक लोकतन्त्र, समाजवादउन्मुख मिश्रित अर्थतन्त्र' भन्ने शब्दहरूको सट्टा 'समाजवादी गणतन्त्र र समाजावाद उन्मुख अर्थ व्यवस्था' शब्द थप गर्नुपर्ने । (फरकमत) पाँचौ बुँदामा 'प्राकृतिक स्रोत र साधनको उपयोगमा आदिवासी, जनजाति लगायतका' शब्दको अगाडि 'स्थानीय' शब्द थप हुनुपर्ने, 'पहिलो अधिकार' भन्ने शब्दको सट्टा 'अधिकार' मात्र राख्नुपर्ने । सोही बुँदामा रहेको 'आदिवासी, जनजाति लगायतका' भन्ने शब्द हटाउनुपर्ने, ' लगायतका' भन्ने शब्द मात्र हटाउनुपर्ने, 'लगायतका' भन्ने शब्दको सट्टा 'र' राख्नुपर्ने, 'पहिलो अधिकार' भन्ने शब्दको सट्टा 'न्यायोचित अधिकार/अग्राधिकार' भन्ने शब्द राखिनुपर्ने । सि.नं. २ आर्थिक अधिकार

- धारा ३ खानेपानीको हकमा खानेपानीका स्रोतमा जनताको नियन्त्रण रहने कुरा लेख्नुपर्छ ।
- धारा ४ खाद्य सम्बन्धी (फरकमत): को सँग खोज्ने, खाद्य सम्बन्धी हक भनेको के हो स्पष्ट नभई यो हक राख्न नहुने, खाद्य सम्बन्धी हक राज्यले सुनिश्चित गर्ने कुरा उल्लेख गर्नुपर्ने, खाद्यमा किसानको पहिलो अधिकार हुने कुरा उल्लेख गर्ने ।
- (फरकमत) धारा ५ सम्पत्तिको हक 'वैज्ञानिक भूमिसुधार कार्यक्रम लागू गर्दा वा सार्वजनिक हितको लागि राज्यले कुनै व्यक्तिको सम्पति अधिग्रहण वा प्राप्त गर्दा वा त्यस्ता सम्पति उपर कुनै अधिकारको सृजना गर्दा कानूनबमोजिम क्षतिपूर्ति दिइनेछ । क्षतिपूर्ति र सोको आधार र कार्यप्रणाली कानूनद्वारा निर्धारण गरिए बमोजिम हुनेछ' । प्रस्तावित व्यवस्था र यो फरकमतको पक्ष-विपक्षमा सभामा पनि तर्कहरु प्रस्तुत भएका ।
- धारा ६ शोषणविरूद्धको हकमा विद्रोहको हक पनि हुनुपर्छ । ६(२) मा प्रथाको अगाडि कु-प्रथा लेखिनुपर्छ ।
- (फरकमत) धारा ७ आवासको हकमा राज्यले कानून बनाएर सबैलाई आवास वितरण गर्ने हो ? यस सम्बन्धी हक सम्पत्ति सम्बन्धी हकमा पर्ने हुँदा यहाँ अस्पष्ट छ । यो हक कसरी सुनिश्चित हुन्छ ?
- आवासको हकमा वृद्ध अपाङ्ग र महिलालाई पहिलो प्राथमिकता दिइने कुरा उल्लेख हुनुपर्ने ।
- (फरकमत) धारा ८ रोजगारीको हक अस्पष्ट र विरोधाभासपूर्ण रहेको, राज्यले रोजगारी नदिए बेरोजगारी भत्ता दिनुपर्ने, रोजगारदाताको हक पनि सुनिश्चित हुनुपर्ने ।
- (फरकमत) धारा ८ प्रत्येक नागरिकलाई सम्मानपूर्ण जीवन यापनका लागि योग्यता अनुसारको रोजगारीको सुनिश्चितताको हक हुनेछ । बेरोजगारी भत्ता हुनुपर्ने, आदिवासी जनजाति, गरीब, महिला, मुस्लिम, दलितलाई रोजगारीमा पहिलो हक हुनेछ । कानून बनाई व्यवस्था गर्ने भन्ने कुरा राख्नु हुन्न । सि.नं. ४ राज्यको दायित्व, सिद्धान्त र नीति । ४.११.२. मा कला शब्द थप गर्नुपर्ने, महिला शब्द थप गर्नुपर्ने, आनुवंशिक सट्टा जैविक स्रोत राख्नुपर्ने । (फरकमत) ४.१२.७. यसमा लगानीकर्ता वा रोजगारदाताको हक अधिकार पनि सुनिश्चितता हुनुपर्ने । (फरकमत) सि.नं. ४.१३.७. क्रान्तिकारी भूमिसुधार कार्यक्रम लागू गरी सामन्ती भू-स्वामित्वको अन्त्य गर्ने नीति अवलम्बन गर्ने, सामन्ती शब्दको सट्टा अवैज्ञानिक वा असमान शब्द राख्नुपर्ने । ५.१४.१२. व्याख्यात्मक टिप्पणीमा स्वायत्तताको सिद्धान्तलाई स्वीकार र लागू गरिने कुरा उल्लेख हुनुपर्छ ।

सि.नं. ५ आर्थिक कार्यप्रणाली

- ५.१४.१३. को निश्चित शब्द आवश्यक नहुने ।

सि.नं. ९ अर्थ विधेयक

- (फरकमत) ९.१९. को खण्ड (ङ) प्रतिबन्धात्मक वाक्यांशमा रहेको स्थानीय निकायले लगाउने कुनै कर भन्ने शब्द हटाउनुपर्ने । सि.नं. २४, धारा ३४ राष्ट्रिय प्राकृतिक स्रोत आयोग तथा सि.नं. २५, धारा ३७ को राष्ट्रिय वित्तीय आयोगका सम्बन्धमा - कानूनमा व्यवस्था गरे हुने, सदस्य संख्या बढाउनु पर्ने, महिला, आदिवासीसमेतको सहभागिता हुनुपर्ने, हरेक प्रदेशको प्रतिनिधि रहनुपर्ने, ६ वर्षको पदावधि बढी भएको, संवैधानिक परिषद्को सिफारिशमा नियुक्ति सम्बन्धी व्यवस्था गरिएको हुँदा परिषद्को परिकल्पना स्पष्ट हुनुपर्ने ।

- सूची १ -

  (फरकमत) जैविक विविधतामा स्थानीय सरकारको पनि भूमिका रहनुपर्ने । विशेष स्वायत्त इलाका, क्षेत्र, स्वशासित उपक्षेत्रको अधिकार सहितको छुट्टै विशेष सूची हुनुपर्ने (चारतहको सूची हुनुपर्ने) प्रहरी स्थानीयतहको पनि हुनुपर्ने । तथ्याङ्क प्रदेश अन्तर्गत पनि राखिनुपर्ने । हुलाक सेवा प्रदेश अन्तर्गत पनि राख्नुपर्ने । पेटेन्ट अधिकार प्रदेश अन्तर्गतसमेत राख्नुपर्ने । परम्परागत उपचार सेवा स्थानीयतहमा समेत राख्नुपर्ने । अन्तर्राष्ट्रिय व्यापारको अधिकार प्रदेशलाई पनि दिनुपर्छ ।

- सूची २ -

  (फरकमत) संस्थागत आयकर र व्यक्तिगत आयकर सङ्घ र प्रदेशलाई दिइनुपर्छ । यसको समर्थनमा सभामा समेत मत आएको । (फरकमत) सम्पत्तिकर स्थानीयतहलाई प्रस्तावित गरिएकोमा केवल घर जग्गामा मात्र सीमित रहनुपर्ने । भन्सार आयको निश्चित प्रतिशत भन्सार कार्यालय रहेको प्रदेशलाई दिइनुपर्ने । VAT को अधिकार प्रदेशलाई पनि दिनुपर्छ । मालपोतलाई भूमिकर भनिनुपर्छ । कार्वन सेवाको अनुदान प्रदेशलाई पनि दिइनुपर्छ ।

**ख) अवधारणापत्रतर्फ**

- (फरकमत) पेज नं. ६१ को विषय प्रवेश उप-शीर्षकको पहिलो परिच्छेदमा २००७ सालदेखिका पटक पटकका ऐतिहासिक जनआन्दोलन, जनयुद्ध र मधेस आन्दोलनबाट प्राप्त जनादेश अनुरूप सम्पन्न संविधानसभाको निर्वाचन भन्ने वाक्यांश थप गर्नुपर्ने । पेज नं. ८२ को पहिलो अनुच्छेदमा रहेको 'विश्वको शक्तिशाली राष्ट्र' भन्ने शब्दावली हटाउनु पर्ने ।

## २.१.४. प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको प्रतिवेदनमाथि संविधानसभाले संवैधानिक समितिलाई दिनु पर्ने प्रस्तावित सुझाव र निर्देशन

### २.१.४.१. अवधारणापत्रतर्फ

- संविधानसभामा छलफल हुँदा यस समितिको प्रतिवेदनमा समावेश अवधारणापत्र खण्डको पेज नं. ६१ को विषय प्रवेश उप-शीर्षकको पहिलो परिच्छेदमा २००७ सालदेखिका पटक पटकका ऐतिहासिक जनआन्दोलन, जनयुद्ध र मधेस आन्दोलनबाट प्राप्त जनादेश अनुरूप सम्पन्न संविधानसभाको निर्वाचन भन्ने वाक्यांश थप गर्नुपर्ने सुझाव माननीय सदस्यहरूबाट आएको सन्दर्भमा यो विषय संवैधानिक समिति लगायतका अन्य केही समितिको प्रतिवेदनमा समेत उठिरहेको हुनाले सबैमा एकरूपतापूर्ण भाषा र विषयवस्तु तय गर्न संवैधानिक समितिको प्रतिवेदनका सम्बन्धमा पछि सभाले संवैधानिक समितिलाई दिने निर्देशन र सुझावमा तय भए अनुरूप गर्ने ।
- अवधारणापत्र खण्डको पेज नं. ८२ को पहिलो अनुच्छेदमा रहेको 'विश्वको शक्तिशाली राष्ट्र अमेरिकाको संविधान हेर्दा' भन्ने शब्दावली को सट्टा 'संयुक्त राज्य अमेरिकाको संविधान हेर्दा' भन्ने शब्दावली राख्ने ।

### २.१.४.२. प्रारम्भिक मस्यौदातर्फ

१. प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको प्रतिवेदनसाथ संलग्न प्रारम्भिक मस्यौदाको सि.नं. १ को प्रस्तावना नियमावली बमोजिम संवैधानिक समितिको कार्यक्षेत्रमा पर्ने देखिएको, सि.नं. २ को आर्थिक अधिकार अन्तर्गत धारा १ देखि ८ सम्म रहेका मौलिक हक, सि.नं. ३ मा रहेको मौलिक कर्तव्य र सि.नं. ४ को धारा १० देखि १३ सम्म रहेका राज्यको दायित्व, सिद्धान्त र नीतिहरु सम्बन्धी विषयहरु नियमावली बमोजिम मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको कार्यक्षेत्रभित्र पर्ने देखिएको, सि.नं. ८ राष्ट्रिय सर्वसंचित कोष, सि.नं. ९ अर्थ विधेयक, सि.नं. १० राष्ट्रिय सर्वसंचित कोषबाट व्यय, सि.नं. ११ राष्ट्रिय सर्वसंचित कोषमाथि व्ययभार, सि.नं. १२ राजस्व र व्ययको अनुमान, सि.नं. १३ विनियोजन ऐन, सि.नं. १४ पूरक अनुमान, सि.नं. १५ पेश्की खर्च, सि.नं. १६ राजस्व र व्यय सम्बन्धी विशेष व्यवस्था, सि.नं. १७ उधारो खर्च, सि.नं. १८ आकस्मिक कोष, सि.नं. १९ आर्थिक कार्यविधि, ऐन सम्बन्धी विषय नियमावलीमा स्पष्ट नभए पनि कार्यक्षेत्र विस्तार गर्दा व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समितिले आफ्नो कार्यक्षेत्रभित्र समावेश गरेकोमा सम्माननीय अध्यक्षज्यूको अध्यक्षतामा बसेको समितिका सभापतिहरूको मिति २०६५ ।१० ।१४ मा बसेको संयुक्त बैठकले त्यसलाई स्वीकार गरेको हुँदा यी विषयहरु व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समितिकै कार्यक्षेत्रभित्रका विषय मान्नु पर्ने र सोको मस्यौदा पनि त्यही प्रतिवेदनमा आधारित रहेर गर्नुपर्ने देखिन्छ । साथै सि.नं. २७ मा रहेको सन्धि वा सम्झौताको अनुमोदन, सम्मिलन स्वीकृति वा समर्थन सम्बन्धी विषय नियमावली बमोजिम राष्ट्रियहितको संरक्षण समितिको कार्यक्षेत्रभित्र पर्ने देखिन्छ । उल्लिखित विषयमा सम्बन्धित समितिको मस्यौदा आधिकारिक हुने, प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको मस्यौदामा आर्थिक र राजस्व बाँडफाँडका दृष्टिले राख्न सिफारिश गरिएका विषयलाई संवैधानिक समितिले महत्वपूर्ण सन्दर्भ सामग्रीको रूपमा ग्रहण गर्न उपयुक्त हुने भएको र सो विषयमा सम्माननीय अध्यक्षज्यूले संविधानसभाको मिति २०६६ ।२ ।१३ को बैठकमा रूलिङ्ग गरिसक्नु भएको हुँदा सोही बमोजिम गर्न सुझाव दिने । दोहोरिएका ती विषयमा सभामा छलफल हुँदा उठेका र मतैक्यता कायम हुन नसकेका विषय पनि सम्बन्धित समितिको मस्यौदाबाट निर्णय भई सम्बोधन हुने भएकोले समितिले यहाँ छलफल र निर्णय गरेको छैन ।

२. प्रारम्भिक मस्यौदाको सि.नं. ५ धारा १४ को उपधारा (१२) को व्याख्यात्मक टिप्पणीमा रहेको "स्वायत्तताको सिद्धान्तलाई सम्मान गर्न" भन्ने व्यहोराको सट्टा "स्वायत्तताको सिद्धान्तलाई स्वीकार र लागू गर्न आवश्यक भएकोले" भन्ने व्यहोरा राख्ने ।

३. प्रारम्भिक मस्यौदाको सि.नं. २४ धारा ३४ मा राष्ट्रिय प्राकृतिक स्रोत आयोग सम्बन्धी व्यवस्था रहेको देखिन्छ । उक्त आयोगको प्रमुख काम, कर्तव्य र अधिकार प्राकृतिक स्रोत सम्बन्धी विषयमा सङ्घ र प्रदेश, प्रदेश-प्रदेश , प्रदेश र स्थानीय सरकार र स्थानीय सरकार-स्थानीय सरकार बीच उठ्ने विवाद निरूपण गर्ने गरी व्यवस्था गरिएको पाइन्छ । संविधानसभा नियमावली, २०६५ को नियम ६६ को क्र.सं. ३ मा सङ्घीय एकाइहरु बीच उत्पन्न हुन सक्ने विवादको समाधान सम्बन्धी संयन्त्र राज्यको पुर्नसंरचना र राज्यशक्तिको बाँडफाँड समितिको कार्यक्षेत्रभित्र पर्ने व्यवस्था गरे अनुरूप राज्यको पुर्नसंरचना र राज्यशक्तिको बाँडफाँड समितिले आफ्नो प्रारम्भिक मस्यौदाको धारा ११ मा सङ्घीय एकाइहरु बीच उत्पन्न हुने विवाद समाधान सम्बन्धी विस्तृत व्यवस्था गरेको हुनाले यो विषयमा संवैधानिक समितिले दुबै प्रतिवेदनलाई समायोजन गरी उपयुक्त व्यवस्था गर्न निर्देशन दिने ।

४. प्रारम्भिक मस्यौदाको सूची १ अन्तर्गत पेज नं. ३७ मा रहेको जैविक विविधताको विषय स्थानीय एकाइको पनि अधिकार रहने गरी सूचीमा थप गर्ने ।

५. प्रारम्भिक मस्यौदाको सूची २ अन्तर्गत पेज नं. ४० मा रहेको मालपोत शीर्षकलाई भूमिकर भनी परिवर्तन गर्ने र व्याख्यात्मक टिप्पणीमा पनि सोही बमोजिम शब्द मिलान गर्ने ।

६. प्रारम्भिक मस्यौदाको सूची २ अन्तर्गत पेज नं. ४१ मा रहेको सम्पत्ति कर शीर्षकको व्याख्यात्मक टिप्पणीको अन्तमा रहेको वाक्यांशको सट्टा सम्पत्ति करमा मूलतः घर जग्गा कर समावेश हुने भन्ने वाक्याशं राख्ने ।

७. राज्य पुनर्संरचना समितिबाट भएको अधिकारको बाँडफाँडलाई समेत मध्यनजर गरी मूल्य अभिवृद्धि कर र आयकर लगाउने अधिकार प्रदेश र स्थानीय सरकारलाई पनि प्रदान गर्नुपर्ने सुझाव आएको सन्दर्भमा संवैधानिक समितिले त्यसलाई ध्यान दिने ।

८. फरक मत आएका र मतैक्यता हुन नसकेका भनी सूचीकृत गरिएका अन्य विषयहरूको हकमा प्रतिवेदनमा आएको मस्यौदाले नै सम्बोधन गरेको हुँदा समितिको प्रारम्भिक मस्यौदा बमोजिम नै गर्ने ।

## २.२. संवैधानिक निकायको संरचना निर्धारण समितिको प्रतिवेदन सम्बन्धमा

### २.२.१. प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरूः-

- देशको भावी शासकीय स्वरूप सङ्घीय पद्धतिमा आधारित हुने निश्चित भएको अवस्थामा देशको प्राकृतिक स्रोत-साधन र जैविक विविधताको समुचित संरक्षण, सम्वर्द्धन, तिनको समन्यायिक उपयोग र बाँडफाँड तथा देशको वित्तीय स्रोतको न्यायोचित वितरण गर्ने सम्बन्धी वित्तीय आयोगको आवश्यकता, गठन, काम कर्तव्य र अधिकार

### २.२.२. अर्को समितिको कार्यक्षेत्रभित्र परेको विषय यस समितिको प्रतिवेदनमा दोहोरिएकोः

**संवैधानिक समितिको कार्यक्षेत्रभित्र पर्ने विषय**

- प्रस्तावना

### २.२.३. सभामा छलफल हुँदा मतैक्यता हुन नसकेका विषयहरूः

**क) प्रारम्भिक मस्यौदातर्फ**

- समितिको प्रतिवेदनमा प्रस्तावित गरिएका ११ वटा आयोगहरूमध्ये हाल कायम रहेका ५ वटा आयोग बाहेक अन्य आयोगहरूलाई हाल कायम रहेको मानव अधिकार आयोगको छाता अन्तर्गत राखी प्रस्तावित नयाँ अयोगहरूका काम, कर्तव्य र अधिकार सोही आयोगमा रहने व्यवस्था गर्ने वा छुट्टै महासङ्घ आयोग गठन गरी सोही अन्तर्गत राख्ने वा मानवअधिकार र लैङ्गिक आयोग गठन गरी सोही अन्तर्गत राख्ने । समितिले प्रस्ताव गरेका सबै आयोगहरु कायम रहनु पर्ने साथै अरू विभिन्न आयोगहरूसमेत थप गर्नुपर्ने । प्रस्तावित सबै आयोगहरूको सन्दर्भमा प्रदेशमा पनि आयोगको संरचना रहनु पर्ने भएकोले अहिले प्रस्तावित सबै आयोगको शुरूमा नेपालमा एक सङ्घीय .... आयोग हुनेछ भनी उल्लेख हुन पर्ने वा नपर्ने विषय । प्रतिवेदनको ठाउँ ठाउँमा उल्लिखित 'राष्ट्रपति' भन्ने शब्दको सट्टा लैङ्गिक तटस्थ शब्द राखिनुपर्छ भन्ने विषय । संवैधानिक

आयोगहरूको व्ययभार संचित कोषबाट हुनुपर्छ भन्ने विषय । संवैधानिक आयोगका पदाधिकारीहरूको नियुक्ति सम्बन्धमा संवैधानिक परिषद्को सिफारिशमा राष्ट्रपतिले गर्ने वा कार्यकारी प्रमुखले नियुक्ति गरेमा व्यवस्थापिकाबाट सुनुवाइ गर्ने विकल्प राखी प्रतिवेदनमा उल्लेख भएकोमा सोको पक्ष र विपक्ष दुबै तर्फ तर्क प्रस्तुत भएको । सबै आयोगमा बराबर सदस्य संख्या नराखी आयोगको प्रकृति, कार्यबोझ र आवश्यकता अनुसार फरक-फरक संख्यामा सदस्यहरु रहने व्यवस्था हुनपर्ने । सबै आयोगका पदाधिकारीहरूको नियुक्तिका लागि आवश्यक पर्ने र अवकाश हुने न्यूनतम उमेर घटाइनु पर्ने/कायमै राख्नुपर्ने/निजहरूको पुनर्नियुक्ति हुन नहुने । अख्तियार दुरूपयोग अनुसन्धान आयोगलाई प्रस्तावित गरिए अनुसार संवैधानिक अङ्गको रूपमा कायम राख्ने वा यही काम गर्नको लागि कार्यकारिणी अन्तर्गत छुट्टै शक्तिशाली निकायको गठन गर्नुपर्ने । तीन जना पदाधिकारी हुने आयोगहरूमा समानुपातिक प्रतिनिधित्व र समावेशीताको आधारमा सदस्यहरूको नियुक्ति हुन्छ भन्ने व्यवस्थाको औचित्य तथा यो शब्दको परिभाषा गरिनुपर्ने भन्ने विषय । प्रतिवेदनको विभिन्न स्थानमा उल्लिखित उच्च नैतिक चरित्र एवं सामाजिक प्रतिष्ठा कायम भएको भन्ने शब्दावलीको परिभाषा आवश्यक पर्ने । सार्वजनिक संस्थानका कर्मचारीहरूको नियुक्ति, पदपूर्ति र बढुवा सम्बन्धी कार्य पनि लोकसेवा आयोगको अधिकारक्षेत्रभित्र रहनुपर्ने भन्ने विषय । प्रतिवेदनको पृष्ठ ४ को बुँदा नं. (१) को प्रतिबन्धात्मक वाक्यांशमा उल्लिखित 'तर ..... अन्य कानूनले छुट्टै विशेष व्यवस्था भएको पदाधिकारीको हकमा भने उपधारा लागू हुने छैन' भन्ने प्रावधानले संविधानको व्यवस्थालाई सङ्कुचित र खण्डित तुल्याउँछ भन्ने विषय । पृष्ठ ४ को उपदफा (४) मा उल्लिखित अख्तियार दुरूपयोग अनुसन्धान आयोगले भ्रष्टाचारको कसुरमा कुनै व्यक्तिउपर महान्यायाधिवक्ताको राय लिएर मात्र मुद्दा चलाउने भन्ने विषय । पृष्ठ १७ को बुँदा नं. २(ख) मा उल्लिखित 'दलहरु बीचको विवाद निरूपण' भन्ने शब्दावली । प्रतिवेदनको पृष्ठ २३ को दफा (४) मा उल्लिखित सैनिक ऐनको अधिकारको विषयमा राष्ट्रिय मानव अधिकार आयोगलाई क्षेत्राधिकार हुने छैन भन्ने व्यवस्थाले मानव अधिकार आयोगको क्षेत्राधिकारलाई सङ्कुचित तुल्याएको भन्ने ।

**ख) अवधारणापत्रतर्फ**

- प्रतिवेदनको पृष्ठ १०६ को अख्तियार दुरूपयोग अनुसन्धान आयोगको काम, कर्त्तव्य र अधिकार शीर्षक अन्तर्गत बुँदा (३) मा उल्लिखित सचेत गराउन वा विभागीय कारवाहीको लागि अख्तियारवालासमक्ष लेखी पठाउने भन्ने व्यहोरा बुँदा नं. (२) मा उल्लिखित महाभियोगको प्रस्ताव पारित भई पदमुक्त हुने संवैधानिक पदाधिकारीहरूको सन्दर्भमा समेत आकर्षित हुने देखिएकोले बुँदा नं. ३ को शुरूमा रहेको 'यसरी' भन्ने शब्दको सट्टा 'बुँदा नं.(१) बमोजिम' भन्ने शब्द राखिनु पर्ने । संवैधानिक अङ्गहरूको विभिन्न तहका सरकारहरूसँगको सम्बन्धका बारेमा स्पष्ट विश्लेषणको कमी रहेको । सरकारलाई जिम्मेवारी र उत्तरदायी बनाउन सीमित सरकारको अवधारणामा आधारित भई स्वतन्त्र संवैधानिक अङ्गहरूको स्थापना गरिएको हुन्छ । यी संवैधानिक अङ्गहरूलाई स्वतन्त्र, निष्पक्ष र प्रभावकारी बनाउनको लागि त्यस्ता निकायमा कार्यरत रहने कर्मचारीहरु विद्यमान सरकार नियन्त्रित निजामती सेवाबाट नपठाई संवैधानिक निकायको छुट्टै सेवा शर्त सम्बन्धी ऐन अन्तर्गत राखिनु पर्ने/नपर्ने सम्बन्धमा कुनै चर्चा परिचर्चा नभएको । संवैधानिक अङ्गहरूको गठन काम कर्तव्य तथा अधिकारको बारेमा प्रतिवेदन दिने समितिको कार्यक्षेत्र रहेकोमा आयोगको कार्यप्रकृति अनुसार मानव अधिकार आयोग र प्रस्तावित ...... संवैधानिक आयोगहरूलाई उजुरी लिने बयान बकपत्र गराउने

खानतलासी गर्ने र मिलापत्र गराउनेजस्ता अर्धन्यायिक प्रकृतिका अधिकारहरू प्रदान गर्नु आवश्यक हुन्छ वा हुँदैन भन्ने सम्बन्धमा स्पष्टता नभएको ।

उक्त समितिको प्रतिवेदनमाथि प्रतिवेदन अध्ययन समितिले तयार गरेको उक्त सुझाव र निर्देशनलाई संविधानसभाले मिति २०६६ ।१० ।२१ मा हुबहु पारित गरी संवैधानि समितिमा पठाएको थियो ।

## २.२.४. संवैधानिक निकायको संरचना निर्धारण समितिको प्रतिवेदनमाथि संविधानसभाले संवैधानिक समितिलाई दिनु पर्ने प्रस्तावित सुझाव र निर्देशन

१. संवैधानिक निकायको संरचना निर्धारण समितिको प्रतिवेदनसाथ संलग्न प्रारम्भिक मस्यौदाको प्रारम्भमा रहेको प्रस्तावना संवैधानिक समितिको कार्यक्षेत्रमा पर्ने देखिएकोले संवैधानिक निकायको संरचना निर्धारण समितिको मस्यौदामा समितिको दृष्टिले प्रस्तावनामा राख्न सिफारिश गरिएका विषयलाई संवैधानिक समितिले महत्वपूर्ण सन्दर्भ सामग्रीको रूपमा ग्रहण गरी प्रस्तावनालाई पूर्णता दिने क्रममा ध्यान दिन सुझाव दिने । समितिबाट प्रस्तुत प्रस्तावनाको विषयमा सभामा छलफल हुँदा उठेका कुराहरू संवैधानिक समितिको मस्यौदाबाट निर्णय भई सम्बोधन हुने भएकोले समितिले यहाँ छलफल र निर्णय गरेको छैन । २. समितिको प्रतिवेदनमा प्रस्तावित ११ वटा आयोगहरूमध्ये हाल कायम ५ वटा आयोग बाहेक अन्य आयोगहरूलाई समितिले नै प्रस्ताव गरे अनुसार व्यवस्था गर्ने वा एकीकृत रूपमा एउटा छाता आयोग अन्तर्गत व्यवस्था गर्ने वा सभामा छलफलको क्रममा प्रस्तावित गरिएका आयोगहरूको विषयमा उचित व्यवस्था गर्ने भन्ने सम्बन्धमा संवैधानिक समितिले छलफल गरी उपयुक्त व्यवस्था गर्न निर्देशन दिने । ३. अख्तियार दुरूपयोग अनुसन्धान आयोगको सम्बन्धमा हालको व्यवस्थालाई यथावत् राखी भ्रष्टाचारको नियन्त्रणका विषयमा जन निर्वाचित सरकारलाई जवाफदेही बनाउन सबै विकल्पहरूमा छलफल गरी समुचित टुङ्गोमा पुग्न संवैधानिक समितिलाई निर्देशन दिने । ४. संवैधानिक आयोगहरूको व्ययभार संचित कोषबाट हुनुपर्छ भन्ने विषयमा व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समितिको प्रतिवेदनको सम्बन्धमा पछि संविधानसभाले संवैधानिक समितिलाई दिने सुझाव र निर्देशन बमोजिम गर्ने । ५. सबै संवैधानिक आयोगका पदाधिकारीहरूको नियुक्ति सम्बन्धमा शासकीय स्वरूप समितिको प्रतिवेदन र अन्य सम्बद्ध समितिका प्रतिवेदनहरूका सम्बन्धमा पछि संविधानसभाले संवैधानिक समितिलाई दिने सुझाव र निर्देशन बमोजिम गर्ने ६. सबै आयोगमा बराबर सदस्य संख्या नराखी आयोगको प्रकृति, कार्यबोझ र आवश्यकताअनुसार फरक-फरक संख्यामा सदस्यहरू रहने व्यवस्था गर्न संवैधानिक समितिलाई निर्देशन दिने । ७. पृष्ठ ४ को उपदफा (४) मा उल्लिखित अख्तियार दुरूपयोग अनुसन्धान आयोगले भ्रष्टाचारको कसुरमा कुनै व्यक्तिउपर महान्यायाधिवक्ताको राय लिएर मुद्दा दायर गर्ने वा आफ्नै निर्णयद्वारा मुद्दा दायर गर्न सक्ने भन्ने विषयमा संवैधानिक समितिले छलफल गरी निर्णय गर्न निर्देशन दिने । ८. प्रतिवेदनको पृष्ठ १२ मा रहेको लोकसेवा आयोगको काम, कर्तव्य र अधिकार सम्बन्धी उपधारा (२) मा सार्वजनिक संस्था पनि राख्ने र उपधारा (६) हटाउने । उपधारा (६) मा रहेको स्पष्टीकरणलाई उपधारा (२) मा समावेश गर्ने ।९.प्रतिवेदनको पृष्ठ १३ मा रहेको लोकसेवा आयोगका प्रादेशिक व्यवस्थामा रहेको मस्यौदाको सट्टा प्रत्येक प्रदेशमा कानूनमा व्यवस्था भएबमोजिम अलग अलग प्रादेशिक लोकसेवा आयोग रहनेछ भन्ने व्यहोरा राख्ने । १०. प्रतिवेदनको पृष्ठ १७ को उपधारा (१) मा रहेको राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन व्यवस्थापिका-संसदको बैठकबाट हुने हो वा बाहिरबाट हुने हो

भन्ने विषय टुङ्गो लागेपछिमात्र निर्वाचन आयोगको जिम्मेवारीभित्र राख्न सकिने भएको तथा स्थानीय सरकार अन्तर्गत कार्यपालिका र व्यवस्थापिकाको अलग्गै व्यवस्था हुने वा नहुने स्पष्ट भए पछि सोको निर्वाचनलाई पनि निर्वाचन आयोगको जिम्मेवारीभित्र राख्न पर्ने अवस्था रहेकोले यी विषयमा शासकीय स्वरूप समितिको प्रतिवेदनको सम्बन्धमा पछि संविधानसभाले संवैधानिक समितिलाई दिने सुझाव र निर्देशन बमोजिम गर्ने । ११. प्रतिवेदनको पृष्ठ १७ को उपधारा (२) को खण्ड (क) मा रहेको निर्वाचनक्षेत्र निर्धारण गर्ने काम निर्वाचन आयोगको नभई निर्वाचनक्षेत्र निर्धारण आयोगको हुने र खण्ड (ख) देखि (ङ) सम्म रहेका कामहरु कानूनबाट व्यवस्थित हुने विषय भएकोले उपधारा (२) हटाई उपधाराको क्रम मिलाउने । १२. प्रतिवेदनको पृष्ठ २३ को मानव अधिकार आयोगको काम, कर्तव्य र अधिकार सम्बन्धी व्यवस्थाको उपधारा (४) को आवश्यकता नरहेकोले सो हटाउने । १३. समितिको प्रतिवेदनमा व्यवस्था गरिएका अन्य आयोगहरूमध्ये संवैधानिक समितिबाट अन्तिम टुङ्गो भएपछि कायम हुने आयोगहरूको प्रादेशिक संरचना कानूनद्वारा व्यवस्था भएबमोजिम हुने व्यवस्था राख्न संवैधानिक समितिलाई निर्देशन दिने । १४. प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको प्रतिवेदनको सि.नं. २५ धारा ३७ मा समावेश भएको राष्ट्रिय वित्तीय आयोग सम्बन्धी व्यवस्थालाई संवैधानिक निकायको रूपमा संविधानमा समावेश गर्ने वा कानूनद्वारा व्यवस्थित गर्ने भन्ने सम्बन्धमा संवैधानिक समितिले छलफल गरी निर्णय गर्न निर्देशन दिने । १५. फरक मत आएका र मतैक्यता हुन नसकेका भनी सूचीकृत गरिएका अन्य विषयहरूको हकमा प्रतिवेदनमा आएको मस्यौदाले नै सम्बोधन गरेको हुँदा समितिको प्रारम्भिक मस्यौदा बमोजिम नै गर्ने ।

उक्त समितिको प्रतिवेदनमाथि प्रतिवेदन अध्ययन समितिले तयार गरेको उल्लिखित सुझाव र निर्देशनलाई संविधानसभाले मिति २०६६ ।११ ।२० मा हुबहु पारित गरी संवैधानिक समितिमा पठाएको थियो ।

## २.३. अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समितिको सम्बन्धमा

### २.३.१. प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरू

- अल्पसंख्यक र सीमान्तकृत समुदायको स्पष्ट परिभाषा हुन नसकेको । अल्पसंख्यक र सीमान्तकृत समुदायको उत्थानका लागि गरिनुपर्ने स्पष्ट संवैधानिक व्यवस्था र सोको प्रभावकारी कार्यान्वयनको संयन्त्रबारे सिफारिश नभएको । हाम्रा पहिलेका संविधानहरूमा यस सम्बन्धमा रहेका कुराहरूको समीक्षा भएको छैन ।

### २.३.२. अर्को समितिको कार्यक्षेत्रभित्र परेका विषय यस समितिको प्रतिवेदनमा दोहोरिएको

- अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षणको समितिको दृष्टिकोणबाट मस्यौदामा समावेश भएका तर संविधानसभा नियमावली, २०६५ अनुसार अरू समितिको कार्यक्षेत्रभित्र पर्ने देहायका विषयहरु दोहोरिएको देखिन्छ ।

**संवैधानिक समितिको कार्यक्षेत्रभित्र पर्ने विषयहरू**

- प्रस्तावना, प्रारम्भिक मस्यौदामा गरिएको राष्ट्रको परिभाषा

**मौलिक हक र निर्देशक सिद्धान्त समितिको कार्यक्षेत्रभित्र पर्ने विषयहरू**

- प्रारम्भिक मस्यौदामा रहेको नागरिकता सम्बन्धी व्यवस्था, समानताको हक, साँस्कृतिक तथा शिक्षा सम्बन्धी हक, धर्म सम्बन्धी हक, राज्यका निर्देशक सिद्धान्तहरु, राज्यका नीतिहरु

**सांस्कृतिक तथा सामाजिक ऐक्यबद्धताको आधार निर्माण समितिको कार्यक्षेत्रभित्र पर्ने विषय**

- प्रारम्भिक मस्यौदामा रहेको राष्ट्रभाषा सम्बन्धी व्यवस्था

## २.३.३. सभामा छलफल हुँदा मतैक्यता हुन नसकेका विषयहरू

**क) प्रारम्भिक मस्यौदातर्फ**

- अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएकाको अधिकार अन्तर्गत धेरै विषय अरू हकसँग खप्टिएको भन्ने विषय, प्रतिवेदनको विभिन्न ठाउँमा रहेका वहिष्करण, तराईवासी, मधेसी, जाति, आदिवासी जनजाति र पूर्ण समानुपातिक भन्ने शब्दावलीहरु ।

  जातीय भेदभाव तथा छुवाछूत विरूद्धको हक

  - वुदां नं. २ को पेज ७ मा उल्लिखित "उपयोगका कुराहरु प्रयोग गर्नबाट यत्रतत्र सर्वत्र स्थलमा" भन्ने शब्दावलीहरु, बुँदा नं. ४ को पेज ७ मा उल्लिखित "अमर्यादा वा घृणालाई राज्यले निरूत्साहित गर्नेछ" । (निरूत्साहितको सट्टामा निषेध, प्रतिबन्ध लगाउने भन्ने शब्द समेत राख्नुपर्ने ।

  सांस्कृतिक र शिक्षा सम्बन्धी हक

  - यो हकमा दुई वटा फरक विषय रहेकोले यसलाई एकै ठाउमा नराखी अलग अलग रूपमा मस्यौदा गर्ने भन्ने विषय । बुँदाको नं. १ पेज नं. ८, ९ तर ..... भनी उल्लिखित प्रतिबन्धात्मक वाक्यांश । बुँदा नं. ४ र ५ पेज नं. १० का व्यवस्थाहरु यी शैक्षिक संस्थाहरूको पूर्वाधार, शिक्षाको मापदण्ड र स्तर निर्धारणका विषयहरु, यी व्यवस्थाले शिक्षालाई निजी र सार्वजनिक गरी दुई समूहमा वर्गीकृत गरेको र निजी क्षेत्रका शैक्षिक संस्थालाई संवैधानिक प्रत्याभूति दिएको ।

  अल्पसंख्यक, सीमान्तकृत तथा वहिष्करणमा पारिएकाको अधिकार

  - बुँदा नं. १ पेज १२ देखी १३ को स्पष्टीकरणमा उल्लिखित खण्ड (क), (ख) र (ग) का व्यवस्थाहरु, बुँदा नं. २ पेज १३ को "तर ..... भन्ने प्रतिबन्धात्मक वाक्यांश, बुँदा नं. ३ पेज १४ को शुरूमा उल्लिखित "उपभोग" भन्ने शब्द र "तर ..... भन्ने प्रतिबन्धात्मक वाक्यांश, बुँदा नं. ५ पेज नं १४ को "बौद्धिक सम्पत्तिको रूपमा पञ्जीकरण गरी उपयोग, संरक्षण र सम्वर्द्धन गर्ने" भन्ने शब्दहरु, बुँदा नं. ६ को पेज नं. १४-१५ को "कुनै विदेशी समुदायसँग स्वतन्त्र एवं शान्तिपूर्ण रूपमा सम्बन्ध स्थापना गर्ने र सरिक हुने हक हुनेछ" भन्ने शब्दहरु, बुँदा नं. ८ पेज नं. १५ को "राज्यबाट प्राप्त गर्ने फाइदा" भन्ने शब्दहरु, बुँदा नं. ९ को पेज नं. १५ को "पूर्ण समानुपातिक" भन्ने शब्द, बुँदा नं. १० पेज १५-१६ को "कानूनमा व्यवस्था गरी पूर्ण समानुपातिक प्रतिनिधित्वको सिद्धान्त अनुरूप राज्य व्यवस्थामा सहभागी" भन्ने

शब्दहरु, बुँदा नं. ११ पेज नं. १६ को "राज्यको हरेक तहमा पूर्ण समानुपातिक प्रतिनिधित्व सहित राज्यले कानूनद्वारा विशेष व्यवस्था गर्ने छ" भन्ने शब्दहरु, बुँदा नं. १२ पेज नं. १६ को "क्षतिपूर्ति बापत समानुपातिकता माथि थप अधिकार सुनिश्चितताको विशेष व्यवस्था" भन्ने शब्दहरु

राज्यको निर्देशक सिद्धान्त

- बुँदा नं. २ पेज नं. १८ को "भातृत्व" भन्ने शब्द

राज्यका नीतिहरु

- बुँदा नं. १ पेज नं. २० को "नागरिकको मर्यादित जीवन बाँच्न पाउने हक" भन्ने शब्दहरु, सोही अधिकार अन्तर्गत पृष्ठ १६ मा उपधारा (१३) मा रहेको उच्चस्तरीय आयोगको औचित्य र व्यवस्था

**ख) अवधारणापत्रतर्फ**

- समितिको कार्यक्षेत्र र अवधारणापत्रमा उल्लेख भएको अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएका वर्ग र समुदायका भन्ने शब्दावली नै उपयुक्त छैन, उत्पीडित जाति जनजाति तथा समुदाय भन्नु पर्छ । वहिष्करणमा पारिएका वर्ग र समुदाय भन्ने कुरा अवधारणापत्रबाट नै सच्याउनु पर्छ । उत्पीडन, शोषण र दमनमा पारिएको छ तर कसैलाई पनि वहिष्कार गरिएको छैन । पृष्ठ १९ मा उल्लेख भएको दलितको र जनजातिको जनसंख्या तथ्याङ्कमा आधारित छैन । दलितको जनसंख्या १३ देखि २० प्रतिशतसम्म छ भनिएको छ भने आदिवासी जनजातिको ४० प्रतिशतको हाराहारीमा छ भनिएको गलत छ । सीमान्तकृत र वहिष्करणमा परेको वर्ग र समुदायमा तराईवासी र मधेसी पर्ने तर हिमाली र दुर्गम क्षेत्रका समुदाय नपर्ने आधार अवधारणापत्रले दिन सकेन । एकल महिला र एड्सपीडित पनि सीमान्तकृतमा पर्दछ, अवधारणापत्रले समेट्न सकेन । कस्तो प्रकारको निर्वाचनप्रणालीले अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएका वर्ग र समुदायको राज्यका जनप्रतिनिधिमूलक संस्थामा प्रतिनिधित्वको सुनिश्चितता गर्छ भन्ने विषय प्रतिवेदनमा समेटिएको छैन । दलितहरुको लागि गैरभौगोलिक क्षेत्रको परिकल्पना अवधारणापत्रले अगाडि सार्न सकेन । अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएका वर्ग र समुदायको अधिकारको संरक्षण हुने प्रभावकारी उपाय जातीय स्वशासन नै हो तर यस सम्बन्धमा प्रतिवेदन मौन छ ।

## २.३.४. अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समितिको प्रतिवेदनमाथि संविधानसभाले संवैधानिक समितिलाई दिनु पर्ने सुझाव र निर्देशन

**क) प्रारम्भिक मस्यौदातर्फ**

१. अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समितिको प्रतिवेदनसाथ संलग्न प्रारम्भिक मस्यौदाको प्रस्तावना र राष्ट्रको परिभाषा संवैधानिक समितिको कार्यक्षेत्रमा पर्ने, नागरिकता सम्बन्धी व्यवस्था, समानताको हक, साँस्कृतिक तथा शिक्षा सम्बन्धी हक, धर्म सम्बन्धी हक, राज्यका निर्देशक सिद्धान्तहरु र राज्यका नीतिहरु मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको कार्यक्षेत्रमा पर्ने, राष्ट्रभाषा सम्बन्धी व्यवस्था सांस्कृतिक तथा सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको कार्यक्षेत्रमा पर्ने देखिन्छ । अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समितिको मस्यौदामा समितिको दृष्टिले सम्बन्धित भागमा राख्न सिफारिश गरिएका

विषयलाई संवैधानिक समितिले महत्वपूर्ण सन्दर्भ सामग्रीको रूपमा ग्रहण गरी सम्बन्धित विषयलाई पूर्णता दिने क्रममा ध्यान दिन उपयुक्त हुन्छ । समितिबाट प्रस्तुत उल्लिखित विषयमा सभामा छलफल हुँदा उठेका कुराहरु सम्बन्धित समितिको मस्यौदाबाट निर्णय भई सम्बोधन हुने भएकोले सभाले यहाँ कुनै निर्णय गरेको छैन ।

२. अल्पसंख्यक र सीमान्तकृत समुदायको हक हितको दृष्टिले हेर्दा जातीय भेदभाव र छुवाछूतविरूद्धको हक महत्वपूर्ण रहेकोमा विवाद हुन सक्दैन । यस समिति र मौलिक हक तथा निर्देशक सिद्धान्त समितिले अवधारणापत्र र प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन तयार पार्दा यो हकको प्रत्याभूत गर्ने गरी मस्यौदा तयार गर्नु स्वाभाविक देखिन्छ । यस विषयमा मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनको पृष्ठ ३१ धारा ९ मा छुवाछूत तथा भेदभावविरूद्धको हक शीर्षकमा यस सम्बन्धी उपयुक्त व्यवस्था गरेको देखिएकोले उक्त हकको सम्बन्धमा मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनमा रहेको मस्यौदालाई नै संविधानको मस्यौदामा समावेश गर्न निर्देशन दिएको छ ।

३. संविधान निर्माणको क्रममा अल्पसंख्यकको परिभाषा र पहिचान गर्नुको उद्देश्य अत्यन्त न्यून संख्याको कारणले जातीय पहिचान, संस्कृति, भाषा वा धार्मिक आस्था लोप हुने अवस्था भई सङ्कटको स्थितिमा पुगेका समूहको विशेष संरक्षण गर्नु हुन्छ भने सीमान्तकृत वा वहिष्करणको अवस्थामा रहेका समूहको परिभाषा र पहिचानको उद्देश्य उनीहरूको आर्थिक, सामाजिक अवस्थामा सुधार ल्याई सशक्तीकरण गर्ने र राज्य व्यवस्थामा मूल प्रवाहीकरण गर्नु रहेको हुन्छ । आर्थिक सामाजिक न्याय स्थापित गरी सारभूत समानताको अवस्था र स्थिति निर्माण गर्न यस्ता उपायहरु अवलम्बन गरिने हो । परिभाषा र पहिचानको दृष्टिले सीमान्तकृत र वहिष्करणको अवस्थामा रहेका समुदायलाई छुट्टयाउने आधार, मापदण्ड र उनीहरूलाई गर्नुपर्ने संरक्षण र विकासको विशेष व्यवस्थाको प्रकृतिसमेत समान हुने भएकोले सीमान्तकृत र वहिष्करणको अवस्थामा रहेका समूहलाई अलग गर्नुपर्ने आवश्यकता र औचित्य देखिदैन । तसर्थ सीमान्तकृत समुदायको परिभाषा र पहिचानले वहिष्करणको अवस्थामा रहेका समुदायलाई स्वतः समेट्दछ ।

अतः समितिको प्रतिवेदनको प्रारम्भिक मस्यौदा खण्डको पेज नं. १२ र १३ मा रहेको उपधारा (१) को खण्ड (क) र (ख) मा रहेको स्पष्टीकरणलाई परिमार्जन गर्ने र खण्ड (ग) मा रहेको स्पष्टीकरणलाई हटाई संविधानको परिभाषा र व्याख्या भन्ने भागमा अल्पसंख्यक र सीमान्तकृत समुदायको देहाय बमोजिमको परिमार्जित परिभाषा समावेश गर्ने ।

**अल्पसंख्यक समुदायः** "अल्पसंख्यक समुदाय भन्नाले कानूनद्वारा निर्धारित प्रतिशतभन्दा कम जनसंख्या रहेका जातीय, भाषिक र धार्मिक समूहहरूलाई सम्झनुपर्छ र सो शब्दले आफ्नै जातीय, धार्मिक र भाषिक विशिष्टता भएको, त्यसलाई बचाई राख्ने आकांक्षा रहेका, विभेद र उत्पीडन भोगेका समूह समेतलाई जनाउँछ ।"

**यस परिभाषाको व्याख्यात्मक टिप्पणीमा राख्ने व्यहोरा**

मानवशास्त्रीय दृष्टिले अल्पसंख्यक समूहको पहिचानको आधार कूल राष्ट्रिय जनसंख्यामा सम्बन्धित समुदायको जनसंख्याको न्यून अंशलाई नै मुख्य रूपमा स्वीकार गरिएको पाइन्छ भने त्यसलाई समाजशास्त्रीय दृष्टिले हेर्दा तुलनात्मक रूपमा कम जनसंख्याको साथसाथै विभेद र उत्पीडनमा परेका/पारिएका, छुट्टै जातीय, धार्मिक तथा भाषिक विशिष्टता र पहिचान भएका र त्यसलाई निरन्तर बचाई राख्न चाहने आकांक्षालाई

समेत अल्पसंख्यक समुदायको पहिचानको आधारको रूपमा ग्रहण गर्नुपर्ने देखिन्छ । अतः उल्लिखित दुबै मान्यतालाई आत्मसात् गरी यो परिभाषाको मस्यौदा गरिएको हो । अल्पसंख्यक समुदायको अधिकार सम्बन्धमा रहेको संवैधानिक व्यवस्थालाई कार्यान्वयनमा लैजान व्यवस्थापिकाले अलग ऐनको निर्माण गर्नुपर्ने हुँदा संविधानको व्यवस्थाको अधीनमा रहेर पछिल्लो राष्ट्रिय जनगणनालाई समेत आधार बनाई अल्पसंख्यक समुदायको परिभाषालाई अझ स्पष्ट गर्न सकियोस् भनी लचिलो परिभाषा गरिएको छ ।

**सीमान्तकृत समुदायः** "सीमान्तकृत समुदाय भन्नाले राजनीतिक, आर्थिक र सामाजिक रूपले पछाडि पारिएका, विभेद र उत्पीडन तथा भौगोलिक विकटताको कारणले सेवा सुविधाको उपभोग गर्न नसकेका वा त्यसबाट वञ्चित रहेका पछिल्लो मानव विकास सूचकाङ्कको कानूनद्वारा निर्धारितस्तरभन्दा न्यून स्थितिमा रहेका समुदायलाई सम्झनुपर्छ र सो शब्दले अतिसीमान्तकृत र लोपोन्मुख समुदाय समेतलाई जनाउँछ ।"

**यस परिभाषाको व्याख्यात्मक टिप्पणीमा राख्ने व्यहोरा**

नेपालको अन्तरिम संविधान २०६३ र केही ऐनहरूले राज्यले विशेष अधिकार सुनिश्चित गर्नुपर्ने समुदायको रूपमा महिला, उत्पीडित जाति/आदिवासी जनजाति, मधेसी, दलित, पिछडिएको क्षेत्रलाई पहिचान गरेको पाइन्छ । यी समुदायभित्रै पनि मानिसहरूको आर्थिक सामाजिक अवस्था अत्यन्त विषम रहेकोले सीमान्तकृत समुदायको परिभाषा र पहिचानलाई अझ वैज्ञानिक र वस्तुनिष्ठ बनाई उनीहरूको सशक्तिकरण र विकासको लागि राज्यबाट उपलब्ध गराइने विशेष सुविधा सम्बन्धित समुदायको पनि अत्यन्त कमजोर अवस्थामा रहेका वर्गले प्राथमिकतापूर्ण रूपले प्राप्त गर्न सकुन् भनी पछिल्लो मानव विकास सूचकाङ्कको आधारमा यसको परिभाषा तय गर्नुपर्ने सिद्धान्तमा सहमत हुँदै यो परिभाषा गरिएको छ । संविधानलाई अन्तिम रूप प्रदान गर्दा जातीय समुदायलाई सीमान्तकृत समुदायको रूपमा स्वीकार गरिएमा संविधान र कानूनले उनीहरूलाई प्रत्याभूत गरेका अधिकार र राज्यबाट उपलब्ध गराइने सुविधा सम्बन्धित समुदायको सीमान्तकृत वर्गले उपभोग गर्न नसक्ने अवस्थामा त्यसै समुदायभित्रका जातिले उपभोग गर्न सक्ने व्यवस्था राख्न उपयुक्त हुन्छ । सीमान्तकृत समुदायको अधिकार सम्बन्धमा रहेको संवैधानिक व्यवस्थालाई कार्यान्वयनमा लैजान व्यवस्थापिकाले ऐनको निर्माण गर्नुपर्ने हुँदा संविधानको व्यवस्थाको अधीनमा रहेर पछिल्लो मानव विकास सूचकाङ्कसमेतलाई आधार बनाई सीमान्तकृत समुदायको परिभाषालाई अझ स्पष्ट गर्न सकियोस् भनी लचिलो परिभाषा गरिएको छ । यसरी परिभाषा गरिएको सन्दर्भमा सामाजिक रूपले पछाडि पारिएका, विभेद र उत्पीडनमा परेका समुदायभित्र अपाङ्गता भएका व्यक्ति, लैङ्गिक र यौनिक रूपले पछाडि पारिएका समुदायलाई समेत समावेश गरिएको छ । साथै सीमान्तकृत अवस्थामा रहने समुदायको आन्तरिक अवस्था आफैँमा फरक-फरक रहने भएकोले लोपोन्मुख र अतिसीमान्तकृत अवस्थामा रहेको समुदायको परिभाषा र पहिचानसमेत कानूनद्वारा निर्धारण गर्न सकियोस् भन्ने उद्देश्य राखिएको छ ।

४. अल्पसंख्यक समुदायको लागि प्रत्याभूत गर्नुपर्ने अधिकार र सीमान्तकृत समुदायको लागि प्रत्याभूत गर्नुपर्ने अधिकारहरू एउटै प्रकृतिको नभई बेग्ला बेग्लै हुने भएकोले समितिको प्रतिवेदनको पेज नं. १२ देखि १६ सम्म रहेको अल्पसंख्यक, सीमान्तकृत तथा वहिष्करणमा पारिएकाको अधिकार भन्ने शीर्षक अन्तर्गत व्यवस्था गरिएका प्रावधानहरूको सट्टा मौलिक

अधिकार तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनमाथि पछि संविधानसभाले दिने सुझाव र निर्देशनसँग सामञ्जस्य हुने गरी देहाय बमोजिम व्यवस्था गर्न निर्देशन दिएको छ :-

**अल्संख्यक समुदायको अधिकारः** अल्पसंख्यक समुदायलाई देहाय बमोजिमको अधिकार प्रत्याभूत गरिएको छः

क) आफ्नो सरोकार रहेका र आफूलाई प्रभावित पार्ने नीतिनिर्माणमा सहभागिताको हक

ख) सांस्कृतिक सम्पदा, परम्परागत ज्ञान, सीप र प्रविधि सम्बन्धी हक

ग) भाषा, लिपि, धर्म सम्बन्धी हक,

घ) भूमि र प्राकृतिक स्रोत-साधन सम्बन्धी हक,

ङ) सामाजिक सुरक्षाको हक,

च) मातृभाषामा सूचना र सञ्चारको हक,

छ) राज्यका संरचनामा विशेष प्रतिनिधित्वको हक,

ज) आफ्नो समुदायको हित र कल्याणका लागि मौलिक संस्कृति र परम्परा संरक्षणको हक ।

**सीमान्तकृत समुदायको अधिकारः** सीमान्तकृत समुदायलाई देहाय बमोजिमको अधिकार प्रत्याभूत गरिएको छ :-

क) राज्यका सबै संरचनामा समानुपातिक प्रतिनिधित्वको हक,

ख) सार्वजनिक सेवामा आरक्षण एवं उपस्थितिको विशेष हक,

ग) शिक्षा, स्वास्थ्य, सामाजिक सुरक्षामा विशेष अधिकार,

घ) भूमि र प्राकृतिक स्रोत-साधन सम्बन्धी हक ।

५. संविधानले गरेको अल्पसंख्यक तथा सीमान्तकृत समुदायको परिभाषामा समयानुकूल परिमार्जनको सिफारिश गर्न, ती समुदायहरूकोलागि प्रत्याभूत गरिएका अधिकारहरूको कार्यान्वयनको स्थिति अनुगमन गर्न, आवधिक रूपमा हुने राष्ट्रिय जनगणना र मानव विकास सूचकाङ्कको आधारमा अल्पसंख्यक र सीमान्तकृत समुदायको सूचीमा गरिनुपर्ने परिमार्जनको सिफारिश गर्ने समेतको अधिकारक्षेत्र भावी संविधानमा संवैधानिक निकायको रूपमा रहने कुनै एक आयोगमा रहने गरी मस्यौदा तयार गर्न निर्देशन दिएको छ ।

**ख) अवधारणापत्रतर्फ**

१. अवधारणापत्रको पृष्ठ १० को दोस्रो अनुच्छेदमा रहेको "आधिकारिक" भन्ने शब्दको सट्टा "सर्वसम्मत" भन्ने शब्द राखी सो अनुच्छेद पछि देहायको परिभाषा सम्बन्धी अंश थप गर्ने :- प्रख्यात समाजशास्त्री ज्यो आर. फेजिन र क्लेरेन्स बुहर फेजिनले यसरी परिभाषित गर्नु भएको छ ,- अल्पसंख्यक भनेको यस्ता समूह जो आफ्ना शारीरिक वा सांस्कृतिक विशेषताहरूका कारण भिन्न एवं असमान व्यवहारका लागि अलग्याइन्छ र जसका सदस्यहरु विभेदका शिकार बन्छन्, जोसँग प्रभुत्वशाली समूह (dominant group) भन्दा विशेषरूपले कम शक्ति र साधन हुन्छ । यिनलाई अधीनस्थ समूह (subordinate group) पनि भनिने गरिन्छ । राष्ट्र सङ्घीय उपायोगका विज्ञ जे. डेस्चेन्स का अनुसार अल्पसंख्यक भनेका राज्यका नागरिकहरूको यस्तो समूह जो संख्यात्मक रूपमा थोरै हुन्छन् र उत्पीडित (दमित) अवस्थामा हुन्छन्, जो बहुसंख्यक जनताभन्दा भिन्नै जातीय, धार्मिक वा भाषिक विशेषताले सम्पन्न हुन्छन् तथा सामूहिक रूपमा बाँच्ने चाहनाले भित्री रूपमा एकआपसमा ऐक्यबद्धताको भावना राख्छन् र जो बहुसंख्यकसँग कानूनी रूपमा र

यथार्थ रूपमा समानता हासिल गर्ने लक्ष्य राख्दछन् ।

अर्का विशेष प्रतिवेदक एफ. केपोटोर्टीका अनुसार अल्पसंख्यक भनेको राज्यको बाँकी जनसंख्याभन्दा कम जनसंख्या भएको र अधीनस्थ अवस्था अथवा दमन–उत्पीडनको अवस्था (non-dominant position) मा रहेको समूह हो जसका सदस्यहरु राज्यका नागरिकहरु (nationals) भएकाले बाँकी जनसंख्याभन्दा भिन्न किसिमको जातीय (ethnic), धार्मिक वा भाषिक विशिष्टताहरु लिएका हुन्छन् र उनीहरु अप्रत्यक्ष रूपले ऐक्यबद्धताको भावना प्रदर्शन गर्दछन् साथै आफ्नो संस्कृति, परम्परा, धर्म वा भाषा सुरक्षित राख्न तर्फ उद्यत हुन्छन् ।

अर्का विशेष प्रतिवेदक ए. ऐड (१९९३) ले अल्पसंख्यक ठहरिनको लागि समूहको संख्या र विशिष्टता नै पर्याप्त छ भनेका छन् । यसरी विज्ञहरूले अल्पसंख्यकको पहिचानका लागि विभिन्न आधारहरु दिएका छन् । त्यस्ता केही आधारहरु देहाय बमोजिम उल्लेख गर्न सकिन्छ :

१) देशको प्रभुत्वशाली समूहभन्दा भिन्न जातीय अर्थात् धार्मिक, शारीरिक तथा सांस्कृतिक वा भाषिक विशिष्टताहरु भएको समूह (२) सामूहिक पहिचानको बलियो भावना र साझा परम्परा (common heritage) भएको समूह, (३) कुनै कुनैको हकमा केही हदसम्म स्वायत्तता भएको वा स्वायत्तता अथवा स्व–सरकारको इतिहास भएको समूह (४) आफ्नो संस्कृति, परम्परा, धर्म वा भाषा सुरक्षित राख्ने चाहना भएको समूह, (५) आफ्ना विशिष्ट पहिचानका कारण भिन्नै र असमान व्यवहारका लागि अलग्याइएको र विभेद एवं पूर्वाग्रहको शिकार बनाइएको अनुभव भएको समूह (६) प्रभुत्वशाली समूहभन्दा शक्ति र संसाधनहरु कम भएकाले दमन र उत्पीडन भोग्न परेको समूह (७) संख्या र संशाधनका हिसाबले शक्ति संरचनामा पहुँच पुऱ्याउन नसक्ने अवस्था रहेको समूह ।

समाजशास्त्री एन्थोनी गिड्डेनले पनि उपरोक्त आधारहरूलाई अरू स्पष्ट गरेका छन् । उनका अनुसार अल्पसंख्यक समूहका तीनवटा विशेषताहरु हुन्छन् –

१) विभेदका कारण अधिकार र अवसरबाट वंचित भई सुविधावंचित अवस्थामा रहेको समूह,

२) विभेदपूर्ण र पूर्वाग्रहजन्य व्यवहारका कारण समूहका सदस्यहरु बीच ऐक्यबद्धता अथवा परस्पर सम्बन्धित रहेको भावना विद्यमान रहेको समूह,

३) बृहत् समुदायबाट शारीरिक तथा सामाजिक रूपले केही हदसम्म अलग्याइएको समूह ।

२) अवधारणापत्रको परिच्छेद २ अन्तर्गत २.७ मा रहेको अन्य देशमा भएका अल्पसंख्यक समुदायका अधिकार सम्बन्धी व्यवस्थाहरु भन्ने शीर्षक पछि २.८ मा देहायको शीर्षक र सोको अर्न्तवस्तु थप गरी त्यसपछिका अन्य शीर्षकहरूको क्रमसंख्या मिलाउने :–

## २.८. अल्पसंख्यक सीमान्तकृत समुदायको हक, अधिकार संरक्षण सम्बन्धमा नेपालका विगतका संविधानहरूमा रहेको व्यवस्था

**२.८.१.** नेपाल सरकार वैधानिक कानून, २००४, नेपाल अन्तरिम शासन विधान २००७, नेपाल अधिराज्यको संविधान, २०१५ र नेपालको संविधान, २०१९ मा यस सम्बन्धी कुनै व्यवस्था भएको पाइदैन ।

## २.८.२. नेपाल अधिराज्यको संविधान, २०४७

नेपाल अधिराज्यको संविधान, २०४७ मा अल्पसंख्यक, सीमान्तकृत र वहिष्करणमा पारिएका वर्गको बारेमा किटानीसाथ कुनै व्यवस्था भएको त पाइँदैन तर आर्थिक, सामाजिक र शैक्षिक रूपले पिछडिएका र कमजोर अवस्थामा रहेका वर्ग र समुदायको लागि केही विशेष व्यवस्थाहरु भने गरिएको देखिन्छ । जसलाई यस प्रकारले उल्लेख गर्न सकिन्छ :-

**क) मौलिक हक अन्तर्गत रहेका विषयहरू** धारा ११ (३) (४) र (धारा १८)

- आर्थिक, सामाजिक वा शैक्षिक दृष्टिले पिछडिएको वर्गको संरक्षण र विकासको लागि कानूनद्वारा विशेष व्यवस्था गर्न सकिने । जातिपातिका आधारमा छुवाछूतको भेदभाव नगरिने । प्रत्येक समुदायलाई भाषा, लिपि र संस्कृतिको संरक्षण र सम्वर्द्धन गर्ने अधिकार, मातृभाषामा शिक्षा दिन, विद्यालय सञ्चालन गर्न पाउने अधिकार

**ख) राज्यका निर्देशिका सिद्धान्त तथा नीतिहरू अन्तर्गत रहेका विषयहरू** (धारा २५ र २६)

- कुनै पनि वर्ग वा व्यक्तिउपर आर्थिक शोषण हुन नपाउने व्यवस्था गर्ने । सबै किसिमका आर्थिक एवं सामाजिक असमानता हटाई विभिन्न जातजाति, धर्म, भाषा, वर्ग र समुदाय बीच सामान्जस्यता स्थापना गर्ने । अनाथ बालबालिका, असक्षम महिला, अपाङ्ग, अशक्तहरूको संरक्षण र उन्नतिका लागि शिक्षा, स्वास्थ्य र सामाजिक सुरक्षाको विशेष व्यवस्था गर्ने नीति राज्यले अवलम्बन गर्ने । शिक्षा, स्वास्थ्य र रोजगारीको विशेष व्यवस्था गरी आर्थिक तथा सामाजिक रूपले पिछडिएका जनजाति र समुदायको उत्थान गर्ने नीति राज्यले अवलम्बन गर्ने । असमर्थ पक्षको प्रतिनिधित्वका लागि निःशुल्क कानूनी सेवा उपलब्ध गराउने नीति राज्यले अवलम्बन गर्ने ।

## २.८.३. नेपालको अन्तरिम संविधान, २०६३

२०६२/०६३ को ऐतिहासिक जनआन्दोलनको एक महत्वपूर्ण लक्ष्य सबै किसिमका विभेदको अन्त गरी समानुपातिक र समावेशी सिद्धान्तको आधारमा राज्यको हरेक संरचनामा सबैको पहुँच स्थापित गर्नु रहेकोले हाम्रो संवैधानिक इतिहासमा पहिलो पटक नेपालको अन्तरिम संविधान, २०६३ मा अल्पसंख्यक र सीमान्तकृत समुदाय शब्दावली प्रयोग भई केही विशेष अधिकार र संरक्षणको प्रत्याभूति भएको देखिन्छ ।

**क) मौलिक हक अन्तर्गत रहेका विषयहरू** (धारा १३, १४, १७, १८, २१ र २४)

- महिला, दलित, आदिवासी जनजाति, मधेसी, किसान, मजदुर आर्थिक सामाजिक वा सांस्कृतिक दृष्टिले पिछडिएको वर्ग वा बालक वृद्ध तथा अपाङ्ग वा शारीरिक वा मानसिक रूपले अशक्त व्यक्तिको संरक्षण सशक्तीकरण वा विकासको लागि विशेष व्यवस्था गर्न सकिने । कुनै पनि व्यक्तिलाई जात, वंश, समुदाय वा पेशाका आधारमा कुनै किसिमको छुवाछूत तथा जातीय भेदभाव नगरिने । महिला, श्रमिक, वृद्ध, अपाङ्ग, तथा अशक्त र असहाय नागरिकलाई कानूनमा व्यवस्था भएबमोजिम सामाजिक सुरक्षाको हक हुने, आर्थिक सामाजिक वा शैक्षिक दृष्टिले पछि परेका महिला, दलित, आदिवासी जनजाति, मधेसी समुदाय उत्पीडित वर्ग, गरीब किसान र मजदुरलाई समानुपातिक समावेशी सिद्धान्तको आधारमा राज्यको संरचनामा सहभागी हुने हक हुनेछ । असमर्थ पक्षलाई कानूनमा व्यवस्था भएबमोजिम निःशुल्क कानूनी सेवा पाउने हक रहने छ । प्रत्येक समुदायलाई भाषा, लिपि र संस्कृतिको संरक्षण र सम्वर्द्धन गर्ने अधिकार, मातृभाषामा शिक्षा दिन, विद्यालय सञ्चालन गर्न पाउने अधिकार

**ख) राज्यको दायित्व, निर्देशक सिद्धान्त तथा नीतिहरू अन्तर्गत रहेका विषयहरू** (धारा ३३, ३४ र ३५ )

- महिला, दलित, आदिवासी जनजाति, मधेसी उत्पीडित, उपेक्षित र अल्पसंख्यक समुदाय र पिछडिएका क्षेत्रको समस्या समाधान गर्न राज्यको अग्रगामी पुर्नसंरचना गरिने । राज्यका सबै अङ्गमा मधेसी, दलित, आदिवासी जनजाति, महिला, मजदुर, किसान, अपाङ्ग, पिछडिएको वर्ग र क्षेत्रलाई समानुपातिक समावेशीको आधारमा सहभागी गराउने । सुकुम्बासी, कमैया, हलिया, हरूवा, चरूवा लगायतका आर्थिक सामाजिक रूपले पछाडि परेका वर्गलाई जग्गा लगायत आर्थिक सामाजिक सुरक्षाको व्यवस्था गर्ने । कुनै पनि जाति, लिङ्ग, वर्ग, उत्पत्ति वा व्यक्तिउपर आर्थिक शोषण हुन नपाउने व्यवस्था गर्ने । सबै किसिमको आर्थिक एवं सामाजिक असमानता हटाउने । राज्यले एकल महिला, अनाथ, बालबालिका ,असहाय, वृद्ध, अपाङ्ग, अशक्त र लोपोन्मुख जाति मधेसी, दलित लगायत सीमान्तकृत समुदाय तथा गरीबीको रेखामुनीका मजदुर किसानको उत्थान गर्ने नीति लिने । महिला, दलित, आदिवासी जनजाति, मधेसी, मुस्लिम लगायत अल्पसंख्यक भूमिहीन ,सुकुम्वासी कमैया, अपाङ्ग, पिछडिएका क्षेत्र तथा समुदाय र द्वन्द्व पीडितका लागि सकारात्मक विभेदका आधारमा विशेष व्यवस्था गर्ने । मुक्त कमैयाको संख्या एकिन गरी उनीहरूको बसोवासको लागि आधारभूत भूमि र रोजगारीको व्यवस्था गर्ने नीति अवलम्बन गरिने । वृद्ध, अशक्त महिला तथा बेरोजगारलाई कानूनमा व्यवस्था गरी भत्ता दिने नीति अवलम्बन गर्ने

**ग) संविधानसभाको निर्वाचन सम्बन्धमा रहेको व्यवस्था** (धारा ६३)

संविधानसभाको निर्वाचनमा उम्मेदवारको चयन गर्दा समावेशी सिद्धान्तलाई ध्यान दिनुपर्ने र समानुपातिक निर्वाचनप्रणालीतर्फ उम्मेदवारहरु सूचीकृत गर्दा महिला, दलित, उत्पीडित जाति, आदिवासी जनजाति, पिछडिएको क्षेत्र, मधेसी लगायत सबैको समानुपातिक प्रतिनिधित्व गराउनु पर्ने ।

**घ) आयोग गठन गर्न सकिने व्यवस्था** (धारा १५४)

नेपाल सरकारले महिला, दलित, आदिवासी जनजाति, मधेसी, अपाङ्ग, मजदुर वा किसान लगायत विविध क्षेत्रको हक हितको संरक्षण र प्रवर्द्धन गर्न आवश्यक आयोगहरु गठन गर्न सक्ने । त्यस्ता आयोगको गठन, काम, कर्तव्य र अधिकार सम्बन्धी व्यवस्था कानूनद्वारा निर्धारित भएबमोजिम हुने । यस व्यवस्थाबमोजिम कानून बनाई अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक हित संरक्षण आयोग गठन गर्न सकिन्छ । अवधारणापत्रको पृष्ठ ६९ मा रहेको ३.२ सुझावहरु भन्ने शीर्षक अन्तर्गत ३.२.१ र ३.२.२ को सट्टा देहायको अंश राख्ने :

संविधानको निर्माण प्रक्रिया राष्ट्र निर्माण प्रक्रियाको एउटा महत्वपूर्ण अवसर पनि भएकोले देशमा रहेका अल्पसंख्यक तथा सीमान्तकृत वर्ग, समुदाय र समूहलाई यो अवसरमा पहिचान गर्न सकिएमा उनीहरूको संरक्षण र विकासको महत्वपूर्ण प्रस्थान विन्दु स्थापित गर्न सकिन्छ । संवैधानिक विधिशास्त्रीय मान्यता अनुसार संविधान मूल कानून भएकोले त्यसले देशमा बसोबास गर्ने सम्पूर्ण जनतालाई समान हक अधिकार सुनिश्चित गरेको हुन्छ र गर्नुपर्दछ भन्ने मानिएको छ । संविधान र कानून निर्माण गर्दा त्यसको सर्वव्यापी आधार समानता नै हुन्छ । तर देशको भूराजनीतिक अवस्था, आर्थिक, सामाजिक विकासको स्थिति, विगतको विभेद र उत्पीडनको कारण शोषण र

दमनमा परेका समूहलाई त्यसको क्षतिपूर्ति स्वरूप विशेष व्यवस्था गर्नुपर्ने आवश्यकता हुन्छ भने जातीय, भाषिक र धार्मिक रूपमा थोरै संख्यामा रहेका समूहहरूको पनि विकास र संरक्षणको लागि अरूलाई भन्दा विशेष प्रकारका व्यवस्थाहरु समेत तर्जुमा गर्नुपर्ने आवश्यकता पर्दछ । यही आवश्यकताको कारणले संविधान निर्माताले आफ्ना नागरिकहरूलाई विवेकसम्मत आधारमा तर्कसंगत वर्गीकरण गर्नुपर्ने स्थिति रहन्छ । संविधान निर्माणको क्रममा अल्पसंख्यकको परिभाषा र पहिचान गर्नुको उद्देश्य अत्यन्त न्यून संख्या, विभेद र उत्पीडनको कारणले जातीय पहिचान, संस्कृति, भाषा वा धार्मिक आस्था लोप हुने अवस्था भई सङ्कटको स्थितिमा पुगेका समूहको विशेष संरक्षण गर्नु हुन्छ भने सीमान्तकृत वा वहिष्करणको अवस्थामा रहेका समूहको परिभाषा र पहिचानको उद्देश्य उनीहरूको आर्थिक, सामाजिक अवस्थामा सुधार ल्याई सशक्तीकरण गर्ने र राज्य व्यवस्थामा मूल प्रवाहीकरण गर्नु रहेको हुन्छ । आर्थिक सामाजिक न्याय स्थापित गरी सारभूत समानताको अवस्था र स्थिति निर्माण गर्न यस्ता उपायहरु अवलम्बन गरिने हो । परिभाषा र पहिचानको दृष्टिले सीमान्तकृत र वहिष्करणको अवस्थामा रहेका समूहलाई छुट्टयाउने आधार, मापदण्ड र उनीहरूलाई गर्नुपर्ने संरक्षण र विकासको विशेष व्यवस्थाको प्रकृतिसमेत समान हुने भएकोले सीमान्तकृत र वहिष्करणको अवस्थामा रहेका समूहलाई अलग गर्नुपर्ने आवश्यकता र औचित्य देखिदैन । तसर्थ सीमान्तकृत समूहको परिभाषा र पहिचानले वहिष्करणको अवस्थामा रहेका समूहलाई समेत स्वतः समेट्ने देखिन्छ ।

### ३.२.१. नेपालमा अल्पसंख्यक समुदायको पहिचानका आधारहरू र परिभाषाः

मानवशास्त्रीय दृष्टिले अल्पसंख्यक समुदायको पहिचानको आधार कूल राष्ट्रिय जनसंख्यामा सम्बन्धित समूहको जनसंख्याको न्यून अंशलाई नै मुख्य रूपमा स्वीकार गरिएको पाइन्छ भने त्यसलाई समाजशास्त्रीय दृष्टिले हेर्दा तुलनात्मक रूपमा कम जनसंख्याको साथसाथै विभेद र उत्पीडनमा परेका/पारिएका, छुट्टै जातीय, धार्मिक तथा भाषिक विशिष्टता र पहिचान भएका र त्यसलाई निरन्तर बचाई राख्न चाहने आकांक्षा रहेका समुदायलाई समेत अल्पसंख्यक समुदायको परिभाषा देहाय बमोजिम गरिनु उपयुक्त हुन्छ :

"अल्पसंख्यक समुदाय भन्नाले कानूनद्वारा निर्धारित प्रतिशतभन्दा कम जनसंख्या रहेका जातीय, भाषिक र धार्मिक समूहहरूलाई सम्झनुपर्छ र सो शब्दले आफ्नै जातीय, धार्मिक र भाषिक विशिष्टता भएको, त्यसलाई बचाई राख्ने आकांक्षा रहेका, विभेद र उत्पीडन भोगेका समूहसमेतलाई जनाउँछ ।"

### ३.२.२. नेपालमा सीमान्तकृत समुदायको पहिचानका आधारहरू र परिभाषाः

सामान्यतया सीमान्तकृत अवस्था भनेको आर्थिक सामाजिक हैसियत औसतभन्दा तल्लो तहमा रहनुलाई बुझिन्छ । खास गरी नीतिनिर्माण तहमा पहुँचको अभाव, गरीबी र कमजोर पोषणस्थिति, मानवीय प्रतिष्ठा र मानव अधिकार उपभोग गर्न नसक्ने अवस्था, आफ्नो भाषा उपयोग गर्ने, संस्कृति संरक्षण र सम्वर्द्धन गर्ने वातावरण नहुनु, शैक्षिक र स्वास्थ्यको स्थिति अत्यन्त कमजोर हुनाको कारणले मानिसलाई सीमान्तकृत अवस्थामा धकेलिदिन्छ । नेपालको सम्बन्धमा देहायका कुराहरूलाई सीमान्तकृत समुदायको पहिचान गर्ने आधारको रूपमा ग्रहण गर्नुपर्ने अवस्था छ :

१) राजनीतिकः विभिन्न तहका नीतिनिर्माण गर्ने निकायमा पहुँच, प्रतिनिधित्व र सहभागिताको स्थिति, राजनीतिक सचेतनाको स्थिति ।

२) सामाजिकः मानवीय प्रतिष्ठा र सम्मान, मानव अधिकारको उपभोगको स्थिति, भाषा, धर्म, संस्कृति र मौलिक पहिचानको उपयोग, संरक्षण तथा सम्वर्द्धनको स्थिति । शैक्षिक अवस्था, स्वास्थ्य सुविधा ।

३) आर्थिकः भूमिमाथिको स्वामित्वको अवस्था, वासस्थानको लागि आफ्नै घर भए वा नभएको अवस्था, घर भएमा पक्की वा कच्ची कस्तो हो र अन्य सर-सुविधाको अवस्था, रोजगारीको अवस्था, अन्य सम्पत्तिको अवस्था, आयआर्जनका अन्य स्रोतहरूको अवस्था ।

४) भूगोलः सेवा सुविधाहरूको उपलब्धता, पर्याप्तता र पहुँचको अवस्था ।

**माथि उल्लिखित आधारमा सीमान्तकृत समुदायको परिभाषा यसरी गरिनुपर्ने हुन्छः**

सीमान्तकृत समुदाय भन्नाले राजनीतिक, आर्थिक र सामाजिक रूपले पछाडि पारिएका, विभेद र उत्पीडन तथा भौगोलिक विकटताको कारणले सेवा सुविधाको उपभोग गर्न नसकेका वा त्यसबाट वञ्चित रहेका पछिल्लो मानव विकास सूचकाङ्कको कानूनद्वारा निर्धारितस्तरभन्दा न्यूनस्थितिमा रहेका समुदायलाई सम्झनुपर्छ र सो शब्दले अतिसीमान्तकृत र लोपोन्मुख समुदायलाई समेत जनाउँछ ।

४. अवधारणापत्रको पृष्ठ ७० र ७१ मा रहेको अल्पसंख्यक समुदायलाई प्रदान गर्नुपर्ने अधिकारको सूचीमा देहायका अधिकार रहने गरी उल्लेख गर्नेः

क) आफ्नो सरोकार रहेका र आफूलाई प्रभावित पार्ने नीतिनिर्माणमा सहभागिताको हक,

ख) सांस्कृतिक सम्पदा, परम्परागत ज्ञान, सीप र प्रविधि सम्बन्धी हक,

ग) भाषा, लिपि, धर्म सम्बन्धी हक,

घ) भूमि र प्राकृतिक स्रोत-साधन सम्बन्धी हक,

ङ) सामाजिक सुरक्षाको हक,

च) मातृभाषामा सूचना र सञ्चारको हक,

छ) राज्यका संरचनामा विशेष प्रतिनिधित्वको हक,

ज) आफ्नो समुदायको हित र कल्याणका लागि मौलिक संस्कृति र परम्परा संरक्षणको हक ।

५. अवधारणापत्रको पृष्ठ ७२ मा रहेको सीमान्तकृत समुदायलाई प्रदान गर्नुपर्ने अधिकारको सूचीमा देहायका अधिकार थप गर्नुपर्नेः

१) राज्यका सबै संरचनामा समानुपातिक प्रतिनिधित्वको हक,

२) सार्वजनिक सेवामा आरक्षण एवं उपस्थितिको विशेष हक,

३) शिक्षा, स्वास्थ्य, सामाजिक सुरक्षामा विशेष अधिकार ।

४) भूमि र प्राकृतिक स्रोत-साधन सम्बन्धी हक ।

६. अवधारणापत्रको पृष्ठ ७५ मा रहेको अन्तिम शीर्षक ३.२.५ पछि देहायको शीर्षक थप गर्नुपर्ने :-

### ३.२.६ अल्पसंख्यक तथा सीमान्तकृत समुदायको लागि संविधानद्वारा गरिएको विशेष अधिकार र संरक्षणको प्रभावकारी कार्यान्वयन र अनुगमनको लागि संवैधानिक संयन्त्रः

अल्पसंख्यक र सीमान्तकृत समुदायको लागि संविधानमा विशेष व्यवस्था राखेर मात्र त्यसबाट सार्थक परिणाम प्राप्त हुन सक्दैन । संविधान निर्माताको मनसाय र भावना

अनुसार विधायिका र कार्यपालिकाले वास्तविक र प्रभावकारी रूपमा व्यवहारमा उतार्न विस्तृत ऐन कानून र नीति बनाई योजना र कार्यक्रम निर्माण गर्नुपर्ने हुन्छ । साथै सीमान्तकृत समुदाय र अल्पसंख्यक समूहको अवधारणा आफैँमा गतिशील भएकोले यसमा आवधिक पुनरावलोकनको आवश्यकता समेत रहन्छ । त्यसैले अल्पसंख्यक र सीमान्तकृत समुदायको लागि संविधानमा गरिएका विशेष व्यवस्थालाई साकार तुल्याउन प्रभावकारी कार्यान्वयन गर्ने गराउने र त्यस स्थितिको समीक्षा गर्न, यसबाट समाजमा देखिएको परिणामको अनुगमन र मूल्याङ्कनको निरन्तरता कायम राख्न विशेष संवैधानिक संयन्त्र अत्यावश्यक छ । त्यस्तो संयन्त्रले आवधिक रूपमा हुने राष्ट्रिय जनगणना र राष्ट्रिय मानव विकास सूचकाङ्कको आधारमा अल्पसंख्यक र सीमान्तकृत समुदायको सूचीमा गरिनुपर्ने परिमार्जनको सिफारिश समेत विधायिकासमक्ष गर्नुपर्ने अवस्था पर्दछ । त्यसको आधारमा विधायिकाले प्रचलित कानूनमा सुधार गर्ने तथा नयाँ कानून निर्माण गर्ने कार्यलाई निरन्तरता दिन सक्दछ । यो आवश्यकतालाई मध्यनजर गरी यो अधिकार कुनै एक उपयुक्त संवैधानिक निकायलाई सुम्पन आवश्यक छ ।"

उक्त समितिको प्रतिवेदनमाथि प्रतिवेदन अध्ययन समितिले तयार गरेको उल्लिखित सुझाव र निर्देशनलाई संविधानसभाले मिति २०६६ ।१२ ।२० मा सामान्य परिमार्जन सहित पारित गरी संवैधानिक समितिमा पठाएको थियो ।

## २.४ राज्यको शासकीय स्वरूप निर्धारण समितिको प्रतिवेदन सम्बन्धमा

### २.४.१. प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरू :-

- यस समितिले पेश गरेको प्रारम्भिक मस्यौदा र अवधारणापत्रमा सङ्घीय तहको शासनप्रणाली र सङ्घीय एवं प्रादेशिक तहको निर्वाचनप्रणालीको सम्बन्धमा नियमावली बमोजिम समितिको आफ्नो धारणा आउन सकेको छैन ।
- देहायका विषयमा चार किसिमका फरक–फरक मतहरु आएका छन् : यी विषय मतैक्यता हुन नसकेका मूल विषयको रूपमा रहेका छन् ।
  १) सहमतीय राष्ट्रपतिप्रणाली र बहुसदस्यीय प्रत्यक्ष समानुपातिक निर्वाचनप्रणाली
  २) संवैधानिक राष्ट्रपति सहित कार्यकारी प्रधानमन्त्री रहने शासनप्रणाली र मिश्रित समानुपातिक निर्वाचनप्रणाली,
  ३) व्यवस्थापिकाबाट निर्वाचित राष्ट्रपतीय शासनप्रणाली र मिश्रित निर्वाचनप्रणाली,
  ४) आलङ्कारिक राष्ट्रपतीय प्रणाली र जनताबाट प्रत्यक्षरूपमा निर्वाचित कार्यकारी अधिकार सहितको प्रधानमन्त्री

### २.४.२. अर्को समितिको कार्यक्षेत्रभित्र परेका विषय यस समितिको प्रतिवेदनमा दोहोरिएको :-

- यस समितिले मस्यौदाको पेज नं. XXXIII को धारा २ मा विभिन्न तहका सरकारहरु बीच अन्तरसम्बन्ध अन्तर्गत सङ्घीय र प्रादेशिक सरकार बीचको विवाद समाधान संयन्त्र तथा सङ्घीय, प्रादेशिक र स्थानीय सरकारहरु बीचको विवाद समाधान संयन्त्र सम्बन्धमा आवश्यक व्यवस्था प्रस्ताव गरेको देखिन्छ । संविधानसभा नियमावली, २०६५ अनुसार राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समितिको कार्यक्षेत्रमा 'सङ्घीय एकाइहरु

बीच उत्पन्न हुनसक्ने विवादको समाधान सम्बन्धी संयन्त्र' समेत रहेकाले यो विषय यहाँ दोहोरिएको छ ।

## २.४.३. समितिको प्रतिवेदनमा मतैक्यता हुन नसकेका विषयहरू :-

क) प्रारम्भिक मस्यौदातर्फः

- सङ्घीयतहको शासनप्रणाली र सङ्घीय एवं प्रदेशिकतहको निर्वाचनप्रणालीबारे सहमतिमा मस्यौदा नै तयार नभएकोले सहमतिमा समितिबाट प्रारम्भिक मस्यौदा तयार भएका विषयहरूको सम्बन्धमा माननीय सदस्यहरूले देहायका वियषमा फरक-फरक धारणा व्यक्त गर्नु भएको देखिन्छ ।

**प्रादेशिक कार्यकारिणी सम्बन्धमाः**

- मस्यौदाको पेज नं. XXIII क्र. सं. १ (१):- ... र अन्य कानूनको अधीनमा रही प्रत्येक प्रदेश ... (संविधानको मस्यौदामा रहने भाषा अनुपयुक्त रहेको) यसैको प्रतिबन्धात्मक वाक्यांश अनुपयुक्त रहेकोले हटाउनुपर्ने । क्र. सं. १ (२) :- र अन्य कानूनको अधीनमा रही ... क्र. सं. २ (१), (२) :- प्रदेश प्रमुखको आवश्यकता नपर्ने, प्रदेश प्रमुखको नियुक्ति प्रदेशमन्त्रिपरिषद् र विधायिकाबाट हुनुपर्ने । क्र. सं. २ (४) :- ... लगातार दुईपटक ... भन्ने व्यवस्था अस्पष्ट र दुईअर्थ लाग्ने भएको र सोको आशय र उद्देश्य व्याख्यात्मक टिप्पणीमा समेत स्पष्ट नभएको । क्र. सं. ४ (२) :- पदमुक्त हुने अवस्था भन्ने शीर्षक अन्तर्गत रहेको उक्त व्यवस्थालाई सन्दर्भले क्र. सं. २ मा लगी उपधारा (५) कायम गरी मस्यौदा मिलाएर राख्न उपयुक्त हुने । क्र. सं. ५ (२) :- ... सामान्यतया ... भन्ने शब्दले प्रदेशप्रमुख आफैँले मात्र पनि अधिकारको प्रयोग गर्न सक्ने अवस्था आउने । ७ (३) (फरक मत) प्रादेशिक संसदमा न्यूनतम १० प्रतिशत संसदीय स्थान ल्याउने दलहरूको आनुपातिक साझेदारीमा ९ सदस्यीय मन्त्रिपरिषद् गठन गर्ने । क्र. सं. ७ (६) :- मुख्यमन्त्रीको नियुक्ति सम्बन्धी व्यवस्था क्र. सं. ८ मा रहेको तर पदमुक्त हुने अवस्था पहिल्यै यस धारामा लेखिएको हुँदा मिलाइराख्नुपर्ने । ७ (६) (घ) (फरक मत) अविश्वासको प्रस्तावसाथ वैकल्पिक मुख्यमन्त्रीको प्रस्ताव पनि आउनु पर्ने । क्र. सं. ७ (७) (ख) :- प्रधानमन्त्री (प्रदेशमा प्रधानमन्त्री नहुने हुँदा त्रुटिपूर्ण रहेको) क्र. सं. ७ (७) र ९:- प्रदेशमा राज्यमन्त्री र सहायकमन्त्री आवश्यक नरहेको (कामको जिम्मेवारी वोझ कम हुने, धेरै संख्या राख्नु आर्थिक दृष्टिकोणले धान्न नसकिने) क्र. सं. ८ :- मुख्यमन्त्रीको सट्टा अध्यक्ष वा गर्भनर भन्नुपर्ने । प्रत्यक्ष वालिग मताधिकारको आधारमा निर्वाचित हुनुपर्ने । उपधारा (२) को प्रतिबन्धात्मक वाक्यांश अनुसार विश्वासको मत प्राप्त नभएमा के हुने भन्नेमा अस्पष्टता रहेको । क्र. सं. ९:-सार्वभौमिकतामा प्रतिकूल असर नपर्ने गरी भन्ने शब्दावली अस्पष्ट रहेको । क्र. सं. १२ (१),(२):- नियमावली सट्टा ऐन भन्नुपर्ने, अदालतमा प्रश्न उठाउन नसकिने व्यवस्था राख्न नहुने ।

**स्थानीय कार्यकारिणी सम्बन्धमाः**

- क्र. सं. ४ (१) (ख): लिखित राजीनामा को समक्ष दिने ? भन्ने अस्पष्ट रहेको ।

**सुशासन र सरकारी सेवाको गठन सम्बन्धमाः**

- क्र. सं. ४ (१) :- सरकारी सेवा ... शीर्षक अन्तर्गत सार्वजनिक सेवाहरूको गठन ... भनिएको हुँदा सरकारी सेवा वा सार्वजनिक सेवा कुन शब्द प्रयोग गर्ने हो एकरूपता कायम गरिनुपर्ने । क्र. सं. ४ (२) :- यसमा आवश्यकता अनुसार विभिन्न सरकारी सेवाको गठन ... भनी उल्लेख भएकोमा ४ (१) को अधीनमा रही गठन हुने भन्न

खोजिएको हो वा तीबाहेक अरू सेवाहरु पनि भन्न खोजेको हो स्पष्टता नरहेको, अरू सेवा पनि भन्न खोजिनुले ४ (१) को व्यवस्थाको प्रयोजन के हुने ? अथवा त्यसलाई सीमित गराउने । क्र. सं. ५ (१), (२) :- उपधारा (१) मा ... आयोग मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रप्रमुखले गर्ने भनिएकोमा उपधारा २ मा पुनः अध्यक्ष र सदस्यको नियुक्ति नेपालसरकारले गर्ने भनिएको हुँदा अस्पष्ट र द्वयर्थक रहेको । क्र. सं. ५ (४):- 'सर्वमान्यतामा प्रतिकूल नहुने गरी' भन्ने शब्द प्रष्ट नभएको, सदस्यहरूको अनुभव बारे कुनै उल्लेख नभएको । क्र. सं. ५ (६) :- ... जनसंख्या र सदस्य संख्या बीचको अनुपात यथासम्भव समान हुने गरी भन्ने शब्दावलीको सट्टा जनसंख्या र भूगोल भन्नुपर्ने, जनसंख्यामात्र प्रतिनिधित्वको आधार नहुने । क्र. सं. ५ (१२):- प्रमुख निर्वाचन आयुक्त र पछि रहेको निर्वाचन भन्ने शब्द हटाउनु उपयुक्त हुने । क्र. सं. ७ (१):- निर्वाचित भन्ने शब्द दोहोरो उल्लेख भएकोले परिमार्जन गर्नुपर्ने ।

ख) अवधारणापत्रतर्फः

- पेज नं. ७८, नेपालको अन्तरिम संविधान, २०६३ शीर्षक अन्तर्गत पहिलो अनुच्छेदको पहिलो वाक्यमा रहेको ऐतिहासिक..... २०६३ हो भन्ने व्यवस्थालाई पुनर्लेखन गर्नुपर्ने ।

## २.४.४. राज्यको शासकीय स्वरूप निर्धारण समितिको प्रतिवेदनमाथि समितिको सर्वसम्मतिबाट परिमार्जन गर्ने निर्णय भएका विषयहरू

### २.४.४.१ अवधारणापत्रतर्फ

- अवधारणापत्रको पेज नं. ७८, नेपालको अन्तरिम संविधान, २०६३ शीर्षक अन्तर्गत रहेको शुरूको "ऐतिहासिक जनआन्दोलन दुईबाट देशमा चलिरहेको जनयुद्धलाई समाप्त गरी शान्तिप्रक्रियाको शुरूवातको क्रममा तर्जुमा गरिएको संविधान नेपालको अन्तरिम संविधान, २०६३ हो" भन्ने वाक्यको सट्टा "संविधानसभाबाट नयाँ संविधान नबनेसम्मको अन्तरिम अवधिलाई नियमन र व्यवस्थापन गर्नको लागि राजनीतिक सहमतिबाट नेपालको अन्तरिम संविधान, २०६३ निर्माण गरिएको हो" भन्ने वाक्य राख्ने ।

### २.४.४.२. प्रारम्भिक मस्यौदातर्फ

१. प्रारम्भिक मस्यौदाको पेज नं. XXXIII को धारा २ मा विभिन्न तहका सरकारहरु बीच अन्तरसम्बन्ध अन्तर्गत सङ्घीय र प्रादेशिक सरकार बीचको विवाद समाधान संयन्त्र तथा सङ्घीय, प्रादेशिक र स्थानीय सरकारहरु बीचको विवाद समाधान संयन्त्र सम्बन्धमा आवश्यक व्यवस्था प्रस्ताव गरेको देखिन्छ । संविधानसभा नियमावली, २०६५ अनुसार राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समितिको कार्यक्षेत्रमा 'सङ्घीय एकाइहरु बीच उत्पन्न हुनसक्ने विवादको समाधान सम्बन्धी संयन्त्र' समेत रहेकाले यो विषय यहाँ दोहोरिएको छ । राज्यको शासकीय स्वरूप निर्धारण समितिको मस्यौदामा समितिको दृष्टिले सम्बन्धित भागमा राख्न सिफारिश गरिएका विषयलाई संवैधानिक समितिले महत्वपूर्ण सन्दर्भ सामग्रीको रूपमा ग्रहण गरी सम्बन्धित विषयलाई पूर्णता दिने क्रममा ध्यान दिन सुझाव दिने । समितिबाट उल्लिखित विषयमा सभामा छलफल हुँदा उठेका कुराहरु सम्बन्धित समितिको मस्यौदाबाट निर्णय भई सम्बोधन हुने भएकोले समितिले यहाँ छलफल र निर्णय गरेको छैन । २. प्रारम्भिक मस्यौदाको पेज नं. XXIII को उपधारा (१) र (२) मा रहेको "यो संविधान र अन्य कानूनको अधीनमा रही प्रत्येक प्रदेशको" भन्ने वाक्यांशको सट्टा "संविधान र कानूनको अधीनमा रही प्रदेशको" भन्ने वाक्यांश

राख्ने । ३. प्रारम्भिक मस्यौदाको पेज नं. ह्हक्ष्क् को धारा ४ को उपधारा (१) को खण्ड (ख) मा मुख्यमन्त्रीको हकमा गरिएजस्तै एकरूपता कायम गर्न "राष्ट्रपतिसमक्ष राजीनामा दिएमा" भन्ने व्यवस्था राख्ने । ४. प्रारम्भिक मस्यौदाको पेज नं. XXIV को धारा ४ को शीर्षक "प्रदेशप्रमुख पदमुक्त हुने अवस्था" को सट्टा "प्रदेशप्रमुखको पदरिक्त हुने अवस्था" भनी राख्ने । ५. प्रारम्भिक मस्यौदाको पेज नं. XXV को धारा ५ को उपधारा (२) मा रहेको "सामान्यतया" भन्ने शब्द व्याख्यात्मक टिप्पणीसँग मेल नखाएको र मस्यौदाको दृष्टिले पनि नमिलेकोले हटाउने । ६. प्रारम्भिक मस्यौदाको पेज नं. XXVI को धारा ७ को उपधारा (२) अन्तर्गत रहेको स्पष्टीकरणको सट्टा देहायको स्पष्टीकरण राख्नेः- "स्पष्टीकरणः यस धाराको प्रयोजनको लागि मन्त्री भन्नाले मुख्यमन्त्री, उपमुख्यमन्त्री, मन्त्री, राज्यमन्त्री र सहायकमन्त्रीसमेतलाई जनाउँछ ।" ७. प्रारम्भिक मस्यौदाको पेज नं. XXVII को धारा ७ को उपधारा (६) (७) र (८) लाई धारा ८ अन्तर्गत उपधारा (३) (४) र (५) गरी राख्ने । ८. प्रारम्भिक मस्यौदाको पेज नं. XXVII को धारा ७ को उपधारा (७) को खण्ड (ख) मा रहेको "प्रधानमन्त्री" शब्दको सट्टा "मुख्यमन्त्री" शब्द राख्ने । ९. प्रदेशमा राज्यमन्त्री र सहायकमन्त्री नियुक्त गर्न सकिने विषय धारा ७ को उपधारा (१), (२), (३) र (४) ले नै स्पष्ट गरिसकेकोले धारा ९ राख्न नपर्ने हुनाले त्यसलाई हटाइएको छ । १०. प्रारम्भिक मस्यौदाको पेज नं. XXXVII मा रहेको धारा ४ को सरकारी सेवाको गठन सम्बन्धी व्यवस्थामा निश्चित सेवामात्र संविधानमा उल्लेख गरी कठोर बनाउन उपयुक्त नभएको, नेपाली सेना र प्रहरी सम्बन्धी व्यवस्था राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदनमा सिफारिश गरिसकेको हुँदा यसमा अन्तरिम संविधानमा भएभन्दा बढी व्यवस्था गर्न आवश्यक नभएकोले उपधारा (१) को सट्टा देहायको उपधारा (१) राख्ने : "(१) सङ्घीय सरकारले देशको प्रशासन सञ्चालन गर्न निजामती सेवा र आवश्यक अन्य सेवाहरूको गठन गर्न सक्नेछ । त्यस्ता सेवाहरूको गठन, सञ्चालन र सेवाका शर्तहरु ऐनद्वारा निर्धारण गरिएबमोजिम हुने छन् ।" ११. सोही विषयको उपधारा (२) मा रहेको सङ्घीय शब्द हटाउने । सङ्घीय सरकारी सेवाको विषयमा उपधारा (१) ले नै सम्बोधन गरेको छ । साथै त्यसमा रहेको "प्रादेशिक र स्थानीय सरकारले राज्यको प्रशासन सञ्चालन गर्न आवश्यकतानुसार" भन्ने वाक्यांशको सट्टा "प्रादेशिक, विशेष संरचना र स्थानीय सरकारले आफ्नो प्रशासन सञ्चालन गर्न आवश्यकतानुसार ऐनद्वारा" भन्ने वाक्यांश राख्ने । १२. प्रारम्भिक मस्यौदाको पेज नं. XXXVII मा रहेको धारा ४ को उपधारा (३) र (४) आवश्यक नभएकोले हटाई क्रम मिलाउने । १३. प्रारम्भिक मस्यौदाको पेज नं. XXXVIII को धारा ५ को उपधारा (१) मा सङ्घीय र प्रादेशिक पछि "स्थानीय" शब्द थप्नु पर्ने । किनकि यसै प्रतिवेदनको माथि स्थानीय कार्यकारीणी अन्तर्गतको धारा ५ मा स्थानीय व्यवस्थापिकाको परिकल्पना गरिएको र प्रस्तुत धाराको व्याख्यात्मक टिप्पणीमा पनि स्थानीय विधायिकाको अपरिहार्यता भएको भन्ने व्यहोरा रहेकोले त्यसलाई मिलान गर्ने प्रकारको व्यवस्था गर्न आवश्यक छ । १४. प्रारम्भिक मस्यौदाको पेज नं. XXXIX को धारा ५ मा रहेको निर्वाचनक्षेत्र निर्धारण आयोग अस्थायी प्रकृतिको रहेकोले धारा ६ मा निर्वाचनक्षेत्रको पुनरावलोकन त्यही आयोगले गर्ने भन्नुभन्दा पनि प्रत्येक आवधिक जनगणना पछिको निर्वाचन हुनुभन्दा अघि आयोग गठन गरी निर्वाचनक्षेत्रको पुनरावलोकन गर्ने व्यवस्था राख्नु उपयुक्त हुनेछ । यो व्यवस्था धारा ५ मा नै उपधारा थप गरी समावेश गर्न सकिन्छ । अलग्गै धारा ६ राख्न आवश्यक छैन ।

## २.५. व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समितिको प्रतिवेदन सम्बन्धमा

### २.५.१. प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरू

विभिन्न तहका विधायिकाहरु बीचको अन्तरसम्बन्धको बारेमा पर्याप्त चर्चा नभएको ।

### २.५.२. अर्को समितिको कार्यक्षेत्रभित्र परेका विषय यस समितिको प्रतिवेदनमा दोहोरिएकोः

- व्यवस्थापिकीय अङ्गको गठनमा अपनाइने निर्वाचनप्रणालीको सम्बन्धमा प्रतिवेदनमा व्यवस्था गरिएको देखिदा शासकीय स्वरुप निर्धारण समितिको प्रतिवेदन पेश भएको अवस्था नहुँदा सो समितिको प्रतिवेदनमा यस सम्बन्धमा प्रस्तावित गरिने व्यवस्थासँग समेत मेल खाने गरी उपयुक्त प्रबन्ध गरिनुपर्ने । प्रतिवेदनमा स्थानीय स्वायत्त एकाइको व्यवस्था गरिएकोमा यी एकाइहरु व्यवस्थापिकीय अङ्गका स्थानीय एकाइको रुपमा वा शासकीय स्वरुपका स्थानीय एकाइको रुपमा व्यवस्था गरिएको हो भन्ने सम्बन्धमा अस्पष्टता रहेको ।

### २.५.३. समितिको प्रतिवेदनमा आएका फरकमतहरू

क) प्रारम्भिक मस्यौदातर्फ

- धारा १ - कार्यकारी राष्ट्रपति सहितको एक सदनात्मक व्यवस्थापिका (सङ्घीय जनप्रतिनिधिसभा) हुनपर्ने । धारा २ - धारा १ अनुसार सङ्घीय जनप्रतिनिधिसभाको अधिकारको व्यवस्था गरिनुपर्ने । धारा ३ र ५ - धारा ३ (१) को अन्त्यमा प्रत्यक्ष निर्वाचनका लागि निर्वाचनक्षेत्र कायम गर्दा जनसंख्या र भूगोलको समानुपातिकताको आधारमा निर्वाचनक्षेत्र कायम गरिने छ भनी स्पष्टीकरण थप गर्ने । धारा ३ (२) मा जनसंख्याको आधारमा प्रत्येक प्रदेशमा निर्वाचनक्षेत्र कायम गर्ने व्यवस्था राख्नुपर्ने । न्यूनतम ५० प्रतिशत उम्मेदवारी महिलाको लागि दिइने छ भन्ने वाक्य थप्नुपर्ने । धारा ३ (३) मा रहेको जनसंख्याको आधारमा भन्ने शब्दको सट्टा जनसंख्या र भूगोलको समानुपातिकताको आधारमा भन्ने शब्दहरु थप गर्ने । पिछडिएको वर्ग, क्षेत्र, भन्ने शब्दहरुको सट्टा अतिपिछडिएको कर्णाली, पिछडिएको क्षेत्र र पिछडिएको वर्ग भन्ने शब्द थप गर्नुपर्ने । धारा ३ (४) को व्यवस्थाबाट पछि "हुने गरी कानूनद्वारा व्यवस्था" भन्ने शब्द हटाउनु पर्ने ।
- **सङ्घीय जनप्रतिनिधिसभाको गठन देहायको आधारमा हुन पर्नेः** दुईसय पैंतालीस सदस्य रहने, यो सभा देशको शासन व्यवस्थाको सर्वोच्च र सर्वशक्तिसम्पन्न अङ्ग एवं व्यवस्थापिकाको मूल अङ्ग हुने, यसले राज्यका अन्य अङ्गहरुको निर्माण, निर्देशन, नियन्त्रण एवं अनुगमन आफैँ वा आफ्नो मातहतका संयन्त्र निर्माण गरी गर्ने, बहुसदस्यीय निर्वाचनक्षेत्र प्रणालीअनुसार जनसंख्या र भूगोलको आधारमा महिला, दलित, आदिवासी-जनजाति, मधेसी, मुस्लिम आदि समुदायहरुको समानुपातिक समावेशी प्रतिनिधित्व हुनेगरी प्रत्यक्ष निर्वाचनद्वारा गठन गरिने, जनसंख्याको अनुपातमा प्रतिनिधित्व गर्न आवश्यक न्यूनतम संख्या नपुग्ने जाति, आदिवासी-जनजाति, अल्पसंख्यक समुदायका लागि एउटा निश्चित संख्यामा सङ्घीय व्यवस्थापिकाद्वारा मनोनयनको व्यवस्था गरिने, सोह्र वर्ष उमेर पूरा भएकालाई मतदानको अधिकार हुने, प्रतिनिधि हुनको लागि २३ वर्ष उमेर पुगेको हुनुपर्ने, सभाध्यक्ष र उपाध्यक्षको उमेर ३० वर्ष पुगेको हुनुपर्ने,

सभाको बैठक नबसेको अवस्थामा आवश्यक व्यवस्थापिकीय कार्यसमेत गर्न हरेक स्वायत्तप्रदेशबाट कम्तिमा एक जना प्रतिनिधि पर्ने गरी बढीमा २१ जना सदस्य रहने गरी जनप्रतिनिधिसभाका सदस्यहरूमध्येबाट एक स्थायी समितिको व्यवस्था गरिने । धारा ४ – यो व्यवस्था आवश्यक नरहेको, धारा ४(१)(क) – प्रत्येक प्रदेशबाट जनसंख्याको अनुपातमा कानूनमा व्यवस्था भएअनुसार निर्वाचित हुने ५१ सदस्यहरु रहने व्यवस्था हुनुपर्ने, "महिलाको समेत प्रतिनिधित्व सुनिश्चितता गराइने छ" भन्ने वाक्य थप्नु पर्ने, ३८ सदस्यको सट्टा ५१ हुनुपर्ने ।

धारा ४ (१) (ख) हटाइनु पर्ने । धारा ४ (२) मा रहेको "यथासम्भव" ...... भन्ने शब्द हटाउनु पर्ने । "महिला" भन्ने शब्द थप्नुपर्ने ।धारा ७ र धारा ४७ मा कानूनमा व्यवस्था भएबमोजिम प्रत्याह्वान गरिएमा भन्ने व्यवस्था थप गर्नुपर्ने धारा ८ र ४८ – सदस्यले शपथ लिँदा देश र जनताका नाममा मात्र लिन आवश्यक र उपयुक्त हुने । धारा १० – यो व्यवस्था आवश्यकता नरहेको, राष्ट्रियसभाको अध्यक्षता उपराष्ट्रपतिले गर्ने व्यवस्था हुनुपर्ने ।

- धारा १४ र धारा ५३ – अदालतमा विचाराधीन व्यक्तिगत सरोकारको मुद्दाका वारेमा सदस्यहरूले प्रश्न उठाउन सक्नेछन् तर यसबारे औपचारिक रूपले बहसमा लगिने र कुनै निर्णय गरिने छैन । त्यस्तो मुद्दा देशको शासन व्यवस्थासँग अन्तरसम्बन्धित भएमा, राजनीतिक अन्तर्वस्तु भएको भएमा वा सार्वजनिक सरोकारका विषय भएको भएमा अथवा संविधानसँग कानून बाझिएको भन्ने प्रश्नका विषयमा भने प्रश्न उठाउनुका अतिरिक्त औपचारिक रूपमै प्रस्ताव दर्ता गराई बहसमा लान र निर्णय लिन वा एउटा समिति गठन गरी त्यसमार्फत् व्याख्या गर्न लगाई सोको आधारमा निर्णय गर्न सकिने व्यवस्था हुनुपर्ने, बहसमा बन्देज सम्बन्धी व्यवस्था हटाइनु पर्ने ।धारा १८– यो व्यवस्थाको सट्टामा मन्त्रीले सदनका समितिहरूमध्ये जुनसुकै समितिमा पनि छलफलमा भाग लिन सक्नेछन् तर मतदान भने आफू सदस्य रहेको विषयगत समितिमा मात्र गर्न पाउनेछन् भन्ने व्यवस्था राख्नुपर्ने । धारा २३– यसमा रहेको संयुक्त समितिको सट्टामा सङ्घीय जनप्रतिनिधिसभाका बढीमा पन्ध्र जना सदस्य रहने गरी विशेष समितिको व्यवस्था गर्न उपयुक्त हुने । धारा ३० र ६८ – विकास निर्माण, सेवा सहुलियत, राष्ट्रिय सुरक्षा र साम्प्रदायिक सद्भाव कायम गर्न बाहेक अन्य विषयमा अध्यादेश जारी गरिने छैन भन्ने व्यवस्था हुनपर्ने । सङ्घीय व्यवस्थापन कार्यविधि – व्यवस्थापन कार्यविधिसँग सम्बन्धित सम्पूर्ण प्रक्रियाहरु सङ्घीय जनप्रतिनिधिसभाद्वारा मात्र हुने हुँदा सोही अनुरूपका व्यवस्था र प्रक्रियाहरूमात्र उल्लेख हुनुपर्ने । भाग ४ अन्तर्गत स्वायत्तप्रदेश व्यवस्थापिकाको बारेमा – आत्मनिर्णयको अधिकारसम्पन्न गराउनु पर्ने, स्वायत्तप्रदेश जनप्रतिनिधिसभा नामाकरण गर्नुपर्ने,
- धारा ४४ र ४५ – स्वायत्त प्रदेश जनप्रतिनिधिसभाको गठनमा भूगोल र जनघनत्वको अनुपात हेरी जाति, भाषा र प्राकृतिक स्रोतको उपलब्धताका आधारमा २५ देखि ४५ जना सम्मको सदस्य रहने, बहुसदस्यीय निर्वाचनक्षेत्र प्रणालीका आधारमा हुने, सदस्यहरूको लागि २१ वर्ष उमेर पूरा भएको हुनुपर्ने, पदाधिकारीहरूको उमेर भने २३ वर्ष पुगेको हुनुपर्ने, १६ वर्ष उमेर पूरा भएकालाई मतदानको अधिकार हुने । धारा ४४ (१) मा रहेको प्रदेशसभामा भन्ने शब्दपछि जनसंख्या र भूगोलको समानुपातिकताका आधारमा बढीमा भन्ने शब्दहरु थप गर्नुपर्ने, धारा ४४ (२) मा "हुने गरी" भन्ने शब्दपछि रहेको "कानूनद्वारा व्यवस्था" भन्ने शब्द हटाउनु पर्ने ।

ख) अवधारणापत्रतर्फः

मूलतः बहुमतको प्रतिवेदन र फरकमतको पक्ष र विपक्षमा नै छलफल केन्द्रित रहेकोले अवधारणामा माननीय सदस्यहरु विभाजित भएको ।

## २.५.४. सभामा छलफल हुँदा मतैक्यता हुन नसकेका विषयहरू

- धारा १ – प्रतिनिधिसभा र राष्ट्रियसभाको नामाकरण सम्बन्धमा फरक-फरक विचार धारा ३(१) – प्रतिनिधिसभामा १५१ सदस्य रहने व्यवस्था जस्मा प्रत्यक्ष निर्वाचनबाट ७६ र समानुपातिकबाट ७५ जना (कुन आधारमा यसरी संख्या तोकिएको हो) । धारा ३(२) – ७६ निर्वाचनक्षेत्र के आधारमा तोकिएको हो, यो संख्या कम भएको । निर्वाचनक्षेत्र कायम गर्दा जनसंख्या र भूगोलको आधारमा गर्ने भन्ने कुरा स्पष्ट लेखिनु पर्छ । धारा ३(१)(२)(३) – निर्वाचनप्रणाली प्रत्यक्ष, पूर्ण समानुपातिक, अर्धसमानुपातिक, मिश्रित आदि हुनपर्ने । धारा ३(३) – उत्पीडित जाति, दलित, अल्पसंख्यक समुदाय, अन्य समुदाय भन्ने शब्द । धारा ३(४)– एक तिहाई सदस्यहरूको प्रतिनिधित्व महिलाबाट (महिलाको प्रतिनिधित्व ५०% हुनुपर्ने । धारा ३(५)– पाँच वर्ष (प्रतिनिधिसभाको कार्यकाल ४ वर्ष बनाउनु पर्ने) । धारा ३(८) – १८ वर्षलाई १६ वर्ष बनाउनु पर्ने (कानूनमा व्यवस्था हुन सक्ने) । धारा ३(९) – कानूनमा व्यवस्था हुन सक्ने । धारा ४(१) – राष्ट्रियसभाको नामाकरण, यसमा ५१ सदस्य संख्या रहने भन्ने व्यवस्था, यसैको उपधारा (क) मा रहेका प्रत्येक प्रदेशबाट बराबरी संख्यामा निर्वाचित हुने ३८ सदस्यहरु (के आधारमा यो संख्या किटान गरिएको हो, यसै गरी उपधारा (ख) मा रहेको अल्पसंख्यक महिला शब्द आवश्यक नभएको, यहाँ १३ सदस्यहरु के आधारमा किटान भएको । १३ जना सदस्यमध्ये बौद्धिकक्षेत्रमध्येबाट कसरी प्रतिनिधित्व गराउने । धारा ४(२) – ध्यान दिइने भन्ने शब्दावली । धारा ५(१) – प्रतिनिधिसभाको लागि २५ वर्ष र राष्ट्रियसभाको लागि ३५ वर्ष उमेर पूरा भएको हुनुपर्ने भन्ने व्यवस्था, सदस्यको लागि न्यूनतम शैक्षिक योग्यता समेत किटानी गर्नुपर्ने । धारा ६– प्रधानन्यायाधीश वा निजले तोकेको सर्वोच्च अदालतको अन्य न्यायाधीश भन्ने शब्दावली (प्रधानन्यायाधीशले नै निर्णय गर्नुपर्ने, कति सदस्यीय इजलासले हेर्ने भन्ने विषय) । धारा ७(ङ) – लगातार ३० वटा बैठकमा भन्ने शब्द (संख्या घटाइनु पर्ने) । धारा ८ – मातृभाषामा शपथ लिने व्यवस्था हुनुपर्ने, जोसुकैको नाममा व्यक्तिगत इच्छाका आधारमा शपथ लिन पाउनु पर्ने । धारा ९(१) – यथाशीघ्रको सट्टा एक हप्ता भन्नु पर्ने, सभामुख र उपसभामुखमध्ये १ जना महिला हुनुपर्ने छ भन्ने प्रावधानको साथमा हरेक पदमा एक पटक महिला भए अर्को पटक पुरूष हुने व्यवस्था हुनुपर्ने, फरक-फरक दलको हुनुपर्ने, एकजना मधेसी हुनुपर्ने । धारा ९(४)(क) – प्रतिनिधिसभाको लागि हुने निर्वाचनको उम्मेदवारी दाखिल गर्ने दिनसम्म पदमा रहने व्यवस्था । धारा १० – उपराष्ट्रपतिलाई राष्ट्रियसभाको अध्यक्ष बनाउने व्यवस्था राखिनुपर्ने । धारा १०(१) – यथाशीघ्रको सट्टा एक हप्ता भन्नु पर्ने, अध्यक्ष र उपाध्यक्ष मध्ये १ जना महिला हुनुपर्ने छ भन्ने प्रावधानको साथमा हरेक पदमा एक पटक महिला भए अर्को पटक पुरूष हुने व्यवस्था हुनुपर्ने, फरक-फरक दलको हुनुपर्ने, एकजना मधेसी हुनुपर्ने । धारा ११(४) – कोष्ठभित्र राखिएको गाढा अक्षरमा लेखिएको प्रतिनिधिसभा विघटन सम्बन्धी प्रावधान । धारा ११(५) थप गरी संसदको कार्यकाल नसकिदै विघटन भएकोमा निर्धारित समयमा प्रतिनिधिसभाको निर्वाचन हुन नसकेमा स्वतः ब्युँतिने व्यवस्था राख्नुपर्ने । धारा १४ – माथि उल्लेख गरिएको फरकमतमा नै यस सम्बन्धमा मतैक्यता हुन नसकेको भनी उल्लेख भएको । धारा १७ – महाभियोग/विश्वासको मतको

सम्बन्धमा यसै प्रतिवेदनमा स्पष्ट व्यवस्था गरिनुपर्ने । धारा २०(९)- कानूनद्वारा सट्टा सदनद्वारा भन्ने शब्द राख्नुपर्ने । धारा २१(१), (२), (३) - यी उपधारामा उल्लिखित नियमावलीको सट्टा ऐन शब्द राखिनुपर्ने । धारा २२ - श्रम समिति, महिला समितिसमेत राखिनुपर्ने र नियमावलीको सट्टा ऐन राखिनुपर्ने । धारा २६(२) - नेपाल प्रहरी शब्द पनि राख्नुपर्ने । धारा २७,२८ लगायतका समितिको प्रतिवेदनमा गरिएको व्यवस्थाले राष्ट्रियसभाको भूमिकालाई न्यून बनाएको धारा ३० - राष्ट्रप्रमुख सन्तुष्ट भएमा भन्ने शब्द । धारा ३२ - निजी गुठी भन्ने शब्द पनि राखिनुपर्ने । धारा ३४(३) - यो धारामा रहेका व्यवस्थाहरूको पुन मस्यौदा गरी उपराष्ट्रपति शब्द थप्नुपर्ने, प्रदेशमा संवैधानिक अङ्ग रहने भए सोसमेत राखिनुपर्ने । धारा ४२ - प्रदेश व्यवस्थापिका एक सदनात्मक हुने भन्ने व्यवस्था र यसको नामाकरण । धारा ४४(१) - जनसंख्यापछि भूगोलसमेत राखिनुपर्ने, सभा ३५ सदस्यीय भनेर एउटै संख्या किटान गर्न नहुने, यो संख्या थोरै भएको, तोकिएको सदस्यमध्ये १८ सदस्य प्रत्यक्ष निर्वाचनबाट र १७ सदस्य समानुपातिक निर्वाचनबाट निर्वाचित हुने भन्ने व्यवस्था । धारा ४४(२) - एक तिहाई सदस्यको सट्टा पचास प्रतिशत बनाउनु पर्ने भन्ने विषय । धारा ४४(३) - जनसंख्यापछि भूगोलसमेत राखिनुपर्ने, दलित, अल्पसंख्यक समुदाय, अन्य समुदाय भन्ने शब्द । धारा ४४(४) - ५ वर्षको सट्टा ४ वर्ष हुनुपर्ने भन्ने विषय । धारा ४४(५) - १८ वर्षको सट्टा १६ वर्ष हुनुपर्ने । धारा ४५(क) मा नेपालको नागरिक हुनुपर्ने भन्ने व्यवस्था राखिनुपर्ने । धारा ४५(ख) - २५ वर्ष उमेर भन्ने व्यवस्था । धारा ४६ - प्रदेशको उच्च अदालत वा निजले तोकेको अन्य न्यायाधीश भन्ने शब्दावली (अदालत मात्रैले नहुने प्रमुख वा मुख्यन्यायाधीश भनिनु पर्ने, इजलासमा रहने न्यायाधीशको संख्या तोकिनुपर्ने) । धारा ४७ - ३० वटा बैठक भन्ने शब्दावली । धारा ४९ - प्रदेशसभाका सभामुख र उपसभामुख मध्ये १ जना महिला हुनुपर्ने छ भन्ने प्रावधानको साथमा हरेक पदमा एक पटक महिला भए अर्को पटक पुरूष हुने व्यवस्था हुनुपर्ने, फरक-फरक दलको हुनुपर्ने, एकजना मधेसी हुनुपर्ने । धारा ५०(४) - कोष्ठभित्रको गाढा अक्षरमा लेखिएको प्रदेशसभा विघटन सम्बन्धी व्यवस्था । धारा ५३ - माथि उल्लेख गरिएको फरकमतमा नै यस सम्बन्धमा मतैक्यता हुन नसकेको भनी उल्लेख भएको । धारा ५६ - महाभियोग/विश्वासको मतको सम्बन्धमा यसै प्रतिवेदनमा स्पष्ट व्यवस्था गरिनुपर्ने । धारा ५८(९) - कानूनद्वारा भन्ने शब्दको सट्टा सदनद्वारा भन्ने शब्द राख्नुपर्ने । धारा ५९ (१)(२)(३) - यी उपधारामा उल्लिखित नियमावलीको सट्टा ऐन शब्द राखिनुपर्ने । धारा ८० - प्रस्तावित व्यवस्था अस्पष्ट रहेको, स्थानीय एकाइ, सभा, उसको नियम र विधान बनाउने विधायिकी क्षेत्राधिकार र कार्यविधि स्पष्ट हुनुपर्ने । प्रतिवेदनका विभिन्न ठाँउमा लैङ्गिकमैत्री शब्द थप्नुपर्ने ।

### २.५.५. व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समितिको प्रतिवेदनमाथि समितिको सर्वसम्मतिबाट परिमार्जन गर्ने निर्णय भएका विषयहरू

**प्रारम्भिक मस्यौदातर्फ**

- धारा २ मा रहेको संसदको अधिकार शीर्षकलाई "नेपालको व्यवस्थापिकीय अधिकार" भनी सोही अनुसार मस्यौदामा मिलाउने, धारा ५(ख) मा दुई सदन रहने भएमा तल्लो सदनका सदस्यको उमेर २५ वर्ष पूरा भएको हुनुपर्ने मस्यौदाको व्यवस्थालाई यथावत् कायम राख्ने । धारा ९(१) मा रहेको "यथाशीघ्र" भन्ने शब्दको सट्टा "बैठक प्रारम्भ भएको १५ दिनभित्र" भन्ने शब्दहरु राख्ने, सोही धारामा "सभामुख र उपसभामुख फरक-फरक दलको हुनुपर्ने" व्यवस्था थप गर्ने र सोही धारामा प्रतिबन्धात्मक वाक्यांश राखी 'तर एक दलभन्दा बढी

दलको प्रतिनिधित्व नभएको अवस्थामा वा प्रतिनिधित्व भएरपनि उम्मेदवारी नदिएमा एकै दलको व्यक्ति सभामुख र उपसभामुख हुन बाधा पर्ने छैन' भनी मस्यौदालाई परिमार्जन गर्ने । धारा १९ को '... निजले मतदान गरेमा' पछाडिका वाक्यांशहरु हटाई "कानूनमा व्यवस्था भएबमोजिम सजाय हुनेछ" भन्ने वाक्यांश राखी मस्यौदा परिमार्जन गर्ने । धारा २०(८) मा रहेको मस्यौदाको सट्टा "कसैले कुनै सदनको अवहेलना गरेमा कानूनले व्यवस्था गरेबमोजिम सजाय हुनेछ" भन्ने वाक्यांश राखी मस्यौदा परिमार्जन गर्ने । धारा २१ को उपधारा (१), (२), (३) मा रहेको "नियमावली" भन्ने शब्दको सट्टा "कानून" शब्द राखी सङ्गतिपूर्ण तवरले मस्यौदा परिमार्जन गर्ने । धारा २२ मा रहेको व्यवस्थाको सट्टा 'सभाले कानूनमा व्यवस्था भएबमोजिम समितिहरु गठन गर्न सक्नेछ' भन्ने व्यवस्था राख्ने । धारा २६(२) मा 'सशस्त्र प्रहरी' शब्दपछि 'वा प्रहरी' भन्ने शब्द थप गर्ने । धारा २८ मा रहेको 'सदस्य' भन्ने शब्द हटाउने । धारा ३२ मा ... जुनसुकै ऋण असुल हुँदा प्राप्त भएको सबै धन पछि नेपाल सरकारलाई प्राप्त हुने अन्य जुनसुकै रकम भन्ने शब्दावली थप गरी यस धाराको अन्तमा देहायको प्रतिबन्धात्मक वाक्यांश थप गर्ने : 'तर निजी गुठी बाहेकको अन्य गुठीको रकमको हकमा कानून बनाई नियमित गर्न सकिनेछ । 'धारा ३४(१) मा "राष्ट्रप्रमुख" शब्दपछि "र उपराष्ट्रप्रमुख" शब्द थप गर्ने, उपधारा (३) मा खण्ड (च) पछि खण्ड (छ) थप गरी "राष्ट्रिय मानव अधिकार आयोगका अध्यक्ष र सदस्यहरु" थप गर्ने र सोही धाराको उपधारा (४) मा "राष्ट्रिय मानव अधिकार आयोग" शब्दहरु थप गर्ने । धारा ४५ को खण्ड (क) मा नेपाली नागरिक हुनुपर्ने छ भन्ने व्यवस्था थप गरी सोही अनुसार मस्यौदाको क्रम मिलाउने । मस्यौदाको खण्ड (ख) मा रहेको सदस्यको उमेर २५ वर्ष पूरा भएको हुनुपर्ने व्यवस्थालाई यथावत् कायम राख्ने । धारा ४९ को शीर्षकलाई "प्रदेशसभामुख र प्रदेश उपसभामुखको व्यवस्था" भन्ने, धारा ४९(१) मा रहेको "आफ्ना सदस्यमध्येबाट" भन्ने शब्दपछि "बैठक प्रारम्भ भएको १५ दिनभित्र" भन्ने शब्दहरु राख्ने, सोही धारामा प्रदेशसभामुख र प्रदेश उपसभामुख मध्ये फरक-फरक दलको हुनुपर्ने व्यवस्था थप गर्ने र सोही धारामा प्रतिबन्धात्मक वाक्यांश राखी 'तर एक दलभन्दा बढी दलको प्रतिनिधित्व नभएको अवस्थामा वा प्रतिनिधित्व भएरपनि उम्मेदवारी नदिएमा एकै दलको व्यक्ति सभामुख र उपसभामुख हुन बाधा पर्ने छैन' भनी मस्यौदालाई परिमार्जन गर्ने । धारा ५७ को ' निजले मतदान गरेमा' पछाडिका वाक्यांशहरु हटाई ' कानूनले व्यवस्था गरेबमोजिम सजाय हुनेछ' भन्ने वाक्यांश राखी मस्यौदा परिमार्जन गर्ने । धारा ५८(८) मा रहेको मस्यौदाको सट्टा 'कसैले प्रदेशसभाको अवहेलना गरेमा कानूनले व्यवस्था गरे बमोजिम सजाय हुनेछ' भन्ने वाक्यांश राखी मस्यौदा परिमार्जन गर्ने । धारा ५९ को उपधारा (१), (२), (३) मा रहेको 'नियमावली' भन्ने शब्दको सट्टा 'कानून' शब्द राखी संगतिपूर्ण तवरले मस्यौदा परिमार्जन गर्ने । धारा ६० मा रहेको व्यवस्थाको सट्टा 'प्रदेशसभाले कानूनमा व्यवस्था भएबमोजिम समितिहरु गठन गर्न सक्नेछ' भन्ने व्यवस्था राख्ने । धारा ६६ मा रहेको 'सदस्य' भन्ने शब्द हटाउने । धारा ७० मा 'गुठी रकम बाहेक' भन्ने शब्दहरु पछि 'सङ्घीय सरकारबाट प्राप्त हुने अनुदान वा ऋण' भन्ने शब्दावली थप गरी यस धाराको अन्तमा देहायको प्रतिबन्धात्मक वाक्यांश थप गर्ने : 'तर निजी गुठी बाहेकको अन्य गुठीको रकमको हकमा कानून बनाई नियमित गर्न सकिनेछ ।' धारा ७२ मा प्रदेशमा स्वतन्त्र संवैधानिक अङ्गहरु रहने भएमा तिनका पदाधिकारीहरुमाथि हुने व्ययभार प्रदेश सञ्चित कोषबाट व्यहोरिने गरी मस्यौदा परिमार्जन गर्ने ।

## २.६. न्यायप्रणाली सम्बन्धी समितिको प्रतिवेदन सम्बन्धमा

### २.६.१. प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरू

- अवधारणापत्रमा विवेचना गरिए अनुसार कानूनी सहायताको विषयलाई मस्यौदामा समावेश नगरिएको ।

### २.६.२. अर्को समितिको कार्यक्षेत्रभित्र परेका विषय यस समितिको प्रतिवेदनमा दोहोरिएको

**संवैधानिक समितिको कार्यक्षेत्रभित्र पर्ने विषय**

- प्रारम्भिक मस्यौदाको धारा ३२ मा प्रस्तावित सङ्क्रमणकालीन व्यवस्था संवैधानिक समितिको कार्यक्षेत्रभित्र पर्ने देखिएको ।

**राज्यको पुर्नसंरचना र राज्यशक्तिको बाँडफाँड समितिको कार्यक्षेत्रभित्रको विषय**

- प्रारम्भिक मस्यौदाको धारा १० मा सङ्घ र राज्य बीचको विवाद, राज्य–राज्य बीचको विवाद हेर्ने अधिकारक्षेत्र सङ्घीय सर्वोच्च अदालतको हुने भनिएको तर नियमावली अनुसार सङ्घीय एकाइहरु बीच उत्पन्न हुने विवादको समाधान गर्ने संयन्त्रको निर्धारण गर्ने कार्यक्षेत्र राज्यको पुर्नसंरचना र राज्यशक्तिको बाँडफाँड समितिको रहेको देखिएको ।

**शासकीय स्वरूप समितिको कार्यक्षेत्रभित्र पर्ने विषय**

- प्रारम्भिक मस्यौदाको धारा ३० र ३१ मा क्रमशः सङ्घीय न्यायसेवा आयोग र राज्य न्यायसेवा आयोगको व्यवस्था गरिएको छ । न्यायसेवा आयोग देशको सरकारी सेवाको एक अभिन्न अङ्ग भएको र सरकारी सेवाको समग्र संरचना र खाका संविधानसभा नियमावली, २०६५ बमोजिम राज्यको शासकीय स्वरूप निर्धारण समितिको कार्यक्षेत्रभित्र पर्ने ।

**संवैधानिक निकायको स्वरूप निर्धारण समितिको कार्यक्षेत्रभित्रको विषयमा एकरूपता नभएको**

- प्रारम्भिक मस्यौदाको धारा ३० र ३१ मा क्रमशः सङ्घीय लोकसेवा आयोग र राज्य लोकसेवा आयोगको परिकल्पना गरिएको छ । तर संवैधानिक निकायको स्वरूप निर्धारण समितिको प्रतिवेदनमा सङ्घीय लोकसेवा आयोगको मात्र व्यवस्था भई प्रान्तको हकमा कानूनद्वारा व्यवस्था हुनुपर्ने भनिएको छ । दुई प्रतिवेदन बीच एकरूपताको अभाव देखिन्छ ।

### २.६.३. समितिबाट नै अवधारणापत्र र मस्यौदामा फरक मत आएका विषयहरू

- **न्यायाधीशको नियुक्ति र बर्खास्तगीः** व्यवस्थापिकाबाट नगरी न्यायपरिषद्को सिफारिशमा सक्षम ढङ्गले संसदीय सुनुवाइ गरी हुनुपर्ने । बर्खास्तगीका सम्बन्धमा कानून बनाई प्रभावकारी बनाउने ।
- **संविधान र कानूनको व्याख्या तथा न्यायिक पुनरावलोकनः** यो विषय देशको सर्वोच्च अदालतको आधारभूत जिम्मेवारी नै भएकोले व्यवस्थापिकाबाट गरिनु नहुने ।
- **सर्वोच्च अदालतको प्रधानन्यायाधीशको नियुक्तिः** योग्यता पुगेको व्यक्तिमध्येबाट बाहिरबाट सिधै नियुक्ति नगरी न्यायिक संस्कृतिमा भिजिसकेको सर्वोच्च अदालतको न्यायाधीशहरूमध्येबाट गरिनुपर्ने ।

- **राज्य/ उच्चअदालतका न्यायाधीशहरूको नियुक्ति, सरूवा र बर्खास्तगीः** कानूनको व्याख्यामा एकरूपता र समानता ल्याउन, न्यायाधीशहरूलाई मुलुकभरका कुनै पनि समानस्तरको अदालतमा सरूवा गर्न सकिने तुल्याउन र सर्वोच्च अदालतका लागि मानव संशाधनको रूपमा उपयोग गर्न राज्य/उच्चअदालतका न्यायाधीशहरूको नियुक्ति, सरूवा र बर्खास्तगीको संयन्त्र केन्द्रीय संयन्त्रबाट नै गर्नुपर्ने ।
- **संवैधानिक अदालतको व्यवस्था हुनुपर्नेः** संविधानको व्याख्या, राष्ट्रिय सरोकारका विषय, मानव अधिकार तथा नागरिक सरोकारका विषय र राजनीतिक विषयको व्याख्या र निरूपण गर्न सर्वोच्च अदालत कै सरहको संवैधानिक अदालत हुनुपर्ने । त्यसमा प्रदेश र प्रान्तको प्रतिनिधित्व सहित पूर्ण रूपमा समानुपातिक र समावेशी हुनुपर्ने ।
- **प्रारम्भिक मस्यौदामा रहेका फरक मतः दफा ६(१), ८(१)(क), १६(१), १८(१), २६(१), २६(६) को (क) र (ग), २९, ३२**

## २.६.४. सभामा छलफल हुँदा मतैक्यता हुन नसकेका विषयहरू

**क) प्रारम्भिक मस्यौदातर्फ**

- दफा १(१) र ५(४) एकआपसमा नमिलेको । दफा २(१)(ख) मा सर्वोच्चको सट्टा राज्य अदालत भन्नु पर्ने । दफा २ (२) को अन्तमा गर्न सकिनेछ भन्ने शब्दको सट्टा गरिनेछ भन्नु पर्छ । दफा २(३) मा विवादित व्यवस्था रहेको । जातिविशेष, धर्मविशेष र समुदायविशेषको लागि छुट्टै कानून र अदालत हुन सक्दैन । कानूनको दृष्टिमा सबैलाई समान व्यवहार गर्नु पर्दछ । यसमा अपाङ्गता सम्बन्धी विवाद र पारिवारिक अदालत थप हुनुपर्ने राय पनि आएको । दफा ३ मा ६ महिनासम्म कैद गर्ने अधिकार अर्धन्यायिक निकायलाई दिने प्रस्ताव छ त्यसो गर्नु हुँदैन । कैद गर्ने अधिकार अदालतलाई मात्र हुनुपर्छ । दफा ५ को उपदफा (४) मा राष्ट्रिय महत्वका ठूला पद सम्बन्धी मुद्दा हेर्ने अधिकार अदालतलाई नहुने भनिएको छ । राजनीतिक विषय बाहेक सबै अधिकार अदालतलाई नै हुनुपर्छ । यो विषय अवधारणापत्रको पृष्ठ ४६ को संविधान बनाउदा ध्यान दिनु पर्ने कुरासँग सङ्गतिपूर्ण छैन । दफा ५(५) मा कम्तिमा ५० प्रतिशत महिला हुनुपर्छ । ११ जना भन्ने शब्द अगाडि समानुपातिक शब्द थप गर्नुपर्ने । ११ जनाको सट्टा १५ जना हुनुपर्ने । मस्यौदाको दफा ५(४) र १० (३) को व्यवस्था बाझिएको । दफा ६(१) मा सम्पूर्ण सदस्य संख्याको सट्टा उपस्थित संख्याको भन्ने शब्द भन्नु पर्छ । यो व्यवस्थाप्रति पूर्ण असहमति पनि जनाइएको । दफा ९(१) र १९, २७ मा न्यायाधीशलाई न्यायिक जाँचबुझको लागि पनि अयोग्य ठानिनु पर्छ । दफा १० मा सर्वोच्च अदालतको अधिकारक्षेत्र संकुचित भएको छ । मस्यौदाको दफा १० को उपदफा (२) बमोजिमको व्यवस्था सङ्घीयता विरोधी छ । त्यसको लागि संवैधानिक अदालत हुनुपर्छ । न्यायाधीशको नियुक्ति सम्बन्धी दफा ६, १६ र २६ को व्यवस्थाले न्यायिक स्वतन्त्रता कायम रहन नसक्ने, शक्तिपृथकीकरणको सिद्धान्त विपरीत हुने । दफा ११, २१ मा मुद्दा सार्न सकिने व्यवस्था गरियो तर न्यायाधीश सार्न नसकिने बनाइएको छ । न्यायाधीशहरु समानस्तरका देशैभरका अदालतमा सरूवा गर्न सकिने हुनुपर्छ । दफा २२ मा बहस गर्न नपाउने व्यवस्था हुनुपर्छ । दफा १६ र २९ बमोजिम प्रान्तबाट मात्र न्यायाधीशको नियुक्ति गरिदा समावेशीताको घाँटी रेटिन्छ । उनीहरु अन्यत्र सरूवा हुने र माथिल्लो तहमा जाने बाटो अवरूद्ध हुन्छ । संविधान र कानूनको व्याख्यामा एकरूपता नहुन सक्छ । दफा २९ (१) (क) मा उपाध्यक्षको सट्टा अध्यक्ष राख्नु पर्छ । संविधानको व्याख्या र न्यायिक पुनरावलोकन गर्न दफा २९ बमोजिमको व्यवस्थापिकाको न्यायिक समिति होइन

संवैधानिक अदालतको व्यवस्था हुनुपर्ने । दफा २९ (२)(ख), (६)(क) र (९) (क) मा रहेको आवश्यकदेखि अनुमोदनसम्मका शब्दहरु हटाई प्रतिस्पर्धाबाट छनौट गरी भन्ने शब्दहरु राख्नु पर्छ । दफा २९ (११) मा महिला दलित भनेर किटानीसाथ लेख्नु पर्ने । महान्यायाधिवक्ता सम्बन्धी मस्यौदाको दफा १० मा सरकारी वकिलको सेवा सुविधा न्यायाधीशसरह हुनु हुँदैन । निजामती सेवाका अन्य कर्मचारीसरह हुनुपर्छ ।

**ख) अवधारणापत्रतर्फ**

१. मूलतः बहुमतको प्रतिवेदन र फरकमतको पक्ष र विपक्षमा नै छलफल केन्द्रित रहेकोले अवधारणामा माननीय सदस्यहरु विभाजित भएको । २. सङ्घीयताविरोधी कोणबाट प्रतिवेदन आएको ३. सङ्घीय गणतन्त्रको संविधान बनाउने हो भने अवधारणा र मस्यौदा प्रतिवेदन पूरै Review गर्नुपर्ने ४. Legal Aid बारे प्रतिवेदन पूरै मौन रहेको । ५. विशेष न्यायिक समिति किमार्थ व्यावहारिक नभएको । यसले संसद अन्तर्गत न्यायपालिका रहन्छ । संविधान र कानूनको व्याख्या गर्न संवैधानिक अदालत हुनुपर्छ ।

### २.६.५. न्यायप्रणाली सम्बन्धी समितिका प्रतिवेदनमाथि समितिको सर्वसम्मतिबाट परिमार्जन गर्ने निर्णय भएका विषयहरू

**प्रारम्भिक मस्यौदातर्फ**

- प्रारम्भिक मस्यौदाको धारा ३२ मा प्रस्तावित सङ्क्रमणकालीन व्यवस्था संवैधानिक समितिको कार्यक्षेत्रभित्र पर्ने देखिएकोले यहाँ दोहोरिएको छ । न्यायप्रणाली सम्बन्धी समितिको मस्यौदामा समितिको दृष्टिले सम्बन्धित भागमा राख्न सिफारिश गरिएको विषयलाई संवैधानिक समितिले महत्वपूर्ण सन्दर्भ सामग्रीको रुपमा ग्रहण गरी सम्बन्धित विषयलाई पूर्णता दिने क्रममा ध्यान दिन सुझाव दिने । समितिबाट उल्लिखित विषयमा सभामा छलफल हुँदा उठेका कुराहरु सम्बन्धित समितिको मस्यौदाबाट निर्णय भई सम्बोधन हुने भएकोले समितिले यहाँ छलफल र निर्णय गरेको छैन । मस्यौदाको धारा ३ को व्यवस्थालाई उपधारा (१) मा राखी देहायको उपधारा (२) थप गर्ने : '(२) उपधारा (१) बमोजिम स्थापना र गठन भएका विशिष्टीकृत अदालत, न्यायिक निकाय वा न्यायाधीकरणबाट कैदको सजाय हुनेगरी गरेको निर्णय पुनरावेदन सुन्ने अदालतबाट साधक सदर भएपछि मात्र कार्यान्वयन गर्नुपर्ने छ । मस्यौदाको धारा २९ को उपधारा (३) मा उल्लिखित "जनसंख्याको आधारमा समानुपातिक र समावेशी सिद्धान्त" भन्ने शब्दहरूको सट्टा "यस संविधानमा उल्लिखित योग्यता, दक्षता र अनुभवको अधीनमा रही जनसंख्याको आधारमा समानुपातिक र समावेशी सिद्धान्त" भन्ने शब्दहरु राख्ने । मस्यौदाको धारा २(२), ५(५), २२, २९(११) र महान्यायाधिवक्ताको धारा १० को व्यवस्थालाई यथावत् कायम राख्ने ।

## २.७ मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदन सम्बन्धमा

### २.७.१. प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरू

- कुनै पनि विषय छुटेको देखिदैन ।

### २.७.२. अर्को समितिको कार्यक्षेत्रभित्र परेका विषय यस समितिको प्रतिवेदनमा दोहोरिएको :-

- कुनै पनि विषय दोहोरिएको देखिदैन ।

### २.७.३. समितिको प्रतिवेदनमा आएका फरकमतहरू र मतैक्यता हुन नसकेका विषयहरू

**क) प्रारम्भिक मस्यौदातर्फ**

**नागरिकता सम्बन्धी**

सि.नं. १

- (फरकमत) नेपालमा सङ्घीय सरकारको नाममा प्रादेशिक सरकारले प्रदान गर्ने गरी एकल नागरिकताको व्यवस्था गर्ने, (फरकमत) सङ्घीय सरकार र राज्य सरकारले प्रदान गर्ने गरी छुट्टाछुट्टै नागरिकताको व्यवस्था गर्ने । दोहोरो नागरिकताको व्यवस्था गर्ने, सङ्घीय सरकारको नाममा प्रादेशिक सरकारले पनि नागरिकता जारी गर्न सक्ने हुनुपर्ने ।

सि.नं. ३

- (फरकमत) उपधारा (१) को खण्ड (क) र (ख) मा रहेको 'आमा र बाबु' भन्ने शब्दको सट्टा 'आमा वा बाबु' भन्ने शब्द राख्ने । (फरकमत) सोही उपधारामा खण्ड (ख) पछि देहायको खण्ड (ग) थप गर्नुपर्ने विभिन्न फरकमत आएको :- नेपाली नागरिक आमाबाट नेपालमा जन्म भई नेपालमा स्थायी बसोबास भएको बाबुको पहिचान हुन नसकेको वा बाबुले आफ्नो सन्तानको रूपमा स्वीकार नगरेको व्यक्ति । - नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध कायम भएको विदेशी व्यक्तिको नेपाली नागरिकता प्राप्त हुनु अगावै मृत्यु भएमा निजको सन्तान र नेपाली नागरिकबाट जन्मेको बाबुको ठेगान नभएको व्यक्ति ।

सि.नं. ४

- (फरकमत) उपधारा (१) को सट्टा देहायको उपधारा (१) राख्ने : (१) नेपाली नागरिकसँग विवाह गरेको विदेशी महिलालाई विदेशी मुलुकको नागरिकता त्याग्ने कारवाही चलाएपछि तुरून्त नेपालको वैवाहिक अङ्गीकृत नागरिकता प्रदान गरिने छ । (फरकमत) उपधारा (१) को प्रतिबन्धात्मक वाक्यांशको सट्टा देहायको राख्नेः नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध कायम गरेको विदेशी महिलाले विशी मुलुकको नागरिकता त्याग गरेको स्वयम् घोषणा गरी नेपाली नागरिकता लिन चाहेमा तत्काल नेपालको वैवाहिक अङ्गीकृत नागरिकता लिन सक्नेछ । (फरकमत) प्रस्तावित धारा ४ को व्यवस्था हटाउने र अन्य धाराहरूको क्रम मिलाउने । उपधारा (१) मा रहेको १५ वर्ष अवधि घटाउनु पर्ने, विदेशी मूलको नागरिकता त्याग गरेपछि नागरिकता दिनुपर्ने, नागरिकता नपाउँदासम्म परिचयपत्र दिने व्यवस्था राख्नुपर्ने, नेपाली पुरूषसँग विवाह गर्ने विदेशी महिलाको हकमा फरक व्यवहार गर्ने । उपधारा (२) को अवस्थाको व्यक्तिलाई वंशजको आधारमा नागरिकता दिनुपर्ने । यस सम्बन्धी व्यवस्था अन्तरिम संविधानमा भए बमोजिमकै कायम गर्ने ।

सि.नं. ६

- (फरकमत) आमा वा बाबुको वंशजको आधारमा भन्ने शब्दहरु पछि 'आफूले रोजेको नाम, थर र' भन्ने शब्दहरु थप गर्ने ।

सि.नं. ७

- (फरकमत)प्रस्तावित धाराको सट्टा देहायको धारा ७ राख्ने : नेपाली नागरिकता त्याग गरेका व्यक्तिले पुनः नेपाली नागरिकता लिन चाहेमा पहिले जुन किसिमको नेपालको नागरिकता प्राप्त गरेको हो सोही किसिमको नेपालको नागरिकता प्रदान गरिनेछ । त्यस्तो अवस्थाको व्यक्तिलाई अङ्गिकृत नागरिकता प्रदान गर्नुपर्ने ।

सि.नं. ८

- यो धाराको आवश्यकता नभएकोले हटाउने ।

सि.नं. ९

- स्पष्टीकरणमा ठेगानापछि जन्ममिति पनि उल्लेख हुनुपर्ने ।

सि.नं.१०

- संविधान जारी भएको निश्चित समयावधिभित्र नागरिकता छानविनको कारवाही प्रारम्भ गर्नुपर्ने ।

सि.नं.१२

- यो धाराको आवश्यकता नभएकोले हटाउने ।

सि.नं.१३

- (फरकमत)यो धाराको सट्टा देहायको व्यवस्था राख्ने *"पदाधिकारीको नागरिकता सम्बन्धी व्यवस्था :* नेपालको राजनीतिक, संवैधानिक तथा उच्च प्रशासनिक पदहरुमा नियुक्त वा निर्वाचित हुन वंशजको आधारमा नेपालको नागरिकता प्राप्त नेपाली नागरिक हुनुपर्नेछ ।" (फरकमत) यो धाराको व्यवस्था धारा ४ को उपधारा ४ अनुसारको अङ्गीकृत नागरिकको हकमा मात्र लागू हुने व्यवस्था गर्ने, यो प्रावधान यहाँबाट हटाई विविध भागमा राख्नुपर्ने । (फरकमत) उपधारा (२) मा रहेको दश वर्षको सट्टामा बीस वर्ष कायम गरिनुपर्ने । धारा १३ पूर्वाग्रही भएकोले हटाउने । यस सम्बन्धी व्यवस्था अन्तरिम संविधानमा भए बमोजिमकै कायम गर्ने ।

सि.नं.१४

- (फरकमत)यो व्यवस्था हटाउने । (फरकमत)गैरआवासीय नेपाली परिचयपत्रको सट्टा गैरआवासीय नेपाली नागरिकता नै प्रदान गर्ने ।

**मौलिक हक सम्बन्धी**

सि.नं.१

- उपधारा (१) मा प्रत्येक व्यक्तिलाई जीवनको हक हुनेछ भनेर राख्ने । (फरकमत) उपधारा (२) को सट्टा देहायको उपधारा (२) राख्ने : (२) उपधारा (१) मा उल्लिखित कुनै कुराले अत्यन्त गंभीर प्रकृतिका अपराध गर्ने अपराधीहरुलाई मृत्युदण्ड दिन रोक लगाएको मानिने छैन ।

सि.नं. २

- उपधारा (१) मा रहेको 'कानून बमोजिम बाहेक' भन्ने शब्दहरु हटाउने । उपधारा (२) को खण्ड (घ) प्रतिबन्धात्मक वाक्यांशमा राजनीतिक दल खोल्ने स्वतन्त्रतामा

प्रतिबन्ध लगाउने गरी कुनै व्यवस्था राख्न नहुने । (फरकमत) उपधारा (२) को खण्ड (घ) मा रहेको प्रतिबन्धात्मक वाक्यांशको सट्टा देहायको वाक्यांश थप गरी मिलाउने भनी विभिन्न सुझाव आएको :

- "राष्ट्रघाती कार्य गर्ने, विदेशी शक्तिहरूको दलाली गर्ने, राष्ट्रविरोधी षडयन्त्र गर्ने, वा प्रतिगमनकारी कार्य गर्ने वा त्यस्ता कार्य गर्न कुनै संरचना वा संयन्त्र खडा गर्ने राजनीतिक दललाई मनासिब प्रतिबन्ध लगाउने गरी ऐन बनाउन रोक लगाएको मानिने छैन ।"
- सोही प्रतिबन्धात्मक वाक्यांशमा देहायको वाक्यांश थप गरी मिलाउने : "बहुलवादमा आधारित बहुदलीय शासन व्यवस्था, सङ्घीय लोकतान्त्रिक गणतन्त्र सहितको संसदीय प्रणाली, राष्ट्रिय अन्तर्राष्ट्रिय स्तरमा स्वीकार्य मानव अधिकारका मूल्य मान्यता र नागरिक वा व्यक्तिका सार्वभौम अधिकार प्रतिकूल हुने कार्य गर्ने वा कुनै पनि रूपमा एकदलीय अधीनायकवाद, सर्वसत्तावाद स्थापनाको प्रयत्न गर्ने, राजनीतिक दल वा मातहतका सम्बद्ध निकायमा सैन्य वा अर्धसैन्य संरचना खडा गर्ने, राज्यविरूद्ध सशस्त्र विद्रोह गर्ने, राजनीतिक दल वा मातहत निकायमार्फत् राज्यका कानूनद्वारा गठित संरचनाको समानान्तर हुने गरी कुनै संरचना वा संयन्त्र वा सङ्गठन खडा गर्ने राजनीतिक दललाई मनासिव बन्देज लगाउने गरी कानून बनाउन रोक लगाएको मानिने छैन ।"
- सोही प्रतिबन्धात्मक वाक्यांशमा देहायको वाक्यांश थप गरी मिलाउने : "बहुलवादमा आधारित प्रतिस्पर्धात्मक बहुदलीय शासन व्यवस्था, सङ्घीय लोकतान्त्रिक गणतन्त्र सहितको संसदीय प्रणाली, राष्ट्रिय अन्तर्राष्ट्रियस्तरमा सर्वस्वीकार्य मानव अधिकारका मूल्य मान्यता र नागरिक वा व्यक्तिका सार्वभौम अधिकार प्रतिकूल हुने कार्यमा वा कुनै पनि रूपमा एकदलीय अधीनायकवाद, सर्वसत्तावादको पक्षपोषण गर्ने वा त्यस्तो व्यवस्था स्थापनाको प्रयत्न गर्ने, राजनीतिक दल वा मातहतका संम्बद्ध निकायमा सैन्य वा अर्धसैन्य संरचना खडा गर्ने, सैन्यवादी क्रियाकलाप सञ्चालन गर्ने वा यस्ता कार्यका लागि दुरूत्साहन गर्ने, राज्यविरूद्ध हतियारबन्द विद्रोहको तयारी वा प्रयत्न वा त्यस्तो घोषणा गर्ने राजनीतिक दल वा मातहतनिकाय मार्फत् राज्यका कानूनद्वारा गठित संरचनाको समानान्तर हुने गरी कुनै संरचना वा संयन्त्र वा सङ्गठन खडा गर्ने कार्य गर्ने राजनीतिक दललाई मनासिव बन्देज लगाउने गरी कानून बनाउन रोक लगाएको मानिने छैन ।"
- सोही प्रतिबन्धात्मक वाक्यांशमा "केवल जाति, भाषा, धर्म, सम्प्रदाय वा लिङ्गको आधारमा" भन्ने शब्दहरूको सट्टा "केवल जाति, भाषा, धर्म, क्षेत्र, सम्प्रदाय वा लिङ्गको आधारमा" भन्ने शब्दहरु राख्ने ।

सि.नं. ३

- उपधारा (२) को प्रतिबन्धात्मक वाक्यांशमा 'आर्थिक' पछि 'शैक्षिक' भन्ने शब्द थप गर्ने । (फरकमत) उपधारा (२) को प्रतिबन्धात्मक व्यवस्थाको सट्टा देहायको प्रतिबन्धात्मक व्यवस्था राख्ने :- "तर आर्थिक, सामाजिक वा शैक्षिक दृष्टिले पिछडिएका नागरिकहरूको उत्थान, सशक्तिकरण र विकासको लागि कानूनद्वारा विशेष व्यवस्था गर्न रोक लगाएको मानिने छैन ।" उपधारा (५) मा रहेको 'पुर्ख्यौली' भन्ने शब्दको सट्टा 'पैतृक' भन्ने शब्द राख्ने र सो शब्दपछि 'चल र अचल' भन्ने

शब्द थप गर्ने । (फरकमत) उपधारा (५) पछि देहायको उपधारा (६) थप्ने : (६) प्रत्येक नागरिकलाई आर्थिक समानताको हक हुनेछ ।

सि.नं. ४

- उपधारा (१) को प्रतिबन्धात्मक वाक्यांशमा रहेको 'अदालतको अवहेलना' भन्ने शब्द हटाउनुपर्ने, आम सञ्चार सम्बन्धी हकलाई प्रतिकूल असर पुऱ्याउने गरी प्रतिबन्ध लगाउन नहुने हुँदा यो प्रतिबन्धात्मक वाक्यांश पूरै हटाउने ।

सि.नं. ५

- उपधारा (२) को प्रतिबन्धात्मक वाक्यांशमा कानून व्यावसायी राख्न पाउने हकबाट वञ्चित गर्ने व्यवस्था राख्न नहुने । (फरकमत) उपधारा (४) मा देहायको प्रतिबन्धात्मक वाक्यांश थप गर्ने : "तर प्रचलित अन्तर्राष्ट्रिय कानूनले सजाय हुने अपराधमा/मानवताविरूद्धको अपराध, युद्ध अपराध र जातीय नरसंहार सम्बन्धी अपराधमा भूतप्रभावी कानून बनाएर सजाय गर्न यस उपधाराले बाधा पुऱ्याएको मानिने छैन ।" उपधारा (१०) मा रहेको निःशुल्क कानूनी सहायताको हकमा कस्तो अवस्थालाई असमर्थता मान्ने हो स्पष्ट हुनुपर्ने । पुर्पक्षको लागि थुनामा रहेको व्यक्ति निर्दोष प्रमाणित भएमा राज्यबाट क्षतिपूर्ति पाउने, गर्भवती महिलालाई थुनामा राख्दा विशेष सुविधा दिनुपर्ने व्यवस्था थप गर्ने ।

सि.नं. ६

- पीडकबाट क्षतिपूर्ति पाउन नसक्ने अवस्था भएमा राज्यले नै क्षतिपूर्ति प्रदान गर्ने व्यवस्था थप गर्नुपर्ने ।

सि.नं. ७

- थुनामा रहेको अवस्थामा बाहेक अन्य अवस्थामा पनि सरकारको तर्फबाट दमन र यातना नदिइने कुरा मस्यौदामा स्पष्ट रूपमा राख्नुपर्ने ।

सि.नं. ८

- यो व्यवस्था हटाउनुपर्ने । उपधारा (२) मा निवारक नजरबन्दमा रहेका जुनसुकै व्यक्तिको स्थितिबारे परिवारलाई जानकारी दिने व्यवस्था राख्नुपर्ने ।

सि.नं. ९

- निजीस्तरमा पनि छुवाछूत गर्न नपाउने भनी स्पष्ट उल्लेख हुनुपर्ने । उपधारा (५) मा रहेको 'सामाजिक अपराध' भन्ने शब्दको अगाडि 'जघन्य' भन्ने शब्द थप गर्नुपर्ने ।

सि.नं.१०

- मोहियानी हक लगायत पुर्ख्यौली सम्पत्तिमा सबै सन्तानको बराबर हक हुनेछ भन्ने व्यवस्था थप गर्नुपर्ने । (फरकमत) उपधारा (१) मा देहायको प्रतिबन्धात्मक वाक्यांश थप गर्ने : "तर राज्यले वैज्ञानिक भूमिसुधारको प्रयोजनका लागि बाहेक नागरिकको सम्पत्तिमा सीमा तोक्ने गरी कुनै कानून बनाउने छैन ।" (फरकमत) सोही उपधारामा प्रतिबन्धात्मक वाक्यांश थप गरी देहायको व्यवस्था राख्ने : "तर राज्यले व्यक्तिको आर्जन वा सम्पत्तिमा सीमा तोक्ने गरी कुनै कानून बनाउने छैन ।" (फरकमत) सोही उपधारामा प्रतिबन्धात्मक वाक्यांश थप गरी देहायको व्यवस्था राख्ने : "तर उत्पादनका मुख्य साधन तथा सेवाको राष्ट्रियकरण गरिनेछ र राज्यले व्यक्तिको सम्पत्तिमा सीमा तोक्न सक्नेछ ।" (फरकमत) उपधारा (३) मा रहेका "कुनै अधिकारको सिर्जना गर्ने छैन" भन्ने शब्दहरु पछि "त्यसरी

अधिग्रहण, प्राप्त वा त्यस्तो सम्पत्ति उपर अरू कुनै अधिकार सिर्जना गरिएमा कानूनबमोजिम क्षतिपूर्ति प्रदान गरिनेछ" भन्ने वाक्यांश थप गर्ने । (फरकमत) उपधारा (४) को सट्टामा देहायको उपधारा (४) राख्ने : "(४) क्रान्तिकारी भूमिसुधार लागू गरी जमीनको हदबन्दी गरिने र सीमाभन्दा माथिको जमीन सुकुम्बासी, भूमिहीन र गरीब किसानलाई वितरण गरिनेछ र जमीनको उत्पादन र उत्पादकत्व वृद्धि गर्न वैज्ञानिक योजना बनाई लागू गरिने छ ।" (फरकमत) सोही उपधारामा "जमीन जोत्नेको हुने गरी क्रान्तिकारी भूमिसुधार गरिनेछ" भन्ने व्यवस्था राख्नुपर्ने । (फरकमत) उपधारा (५) पछि देहायको उपधारा (६) थप गर्ने : "(६) वैज्ञानिक भूमिसुधार, भूमिव्यवस्थापन, भूमिको उत्पादन र उत्पादकत्व वृद्धि गर्न, कृषिको आधुनिकीकरण र व्यावसायीकरण, वातावरण संरक्षण, व्यवस्थित आवास तथा शहरी विकास गर्न कानून बनाई नियमन र व्यवस्थापन गर्ने अधिकार सङ्घीय एकाइ (प्रदेश) लाई हुनेछ ।"

सि.नं.११

- राज्य धर्मनिरपेक्ष हुने कुरा उल्लेख गर्ने, धर्मपरिवर्तन गर्ने विषयलाई पूर्णतः निषेध गरिनेछ भन्ने व्यवस्था राख्नुपर्ने । (फरकमत) उपधारा (२) पछि देहायको उपधारा (३) राख्ने : "(३) प्रत्येक व्यक्तिलाई धार्मिक दर्शनको खण्डन गर्ने हक हुनेछ ।"

सि.नं.१२

- मातृभाषामा र साङ्केतिक भाषामा समेत सूचना पाउने हक हुनेछ भनी उल्लेख गर्नुपर्ने ।

सि.नं.१४

- शोषणविरूद्ध विद्रोह गर्न पाउने अधिकार हुनेछ भनी थप्नुपर्ने । उपधारा (४) को प्रतिबन्धात्मक वाक्यांशमा रहेको सार्वजनिक प्रयोजन भनेको के हो भनी स्पष्टीकरण थप गर्नुपर्ने ।

सि.नं.१६

- अपाङ्गता भएका व्यक्तिलाई विशेष शिक्षा पाउने अधिकार सुनिश्चित हुनुपर्छ, प्राथमिक तहसम्म बहिरा व्यक्तिले साङ्केतिक भाषामा पढ्न पाउने व्यवस्था हुनुपर्ने । अनाथ, असहाय नागरिक, महिला, दलित, आदिवासी, जनजाति, लोपोन्मुख समुदाय, उत्पीडितक्षेत्रका वासिन्दालाई निःशुल्क उच्चशिक्षाको हक हुने व्यवस्था हुनुपर्ने । मातृभाषामा उच्चशिक्षा प्राप्त गर्ने र यस्तो शिक्षा प्रदान गर्ने दायित्व राज्यको हुनुपर्ने । (फरकमत) उपधारा (२) को सट्टा देहायको उपधारा (२) राख्ने : "(२) प्रत्येक नागरिकलाई माध्यमिक तहसम्म निःशुल्क र अनिवार्य शिक्षाको हक हुनेछ ।"

सि.नं.१७

- राज्यले बहुभाषिक नीति लिने कुरा उल्लेख हुनुपर्ने, सरकारी कार्यालयमा मातृभाषाको प्रयोग गर्ने व्यवस्था हुनुपर्ने, सरकारी कार्यालयमा साङ्केतिक भाषाको प्रयोग र दोभासेको व्यवस्था हुनुपर्ने । उपधारा (३) मा जात्रा र पर्व भन्ने शब्द थप गर्नुपर्ने ।

सि.नं.१८

- उपधारा (१) मा रहेको कानूनद्वारा निर्धारण भएबमोजिम हुनेछ भन्ने शब्दहरु राख्न नहुने । महिला, दलित, आदिवासी, जनजाति, मधेसी, मुस्लिम, अल्पसंख्यक तथा सीमान्तकृत समुदायलाई विशेष अधिकार हुने कुरा उल्लेख गर्ने । प्रत्येक नागरिकलाई रोजगारीको हक हुने व्यवस्था राखिसकेपछि बेरोजगार भत्ताको व्यवस्था

गर्नु आवश्यक नपर्ने । (फरकमत) उपधारा (१) को सट्टा देहायको उपधारा (१) राख्ने : "(१) प्रत्येक नागरिकलाई रोजगारीको हक हुनेछ र प्रत्येक नागरिकलाई योग्यता अनुसारको काम र काम अनुसारको ज्याला पाउने हक हुनेछ ।"

सि.नं.१९

- १६ वर्ष मुनिका किशोर, किशोरीलाई घरेलु श्रमिकको रूपमा राख्न नपाउने व्यवस्था हुनुपर्ने । काम, पारिश्रमिक र आरामको हक सुनिश्चित हुनुपर्ने ।

सि.नं. २०

- उपधारा (२) मा रहेको 'प्रजनन स्वास्थ्य' भन्ने शब्दको अगाडि 'सुरक्षित मातृत्व र' भन्ने शब्द थपगर्ने । उपधारा (४) र (५) मा रहेको 'पहुँचको हक' भन्ने शब्द नराखी स्पष्ट हकको व्यवस्था गर्नुपर्ने । अपाङ्गता भएका महिलालाई प्रजनन स्वास्थ्यमा विशेष अधिकार हुने कुरा उल्लेख गर्ने ।

सि.नं. २१

खाद्य सम्बन्धी हक भन्ने शीर्षकको सट्टा खाद्य सम्प्रभूताको हक भन्ने शीर्षक राख्नुपर्ने । (फरकमत) उपधारा (३) को सट्टा देहायको उपधारा (३) राख्ने : "(३) प्रत्येक नागरिकलाई भोक तथा कुपोषणबाट मुक्तिको हक हुनेछ ।"

सि.नं. २२

उपधारा (१) मा रहेको 'पहुँच' भन्ने शब्द हटाउनु पर्ने ।

सि.नं. २३

उपधारा (३) मा रहेको 'प्रजनन' भन्ने शब्दको अगाडि 'सुरक्षित मातृत्व र' भन्ने शब्द थपगर्ने । उपधारा (४) महिलाविरूद्ध हुने हिंसा र शोषणलाई सामाजिक अपराधको रूपमा उल्लेख गर्नुपर्ने । उपधारा (५) राज्यका सबै क्षेत्र, अङ्ग र निकायमा महिलाको जनसंख्याको आधारमा समानुपातिक र समावेशी आधारमा सहभागिताको हक सुनिश्चित गर्ने । व्याख्यात्मक टिप्पणीमा रहेको एक-तिहाई सम्बन्धी व्यवस्था हटाई समानुपातिक सहभागिता सुनिश्चित गर्ने भन्ने व्यवस्था राख्नुपर्ने ।

सि.नं. २४

उपधारा (१) मा आमा वा बाबुको थर रोज्न पाउने हक समेत थप गर्ने । उपधारा (४) मा प्राथमिक तह/माध्यमिक तह/उच्चशिक्षासम्म मातृभाषामा शिक्षा पाउने हक हुनेछ भनी उल्लेख हुनुपर्ने । (फरकमत) उपधारा (७) पछि देहायको उपधारा (८) थप्ने र अन्य उपधाराहरूको क्रम मिलाउने : "(८) प्रत्येक बालबालिकालाई सुसूचित हुन पाउने, सङ्गठित हुन पाउने र आफूहरूमाथि प्रभाव पार्ने विषयमा विचार व्यक्त गर्न पाउने हक हुनेछ । तर कुनै पनि बालबालिकालाई दलगत राजनीतिक प्रयोजनकालागि प्रयोग गर्न पाइने छैन ।" उपधारा (१०) मा 'सडक बालिका' भन्ने शब्द थप गर्नुपर्ने ।

सि.नं. २५

दलितका परम्परागत पेशामा सो समुदायको अग्राधिकारको व्यवस्था उल्लेख हुनुपर्ने । उपधारा (१) मा रहेको 'सामाजिक अपराध' भन्ने शब्दको अगाडि 'गम्भीर' भन्ने शब्द थप गर्ने । उपधारा (२) मा ७ देखि १० प्रतिशतसम्म क्षतिपूर्ति बापत दिइने कुरा उल्लेख हुनुपर्ने । उपधारा (३) मा रहेको 'विशेष अवसर' भन्ने शब्दको सट्टा 'विशेष अधिकार' भन्ने शब्द राख्नुपर्ने ।

सि.नं. २६

- राउटे र कुसुण्डाजस्ता लोपोन्मुख समुदायका महिलासँग अन्य समुदायका पुरूषले विवाह गरी जन्मेका बच्चाको थर लोपोन्मुख समुदायका महिलाकै थर कायम हुने व्यवस्था गर्नुपर्ने ।

सि.नं. २७

- किसान, जेष्ठ नागरिक, मधेसी, मुस्लिम, अल्पसंख्यक, सीमान्तकृत, अपाङ्गता भएका व्यक्तिका अधिकारहरू अलग-अलग धारामा उल्लेख हुनुपर्ने । आदिवासी जनजाति सम्बन्धी संयुक्त राष्ट्रसङ्घीय घोषणापत्र, २००७ तथा आई.एल.ओ. अभिसन्धि १६९ लगायतका अन्तर्राष्ट्रिय सन्धि, महासन्धि, घोषणापत्र आदिमा उल्लिखित अधिकारहरूलाई मौलिक अधिकारको रूपमा छुट्टै धारामा राख्नुपर्छ । (फरकमत) उपधारा (१) र (२) को सट्टा देहायको उपधारा (१) राख्ने र उपधारा क्रम मिलाउने : "(१) राजनीतिक, आर्थिक, सामाजिक, भाषिक तथा सांस्कृतिक रूपले राज्यद्वारा पछाडि पारिएका मधेसी, दलित, महिला, आदिवासी, जनजाति, मधेसी पिछडावर्ग, मुस्लिम, अल्पसंख्यक तथा सीमान्तकृत, लैङ्गिक तथा यौनिक अल्पसंख्यक समुदाय, पछाडि पारिएको क्षेत्र, अपाङ्गता भएका व्यक्ति, युवा, किसान र मजदूर वर्गलाई समानुपातिक र समावेशी सिद्धान्तको आधारमा राज्यका सबै अङ्ग, तह र निकायहरूमा जनसंख्याको आधारमा सहभागी हुने हक हुनेछ ।" (फरकमत) उपधारा (१) र (२) को सट्टा देहायको उपधारा (१) राख्ने र उपधारा क्रम मिलाउने : "(१) आर्थिक तथा सामाजिक रूपले पछाडि परेका नागरिकलाई राज्यको संरचना तथा सार्वजनिक सेवामा सहभागी हुन पाउने हक हुनेछ ।" उपधारा (४) मा रहेको 'विशेष अवसर तथा लाभ' भन्ने शब्दको सट्टा 'विशेष अधिकार' भन्ने शब्द राख्नुपर्ने । (फरकमत) उपधारा (५) मा भएको प्रावधानमा देहायको वाक्यांश थप गर्ने : " आदिवासी, जनजाति समुदायलाई आत्मनिर्णयको अधिकार सहित स्वशासन र स्वायत्तताको अधिकार तथा स्वतन्त्र, पूर्व र सुसूचित सहमतिको हक हुनेछ ।" (फरकमत) सोही उपधाराको प्रावधानमा देहायको वाक्यांश थप गर्ने : "आदिवासी जनजाति तथा स्थानीय समुदायलाई पहिचानको हक, प्राकृतिक स्रोतमाथि प्राथमिकताको हक, स्वशासनको हक तथा राष्ट्रिय अखण्डता, समग्र राष्ट्रियहित र एकतालाई सुदृढ गर्दै संविधान र प्रचलित कानूनको अधीनमा रही आत्मनिर्णयको हक हुनेछ ।" (फरकमत) सोही उपधाराको प्रावधानमा देहायको वाक्यांश थप गर्ने : "प्राकृतिक स्रोत-साधन माथि आदिवासी जनजातिको अग्राधिकारको हक हुनेछ ।" (फरकमत) उपधारा (७) मा भएको प्रावधानमा देहायको वाक्यांश थप्ने : "मधेसी समुदायलाई आत्मनिर्णयको अधिकार सहित स्वशासन र स्वायत्तताको अधिकार हुनेछ ।"(फरकमत) सोही उपधाराको प्रावधानमा देहायको वाक्यांश थप्ने : "मधेसी समुदायको आत्मनिर्णयको अधिकार सहितको स्वायत्त मधेस प्रदेश र त्यहाँको भूमि तथा प्राकृतिक स्रोतमाथि अग्राधिकारको हक हुनेछ ।"(फरकमत) उपधारा (११) को सट्टा देहायको व्यवस्था सङ्क्रमणकालीन व्यवस्था अन्तर्गत राख्ने : "लोकतन्त्र प्राप्तिको लागि भएका सबै आन्दोलन/सङ्घर्षको क्रममा जीवन उत्सर्ग गर्ने शहीदका परिवार, लोकतन्त्रका योद्धा, द्वन्द्वपीडित र विस्थापित, अपाङ्ग, घाइते तथा पीडितलाई राहत तथा न्याय प्रदान गर्ने एवम् उचित सम्मान सहित शिक्षा, स्वास्थ्य, रोजगारी, आवास र सामाजिक सुरक्षामा प्राथमिकताका साथ अवसर प्रदान गरिनेछ ।" (फरकमत) उपधारा (११) पछि देहायको उपधारा (१२) थप गर्ने : "(१२) आदिवासी र स्थानीय समुदायलाई भूमि र प्राकृतिक सम्पदामाथि अग्राधिकारको हक हुनेछ ।"

सि.नं. २८

- कानूनमा व्यवस्था भएबमोजिम भन्ने व्यवस्था हटाउनु पर्ने ।

सि.नं. ३१

- उपधारा (१) को व्यवस्थाले मौलिक हकलाई सङ्कुचित तुल्याउने हुँदा यो उपधारा हटाउनु पर्ने । उपधारा (२) मा दुई वर्षभित्र कानूनी व्यवस्था गर्ने भन्ने व्यहोरा राख्न नहुने । उपधारा (३) मा रहेको 'कारवाही चलाउन पाउने हक हुने' भन्ने शब्दको सट्टा 'उपचार प्राप्त गर्ने हक हुने' भन्ने शब्दहरु राख्नुपर्ने । दुई वर्षभित्र बन्नु पर्ने कानून बने वा बनेनन् भन्ने कुराको परीक्षण न्यायालयबाट हुनु पर्दछ (फरकमत) प्रस्तावित धारा ३१ पछि देहाय बमोजिमको धारा ३२ थप गर्ने

  **३२. मधेसी समुदायको हकः** (१) मधेसी समुदायको विकास, प्रवर्द्धन, सशक्तीकरण र समान पहुँचको लागि प्राथमिकताको साथ विशेष अवसर र विशेषाधिकारको हक हुनेछ (२) राज्य संयन्त्रका सबै अङ्ग तह र निकायमा मधेसी समुदायको समानुपातिक समावेशी सिद्धान्तको आधारमा सहभागी हुने हक हुनेछ (३) मधेसी समुदायको शिक्षा, स्वास्थ्य रोजगारी, सार्वजनिक सेवा, सरकारी सेवामा प्राथमिकताको साथै विशेष अवसर र विशेषाधिकार सहित सहभागी हुने हक हुनेछ (४) मधेसी समुदायमाथि कुनै प्रकारको विभेद वा शोषण गरिने छैन । यस्तो कार्य कानूनबमोजिम दण्डनीय हुनेछ र पीडितलाई क्षतिपूर्ति प्राप्त गर्ने हक हुनेछ । (५) मधेसी समुदायलाई आत्मनिर्णय सहितको अधिकार र स्वायत्त मधेस प्रदेश राज्यको सुनिश्चितताको साथै त्यहाँको भूमि र प्राकृतिक स्रोतमाथि अग्राधिकार हुनेछ ।

**मौलिक कर्तव्य सम्बन्धी**

सि.नं. १

- अनिवार्य सैनिक तालिमको सट्टा हाल कायम रहेको राष्ट्रिय सेवा दल तालिमलाई विस्तृत गराइनु उपयुक्त हुने । (फरकमत) खण्ड (घ) को सट्टा देहायको खण्ड (घ) राख्ने : "(घ) राष्ट्रिय विपत्ति र सङ्कटका समयमा सेवा गर्नु ।" देहायका विषयहरूलाई पनि मौलिक कर्तव्यको रूपमा राख्नुपर्ने :

  - (फरकमत) सैनिक तालिम लिनु । (फरकमत) अनिवार्य सैनिक तालिम लिनु । (फरकमत) शान्ति र सदाचारको अनिवार्य तालिम लिनु । (फरकमत) आदिवासी जनजातिको परम्परागत ज्ञान, सीप र प्रविधिको संरक्षण र प्रवर्द्धन गर्नु । (फरकमत) देश विकासमा युवाहरूले कम्तीमा एकवर्ष अनिवार्य सेवा गर्नु । महिलाले गर्ने घरेलु श्रमको सम्मान गर्ने

**राज्यका निर्देशक सिद्धान्त, नीति तथा दायित्व सम्बन्धीः**

सि.नं. २

- (फरकमत) उपधारा (१) मा रहेका "सर्वोपरि राख्दै" भन्ने शब्दहरु पछि "सबै प्रकारका विदेशी हस्तक्षेपको अन्त्य गर्दै" भन्ने शब्दहरु र "सङ्घीय एकाइहरु बीचको सम्बन्ध सञ्चालन गर्दै" भन्ने शब्दहरु पछि "आत्मनिर्णयको अधिकार सहितको" भन्ने शब्दहरु थप्ने तथा सोही उपधारामा रहेका "सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक व्यवस्था" भन्ने शब्दहरूको सट्टा "जनताको सङ्घीय गणतन्त्र" भन्ने शब्दहरु राख्ने । (फरकमत) सोही उपधारामा रहेको "सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक व्यवस्था" को सट्टा "बहुलवाद र बहुदलीय प्रतिस्पर्धामा आधारित सङ्घीय लोकतान्त्रिक गणतन्त्र" भन्ने शब्दहरु राख्ने ।

(फरकमत) सोही उपधारामा रहेको "सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक व्यवस्था" को सट्टा "समाजवादी गणतन्त्र" भन्ने शब्दहरु राख्ने ।

सि.नं. ३

- (फरकमत) खण्ड (क) को बुँदा नं. (५) मा देहायको वाक्यांश थप गर्ने : "देशको सार्वभौमसत्ता, स्वाधीनता र अखण्डताको संरक्षणको लागि युवाहरूलाई अनिवार्य सैनिक/सैनिक तालिम दिने ।" (फरकमत) खण्ड (ग) को बुँदा नं. (२) मा रहेका "लोकतान्त्रिक संस्कृतिको" भन्ने शब्दहरूको सट्टा "लोकतान्त्रिक संस्कृति र जनसंस्कृतिको" भन्ने शब्दहरु राख्ने । (फरकमत) खण्ड (घ) को बुँदा नं. (१) को सट्टा देहायको बुँदा नं. (१) राख्ने : "१. सार्वजनिक, सहकारीको विकास र विस्तार गर्दै उत्पादनका साधनहरूमा क्रमशः राज्यको स्वामित्व बढाउँदै लाने ।" (फरकमत) सोही खण्डको बुँदा १२ मा रहेका "विपन्न वर्गका नागरिकलाई विशेष प्राथमिकता दिँदै" भन्ने शब्दहरूको सट्टा "विपन्न वर्गलाई विशेष अधिकार दिई" भन्ने शब्दहरु राख्ने । (फरकमत) खण्ड (ङ) को बुँदा नं. (१) मा रहेको "वैज्ञानिक भूमिसुधार" भन्ने शब्दहरूको सट्टा "जमीन जोत्नेको अधिकार स्थापित गराउने र जमीनको हदबन्दी सहितको क्रान्तिकारी भूमिसुधार" भन्ने शब्दहरु राख्ने । (फरकमत) सोही खण्डको बुँदा नं. (१) को सट्टा देहायको बुँदा नं. (१) राख्ने : "(१) जमीन जोत्नेको हुने गरी क्रान्तिकारी भूमिसुधार गर्ने" । (फरकमत) सोही बुँदा नं. (१) मा देहायको वाक्यांश थप गर्ने : "भौगोलिक बनावट अनुसार कृषि जमीन (भूमि) हुने भएकोले समग्र वा खेतीयोग्य जमीन भूमिव्यवस्थापन सम्बन्धी कार्यको अधिकारक्षेत्र प्रदेशलाई हुनेछ" । (फरकमत) खण्ड (छ) को बुँदा नं (१) मा रहेका "स्थानीय समुदायलाई प्राथमिकता" भन्ने शब्दहरु पछि "र अग्राधिकार" भन्ने शब्दहरु थप गर्ने । (फरकमत) सोही खण्डको बुँदा नं. (१) मा रहेको प्रावधानमा "हिमाल, जल, जङ्गल, जमीन र प्राकृतिक सम्पदामाथि आदिवासी जनजातिको अग्राधिकार रहने" भन्ने शब्दहरु थप गर्ने । (फरकमत) खण्ड (ज) को बुँदा नं (३) मा रहेको "शिक्षालाई" भन्ने शब्दहरु अगाडि "जनवादी शिक्षा लागू गरी" भन्ने शब्दहरु थप्ने । (फरकमत) सोही खण्डको बुँदा नं. (६) को सट्टा देहायको बुँदा नं. (६) राख्ने : "६. शिक्षालाई राज्यले पूर्णतः बहन गर्दै जाने" । (फरकमत) सोही खण्डको बुँदा नं. (१७) पछि देहायको बुँदा नं. (१८) थप्ने : "१८. सार्वजनिक सरोकारका क्षेत्रहरु सबै राज्यले हेर्ने ।" (फरकमत) खण्ड (ञ) को बुँदा नं. (१०) को सट्टा देहायको बुँदा नं. (१०) राख्ने : "(१०) लोकतन्त्र प्राप्तिको लागि भएका सबै आन्दोलन/सङ्घर्षको क्रममा जीवन उत्सर्ग गर्ने शहीदका परिवार, लोकतन्त्रका योद्धा, द्वन्द्वपीडित र विस्थापित, अपाङ्ग, घाइतेका लागि राज्यबाट न्याय, उचित सम्मान तथा शिक्षा, स्वास्थ्य, रोजगारी, आवास तथा सामाजिक सुरक्षामा प्राथमिकताका साथ अवसर प्रदान गर्ने ।" (फरकमत) सोही खण्डको बुँदा नं (१६) मा देहायको वाक्यांश थप्ने : "प्राकृतिक साधन-स्रोतमाथि अग्राधिकार सहित आदिवासी जनजाति समुदायलाई आत्मनिर्णयको अधिकार, जातीय स्वशासन सहितको स्वायत्तता सुनिश्चित गर्ने ।"(फरकमत) सोही खण्डको बुँदा नं. (१९) मा देहायको वाक्यांश थप्ने : "राज्यले सामाजिक सुरक्षा र सामाजिक न्याय प्रदान गर्दा मधेसी, महिला, दलित, पिछडा वर्ग, आदिवासी जनजाति, मुस्लिम, अल्पसंख्यक, भूमिहीन, सुकुम्बासी, कमैया, अपाङ्गता भएका व्यक्ति र विपन्न वर्गलाई सकारात्मक विभेदका आधारमा विशेष व्यवस्था गर्ने ।"( फरकमत) खण्ड (ठ) को बुँदा नं. (१) पछि देहायको बुँदा (२) थप्ने : "२. उपेक्षित रहेको मधेस तराई क्षेत्रको ऐतिहासिक, सांस्कृतिक महत्व तथा ठूलो पहिचान

भएको मिथिलाञ्चलक्षेत्र, जनकपुरधाम, रामजानकी मन्दिर, धनुषाधाम, वराहक्षेत्र, सलहेसस्थान, सिम्रौनगढ लगायतका क्षेत्रको संरक्षण, प्रवर्द्धन एवम् प्रचार-प्रसारको विशेष व्यवस्था गर्दै राष्ट्रिय अर्थतन्त्रको महत्वपूर्ण आधारको रूपमा पर्यावरणमैत्री पर्यटन उद्योगको विकास गर्ने ।"

सि.नं. ५

- (फरकमत) उपधारा (१) मा रहेको "राष्ट्रप्रमुख" भन्ने शब्दको सट्टा "सरकारले" भन्ने शब्दहरु, "सङ्घीय व्यवस्थापिका" भन्ने शब्दहरूको सट्टा "सङ्घीय तथा सङ्घीय एकाइस्तरको संसद" भन्ने शब्दहरु राख्ने तथा सोही उपधारामा रहेका "पेश गर्नेछ" भन्ने शब्दहरूपछि "त्यस्तो प्रतिवेदनमा छलफल गरी संसदले सरकारलाई आवश्यक राय, सिफारिश वा निर्देशन दिन सक्नेछ" भन्ने वाक्यांश थप्ने ।

सि.नं. ६

- (फरकमत) "सङ्घीय व्यवस्थापिका" भन्ने शब्दहरूको सट्टा "संसद" भन्ने शब्द राख्ने ।

**ख) अवधारणापत्रतर्फ**

- पृष्ठ नं. ३३८ को दोस्रो प्याराग्राफमा रहेको मुस्लिम समुदाय हिन्दमहासागर र भारतको बाटो हुँदै रत्न मल्लको कार्यकालमा नेपालमा प्रवेश गरेको भन्ने व्यहोरा उल्लेख गर्न आवश्यक नभएको मौलिक हक र निर्देशक सिद्धान्तमा कतिपय विषय दोहोरिएकोले मिलाउनु पर्छ । एउटै विषय दुबै ठाउँमा रहँदा अन्यौल सृजना हुन्छ । देशको सार्वभौमसत्ताको संरक्षण गर्ने तथा संविधान र कानूनको पालना गर्नुपर्ने विषयमात्र कर्तव्यमा राख्न उचित हुने ।

## २.७.४. मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनमाथि समितिको सर्वसम्मतिबाट परिमार्जन गर्ने निर्णय भएका विषयहरू

**क) अवधारणापत्रतर्फ**

- प्रतिवेदनको पृष्ठ नं. ३३८ को दोस्रो प्याराग्राफमा रहेको "मुस्लिम समुदाय हिन्दमहासागर र भारतको बाटो हुँदै रत्न मल्लको कार्यकालमा नेपालमा प्रवेश गरेको" भन्ने व्यहोरा आवश्यक नभएकोले हटाउने ।

**ख) प्रारम्भिक मस्यौदातर्फ**

**१. मौलिक हक सम्बन्धमा**

- सि.नं. १ को सम्मानपूर्वक बाँच्न पाउने हकको मस्यौदा परिवर्तन गर्न नपर्ने यथावत् राख्ने । सि.नं. ३ को उपधारा (२) को प्रतिबन्धात्मक वाक्यांशमा 'आर्थिक' पछि 'शैक्षिक' शब्द थप गर्न आवश्यक नपर्ने । सि.नं. ३ को उपधारा (५) मा रहेको 'पुर्ख्यौली' भन्ने शब्दको सट्टा 'पैतृक' भन्ने शब्द राख्ने र सोको व्याख्यात्मक टिप्पणीमा पनि 'पुर्ख्यौली' भन्ने शब्दको सट्टा 'पैतृक' भन्ने शब्द राख्ने । सि.नं. ३ मा प्रयोग भएको समानताले सबै किसिमका समानतालाई समेट्ने भएकोले आर्थिक समानताको हक थप गर्न नपर्ने । सि.नं. ४ को प्रतिबन्धात्मक वाक्यांशमा केही परिमार्जन गर्न नपर्ने । सि नं. ५ को उपदफा (१०) मा गर्भवती महिलालाई थुनामा राख्दा विशेष सुविधा दिने र सि.नं. ६ मा पीडकबाट क्षतिपूर्ति पाउन नसक्ने अवस्था भए राज्यबाट क्षतिपूर्ति पाउने व्यवस्था राख्ने भनी आएका सुझाव कानून निर्माण गर्दा सम्बोधन गर्न सकिने भएकोले संविधानमा समावेश गर्न नपर्ने । सि.नं. ८ को उपधारा (२) को सट्टा देहायको उपधारा (२) राख्ने ।"(२) उपधारा (१) बमोजिम निवारक नजरबन्दमा

रहेको व्यक्तिको स्थितिको बारेमा निजका परिवारका सदस्यलाई जानकारी दिनु पर्नेछ । तर शत्रुराज्यका नागरिकको हकमा यो उपधारा लागू हुने छैन ।"सि.नं. ९ को उपधारा (१) मा रहेको "आधारमा" भन्ने शब्दावलीपछाडि "कुनै पनि स्थानमा" भन्ने शब्दहरु थप गर्ने । सि.नं. ९ को उपधारा (५) मा रहेको "सामाजिक अपराधको रूपमा" भन्ने शब्दावलीअगाडि "गम्भीर" भन्ने शब्द थप गर्ने । सि.नं. १६ को उपधारा (३) को शुरूमा "अपाङ्गता भएका र" भन्ने शब्दहरु थप गरी उपधारा (३) पछि देहायको उपधारा (४) थप गरी उपदफाको क्रम मिलाउने :

"(४) कानूनमा व्यवस्था भएबमोजिम दृष्टिविहीनहरूलाई ब्रेललिपि तथा बहिराहरूलाई साङ्केतिक भाषामा शिक्षा पाउने हक हुनेछ ।" यसको व्याख्यात्मक टिप्पणीमा देहायको व्यहोरा राख्नेः "दृष्टिविहीनहरु र बहिरा नागरिकहरूलाई उनीहरूको आवश्यकता बमोजिमको ब्रेललिपि तथा साङ्केतिक भाषामा पाठ्य सामग्री र शिक्षणसुविधा नहुने हो भने उनीहरूले आधारभूत शिक्षाबाट वञ्चित हुने अवस्था सृजना हुने भएकोले । "सि.नं. १८ को उपधारा (१) मा देहायको प्रतिबन्धात्मक वाक्यांश थप गरी उपधारा (३) हटाउनेः "तर यस उपधारा बमोजिम रोजगारी उपलब्ध नहुँदासम्म बेरोजगार नागरिकलाई कानूनमा व्यवस्था भएबमोजिम बेरोजगार भत्ता पाउने हक हुनेछ ।"सि.नं. २२ को उपधारा (२) मा रहेको 'नागरिकलाई' भन्ने शब्दपछि "आफ्नो स्वामित्वमा रहेको" भन्ने शब्दहरु थप गर्ने । सि.नं. २३ को उपधारा (३) मा रहेको "महिलालाई" भन्ने शब्दपछि "सुरक्षित मातृत्व र" भन्ने शब्दहरु थप गर्ने । सि.नं. २४ को उपधारा (२) मा रहेको 'उचित स्याहार' भन्ने शब्दपछि " सहितको प्रारम्भिक बाल विकास" भन्ने शब्दहरु थप गरी उपधारा (३) हटाउने, उपधारा (३) को व्याख्यात्मक टिप्पणी उपधारा (२) मा राख्ने र मातृभाषामा शिक्षा पाउने हक सि.नं. १६ मा नै प्रत्याभूत भएकोले दोहोरिएको उपधारा (४) हटाउने । सि.नं. २४ पछि देहायको सि.नं. २५ राखी धाराहरूको क्रम मिलाउनेः

**"२५. ज्येष्ठ नागरिकको हकः** प्रत्येक ज्येष्ठ नागरिकलाई कानूनमा व्यवस्था भएबमोजिम सामाजिक सुरक्षाको हक हुनेछ ।" सि.नं. २५ मा प्रस्तावित दलित समुदायको हकको सट्टामा देहायको व्यवस्था राख्ने ।

**"२५. दलित समुदाय सम्बन्धी हकः** (१) दलित समुदायका व्यक्तिलाई निजामती सेवा, सेना, प्रहरी लगायतका राज्यका सबै निकाय र क्षेत्रहरूमा समानुपातिक आधारमा रोजगारी प्राप्त गर्ने हक हुनेछ । सार्वजनिक सेवा लगायतका रोजगारीका अन्य क्षेत्रमा दलित समुदायको सशक्तिकरण, प्रतिनिधित्व र सहभागिताको लागि कानूनद्वारा विशेष व्यवस्था गरिनेछ । (२) दलित विद्यार्थीलाई प्राथमिकदेखि उच्चशिक्षासम्म छात्रवृत्ति सहित निःशुल्क शिक्षाको व्यवस्था गरिनेछ । प्राविधिक र व्यावसायिक उच्चशिक्षामा दलितको लागि कानूनद्वारा विशेष व्यवस्था गरिनेछ । (३) दलित समुदायलाई स्वास्थ्य र सामाजिक सुरक्षा प्रदान गर्न कानूनद्वारा विशेष व्यवस्था गरिने छ । यस्तो व्यवस्था गर्दा विपन्न दलितलाई प्राथमिकता दिइनेछ । (४) दलित समुदायलाई आफ्नो परम्परागत पेशा, ज्ञान, सीप र प्रविधिको प्रयोग, संरक्षण र विकास गर्ने हक हुनेछ । राज्यले दलित समुदायका परम्परागत पेशासँग सम्बन्धित आधुनिक व्यावसायमा उनीहरूलाई प्राथमिकता दिई सोका लागि आवश्यक पर्ने सीप र स्रोत उपलब्ध गराउनेछ । (५) राज्यले भूमिहीन दलितलाई एक पटक जमीन उपलब्ध गराउनु पर्नेछ । (६) आवासविहीन दलितको लागि राज्यले बसोबासको व्यवस्था गर्नेछ । (७) सङ्घीय प्रादेशिक र स्थानीयतहका सबै राजनीतिक संरचनामा

जनसंख्याको आधारमा दलितको समानुपातिक प्रतिनिधित्वको व्यवस्था गरी सङ्घीय र प्रादेशिक संरचनामा क्रमशः तीन र पाँच प्रतिशत थप प्रतिनिधित्वको लागि कानूनद्वारा आवश्यक व्यवस्था गरिनेछ । (८) दलित समुदायले यस धारा बमोजिम प्राप्त गर्ने अधिकारहरु पहाडी दलित, मधेसी दलित र दलित महिलाले समानुपातिक आधारमा प्राप्त गर्नेछन् ।" सि.नं. २७ मा रहेको सामाजिक न्यायको हक अन्तर्गतको उपधारा (२) को सट्टा देहायको उपधारा (२) राख्ने: "(२) उपधारा (१) बमोजिमको हकको उपभोग गर्दा आर्थिक रूपले विपन्न नागरिकलाई प्राथमिकता पाउने हक हुनेछ ।"सि.नं. २८ मा रहेको "जेष्ठ नागरिक" भन्ने शब्दहरु हटाउने ।सि.नं ३१ को मौलिक हकको कार्यान्वयन र संवैधानिक उपचारको हक अन्तर्गतको उपधारा (३) लाई उपधारा (१) मा राख्ने र सोको व्यहोरामा रहेको "कारवाही चलाउन" शब्दको सट्टा "उपचार" भन्ने शब्द राख्ने । सोही हकको उपधारा (१) लाई उपधारा (३) मा राख्ने । सि.नं ३१ को मौलिक हकको कार्यान्वयन र संवैधानिक उपचारको हक अन्तर्गतको उपधारा (२) मा रहेको "कानूनी व्यवस्था" भन्ने शब्दहरूको सट्टा "मनासिव माफिकको कानूनी व्यवस्था" भन्ने शब्दहरु राख्ने ।

### ३. मौलिक कर्तव्य सम्बन्धमा

- सि.नं. १ मा देहायका कर्तव्यमात्र राख्ने, अन्य विषय राख्न आवश्यक नपर्ने ।

क) राष्ट्रप्रति निष्ठावान् हुँदै नेपालको राष्ट्रियता, सार्वभौमसत्ता र अखण्डताको रक्षा गर्न

ख) संविधान र कानूनको पालना गर्न

ग) राष्ट्रले चाहेका बखत अनिवार्य सेवा गर्नु ।

### ४. राज्यका निर्देशक सिद्धान्त, नीति तथा दायित्व सम्बन्धमा

- सि.नं. ३ को खण्ड (छ) को बुँदा नं. २ मा रहेको नीति कृषि र भूमि सम्बन्धी रहेकोले त्यसलाई खण्ड (ङ) अन्तर्गत बुँदा नं. ३. पछि बुँदा नं. ४. गरी राख्ने । सि.नं. ३ को खण्ड (ज) को बुँदा नं. ३ मा रहेको "व्यावहारिक" शब्दपछि "एवं जनमुखी" भन्ने शब्द थप गर्ने । सि.नं. ३ को खण्ड (झ) को बुँदा नं. २ पछि देहायको बुँदा नं. ३ राखी अन्य बुँदाहरूको क्रम मिलाउने :

'३. राज्यले दलित समुदायलाई सबै औद्योगिक प्रतिष्ठानहरूमा समानुपातिक ढङ्गले रोजगारी उपलब्ध गराउने नीति अवलम्बन गर्नेछ ।' सि.नं. ३ को खण्ड (ञ) को बुँदा नं. १० मा रहेको व्यवस्थालाई सबै समितिको प्रतिवेदनमा प्रयोग गर्न उपयुक्त हुने साझा र एकीकृत शब्दावली सहमतिबाट तय भएबमोजिम राख्ने । सि.नं. ३ को खण्ड (ञ) को बुँदा नं. १६ मा रहेका 'सम्वर्द्धन गरी' भन्ने शब्दहरूलाई 'सम्वर्द्धन गर्ने' भनी मिलाउने र त्यसपछि रहेको अंशलाई खण्ड (छ) को बुँदा नं. १ मा मिलान गर्ने । सि.नं. ३ को खण्ड (ठ) अन्तर्गत एउटामात्र नीति रहेकोले सोको व्यहोराको शुरूमा रहेको १.अङ्क हटाई, सोही व्यहोराको "सांस्कृतिक" भन्ने शब्दपछि "धार्मिक" भन्ने शब्द थप गर्ने । सि.नं. ५ मा रहेको "राष्ट्रप्रमुखले प्रत्येक वर्ष सङ्घीय व्यवस्थापिकासमक्ष पेश गर्नेछ" भन्ने शब्दहरूको सट्टा "प्रत्येक वर्ष नेपाल सरकारले तयार गरी राष्ट्रप्रमुखसमक्ष पेश गर्नेछ र राष्ट्रप्रमुखले त्यस्तो प्रतिवेदन प्रधानमन्त्री मार्फत् सङ्घीय व्यवस्थापिकासमक्ष पेश गर्ने व्यवस्था गर्नेछ" भन्ने शब्दहरु राख्ने । व्यवस्थापिकाको नाम अन्तिम रूपमा जे तय हुन्छ त्यही नै यो प्रतिवेदनमा पनि प्रयोग गरी मिलान गर्ने ।

## २.८. राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदन सम्बन्धमा

### २.८.१. यो समितिको प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरू

- नेपालको भूपरिवेष्ठित भौगालिक अवस्था, यो हैसियतमा अन्तर्राष्ट्रिय कानूनबमोजिम प्राप्त गर्नुपर्ने अधिकार र सुविधा तथा यसबाट नेपालको राष्ट्रियहितमा परिरहेको र पर्न सक्ने प्रभावबारे चर्चा नभएको । नेपालको नागरिकता र राष्ट्रियहित बीचमा रहेको अन्तरसम्बन्ध, संविधान जारी भएपछि नेपाली नागरिकताको प्राप्ति र समाप्ति, अङ्गीकृत नागरिक महत्वपूर्ण पद र जिम्मेवारीमा पुग्न सक्ने वा नसक्ने । सक्ने भए त्यसका पूर्वशर्तहरू, दोहोरो नागरिकता र आप्रवासलाई स्वीकार गरिने हो वा होइन भन्ने सम्बन्धमा स्पष्ट व्यवस्था ।

### २.८.२. अरू समितिको कार्यक्षेत्रभित्र परेका विषय यो समितिको प्रतिवेदनमा दोहोरिएको

**संवैधानिक समितिको कार्यक्षेत्रभित्र पर्ने विषयहरू**

- प्रारम्भिक मस्यौदाको क्र.सं. १ मा रहेको प्रस्तावना । क्र.सं. २ मा रहेको सार्वभौमसत्ताको प्रयोगविधि, । क्र.सं. १० मा रहेको नेपाली राजदूत र विशेष प्रतिनिधि सम्बन्धी व्यवस्था । क्र.सं. १७ मा रहेको सङ्कटकालीन अधिकार सम्बन्धी व्यवस्था । क्र.सं. १९ मा रहेको राजनीतिक दल सम्बन्धी व्यवस्था । क्र.सं. २० मा रहेको जनमतसङ्ग्रह सम्बन्धी व्यवस्था ।

**मौलिक हक र निर्देशक सिद्धान्त समितिको कार्यक्षेत्रभित्र पर्ने विषयहरू**

- क्र.सं. ४ मा रहेको मौलिक हक सम्बन्धी व्यवस्था । क्र.सं. ५ मा रहेको नागरिकको कर्तव्य सम्बन्धी व्यवस्था । क्र.सं. ६ मा रहेको राज्यको दायित्व सम्बन्धी व्यवस्था । क्र.सं. ७ मा रहेको राज्यका निर्देशक सिद्धान्त सम्बन्धी व्यवस्था । क्र.सं.८ मा रहेको राज्यका नीति सम्बन्धी व्यवस्था ।

**राज्य पुनसंरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको कार्यक्षेत्रभित्र पर्ने विषयहरू**

- क्र.सं. १८ मा रहेको आत्मनिर्णयको अधिकार ।

### २.८.३. सभामा छलफल हुँदा मतैक्यता हुन नसकेका विषयहरू

**क) प्रारम्भिक मस्यौदातर्फ**

- क्र.सं. ३ मा रहेको राष्ट्रियहितको परिभाषा नीतिगतभन्दा विवरणात्मक बढी भएको, निषेधात्मक तवरले राखिएको, उपधारा (२) र (३) मा 'दण्डनीय हुने' भन्ने विषय अनुपयुक्त भएको । क्र.सं. ११ मा रहेको सन्धिसम्पन्न गर्ने अधिकारको उपधारा (२) मा रहेको सन्धिसम्पन्न गर्दा प्रदेशको सहमति लिने र उपधारा (३) मा रहेको केन्द्रको सहमतिमा प्रदेशले करारजन्य संझौता गर्न सक्ने विषय । क्र सं. १२ मा रहेको सन्धि वा सम्झौता गर्न नसकिने व्यवस्था । क्र.सं. १३ मा रहेको सन्धि वा सम्झौताको अनुमोदन सम्बन्धी व्यवस्थाको उपधारा (२) मा तत्काल कायम सम्पूर्ण सदस्यहरूको दुईतिहाईबाट अनुमोदन गर्ने कुरा बढी कठोर भएको, उपधारा (३) मा साधारण बहुमतबाट गर्न सकिने कुरा बढी लचिलो भयो भन्ने विषय तथा व्यापक, गम्भीर र दीर्घकालीन असरको परिभाषा स्पष्ट हुनुपर्ने विषय । क्र.सं.१४ मा रहेको विषय संविधानमा राख्न आवश्यक नरहेको । क्र.स.१५ मा रहेको विषय संविधानमा रहनु पर्ने प्रकृतिको नभई कानून वा

नियमावलीमा रहन सक्ने विषय भएको । क्र.सं. १६ मा रहेको जलस्रोत उपयोगका विषयमा स्वदेशी व्यक्ति वा संस्था बाहेकका अन्य व्यक्ति वा संस्थासँग लगानी संझौता गर्नु अघि केन्द्रीय व्यवस्थापिकाबाट स्वीकृति प्राप्त गर्नुपर्ने विषय । क्र.सं. २१ मा रहेको भारतसँगको सिमानाको स्थायी सीमाङ्कन गर्ने विषय र संविधानमा तिथिमिति सहितको सन्धिको उल्लेखन । क्र.सं. २२ मा रहेको राष्ट्रिय सुरक्षा परिषद्को संरचना, उत्तरदायित्व र प्रतिवेदनको प्रस्तुति । क्र.सं. २३ मा रहेको सैनिकसेवा आयोगको अलग व्यवस्था कानूनले गर्न सक्ने सम्बन्धमा । क्र.सं. २४ को उपधारा (२) लगायत अवधारणापत्र र मस्यौदाको ठाँउ ठाँउमा रहेको जनमुक्ति सेना भन्ने शब्दावली र समानुपातिक भन्ने शब्दावली सम्बन्धमा । सोही सेना सम्बन्धी व्यवस्था अन्तर्गत उपधारा (४) र (५) मा प्रधानसेनापतिको नियुक्ति र पदमुक्तिसम्बन्धमा रहेको व्यवस्था । क्र.सं.२५, २६, २७ र २८ मा रहेका अर्ध सैनिक बल, गुप्तचर सङ्गठन, प्रहरी सम्बन्धी व्यवस्था र सरकारप्रति उत्तरदायी रहने भन्ने व्यवस्थाहरु संविधानमा राख्न नपर्ने कानूनबाट गर्न सकिने भन्ने विषय । प्रदेशमा मात्र नभएर सङ्घीय प्रहरी ईकाइ समेत आवश्यक पर्ने विषय ।

**ख) अवधारणापत्रतर्फ**

- अवधारणापत्रको पृष्ठ १४७ को बुँदा २.७.१४ को पहिलो अनुच्छेदमा रहेको पहिलो वाक्य जसमा 'नेपालको तत्कालीन राजतन्त्र तथा संवैधानिक व्यवस्थाको विरोधमा वि.सं. २०५२ फाल्गुन १ देखि ने.क.पा.माओवादीद्वारा सञ्चालित जनयुद्धको परिणाम स्वरुप नेपालमा राजनीतिक परिवर्तनका साथै नेपालको अन्तरिम संविधान, २०६३ जारी भएको हो' भन्ने व्यहोरा । अवधारणापत्रको पृष्ठ १५१ को अन्तिम हरफ र १५२ को पहिलो हरफमा रहेको '१८ वर्ष उमेर पुगेका, ३५ वर्ष ननाघेका हरेक सक्षम नागरिकलाई प्रथमपटक ९ महिना र त्यस पछि प्रत्येक २ वर्षको अन्तरालमा एक महिनाको पुनर्ताजगीको अनिवार्य सैनिक तालिम र सेवा गर्नुपर्ने' भन्ने व्यहोरा ।

## २.८.४. राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदनमाथि समितिको सर्वसम्मतिबाट परिमार्जन गर्ने निर्णय भएका विषयहरू

- राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदनसाथ संलग्न प्रारम्भिक मस्यौदाको क्र.सं. १, २, १०, १७, १९ र २० मा रहेका विषयहरु संवैधानिक समितिको कार्यक्षेत्रमा पर्ने देखिएको, क्र.सं. ४, ५, ६, ७ र ८ मा रहेका विषयहरु मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको कार्यक्षेत्रभित्र पर्ने देखिएको र क्र.स. १८ रहेको विषय राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समितिको कार्यक्षेत्रभित्र पर्ने देखिन्छ । राष्ट्रियहितको संरक्षण समितिको मस्यौदामा समितिको दृष्टिले सम्बन्धित भागमा राख्न सिफारिश गरिएका विषयलाई संवैधानिक समितिले महत्वपूर्ण सन्दर्भ सामग्रीको रुपमा ग्रहण गरी सम्बन्धित विषयलाई पूर्णता दिने क्रममा ध्यान दिन सुझाव दिने । समितिबाट उल्लिखित विषयमा सभामा छलफल हुँदा उठेका कुराहरु सम्बन्धित समितिको मस्यौदाबाट निर्णय भई सम्बोधन हुने भएकोले समितिले यहाँ छलफल र निर्णय गरेको छैन ।
- मस्यौदाको क्र.सं. ३ मा राष्ट्रियहित सम्बन्धी व्यवस्थामा राष्ट्रियहितका आधारभूत विषय सहितको परिभाषामात्र समावेश गर्न उपयुक्त हुने भएकोले हालको मस्यौदाको पहिलो हरफमा रहेको सार्वभौमसत्ता र राष्ट्रिय अखण्डता पछि "राष्ट्रिय स्वाधीनता" भन्ने शब्दहरु थप गर्ने, दोस्रो हरफमा रहेको राष्ट्रको स्वतन्त्रतापछि "राष्ट्रिय एकता सबै नेपालीको हक, हित र स्वाभिमानको संरक्षण" भन्ने शब्दहरु थप गर्ने, नवौं हरफमा रहेको जातिपछि "धर्म" शब्द थप गर्ने, एघारौं हरफको समतामूलक समाजको निर्माण गर्नेपछि "नेपाली

श्रम र पुँजीको संरक्षण, खाद्य सुरक्षा, उर्जा सुरक्षा र स्वच्छ पानीको संरक्षण गर्ने" भन्ने शब्दहरु थप गरी सो भावना प्रतिविम्बित हुने गरी मस्यौदा गर्ने । साथै हालको मस्यौदाको दोस्रो र तेस्रो हरफमा रहेको "पहिचान, सहमति र सहकार्यको आधारमा" भन्ने शब्दहरु, आठौं हरफमा रहेको "यातायात, सूचना र प्रविधिको विकास" भन्ने शब्दहरु, व्याख्यात्मक टिप्पणीको सातौं हरफमा रहेको "यसको ठोस परिभाषासमेत गर्न कठिन छ ।" भन्ने शब्दहरु राख्न आवश्यक नभएकोले हटाउने ।

- क्र.सं. १२ मा सन्धिसम्पन्न गर्न नसकिने विषयको नकारात्मक सूची राखिएकोमा संविधानमा त्यस्तो सूची राख्न आवश्यक नरहेको, यो बुँदामा उल्लिखित खण्ड (क) को व्यवस्थालाई मात्र धारा १३ को व्यवस्था अन्तर्गत उपधारा (३) पछि नेपालको अन्तरिम संविधान, २०६३ को धारा १५६(४) अनुरूपको भाषा र तरिकाले अलग्गै उपधारामा राख्ने । क्र.सं. १३ को उपधारा (२) को पाँचौं हरफमा रहेको "तत्काल कायम रहेका सम्पूर्ण सदस्यहरूको" भन्ने शब्दहरु को सट्टामा "उपस्थित सदस्यहरूको" भन्ने शब्दहरु राख्ने र उपधारा (३) र (४) लाई नेपालको अन्तरिम संविधान २०६३ को धारा १५६ मा भएसरहको व्यवस्था अनुरूप मस्यौदा गरी अरू विषयहरु सन्धि सम्बन्धमा विधायिकाबाट निर्मित कानूनले नियमित गर्ने गरी राख्ने । क्र.सं. १४.मा रहेको व्यवस्था संविधानमा राख्न उपयुक्त नहुने हुँदा उक्त व्यवस्था विधायिकाबाट निर्मित कानूनले नियमित गर्ने गरी राख्ने । क्र.सं.१५. को व्यवस्था संविधानमा उल्लेख गर्नु पर्ने महत्वको नभएकोले सन्धि सम्बन्धी विधायिका निर्मित कानून वा विधायिकाको कार्यविधि सम्बन्धी नियमावली (Rules of Procedure) बाटै व्यवस्थित हुन सक्ने कारणले संविधानमा समावेश गर्न नपर्ने । क्र.सं. २१ मा रहेको नेपालको अन्तर्राष्ट्रिय सिमाना सम्बन्धी व्यवस्थाको लागि उपधारा (१) को व्यवस्था पर्याप्त रहेकोले उपधारा (२) आवश्यक नपर्ने, साथै यो उपधारा (२) मा उल्लेख भएको कुरा अवधारणापत्र र व्याख्यात्मक टिप्पणीबाट नै स्पष्ट भइरहेको छ । सि.नं. २१ को व्याख्यात्मक टिप्पणीको पेज १९ को तेस्रो हरफमा रहेको "सन् १८७५ को सन्धि" भन्ने शब्दपछि " लगायत" भन्ने शब्द थप गर्दा कुनै ऐतिहासिक दस्तावेज यहाँ उल्लेख गर्न छुट भएको भए पनि सबैलाई आधार लिएर सिमाना व्यवस्थापन गर्न सकिने हुन्छ ।
- क्र.सं. २२ मा रहेको राष्ट्रिय सुरक्षा परिषद् सम्बन्धी व्यवस्थाको उपधारा (१) को तेस्रो हरफमा रहेको सेनाको परिचालन पछि कमा (,) राख्ने र "नियन्त्रण" भन्ने शब्द थप गर्ने, । सोही उपधाराको खण्ड (च) आवश्यक नरहेकोले हटाउने । सोही धाराको उपधारा (२) र (४) मा रहेको विषय कानूनमा रहने विषय भएकोले संविधानमा राखिरहन नपर्ने । सोही धाराको उपधारा (३) मा रहेको विषयलाई देहाय वमोजिम परिमार्जन गर्न उपयुक्त हुने - "रक्षा मन्त्रालयको सचिवले राष्ट्रिय सुरक्षा परिषद्को सचिव भई काम गर्नेछ" सोही धाराको अन्तमा देहायको उपधारा थप गर्ने आवश्यक देखिएको । "(३) राष्ट्रिय सुरक्षा परिषद्ले आफ्नो वार्षिक प्रतिवेदन राष्ट्रप्रमुखसमक्ष पेश गर्नेछ र निजले उक्त प्रतिवेदन मन्त्रिपरिषद्मार्फत् व्यवस्थापिकासमक्ष पेश गर्ने व्यवस्था गर्नेछ ।
- क्र.सं. २४ मा रहेको नेपाली राष्ट्रिय सेना सम्बन्धी व्यवस्थाको उपधारा (१) को व्यवस्थाको सट्टा देहाय वमोजिमका व्यवस्थाहरु गर्न उपयुक्त हुने : "(१) देशको सार्वभौमसत्ता, अखण्डता, स्वतन्त्रता र राष्ट्रिय एकताको रक्षाका लागि लोकतान्त्रिक सिद्धान्तप्रति प्रतिबद्ध समानुपातिक, समावेशी र राष्ट्रिय स्वरूपको नेपाली सेनाको एक सङ्गठन रहनेछ । "सोही धाराको उपधारा (१) पछि देहायका उपधारा (२) र (३) थप गरी उपधाराको क्रम मिलाउने :-"(२) नेपाली सेनालाई राष्ट्रिय स्वरूप प्रदान गर्न

र समावेशी बनाउन मधेसी, आदिवासी जनजाति, दलित, महिला, पिछडिएका क्षेत्र लगायतका जनताको प्रवेश समानता र समावेशी सिद्धान्तका आधारमा कानूनमा व्यवस्था गरी सुनिश्चित गरिनेछ । (३) नेपाल सरकारले नेपाली सेनालाई कानूनमा व्यवस्था भएबमोजिमको विकास निर्माण र प्राकृतिक प्रकोप नियन्त्रण लगायतका अन्य कार्यमासमेत लगाउन सक्नेछ ।" सोही धाराको उपधारा (२) मा २ वटा अलग अलग विषय एकै स्थानमा रहेकोमा नेपाली सेना लोकतान्त्रिक सिद्धान्तप्रति प्रतिबद्ध, सहभागितामूलक तथा समावेशी स्वरूपको हुनुपर्ने विषय उपधारा (१) मा नै समावेश भई सकेकोले यसमा राख्न नपर्ने । उपधारा (६) को व्यवस्था सि.नं. २२ (१) को राष्ट्रिय सुरक्षा परिषद् सम्बन्धी व्यवस्थामा समावेश भईसकेकोले राखिरहन नपर्ने । उपधारा (७) को अन्तमा रहेको "केन्द्रीय व्यवस्थापिकाको विशेष सुरक्षा समितिमा" भन्ने शब्दहरूको सट्टा "सङ्घीय व्यवस्थापिकामा" भन्ने शब्दहरु राख्ने ।

- क्र.सं.२५, २६, २७ र २८ मा रहेका अर्ध सैनिक बल, गुप्तचर सङ्गठन, प्रहरी सम्बन्धी व्यवस्था र सरकारप्रति उत्तरदायी रहने भन्ने व्यवस्थाहरूको मस्यौदामा रहेजस्तो अलग-अलग विस्तृत व्यवस्था संविधानमा रहनु पर्ने देखिदैन । त्यसको सट्टामा एउटै बुँदामा देहायको व्यवस्था र व्याख्यात्मक टिप्पणी राख्नु पर्याप्त हुनेछ,-

| क्र.सं. | विषयवस्तु | संविधानमा राख्ने प्रस्तावित व्यवस्था | व्याख्यात्मक टिप्पणी |
|---|---|---|---|
| २५ | नेपाल प्रहरी, अर्धसैनिक बल र गुप्तचर सङ्गठन सम्बन्धी व्यवस्थाः | (१) केन्द्रमा सङ्घीय प्रहरी, सङ्घीय अर्धसैनिक बल र सङ्घीय गुप्तचर संस्थाको सङ्गठन रहनेछ ।<br><br>(२) प्रत्येक सङ्घीय ईकाईमा प्रहरी सङ्गठन रहनेछ ।<br><br>(३) सुरक्षानिकाय सम्बन्धी अन्य व्यवस्था कानूनद्वारा निर्धारण भए वमोजिम हुनेछ । | सङ्घीय एकाइहरूमा शान्तिसुरक्षा कायम गर्न नागरिकको जीउधनको रक्षा गर्न, कानूनको पालना गराउन र अपराधको अनुसन्धान र नियन्त्रण गर्नको लागि प्रत्येक एकाइमा अलग-अलग प्रहरी सङ्गठन रहने भए तापनि राष्ट्रिय र अन्तर्राष्ट्रिय महत्वका र सो स्तरमा हुने सङ्गठित र गम्भीर प्रकृतिका अपराधहरूको प्रभावकारी अनुसन्धान गर्ने र त्यसका लागि आवश्यक क्षेत्रीय तथा विश्वव्यापी सहयोग आदान प्रदान गर्न, राष्ट्रको आन्तरिक सुरक्षासँग सम्बन्धित अन्य विषयहरूका अतिरिक्त अपराध र अपराधीहरूको सूचनाको अभिलेखन, व्यवस्थापन, विश्लेषण तथा समन्वय केन्द्रको रूपमा काम गर्न, विधिविज्ञान, प्रतिआतङ्ककारी कारवाही दस्ता, होस्टज नेगोशिएसन जस्ता विशिष्टीकृत विज्ञसेवा उपलब्ध गराउन, राष्ट्रिय अपराध नियन्त्रणसँग सम्बन्धित संयन्त्र र इन्टरपोलसँग समन्वय गर्न, व्यावसायिक प्रहरी जनशक्ति तयार गर्न र सबै सङ्घीय एकाइका प्रहरी सङ्गठनहरूलाई एकसूत्रमा बाँधी सङ्गठन बीचको आपसी सम्बन्ध सुमधुर बनाउनका लागि सङ्घीय प्रहरी सङ्गठन पनि अपरिहार्य हुने भएकोले यस सम्बन्धी व्यवस्था गरिएको छ ।<br><br>साथै सङ्घीय अर्धसैनिक बल र सङ्घीय गुप्तचर सङ्गठन केन्द्रमा रहने गरी व्यवस्था गरिएको छ ।<br>सङ्घीय प्रहरी सङ्गठन अन्तर्गत रहने विभिन्न प्रकृतिका व्युरोहरू, त्यसको सञ्चालन, सङ्घीय अर्धसैनिक बल र सङ्घीय गुप्तचर सङ्गठनको सङ्घीय एकाइ स्तरमा रहने नेटवर्क र सोको सञ्चालन लगायतका अन्य आवश्यक व्यवस्था कानूनद्वारा निर्धारण गर्न सकिने व्यवस्था गरिएको छ । |

**अवधारणापत्रमाथिको सुझाव**

- छलफलमा उठेका जिज्ञासाको जवाफ दिने क्रममा माननीय सभापतिले अवधारणापत्रको भाग २ को २.१ को पहिलो अनुच्छेदमा देहायको व्यहोरा थप गर्ने प्रस्ताव गर्नु भएको र सो राख्दा अवधारणापत्रमा अझ स्पष्टता आउने भएकोले सो अंश थप गर्ने :–

  "**ऐतिहासिक जनआन्दोलनको पृष्ठभूमि र औचित्य :** शदीयौंदेखि देशमा विद्यमान वर्गीय, जातीय, क्षेत्रीय, लैङ्गिक विभेद, निरङकुशताका विरूद्ध र लोकतन्त्र, शान्ति, अमनचैन, समुन्नति र समानताका लागि लखन थापा, गंगालाल श्रेष्ठ, धर्मभक्त माथेमा, शुक्रराज शास्त्री र दशरथ चन्द लगायत हजारौं ज्ञात अज्ञात शहीदहरूले गरेको प्राणको आहुति, वि.सं.२००७, वि.सं.२०३६ र वि.सं. २०४६ सालका जनआन्दोलनहरु र राजा ज्ञानेन्द्रले वि.सं. २०५९ आश्विन १८ गते चालेको असंवैधानिक, प्रतिगामी कदमका विरूद्ध तत्कालीन सात राजनीतिक दलहरूको अगुवाईमा परिचालित ऐतिहासिक आन्दोलनहरु र १२ बुँदे समझदारीपश्चात् सात राजनीतिक दल र तत्कालीन ने.क.पा. (माओवादी) को संयुक्त आयोजनामा सञ्चालित ०६२/०६३ को १९ दिने ऐतिहासिक शान्तिपूर्ण जनआन्दोलनको बलमा सामन्तवादी राजतन्त्रको अन्त र सङ्घीय लोकतान्त्रिक गणतन्त्रको स्थापना सम्भव भई राज्यको पुनर्संरचना गरी नयाँ नेपाल निर्माण गर्न र समुचित राष्ट्रियहितका पक्षमा नीतिनिर्माण गर्न ऐतिहासिक मोडमा उभिएका छौं । यस महान् अभियानहरूमा शहादत प्राप्त गर्ने सम्पूर्ण आदरणीय शहीदहरु र घाइते एवं बेपत्ता योद्धाहरु यसका प्रेरणादायी शक्तिहरु हुन् । "अवधारणापत्रमा नेपालको भूपरिवेष्ठित भौगालिक अवस्था, यो हैसियतमा अन्तर्राष्ट्रिय कानूनबमोजिम प्राप्त गर्नुपर्ने अधिकार र सुविधा तथा यसबाट नेपालको राष्ट्रियहितमा परिरहेको र पर्न सक्ने प्रभावबारे चर्चा नभएको र छलफलमा उठेका जिज्ञासाको जवाफ दिने क्रममा माननीय सभापतिले यो तथ्यलाई स्वीकार गरी देहायको व्यवस्था थप गर्ने प्रस्ताव राख्नु भएकोले अवधारणापत्रको भाग २ को २.१.२ मा सो अंश थप गर्ने : "**भूपरिवेष्ठित राष्ट्र सम्बन्धी :** विश्वमा ४३ वटा राष्ट्र भूपरिवेष्ठित रहेका छन् । जुन समुद्रसँग प्रत्यक्ष पहुँचबाट बञ्चित रहेका छन् । यस्ता राष्ट्रहरु सामुद्रिक बन्दरगाहसम्म पुग्नको लागि छिमेकी राष्ट्रमा भर पर्नुपर्ने हुन्छ । त्यसमध्ये नेपाल पनि एक भूपरिवेष्ठित राष्ट्र हो । भूपरिवेष्ठित राष्ट्रहरूका केही अधिकारलाई UN Convention on the Law of Sea, 1982 ले सुनिश्चित गरेको छ । यो अभिसन्धि सन् १९९४ देखि कार्यान्वयनमा आइसकेको छ । हालसम्म यसका पक्ष राष्ट्रहरु १५८ बनिसकेका छन् । नेपाल, भारत र चीनसमेत यसका पक्ष राष्ट्र बनेका छन् भने अमेरिकाले यस महासन्धिलाई अझसम्म अनुमोदन गरेको छैन । यो अभिसन्धिले भूपरिवेष्ठित राष्ट्रलाई निम्न अधिकारहरु प्रदान गरेको छ :– १. समुद्रसँग निर्बाध रूपमा आवतजावत गर्ने (पारवहन स्वतन्त्रता, यातायातका साधन र सुविधाहरु र सञ्चार) । २. ट्रान्जिट राष्ट्रको बन्दरगाहमा समान व्यवहार पाउने । ३. समुद्रीतटसम्म निर्बाध पुहँच । ४. अन्तर्राष्ट्रिय व्यवस्था (International Regime) मा सहभागी हुन पाउने अधिकार ।

  सन् १९८२ को सामुद्रिक कानूनले भूपरिवेष्ठित राष्ट्रहरूको समुद्रसँग निर्बाधरूपमा पहुँचको अधिकारको उल्लेख गरेको छ तापनि यो अधिकारको उपयोग समुद्रवेष्टित राष्ट्रमा भर पर्नु परेको छ । यो सार्वभौम समानताको आधारमा (Principle of sovereign equality) व्यवहार गर्ने सिद्धान्तमा आधारित छ । यसका लागि द्विपक्षीय सन्धिको आवश्यकता हुन्छ । नेपालको पारवहन सञ्चालन खास गरी नेपाल भारत पारवहन सन्धि २००२ बाट मुख्य रूपमा हुँदै आएको छ । पारवहन सन्धि समय-समयमा परिमार्जन र पुनरावलोकन हुँदै आइरहेको छ । यस सन्धिको माध्यमबाट भारतले नेपाललाई १५ वटा पारवहन

रूट प्रदान गरेको छ । भारतले उपलब्ध गराएका सुविधा अन्तर्गत कलकत्ता र हल्दिया बन्दरगाह मुख्य रूपमा रहेका छन् र यसका अतिरिक्त मुम्बई र कन्दालासमेत नेपालले उपयोग गर्दै आएको छ । चीनसँगको कोदारीमार्ग उपयोग गर्न सकिने भए पनि भौगोलिक अवस्थाको कारणबाट भारतसँगको पारवहन मार्ग नै उपयोग गर्नुपर्ने बाध्यता नेपालको रहेको छ । द्विपक्षीय सन्धिको अभावमा १९८२ को सामुद्रिक कानून सम्बन्धी महासन्धिले भूपरिवेष्ठित राष्ट्रहरूलाई प्रदान गरेका अधिकार सीमित र प्रायः निष्प्रयोजन हुन गएको छ । तसर्थ महासन्धिले प्रदान गरेका अधिकार राष्ट्रियहित अनुकूल सुनिश्चित गरी उपयोग गर्ने दिशामा नेपालले कूटनीतिक र द्विपक्षीय सन्धिका माध्यमबाट महासन्धिले प्रदान गरेको अधिकार उपयोग गर्ने दिशामा नेपालले पहल र प्रयत्न गर्नु पर्छ ।" अवधारणापत्रको पृष्ठ १४७ को बुँदा २.७.१४ को पहिलो अनुच्छेदमा रहेको पहिलो वाक्य अपूर्ण रहेको अधिकाशं माननीय सदस्यहरूको भनाइ रहेको र त्यसलाई स्वीकार गरी छलफलमा उठेका जिज्ञासाको जवाफ दिने क्रममा माननीय सभापतिले उक्त स्थानमा देहाय बमोजिमको अंश थप गर्न प्रस्ताव गर्नु भएको र त्यसले अवधारणापत्रको सम्बन्धित विषयलाई स्पष्ट पारी पूर्णता दिने भएकोले सो अंश थप गर्ने :"शदीयौदेखि देशमा विद्यमान वर्गीय, जातीय, क्षेत्रीय, लैङ्गिक विभेद र निरङ्कुशताका विरूद्ध नेपाली जनताले गर्दै आएको बलिदानीपूर्ण सङ्घर्ष, लखन थापादेखिका ज्ञात अज्ञात शहीदहरूले राष्ट्रियता, लोकतन्त्र, शान्ति, अमनचैन, समुन्नति र समानताका लागि दिएको प्राणको आहुति, ०६२/०६३ मा निरङकुश राजतन्त्रविरूद्ध तत्कालीन सात राजनीतिक दलहरूको अगुवाइमा सञ्चालित ऐतिहासिक १९ दिने शान्तिपूर्ण जनआन्दोलन तथा"

## २.९. सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको प्रतिवेदन सम्बन्धमा

### २.९.१. प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरू

- सामाजिक तथा सांस्कृतिक ऐक्यबद्धताको आधार निर्माणमा धर्म, संस्कृति र भाषा सबै महत्वपूर्ण हुने भए पनि धर्मको सन्दर्भमा समितिको प्रतिवेदनमा पर्याप्त चर्चा नभएको भनी सभामा छलफल हुँदा माननीय सदस्यहरूले बोल्नु भएको कारण केही विषयवस्तु थप गर्न आवश्यक रहेको ।

### २.९.२. अर्को समितिको कार्यक्षेत्रभित्र परेका विषय यस समितिको प्रतिवेदनमा दोहोरिएको

**संवैधानिक समितिको कार्यक्षेत्रभित्र पर्ने विषय**

- धारा १, प्रस्तावना

**मौलिक हक र निर्देशक सिद्धान्त समितिको कार्यक्षेत्रभित्र पर्ने विषयहरू**

- धारा २, शिक्षा सम्बन्धी हक । धारा ४, आदिवासी/जनजातिको हक । धारा ५, छुवाछूत तथा जातीय भेदभाव विरूद्धको हक । धारा ६, सामाजिक न्यायको हक । धारा ७, सामाजिक सुरक्षाको हक । धारा ८, राज्यको दायित्व । धारा ९, राज्यका निर्देशक सिद्धान्तहरु । धारा १०, राज्यका नीतिहरु

**संवैधानिक निकायको संरचना निर्धारण समितिको कार्यक्षेत्रभित्र पर्ने विषय**

- धारा १२, दलित आयोगको स्थापना । धारा १६, भाषा आयोग सम्बन्धी व्यवस्था (स्थायी वा अस्थायी कस्तो राख्ने)

## २.९.३. सभामा छलफल हुँदा मतैक्यता हुन नसकेका विषयहरू

**क) प्रारम्भिक मस्यौदातर्फ**

- धारा ३ को संस्कृति तथा भाषा सम्बन्धी हकको उपदफा (१) को प्रतिबन्धात्मक वाक्याशंमा उल्लिखित 'तर संस्कृतिको आडमा निर्मित कुरीति, कुसस्कार र कुप्रथा वा मान्यताको प्रयोगमा रोक लगाउने गरी कानूनद्वारा विशेष व्यवस्था गर्न बाधा पुऱ्याएको मानिने छैन ।' भन्ने वाक्यको मस्यौदामा परिमार्जन गर्नुपर्ने । धारा ११, सामाजिक ऐक्यबद्धताको प्रर्वद्धन गर्नेः- 'सघीय संरचनाको निर्माण गर्दा' संविधान निर्माण कै क्रममा सङ्घीय संरचना निर्माण भई संविधानमा लेखिने भएकोले त्यही संविधानको भाषामा त्यस्तो शब्द राख्न जरूरी नभएको । धारा १३, राष्ट्रभाषाको उपधारा (४) मा उल्लिखित 'दृष्टिविहीन तथा आवाज विहीनहरूको लागि ब्रेललिपि तथा साङ्केतिक भाषाको प्रयोग गर्न पाउने अधिकार हुनेछ' । भन्ने वाक्य । धारा १४(१) मा रहेको सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्थाहरु । धारा १४(२) को 'केन्द्रीय सरकारको सरकारी कामकाजको भाषा' र 'एक वा एकभन्दा बढी राष्ट्रभाषा' । धारा १४(४) को सार्वजनिक सेवा प्राप्त गर्न आफ्नो मातृभाषाको प्रयोगमा कसैलाई बाधा पुऱ्याएको मानिने छैन भन्ने वाक्यांश र सोको स्पष्टीकरणमा उल्लिखित अनुवाद गर्ने सम्बन्धी व्यवस्था । धारा १५ को केन्द्रीय सरकार र प्रान्तीय सरकार तथा प्रान्तीय सरकारहरु बीचको सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्थाहरु (केन्द्र र प्रान्त तथा प्रान्त प्रान्तहरु बीचको सम्पर्क भाषा किटान गरेर जानु नहुने, साथै यो व्यवस्था धारा १४ सँग गाँसिएको र सो दफामा नै विवाद भएको) । धारा १६ को भाषा आयोगको स्थापना स्थायी वा अस्थायी प्रकृतिको हुने भन्ने विषय । धारा १७ को अदालती कामकारवाही तथा आधिकारिक लिखतको भाषा सम्बन्धी विषय ।

**ख) अवधारणापत्रतर्फ**

- अवधारणापत्र र मस्यौदामा उल्लिखित 'सशस्त्र द्वन्द्व' भन्ने शब्दको सट्टा 'जनयुद्ध' शब्द राख्नुपर्छ वा पर्दैन भन्ने सम्बन्धमा । पृष्ठ १४ मा उल्लिखित Parliament भन्ने अङ्ग्रेजी शब्दको सट्टा Legislature भन्ने शब्द राखिनुपर्छ भन्ने विषय ।

## २.९.४. सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको प्रतिवेदनमाथि समितिको सर्वसम्मतिबाट परिमार्जन गर्ने निर्णय भएका विषयहरू

### २.९.४.१ अवधारणापत्रतर्फ

क) पेज नं. १४ को दोस्रो प्यारामा व्यवस्थापिका भन्ने शब्दको कोष्ठभित्र अङ्ग्रेजी एबचष्किभलत भन्ने शब्द रहेकोमा व्यवस्थापिका शब्द आफैँमा बोधगम्य रहेकोले कोष्ठभित्रको अङ्ग्रेजी Parliament भन्ने शब्द आवश्यक नपर्ने हुँदा हटाउने ।

ख) पेज नं. ७१ को दोस्रो प्याराग्राफको सट्टा देहायको अंश थप गर्ने :-

"नेपाल विविधता बीच एकता कायम रहेको देश हो । विभिन्न भाषा, धर्म, संस्कृति, मूल्य र मान्यता भएका वर्ग र समुदायहरु बीचको सद्भावबाट नै राष्ट्रिय एकतालाई प्रवर्द्धन गर्न सकिन्छ । शदियौंदेखि कायम रहेका यस्ता विविधताको संरक्षण, सम्वर्द्धन र प्रवर्द्धनबाट नै सामाजिक ऐक्यबद्धताको जगलाई मजबुत तुल्याउन सकिन्छ ।

धर्म धारण गरिने विषय हो । कतिपय मानिसको आस्थाको धरोहरको रूपमा धार्मिक मूल्य र मान्यताहरु रहेका हुन्छन् । अतः मानिसको आचरण, व्यवहार र सामाजिक सम्बन्धका कैयौं पक्षहरूले धर्मसँग सानिध्यता राखेका हुन्छन् । समाज विकासको क्रमसँगै मानिसका

आचरण र व्यवहारहरु परिमार्जित हुँदै गएका हुन्छन् तर धार्मिक आस्था, मूल्य र मान्यताहरु सहजै परिवर्तन हुन गाह्रो पर्दछ । यसर्थ राज्यले सबै धार्मिक सम्प्रदायहरुप्रति उचित र सन्तुलित व्यवहार गर्नु आवश्यक हुन्छ । धार्मिक सहिष्णुता कायम राख्न नसकेकै कारणबाट कैयौं देशहरु आन्तरिक द्वन्द्वको चपेटामा परेका उदाहरणहरु पनि छन् । यस्ता सबै धार्मिक सम्प्रदायहरुका बीच सद्भाव कायम राखी समाजमा एकता कायम राख्नेतर्फ उचित ध्यान दिनु राज्यको दायित्व हुन्छ ।

नेपाली समाज बहुधार्मिक समाज हो । नेपालमा हिन्दु, बौद्ध, मुस्लिम, किराँत, क्रिश्चियन, शिख, जैन, वहाई लगायतका विभिन्न धर्मावलम्बी वा सम्प्रदाय रहेका छन् । २०५८ सालको जनगणना अनुसार नेपालमा ८०.६२% हिन्दु, १०.७४% बौद्ध, ४.२०% मुस्लिम, ३.६०% किराँत, ०.४५% क्रिश्चियन, ०.०३% शिख, ०.०२% जैन ०.०१% वहाई तथा ०.३५% अन्य धर्मावलम्बीहरु रहेको तथ्याङ्क छ । यी धर्मावलम्बीहरु नेपालको विभिन्न भौगोलिक क्षेत्रमा छरिएर रहेका छन् ।

धर्म व्यक्तिको आस्था, निष्ठा, दृष्टिकोण वा अन्तःकरणको विषय भएको हुँदा व्यक्तिले यसको अवलम्बन गर्नु स्वाभाविक मानिन्छ । यद्यपि धर्म मान्ने वा नमान्ने र कुन धर्मको अवलम्बन गर्ने भन्ने विषय व्यक्तिको वैयक्तिक स्वतन्त्रताभित्रकै विषय हो । धर्म आध्यात्मिक चिन्तनमात्र नभएर यसले सामाजिक र सांस्कृतिक विषयमा पनि प्रभाव पारेको हुन्छ । तसर्थ यसले सामाजिक सम्बन्ध र व्यवहारलाई पनि केही हदसम्म निर्देशित गर्दछ । त्यस्तै धर्म-संस्कृतिको विकास गर्ने एउटा माध्यम पनि हो । धर्म समाजमा मेलमिलापको केन्द्रको रुपमा पनि रहन्छ ।

यसरी धर्मको संस्कृति, समाज र राज्यसँग अन्योन्याश्रित सम्बन्ध रहने हुँदा समाजमा सामाजिक ऐक्यबद्धता कायम गर्ने सन्दर्भमा यसको महत्वपूर्ण भूमिका हुने कुरालाई नकार्न सकिदैन । विभिन्न धर्मावलम्बी वा धार्मिक सम्प्रदायका बीच आपसी सद्भाव, सहिष्णुता, सामन्जस्यता र पारस्परिकताको अभिवृद्धिबाट सामाजिक ऐक्यबद्धताको प्रवर्द्धन हुन जान्छ । यसका लागि धर्मप्रति राज्यको समान सद्भावपूर्ण र सन्तुलित व्यवहार आवश्यक पर्दछ । धार्मिक सहिष्णुता तथा एक-अर्को धार्मिक सम्प्रदायको धार्मिक समारोहमा एक-अर्को धार्मिक सम्प्रदायका व्यक्तिहरुको उपस्थिति वा सहभागिता नेपाली समाजको मौलिक चरित्रको रुपमा रही आएको छ । यो नेपाली मात्रको गर्वको विषय हो । तथापि विगतमा हिन्दु धर्मसँग शासक वर्गको अन्तर्सम्बन्ध रहेको तथा राज्यले नै हिन्दु धर्मलाई विशेष संरक्षण दिएको कारण अन्य धर्महरुले समान संरक्षण, मान्यता वा पहिचान नपाएको स्थिति रहेको थियो ।

धर्म सम्बन्धी नेपालको संवैधानिक व्यवस्थालाई हेर्ने हो भने सर्वप्रथम नेपाल सरकार वैधानिक कानून, २००४ ले मौलिक हक अन्तर्गत धार्मिक स्वतन्त्रताको सुनिश्चित गरेको थियो । तथापि यसले कुनै धर्म विशेषलाई कुनै खास स्थान प्रदान गरेको भने थिएन । त्यसपछि निर्माण भएको नेपाल अन्तरिम शासन विधान, २००७ ले धर्म र राज्य बीच कुनै सम्बन्ध स्थापित नगरी धर्मका आधारमा राज्यले कुनै भेदभाव नगर्ने कुराको प्रत्याभूति गऱ्यो । नेपाल अधिराज्यको संविधान, २०१५ ले कुनै धर्मविशेषलाई राज्यले स्थान नदिए पनि राजा हिन्दु धर्मावलम्वी हुने कुरा उल्लेख गरी हिन्दु धर्मको अवलम्बन र अभ्यास गर्ने स्वतन्त्रता प्रदान गर्दै कसैले कसैको धर्मपरिवर्तन गर्न नपाउने कुरा उल्लेख गरेको थियो । नेपालको संविधान, २०१९ मा २०३७ सालमा भएको तेस्रो संशोधनमार्फत् नेपाललाई पहिलो पटक हिन्दु अधिराज्यको रुपमा घोषणा गऱ्यो । सोबाहेक यस संविधानले पनि धर्मको अवलम्बन र धर्मको कृत्य गर्न पाउने कुरालाई

मौलिक हक अन्तर्गत व्यवस्था गऱ्यो । नेपाल अधिराज्यको संविधान, २०४७ ले नेपाललाई हिन्दु अधिराज्यको रूपमा घोषणा गर्दै मौलिक हक अन्तर्गत प्रत्येक व्यक्तिलाई प्रचलित परम्पराको मर्यादा राखी सनातनदेखि चलि आएको आफ्नो धर्मको अवलम्बन र अभ्यास गर्ने स्वतन्त्रताको संवैधानिक प्रत्याभूति गऱ्यो ।

यस प्रकार नेपाल सरकार वैधानिक कानून, २००४ देखि नेपाल अधिराज्यको संविधान, २०४७ सम्म आइपुग्दा धर्मका सम्बन्धमा विभिन्न संवैधानिक व्यवस्था र अभ्यासहरू हुँदै आएको पाइन्छ । नेपाल प्राचिन कालदेखि नै हिन्दुधर्मशास्त्रका मान्यताहरूबाट निर्देशित हुँदै आएको देखिन्छ । नेपालको कानूनी इतिहासलाई अध्ययन गर्दा जयस्थिति मल्लद्वारा निर्मित मानव न्यायशास्त्र हिन्दु धर्मका नीति नियमहरूबाट प्रभावित भएको पाइन्छ । नेपालमा शासन गरिआएका राजाहरूले पनि हिन्दुधर्मशास्त्रकै आधारमा दैवी शक्तिबाट समेत आफूलाई देशमा शासन गर्ने वैधता र वैधानिकता प्राप्त भएको हो भनी दावी गरिएको पनि पाइन्छ । नेपालको पहिलो लिखित कानूनी दस्तावेजको रूपमा रहेको मुलुकी ऐन, १९१० ले पनि हिन्दुधर्मशास्त्रकै आचार र नियमहरूलाई आत्मसात् गरेको सन्दर्भमा त्यस प्रकारको प्रचलन अभ्यास र कानूनी एवं संवैधानिक व्यवस्थाले अन्य धर्मावलम्वीहरूलाई थिचोमिचोमा पारेको वा राज्यले हिन्दुधर्मलाई मात्र संरक्षण वा पृष्ठपोषण गरेको हुँदा त्यस प्रकारको विभेदको अन्त्य गर्न नेपाललाई धर्मनिरपेक्ष राज्यको रूपमा घोषणा गर्नुपर्ने सवाल विभिन्न राजनीतिक दलहरूबाट समेत उठिरहेको सन्दर्भमा त्यसलाई मान्यता दिने गरी नेपालको अन्तरिम संविधान, २०६३ ले नेपाललाई धर्मनिरपेक्ष राज्यको रूपमा घोषणा गर्दै त्यसको संवैधानिक प्रत्याभूति गरेको छ ।

धर्मनिरपेक्षताको अर्थ गर्दा मूलतः तीन वटा विचारधारा राख्ने गरिएको पाइन्छ । पहिलो राज्यले धर्मलाई कुनै विषय नै नमान्ने अथवा निधर्मी राष्ट्रको रूपमा रहने, दोस्रो राज्यसँग धर्मको कुनै पनि सम्बन्ध हुँदैन, राज्य र धर्म अलग-अलग विषय हुन्, राज्यको यससँग कुनै सम्बन्ध नै हुँदैन भन्ने र तेस्रो विचारधाराले राज्यले कुनै अमुक धर्मलाई मान्यता वा प्रोत्साहन नदिई सर्वधर्म समभावको नीति लिई सबै धर्मप्रति समान व्यवहार र महत्व दिनुपर्छ भन्ने कुरामा जोड दिन्छ । धर्मनिरपेक्षतालाई आत्मसात् गरिएका देशमा धार्मिक आस्थाका आधारमा राज्यले कुनै किसिमको भेदभाव नगर्ने प्रत्याभूति र धार्मिक स्वतन्त्रताको प्रत्याभूति गरिएको हुन्छ । नेपालको सन्दर्भमा नेपालको अन्तरिम संविधान, २०६३ ले धर्मनिरपेक्षतालाई अङ्गीकार गरिसकेको छ । नेपाल एक बहुधार्मिक र बहुसांस्कृतिक देश भएकोले यसको कुनै एक मात्र धर्म वा संस्कृति हुँदैन । राज्यले सबै धर्मावलम्बी वा धार्मिक समुदायहरूको धार्मिक स्वतन्त्रताको सम्मान गर्नुपर्छ र कुनै धर्म विशेषका लागि विशेष संरक्षण वा धर्मलाई राज्यले लगानी गर्नु हुँदैन । धर्मका आडमा नेपाली समाजमा कतिपय अवैज्ञानिक वा कोरा मान्यताहरू वा कुरीतिहरूको जन्म भएको हुँदा तिनको अन्त्यको लागि भने राज्यले आवश्यक पहल गर्नु वाञ्छनीय हुन्छ । तसर्थ, त्यस्ता मान्यता वा कुरीतिको अन्त्य गर्दै विभिन्न धर्ममा रहेका साझा मूल्य र मान्यताहरूको पहिचान, नेपाली समाजमा रही आएको धार्मिक सहिष्णुता तथा आपसी सद्भावको प्रोत्साहन र धार्मिक स्वतन्त्रताको जगमा व्यापक राष्ट्रिय र सामाजिक ऐक्यबद्धताको प्रवर्द्धन र सम्वर्द्धन गर्नु पर्दछ ।"

### २.९.४.२. प्रारम्भिक मस्यौदातर्फ

- सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको प्रतिवेदनसाथ संलग्न प्रारम्भिक मस्यौदाको धारा १, प्रस्तावना संवैधानिक समितिको कार्यक्षेत्रमा पर्ने देखिएको,

धारा २, ४, ५, ६, ७, ८, ९ र १० मा रहेका विषयहरु मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको कार्यक्षेत्रभित्र पर्ने देखिएको र धारा १२, दलित आयोगको स्थापना तथा धारा १६ मा रहेको भाषा आयोग सम्बन्धी विषय संवैधानिक निकायको संरचना निर्धारण समितिको कार्यक्षेत्रभित्र पर्ने देखिन्छ । सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको मस्यौदामा समितिको दृष्टिले सम्बन्धित भागमा राख्न सिफारिश गरिएका विषयलाई संवैधानिक समितिले महत्वपूर्ण सन्दर्भ सामग्रीको रूपमा ग्रहण गरी सम्बन्धित विषयलाई पूर्णता दिने क्रममा ध्यान दिन सुझाव दिने । समितिबाट उल्लिखित विषयमा सभामा छलफल हुँदा उठेका कुराहरु सम्बन्धित समितिको मस्यौदाबाट निर्णय भई सम्बोधन हुने भएकोले समितिले यहाँ छलफल र निर्णय गरेको छैन । धारा ३ को संस्कृति तथा भाषा सम्बन्धी हकको उपदफा (१) को प्रतिबन्धात्मक वाक्याशंमा उल्लिखित 'तर संस्कृतिको आडमा निर्मित कुरीति, कुसंस्कार र कुप्रथा वा मान्यताको प्रयोगमा रोक लगाउने गरी कानूनद्वारा विशेष व्यवस्था गर्न बाधा पुऱ्याएको मानिने छैन ।' भन्ने वाक्यको सट्टा 'तर यस उपधारामा लेखिएको कुनै कुराले संस्कृतिको आडमा निर्मित कुरीति, कुसंस्कार र कुप्रथाको प्रयोगमा रोक लगाउने गरी कानून बनाउन बाधा पुऱ्याएको मानिने छैन । ' भन्ने वाक्य राख्ने । धारा ११, मा सघीय संरचनाको निर्माण गर्दा जोड दिनु पर्ने विषय उल्लेख रहेको, संविधान निर्माणकै क्रममा सङ्घीय संरचना निर्माण भई संविधानमा लेखिने भएकोले यो विषयलाई प्रस्तावना तयार गर्दा र राज्य पुर्नसरचना गर्दा यथोचित ध्यान दिने । यहाँ अलग धाराको रूपमा राख्न आवश्यक नपर्ने । धारा १३, राष्ट्रभाषा अन्तर्गत मस्यौदा गरिएको उपधारा (१) मात्र यहाँ पर्याप्त रहेको । उपधारा (२) मा उल्लिखित सम्वर्द्धन शब्द हटाई राज्यको दायित्व अन्तर्गत उपयुक्त स्थानमा राख्ने । उपधारा (३) को व्यवस्थालाई मौलिक हक अन्तर्गत उपयुक्त स्थानमा राख्ने र उपधारा (४) मा रहेको 'दृष्टिविहीन तथा आवाज विहीनहरूको लागि ब्रेललिपि तथा साङ्केतिक भाषाको प्रयोग गर्न पाउने अधिकार हुनेछ ।' भन्ने व्यवस्थालाई 'दृष्टिविहीनहरूलाई ब्रेललिपि तथा बहिराहरूलाई साङ्केतिक भाषाको प्रयोग गर्न पाउने अधिकार हुनेछ' भनी परिमार्जन गरी मौलिक हक अन्तर्गत शिक्षा सम्बन्धी हकमा समावेश गर्ने ।

## २.१०. संवैधानिक समितिको प्रतिवेदन सम्बन्धमा

### २.१०.१. प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरू

- समितिले पहिचान गरेका कार्यक्षेत्रभित्रका कुनै पनि विषय छुटेको देखिदैन । संवैधानिक निकायको संरचना निर्धारण समिति, प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समिति लगायतका केही समितिहरूले संवैधानिक परिषद्को परिकल्पना गरी त्यसको सिफारिशमा महत्वपूर्ण संवैधानिक निकायका प्रमुख र पदाधिकारीको नियुक्ति सम्बन्धी व्यवस्था गरेको पाइन्छ तर उक्त संवैधानिक परिषद्को गठन र काम कर्तव्यबारे कुनै पनि समितिको प्रतिवेदनमा उल्लेख नभएकोले संवैधानिक समितिले नै तयार गर्ने हो वा के गर्ने हो छलफल हुनुपर्ने ।

## २.१०.२. अर्को समितिको कार्यक्षेत्रभित्र परेका विषय यस समितिको प्रतिवेदनमा दोहोरिएको :–

- संविधानसभा नियमावली, २०६५ ले अरू विषयगत समितिको कार्यक्षेत्रभित्र परेका कुनै पनि विषय यस समितिको प्रतिवेदनमा दोहोरिएको देखिदैन ।

## २.१०.३ समितिको प्रतिवेदनमा आएका फरकमतहरू र सभामा छलफल हुँदा मतैक्यता हुन नसकेका विषयहरू :–

क) प्रारम्भिक मस्यौदातर्फ

सि.नं. १ प्रस्तावनामा

- प्रस्तावनामा रहनुपर्ने भनी अन्य विषयगत समितिहरूबाट आएका प्रतिवेदनको सिफारिशलाई ध्यान नदिइएको, बेवास्ता गरिएको । संविधानको प्रारम्भमा नै यो संविधानको स्रोत नेपाली जनता हुन् भनी लेख्नुपर्ने । प्रस्तावना संक्षिप्त र सरल नभई शब्द भण्डारको रूपमा बोझिलो रहेको, कतिपय विषयहरु दोहोरिएको । पहिलो अनुच्छेदमा हामी नेपाली जनताभन्दा हुन्छ, सार्वभौमसत्तासम्पन्न नभनी सार्वभौम मात्र भन्ने । प्रस्तावनामा स्थानीय स्वायत्तता र स्वशासन, विकेन्द्रीकरण, समाजवादउन्मुख मिश्रित अर्थव्यवस्था, आर्थिक स्वतन्त्रता, सामाजिक अधिकार, उद्यमशीलताको विकासद्वारा आर्थिक समृद्धि, समन्याय र सन्तुलित विकास गर्ने विषय समावेश हुनुपर्ने । सबै प्रकारका हिंसाका अवशेषको अन्त्य गर्ने कुरा प्रस्तावनामा लेख्नुपर्ने । विगतमा भएका सबै आन्दोलनलाई अनुसूची बनाई राख्नुपर्ने वा व्याख्यात्मक टिप्पणीमा समावेश गरी मस्यौदामा साझा शब्दावली प्रयोग गर्नुपर्ने, विगतको सबै आन्दोलनलाई साझा शब्दले सम्बोधन गर्नुपर्ने । (फरकमत) प्रस्तावनामा निम्न अनुच्छेदहरु थप गर्नुपर्ने । सामान्तवाद र वैदेशिक हस्तक्षेपका सबै रूप र अवशेषहरूको अन्त्य गरी समाजवादउन्मुख जनताको सङ्घीय गणतन्त्रको स्थापना गर्दै, मजदूर, किसान लगायतका श्रमजीवी जनता नै इतिहासका चालक शक्ति हुन् भन्ने यथार्थतालाई आत्मसात् गरी राज्यका विधिन्न अङ्गहरूमा सम्पूर्ण श्रमजीवी जनताको विशेषाधिकारको व्यवस्था गर्दै, वर्गीय, जातीय, क्षेत्रीय, लैङ्गिक र छुवाछूतजन्य वर्ण व्यवस्थाको उत्पीडनलाई अन्त्य गर्न राज्यको अग्रगामी पुनसंरचना गर्दै । (फरकमत) हिन्दुराष्ट्र, राजसंस्था एवं सङ्घीयता लगायतका विषयमा जनमतसङ्ग्रह गरी सोको नतिजा अनुरूप तत् सम्बन्धी व्यवस्था संविधानमा व्यवस्था गर्नुपर्ने । (फरकमत) 'पूर्ण र स्वच्छ अग्रगामी लोकतन्त्र ९ज्भबमधष्लन म्ष्कयअचबअथ० लाई अङ्गीकार गर्दै' भन्ने शब्द थप गर्ने । (फरकमत) 'नेपाल एक घर र सम्पूर्ण नेपाली एउटै परिवार भन्ने भावनालाई आत्मसात् गर्दै' भन्ने शब्दावली थप गर्ने । (फरकमत) प्रस्तावनाको अनुच्छेद १ को सट्टामा 'सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक धर्मनिरपेक्ष राज्य नेपालका हामी नेपाली जनता' भन्ने शब्द राख्ने । (फरकमत) प्रस्तावनाको अनुच्छेद २ मा 'चुरेभावर आन्दोलन' थपगर्नुपर्ने । 'राष्ट्रिय एकता, राष्ट्रिय स्वाधीनता एवं स्वाभिमान' पछि 'र नेपाली नागरिकको गरिमा र आत्मसम्मानलाई' अक्षुण्ण राख्दै भन्ने शब्द थप्ने । (फरकमत) प्रस्तावनाको अनुच्छेद ३ मा 'ऐतिहासिक सशस्त्र जनआन्दोलन, शान्तिपूर्ण जनआन्दोलन र मधेस आन्दोलन' भन्ने शब्दहरूको सट्टा प्रजातन्त्र प्राप्तिको निम्ति भएका जनआन्दोलनहरु भन्ने शब्दहरु राख्नुपर्ने । 'आदिवासी जनजातिको आन्दोलन, लिम्बुवान आन्दोलन,

थरूहट आन्दोलन लगायत दलित, पिछडावर्ग, मुस्लिम समुदायको आन्दोलन' थप्ने । 'मधेसआन्दोलन' भन्ने शब्द हटाउने । प्रारम्भमा नै 'राष्ट्रिय स्वाधीनता' भन्ने शब्द राख्नुपर्ने । 'शान्ति र मानवअधिकार' भन्ने शब्द हटाउनुपर्ने । 'सशस्त्र सङ्घर्षको' सट्टामा 'जनयुद्ध' शब्द राखिनुपर्ने । 'अग्रगामी परिवर्तनका लागि गरिएका … बलिदान' भन्ने शब्दहरूको सट्टा 'नेपाली जनताले हालसम्म पटक-पटक गर्दै आएका ऐतिहासिक सङ्घर्ष, त्याग र बलिदानको गौरवपूर्ण इतिहासलाई स्मरण एवं शहीदहरूलाई सम्मान गर्दै' भन्ने शब्दहरु राख्नुपर्ने । सबै आन्दोलनलाई समेट्ने 'शान्तिपूर्ण जनआन्दोलन' भन्ने साझा शब्द राख्नुपर्ने । (फरकमत) प्रस्तावनाको अनुच्छेद ४ मा राज्यव्यवस्थाले सृजना गरेका विभेद शब्दको अगाडि सबै प्रकारका एकाधिकार भन्ने वाक्यांश थप्ने । 'विगतको पितृसत्तात्मक, सामन्ती, निरङ्कुश, केन्द्रीकृत र एकात्मक राज्यव्यवस्थाले सृजना गरेको जातीय विभेद र मनुवादी निरङ्कुश राजतन्त्रात्मक वर्णव्यवस्थाबाट भएको उत्पीडनको पीडालाई स्मरण गर्दै' भन्ने शब्दहरु राख्नुपर्ने । ' एकात्मक' भन्ने शब्द हटाउने । 'विगतको' पछि 'निरङ्कुश राजतन्त्रात्मक सामन्ती' शब्द थप गर्ने । 'शान्तिपूर्ण आन्दोलन तथा' पछि 'तिनका वीर वीराङ्गना' थप्नुपर्ने । प्रस्तावनाको अनुच्छेद ४ मा रहेको विभेद र उत्पीडनको पीडालाई स्मरण गर्ने होइन अन्त गर्ने शब्द प्रयोग गर्नुपर्ने, के कस्ता पीडा हुन् उल्लेख गर्नुपर्ने । प्रस्तावनाको चौथो अनुच्छेदको अन्तमा नेपाली जनताको त्याग र शहीदहरूको बलिदानलाई सम्मान गर्दै भन्ने शब्दहरु राखी परिमार्जन गर्नुपर्ने । पाचौ अनुच्छेदमा रहेका 'बहु' शब्दले अर्थ नदिएकोले आवश्यक नपर्ने (फरकमत) प्रस्तावनाको अनुच्छेद ६ मा 'मानवअधिकार' भन्ने शब्दको अगाडि 'आर्थिक समानता सहितको' भन्ने शब्द थप्नुपर्ने । प्रतिस्पर्धात्मक बहुदलीय लोकतान्त्रिक शासनव्यवस्थाको अगाडि 'पूर्ण समानुपातिक' शब्द थप गर्ने । 'बहुलवाद' शब्द थप गर्नुपर्ने । 'बहुलवादमा आधारित' शब्द थप गर्नुपर्ने । ' न्यायालयको' अगाडि 'जनउत्तरदायी' भन्ने शब्द थप्ने । 'मानवअधिकार' भन्ने शब्दको अगाडि 'आर्थिक अधिकार सहितको' भन्ने शब्द राख्नुपर्ने । 'जनताको' भन्ने शब्द हटाउने । 'जनताको समानुपातिक समावेशी' भन्ने शब्द झिकी 'बहुलवादमा आधारित' शब्द थप गर्नुपर्ने । 'जनताको … शासन व्यवस्था' भन्ने शब्दहरूको सट्टा 'सामाजिक न्यायमा आधारित प्रतिस्पर्धात्मक बहुदलीय लोकतान्त्रिक समाजवादी शासन व्यवस्था' भन्ने शब्दहरु राख्ने । 'मानवअधिकार' भन्ने शब्दको अगाडि 'महिला अधिकार' भन्ने शब्द थप्नुपर्ने । 'समानुपातिक' भन्ने शब्द हटाउनु पर्ने । (फरकमत) प्रस्तावनाको अनुच्छेद ७ मा 'आत्मनिर्णयको अधिकार, स्वायत्तताको' सट्टामा 'आत्मनिर्णयको सिद्धान्त र जातीय, क्षेत्रीय'/'स्थानीय' भन्ने शब्द राख्ने । 'आत्मनिर्णयको अधिकार' भन्ने शब्द हटाउने । 'स्वायत्तता र स्वशासनको अधिकार' को सट्टामा 'प्रजातान्त्रिक विकेन्द्रीयता र स्थानीय स्वायत्त शासन' भन्ने शब्द लेख्ने । यस अनुच्छेदलाई 'राष्ट्रिय अखण्डता र आत्मनिर्णयको अधिकारलाई अक्षुण्ण राखी जनताको स्वायत्तता र स्वशासनको अधिकार लाई आत्मसात् गर्दै' भनी लेख्ने । (फरकमत) प्रस्तावनाको अनुच्छेद ८ मा 'सम्पन्नता र सामाजिक न्याय सुनिश्चित गर्न समानुपातिक' शब्द अगाडि 'जातीय जनसंख्याको आधारमा पूर्ण' भन्ने वाक्यांश थप्ने । 'समानुपातिक' भन्ने शब्दको अगाडि 'कामदार वर्गको सर्वोत्तम हित हुने गरी ' भन्ने शब्दहरु राख्नुपर्ने । समतामूलक समाजको अगाडि 'धर्मनिरपेक्ष र' भन्ने शब्द थप गर्ने । 'समानुपातिक' भन्ने शब्दको अगाडि 'किसान मजदुर लगायत श्रमजीवी जनताको हितसंरक्षण गर्ने गरी ' भन्ने शब्द थप गर्नुपर्ने । (फरकमत) प्रस्तावनाको अनुच्छेद ९ मा 'यो' पछि 'समाजवादउन्मुख' भन्ने शब्द राख्नुपर्ने । 'सङ्घीय लोकतान्त्रिक गणतन्त्र'

को अगाडि 'जनताको' शब्द थप्ने । 'दिगो शान्तिको' अगाडि 'अग्रगमन सहितको' भनी थप्ने । 'सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाको माध्यमद्वारा' भन्ने शब्दको सट्टा 'लोकतान्त्रिक गणतन्त्रात्मक एकात्मक शासन व्यवस्थाको माध्यमद्वारा' भन्ने शब्द राख्ने । (फरकमत) प्रस्तावनामा 'नेपाली जनताले साम्राज्यवाद र विस्तारवादविरूद्ध गर्दै आएको सङ्घर्षहरूको उच्च मूल्याङ्कन गर्दै' भन्ने अनुच्छेद थप्नुपर्ने ।

सि.नं. २ संविधान मूल कानूनमा

- (फरकमत) राज्यको आफ्नो छुट्टै संविधान रहने व्यवस्था गर्ने । सङ्घीय संविधानसँग प्रतिकूल नहुनेगरी सङ्घीय एकाइले आफ्नो छुट्टै संविधान जारी गर्ने अधिकार प्रदान गर्नुपर्ने । धारा १ (२) मा संविधान बमोजिमको दायित्व पूरा गर्नु सबैको कर्तव्य हुने होइन, नेपाली नागरिकको कर्तव्य हुने भन्नुपर्ने, धारा २ (२) को सार्वभौमसत्ताको प्रयोगविधि अझ स्पस्ट गर्नुपर्ने ।

सि.नं. ३ सार्वभौमसत्ता र राजकीयसत्तामा :

- (फरकमत) नेपालको सार्वभौमसत्ता र राजकीयसत्ता ईश्वर र जनतामा निहित रहेको छ भन्ने शब्दावली थपगर्ने ।

सि.नं. ४ राष्ट्र, राज्य र नेपालको क्षेत्रमा

- राज्य र राष्ट्रको परिभाषा विरोधाभाषपूर्ण भएकाले राष्ट्रको परिभाषा हटाउनुपर्ने । (फरकमत) नेपाल राज्यको परिभाषामा रहेको 'बहुराष्ट्रिय' र 'सङ्घीय' भन्ने शब्द हटाउने । 'राज्य धर्मनिरपेक्ष हुने' वाक्य हटाई धर्मनिरपेक्षतावारे जनमतसङ्ग्रहबाट टुङ्गो लगाउनु पर्छ । बहुराष्ट्रिय भन्ने शब्दको सट्टा बहुराष्ट्रिय विशेषतायुक्त भन्ने शब्द राख्ने । धारा ४ मा रहेको 'बहुराष्ट्रिय' शब्दको सट्टा 'बहुजातीय' शब्द राख्नुपर्ने । (फरकमत) राष्ट्रको परिभाषामा बहुभाषिक पछि बहुलैङ्गिक शब्द थप गर्नुपर्ने । (फरकमत) उपधारा २ मा रहेको 'सङ्घीय' भन्ने शब्दको सट्टा 'प्रशासकीय' भन्ने शब्द राख्ने । (फरकमत) 'सङ्घीय लोकतान्त्रिक गणतन्त्र' भन्ने शब्दको अगाडि 'जनताको' भन्ने शब्द थप गर्ने । (फरकमत) समाजवादउन्मुख भन्ने शब्दको सट्टामा सङ्घीय लोकतान्त्रिक समाजवादी गणतन्त्रात्मक भन्ने शब्द राख्ने । (फरकमत) समाजवादउन्मुख भन्ने शब्दको अघि सङ्घीय लोकतान्त्रिक भन्ने शब्द थप गर्ने । (फरकमत) अनुसूची १ मा लेखिएको नेपाल राज्यभित्र रहने सङ्घीय एकाइहरूको ठाँउमा तलका अंशहरू थप्ने :
  - प्रशसनिक दृष्टिकोणले नेपाल राज्य तीन तहमा बाँडिने छ - केन्द्र, प्रदेश र जिल्ला
  - प्रदेशहरू निम्न अनुसार हुने छन् ।

    कोशी प्रदेश - मेची र कोशी अञ्चललाई मिलाएर । सगरमाथा प्रदेश - सगरमाथा र जनकपुर अञ्चललाई मिलाएर । बागमती प्रदेश - बागमती र नारायणी अञ्चललाई मिलाएर । गण्डकी प्रदेश - गण्डकी र धवलागिरी अञ्चललाई मिलाएर । लुम्बिनी प्रदेश - राप्ती र लुम्बिनी अञ्चललाई मिलाएर । कर्णाली प्रदेश - कर्णाली र भेरी अञ्चललाई मिलाएर महाकाली प्रदेश -महाकाली र सेती अञ्चललाई मिलाएर । जिल्लाको आवश्यकता अनुसार संसदद्वारा पुनर्गठन हुनेछ । स्थानीय स्वायत्त शासनका तीन तह हुने छन् - प्रदेश, जिल्ला र गाउँ वा नगरपालिका । धारा ४ को उपधारा (२) सँग सम्बन्धित अनुसूचीमा स्थानीय सरकारको सूचीसमेत समावेश हुनुपर्ने ।

सि.नं. ५ राष्ट्रिय भ्रूण्डा, गान र निशाना छापमा :ञ

- (फरकमत) परिवर्तनलाई प्रतिविम्बित गर्ने गरी राष्ट्रिय भ्रूण्डा र चिन्ह बनाउनुपर्ने । (फरकमत) प्रतीकको व्यवस्था कानूनमा तोकिएबमोजिम हुने व्यवस्था गर्नुपर्ने । (फरकमत) राष्ट्रिय भ्रूण्डा, गान र प्रतीकहरु नेपालको अन्तरिम संविधान, २०६३ को व्यवस्थालाई यथावत् राख्नुपर्ने । (फरकमत) राष्ट्रिय गानको चौथो हरफमा वीरहरूसँग वीराङ्गना थप्नुपर्ने । राष्ट्रिय भ्रूण्डाको आकार, चिन्ह र रङ्गबारे पुनर्व्याख्या गरिनुपर्ने । राष्ट्रको पहिचान भ्रूल्काउने राष्ट्रिय प्रतीकहरु पनि राख्नुपर्ने । त्यस्ता प्रतीक राख्दा आमसहमति कायम गरिनुपर्ने । निशाना छापमा रहेको जननी जन्मभूमिश्च स्वर्गादपि गरीयशी भन्ने विषय संस्कृत भाषामा राख्न नहुने । राष्ट्रिय गानमा रहेको सङ्गीत यथावत् राखी जुनसुकै भाषामा पनि गाउन सक्ने बनाइनुपर्ने ।

सि.नं. ६ संविधान संशोधनमा :

- (फरकमत) धारा ६ को उपधारा (१) मा सार्वभौमसत्तासम्पन्न जनताको परिवर्तनको इच्छालाई रोक्ने वा प्रतिबन्ध लगाउने कुरा कुनै पनि लोकतान्त्रिक मूल्य मान्यताभित्र पर्दैन । सार्वभौमसत्ता र राष्ट्रिय स्वाधीनताबाहेकका विषयहरु अपरिवर्तनीय हुन सक्दैनन । तसर्थ अपरिवर्तनीय भनिएका विषय संविधानमा राखिनु हुँदैन । त्यसमा पनि प्रतिस्पर्धात्मक बहुदलीय व्यवस्थालाई आत्मसात् गरी सकेपछि बहुलवादजस्तो व्यवस्था राख्नु अवैज्ञानिक हुन्छ । (फरकमत) जनमतसङ्ग्रहबाट अनुमोदन हुने विषयहरूमा निम्नलिखित विषयहरु अनिवार्य रूपमा उल्लेख गर्नुपर्ने :
  - प्राकृतिक स्रोत र साधनको बाँडफाँड गर्ने गरी विदेशी राष्ट्रसँग हुने सम्भ्रौता । नेपालको अन्तराष्ट्रिय सीमा सम्बन्धी सम्भ्रौता । सुरक्षा र सामाजिक सम्बन्धी सम्भ्रौता । राष्ट्रिय सम्पदाको स्वरूपलाई परिवर्तन गर्ने विषय । मानव स्वास्थ्यमा प्रतिकूल असर पर्न सक्ने विषयमा बहुराष्ट्रिय निगमसँग गरिने सम्भ्रौता ।
- (फरकमत) मानवअधिकार शब्दको अगाडि आर्थिक समानता सहितको शब्द थप गर्ने । (फरकमत) बहुलवाद शब्द हटाउने । (फरकमत) आदिवासीको अग्राधिकार र धर्मनिरपेक्षतालाई असंशोधनीय बनाई जातीय व्यवस्था रहेसम्म वा १२० वर्षसम्म संविधान संशोधन गर्न नपाइने व्यवस्था राख्ने । (फरकमत) प्रेसस्वतन्त्रतापछि 'धर्मनिरपेक्षता' शब्द थपगर्ने । (फरकमत) सार्वभौमसत्ता, राष्ट्रिय स्वाधीनता र सङ्घीयतालाई अपरिवर्तनीय प्रावधान अन्तर्गत राख्नुपर्ने । (फरकमत) उपधारा ३ हटाई निम्नअनुसारको धारा राख्ने : उपधारा २ बमोजिम पेश भएको विधेयक सङ्घीय वा प्रादेशिक एकाइको अधिकारको विषयसँग सम्बन्धित भएमा मुलुकको ५१ प्रतिशत जनताको प्रतिनिधित्व गर्ने कूल सङ्घीय एकाइहरूको बहुमत विधायकहरु द्वारा अनुमोदन भएमा सङ्घीय विधायिकाको दुई तिहाई मतद्वारा अनुमोदनका लागि पेश गरिने छ । तर सङ्घीय एकाइको पुनः संरचना वा सिमाना परिवर्तनको विषय यस धारा अन्तर्गत संविधान संशोधनको विषय हुँदैंन । (फरकमत) उपधारा ६ हटाई निम्नअनुसारको व्यवस्था गर्ने । सिमाना परिवर्तनका लागि सम्बन्धित सङ्घीय एकाईहरु को विधायिकाको बहुमतको सहमतिपश्चात् सम्बन्धित सङ्घीय एकाइहरूमा जनमतसङ्ग्रहद्वारा र प्रदेश पुनः संरचना आयोगको सिफारिशको आधार सङ्घीय विधायिकाको बहुमतबाट पारित गरिने छ । (फरकमत) उपघारा ७ मा उल्लेख गरिएको विधेयकपछि रहेको बहुमत सङ्घीय एकाइको विधायिकाको सट्टा ५०% भन्दा बढी जनताको प्रतिनिधित्व गर्ने सङ्घीय एकाइको विधायिकाले भन्ने शब्द थप्ने । (फरकमत) धारा ८ मा रहेका सङ्घीय र सङ्घीय एकाइ शब्दहरु हटाउने । यसमा देहायका उपधारा थपगरी क्रमसंख्या

मिलाउने – कानूनले निर्धारण गरेको विधि, प्रक्रिया पूरागरी तोकिएको संख्याका नागरिकहरूले हस्ताक्षर गरी सङ्घीय व्यवस्थापिकामा संविधान संशोधनको प्रस्ताव पेश गर्न सक्नेछन् । (फरकमत) उपधारा (४) मा उक्त विषयमा स्वतः संविधान संशोधन भएको मानिनेछ भन्ने शब्दको ठाँउमा उक्त विषयलाई संशोधनको लागि स्वीकृत भएको मानिनेछ र व्यवस्थापिका-संसदबाट संशोधन गरिने छ भन्ने उल्लेख हुनुपर्ने । धारा ८(२) र (३) मा रहेको संविधान संशोधन सम्बन्धी मस्यौदाको ठाँउ-ठाँउमा रहेका तोकिएवमोजिमको न्यूनतम संख्याका सदस्य नभनी संख्या किटान नै गरेर राख्नुपर्ने । संविधान संशोधनमा स्थानीय स्वायत्तता र स्वशासन, समानुपातिक समावेशी विषयलाई पनि अपरिवर्तनीय मान्यताको रूपमा राख्नुपर्ने र स्थानीय सरकारको सिमाना परिवर्तनसँग सम्बन्धित विषयमा स्थानीय सरकारको सहमति आवश्यक पर्ने ।

सि.नं. ७ राजनीतिक दलमा

- (फरकमत) उपधारा ७ थपगर्ने – कुनै जातजाति, भाषा, धर्म र क्षेत्रको आधारमा दल खोल्न पाइने छैन । (फरकमत) उपधारा (४) को खण्ड (ग) मा रहेको समावेशी भन्ने शब्दको अगाडि समानुपातिक शब्द थप गर्ने । (फरकमत) उपधारा (४) को खण्ड (ग) मा रहेको समावेशी भन्ने शब्दको सट्टा समानुपातिक शब्द राख्ने । (फरकमत) मूलनिवासी, दलित, जनजाति, आदिवासी, महिला, पीछडावर्ग र मुस्लिम समुदायले खोल्ने दललाई राज्यले ३० वर्षसम्म ३० -४० % सम्म अनुदान दिने व्यवस्था राख्ने । (फरकमत) उपधारा ५ मा जेसुकै कुरा लेखिएको भए तापनि जाति र क्षेत्रको आधारमा दल दर्तागर्न बन्देज लगाएको मानिने छैन भन्ने वाक्य थप गर्ने । (फरकमत) प्रत्येक राजनीतिक दलले सङ्घीय, राज्य लगायत स्थानीय निर्वाचनमा कम्तिमा १ तिहाई उम्मेदवार उठाउनुपर्ने प्रावधान थप गर्ने । (फरकमत) सङ्घीय र सङ्घीय एकाइतहको सट्टामा केन्द्रीय र स्थानीयतह लेख्ने । (फरकमत) धारा ९ को उपधारा (४) खण्ड (ग) को अन्त्यमा लेखिएको व्यवस्था गरिएको हुनुपर्छ भन्ने ठाँउमा संम्भव भएसम्म व्यवस्थागर्ने प्रयत्न गर्नुपर्छ भन्ने शब्द लेख्ने । (फरकमत) धारा ९ को उपधारा (६) हटाउने । राजनीतिक दलको दर्ता गर्दा वार्षिक लेखापरीक्षण प्रतिवेदन पेशगर्नुपर्ने व्यहोराको सट्टा आवधिक लेखापरीक्षण प्रतिवेदन पेश गर्नुपर्ने भन्ने व्यहोरा राख्नुपर्ने । धारा १२ मा रहेको व्यहोराको प्रारम्भमा रहेको (१) हटाउनुपर्ने, किनकि यस धारामा उपधारा (२) रहेको पाइँदैन । राजनीतिक दलहरूलाई निर्वाचनमा पाएको मतको आधारमा राज्यले आर्थिक अनुदान उपलब्ध गराउने व्यवस्था थप गर्नुपर्ने । राजनीतिक दलको आम्दानी खर्च पारदर्शी बनाउनु पर्ने विषयमा अझ विस्तृत र स्पष्ट व्याख्या राख्नुपर्ने । राजनीतिक दल सम्बन्धी धारा ९(५) को व्यवस्था आवश्यक छैन शान्तिपूर्ण रूपमा आउनेलाई वैचारिक निषेध गर्न नहुने ।

सि.नं. ८ सङ्कटकालीन व्यवस्थामा

- राजनीतिक र गैर राजनीतिक सङ्कटकाललाई छुट्याउनुपर्छ । धारा १३ को उपधारा (१) मा रहेको आर्थिक विश्रृंखलता र प्राकृतिक प्रकोपको आधारमा लगाइने सङ्कटकाललाई अरू आधारसँग भिन्न गरिनुपर्ने, मौलिक हकको बन्देजमा पनि फरक गरिनुपर्ने । (फरकमत) धारा १३ (१) मा रहेको सशस्त्र विद्रोह, चरम आर्थिक विश्रृङखलता, प्रकृतिक विपत्ति वा महामारी भन्ने शब्दहरु हटाउने । (फरकमत) धारा १३ को उपधारा (२), (३) र (४) मा लेखिएका सङ्घीय विधायिकाबाट भन्ने शब्दबाट सङ्घीय शब्द हटाउने ।

(फरकमत) धारा १३ को (९) मा निजले सो घोषणा वा आदेश समाप्त भएको मितिले ३ महिनाभित्र भन्ने शब्दको सट्टा सङ्कटकालीन अवस्थाको भित्र वा त्यो घोषणा वा आदेश समाप्त भएको मितिले ३ महिना भित्र भन्ने शब्द लेख्ने । (फरकमत) सङ्कटकालको अवस्थामा संसद विघटन नगर्ने उपघारा थप गर्ने । (फरकमत) राष्ट्रप्रमुखले नेपाल राज्यभर वा कुनै प्रदेशमा लागू हुनेगरी सङ्कटकालीन व्यवस्थाको घोषणा गर्न वा आदेश जारी गर्न सक्ने छ भनी संशोधन गर्नुपर्ने । (फरकमत) उपधारा ९ मा थपगर्नुपर्ने- कानूनवमोजिम पदाधिकारीको वदनियत प्रमाणित भएमा दोषी पदाधिकारीमाथि आवश्यक कानूनी कार्यवाही गरिनेछ । धारा १३(९) मा पीडितले कति समयभित्र क्षतिपूर्ति पाउने हो सो स्पष्टसँग खुलाउनु पर्ने । सङ्घीय एकाइमा सङ्कटकाल घोषणा गर्ने अधिकार सङ्घीय एकाइलाई नै प्रदान गर्नुपर्ने । सङ्घीय एकाइमा सङ्कटकालको घोषणा गर्नु परेमा सम्बन्धित एकाइको विधायिकाको दुई-तिहाई बहुमतबाट अनुमोदन गर्नुपर्ने व्यवस्था राख्ने ।

सि.नं. ९ विविधमा :

- (फरकमत) नेपाली राजदूत र विशेष प्रतिनिधि नियुक्ति गर्दा समानुपातिक समावेशी सिद्धान्तको आधारमा नियुक्ति गर्ने भन्ने व्यवस्थाबाट समानुपातिक भन्ने शब्द झिक्ने । (फरकमत) धारा १५ को सट्टामा मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रप्रमुखले नेपाली राजदूत र कुनै खास प्रयोजनको लागि विशेष प्रतिनिधि नियुक्त गर्न सक्ने छ भन्ने व्यवस्था राख्ने । (फरकमत) नेपाली राजदूत र विशेष प्रतिनिधि नियुक्ति गर्नु पूर्व कानूनमा व्यवस्था भएवमोजिम संसदीय सुनवाई हुने व्यवस्था राख्ने । मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रप्रमुखले जुनसुकै मुद्दामा भएको सजायलाई माफी गर्न नहुने । खासगरी चेलीबेटी बेचबिखन र लागू औषधजस्ता गम्भीर अपराधका मुद्दाको सजायलाई माफी गर्न नहुने । सर्वदलीय उच्चसंयन्त्रबाट भएको निर्णयानुसार माफी दिने कार्यलाई अगाडि बढाइनुपर्ने ।

सि.नं. १० सङ्क्रमणकालीन व्यवस्थामा :

- (फरकमत) राष्ट्रपति र उपराष्ट्रपतिको सट्टामा अध्यक्षमण्डलको व्यवस्था राख्ने (फरकमत) देहायका प्रावधानहरु थप गर्नुपर्ने :
  - नयाँ संविधान जारी गएको मितिले बढीमा एक महिनाभित्र राष्ट्रपति तथा मन्त्रिमण्डलको अन्तरिम व्यवस्था व्यवस्थापिका-संसदको रुपमा कायम रहने संविधानसभाले गर्ने । संवैधानिक अङ्गका पदाधिकारीहरु र न्यायाधीशहरुको अन्तरिम व्यवस्था नयाँ संविधान जारी भएको तीन महिनाभित्र व्यवस्थापिका-संसदको रुपमा कायम रहने संविधानसभाले गर्ने । स्वायत्त प्रादेशिक राज्यहरुको अन्तरिम व्यवस्था नयाँ संविधान जारी भएको तीन महिनाभित्र व्यवस्थापिका-संसदको रुपमा कायम रहने संविधानसभाले गर्ने ।
- (फरकमत) बाधा अड्काउ फुकाउने अधिकार सङ्क्रमणकालीन अवस्थामा राखी निम्नानुसार संशोधन गरिनुपर्ने :
  - राष्ट्रपतिले मन्त्रिपरिषद्को सिफारिशमा आवश्यक सम्झेमा, यस संविधानको कार्यान्वयनमा त्यस्तो बाधा अडकाऊ फुकाउने, जुन विशिष्टतया अन्तरिम संविधान २०६३ को धाराबाट यस संविधानको धारामा सङ्क्रमणको सम्बन्धमा रहेको छ, आदेश जारी गरी निर्देश गर्न सक्ने छ । आदेश उल्लिखित अवधिको दौरान यस संविधानको उपान्तरण **(addition)**, परिवर्तन **(modification)** वा लोप **(omission)**

को रूपमा अनुकूलन (adaptation) को अधीनमा रही प्रभावी (effective) रहने छ । यस्तो आदेश व्यवस्थापिका-संसदबाट एकमहिना भित्र अनुमोदन गराउनुपर्ने । यस संविधान अन्तर्गत गठित सङ्घीय संसद/व्यवस्थापिका-संसदको प्रथम अधिवेशन पश्चात् बाधा अड्काउ फुकाउ जारी रहने छैन ।

- (फरकमत) सङ्क्रमणकालीन व्यवस्थामा : यसमा निम्नानुसार संशोधन गरिनुपर्ने :
  - यस संविधान अन्तर्गत निर्वाचित सङ्घीय संसद/व्यवस्थापिका-संसदको प्रथमअधिवेशनबाट अन्तरिम संविधानको खारेजीको घोषणा नभएसम्मको अवस्थालाई सङ्क्रमणकालीन अवस्था भनिनुपर्छ । यो संविधान प्रारम्भ हुँदाका बखत वहाल रहेका राष्ट्रपति र उपराष्ट्रपति नयाँ संविधान वमोजिम निर्वाचन नभएसम्म कायम रहने र कुनै कारणवश पद रित्त भएमा पदपूर्ति हुने प्रक्रिया अन्तरिम संविधान वमोजिम हुनेछ । यो संविधान प्रारम्भ हुँदाका बखत कायम रहेको मन्त्रिपरिषद् यसै संविधान अन्तर्गत गठन भएको सङ्घीय मन्त्रिपरिषद् मानिने छ । यो संविधान वमोजिम निर्वाचित सङ्घीय संसद/व्यवस्थापिका-संसदबाट सङ्घीय मन्त्रिपरिषद् गठन नभएसम्म साविकको मन्त्रिपरिषद् कायम रहने छ । तर सङ्घीय संसद/व्यवस्थापिका-संसदको प्रथम अधिवेशनपश्चात् ६० दिनभित्र यस संविधान अन्तर्गतको मन्त्रिपरिषद् गठन हनेछ । (फरकमत) विधायिकी अधिकार अन्तर्गत संसद सचिवालयका पदाधिकारी र कर्मचारी सम्बन्धी व्यवस्था आवश्यक छैन । (फरकमत) सङ्क्रमणकालको अवधिसम्म यस संविधानद्वारा व्यवस्था गरिएको स्थानीय निकायको गठन यथावत् कायम रहने छ । तर यस संविधान अन्तर्गत गठित संसदको प्रथम अधिवेशनपश्चात् यस संविधान अनुसार स्थानीय निकायको गठन नहुन्जेल नवगठित संसदद्वारा स्थानीय निकायको अस्थायी गठनको व्यवस्था गरिने छ । (फरकमत) धारा २४ को उपधारा (२) मा रहेको वहाल रहेका न्यायाधीशहरु भन्ने शब्दहरूपछि रहेको यो संविधानमा ... नभएसम्म भन्ने शब्दहरूको सट्टा यसै संविधान बमोजिम नियुक्ति भएको मानी आ-आफ्नो पदमा यथावत् कायम रहने छन् भन्ने शब्दहरु राख्ने । (फरकमत) धारा २५ को उपधारा (३) मा रहेको कार्यरत पदाधिकारीहरु भन्ने शब्दपछि रहेको यो संविधानमा नभएसम्म भन्ने शब्दहरूको सट्टा यसै संविधान बमोजिम नियुक्ति भएको मानी आ-आफ्नो पदमा यथावत् कायम रहने छन् भन्ने शब्दहरु राख्ने । सङ्क्रमणकालीन व्यवस्था अन्तर्गत वर्तमान संविधानसभालाई नै व्यवस्थापिकाको रूपमा निरन्तरता दिने तर न्यायाधीश एवं संवैधानिक निकायका पदाधिकारीहरूको हकमा अन्यथा व्यवस्था राखिनुले दोहोरो मापदण्ड अवलम्बन गरेको देखिने हुँदा एकरूपता कायम गरिनुपर्ने । सङ्क्रमणकालीन व्यवस्था अन्तर्गत धारा २६ को उपधारा (२) को प्रतिबन्धात्मक वाक्यांशमा संविधानसँग बाझिएका कानूनहरु तुरुन्त निष्क्रिय हुने व्यवस्था राखी परिमार्जन गर्नुपर्ने । बाधा अड्काउ फुकाउन जारी भएको आदेश व्यवस्थापिका-संसदबाट अनुमोदन गर्ने प्रावधान थप गर्नुपर्ने ।

सि.नं. १२ संक्षिप्त नाम, प्रारम्भ र खारेजी

- (फरकमत) समाजवादउन्मुख गणतन्त्र नेपालको संविधान, २०६७ भनी नाम राख्नुपर्ने । (फरकमत) सङ्घीय गणतन्त्र नेपालको संविधान, २०६७ भनी नाम राख्नुपर्ने । (फरकमत) जनताको सङ्घीय गणतन्त्र नेपालको संविधान, २०६७ भनी नाम राख्नुपर्ने । गणतन्त्र नेपालको संविधान २०६७ भनी नामाकरण गर्नुपर्ने ।

(फरकमत) संविधानको नामपछि साल उल्लेखगर्दा नेपाल सम्वत् ११३० उल्लेख गर्नुपर्ने । (फरकमत) नामको पछाडि रहेको २०६७ हटाउने ।

**ख) अवधारणापत्रतर्फ**

- अवधारणापत्रको ६० पेजमा उपशीर्षक नं. २.१.३ को दोस्रो प्याराग्राफमा राज्य, राष्ट्र नभनी मस्यौदा बमोजिमको बहुराष्ट्रिय राज्य भन्नु पर्छ । A .V . Diecy, H .L .A Hart, Hens Kelson को भनाइ संवैधानिक सर्वोच्चता सम्बन्धी अवधारणापत्रमा राख्नु बेठीक छ । अवधारणापत्रको ७२ पेजमा उपशीर्षक नं. २.२.१.५ मा राखिएको अन्तिम वाक्य विवादास्पद रहेको छ । यसले जनताका प्रतिनिधिको अधिकार कटौती गरेको छ । मानिसहरूको समूहलाई राज्य भन्नु उपयुक्त हुन्न । अवधारणापत्रको पेज ७६ मा राज्यमा मानिसहरु निश्चित प्रदेश अन्तर्गत कानूनको निमित्त सङ्गठित भएका हुन्छन् भन्नेमा प्रदेशको सट्टा क्षेत्र भन्नुपर्दछ । सोही पृष्ठमा राज्यको लागि राजकीयसत्ताको प्रयोग तथा सरकार हुनु वाञ्छनीय हुन्छ भन्ने शब्दको सट्टा आवश्यक हुन्छ लेख्नुपर्छ । संविधानवादको मर्मलाई साकार तुल्याउनु मात्र दलको उद्देश्य हुनुहुन्न । अवधारणापत्रको लेखाइबाट त्यस्तो अर्थ लाग्न गएको छ । अवधारणापत्रका विभिन्न स्थानमा समानुपातिक समावेशी, हिंसा र क्रान्ति एउटै शब्दावलीजस्तो गरेर लेखिएकोछ । यिनीहरूको बीचमा ठूलो अन्तर रहेकोले सही रूपमा उल्लेख गरिनु पर्दछ ।

## २.१०.४. संवैधानिक समितिको प्रतिवेदनमाथि समितिको सर्वसम्मतिबाट परिमार्जन गर्ने निर्णय भएका विषयहरू

### २.१०.४.१. अवधारणापत्रतर्फ

- अवधारणापत्रको ६० पेजमा उपशीर्षक नं. २.१.३ को दोस्रो प्याराग्राफमा रहेको "राज्य, राष्ट्र" शब्दको सट्टा "राज्य" शब्द राख्ने । अवधारणापत्रको ७२ पेजमा उपशीर्षक नं. २.२.१.५ को अन्तिम वाक्यमा संविधानसँग बाझिएका कानून वदर घोषित गर्ने अधिकार सङ्घीय सर्वोच्च अदालतलाई मात्र हुने गरी संविधानमा व्यवस्था गरिनुपर्छ भन्ने व्यवस्थालाई न्यायप्रणाली र राज्यको पुर्नसंरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदनसँग मिलान हुने गरी व्यवस्था गर्नुपर्ने भएकोले अहिले बाँकी राख्ने । अवधारणापत्रको पेज ७६ मा राज्यमा मानिसहरु निश्चित प्रदेश अन्तर्गत कानूनको निमित्त सङ्गठित भएका हुन्छन् भन्नेमा बुँदामा रहेको "प्रदेश" भन्ने शब्दको सट्टा "क्षेत्र" भन्ने शब्द राख्ने । अवधारणापत्रको पेज ७६ मा राज्यको लागि राजकीयसत्ताको प्रयोग तथा सरकार हुनु वाञ्छनीय हुन्छ भन्ने बुँदामा रहेको "वाञ्छनीय" भन्ने शब्दको सट्टा "आवश्यक" भन्ने शब्द राख्ने ।

### २.१०.४.२. प्रारम्भिक मस्यौदातर्फ

- प्रारम्भिक मस्यौदाको धारा १२ मा उपधारा (२) नरहेको हुनाले प्रारम्भमा रहेको (१) हटाउने । सोही धारामा रहेको दर्ता र सञ्चालन भन्ने शब्दहरूको सट्टा दर्ता, सुविधा र सञ्चालन भन्ने शब्दहरु राख्ने । प्रारम्भिक मस्यौदाको धारा १३ को उपधारा (१) पछि देहायको उपधारा (२) थप गरी उपधाराको क्रम मिलाउने : "(२) उपधारा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि कुनै प्रदेशमा प्राकृतिक विपत्ति वा महामारीको कारणले गम्भीर सङ्कट उत्पन्न भएमा सम्बन्धित प्रदेश सरकारले नेपाल सरकारसमक्ष

यस धारा बमोजिम आंशिक सङ्कटकालीन अवस्थाको घोषणा वा आदेश जारी गर्नको लागि अनुरोध गर्न सक्नेछ ।"

उल्लिखित सातवटा समितिका प्रतिवेदनहरूमाथि प्रतिवेदन अध्ययन समितिले सहमतिमा टुङ्गो लगाएका विषयलाई सुझावको रूपमा ग्रहण गर्दै संविधानसभाले विवादहरू संवैधानिक समितिबाट नै सहमति कायम गर्ने गरी सबै सातवटा प्रतिवेदन मिति २०६७ ।१० ।१३ मा संवैधानिक समितिमा पठाएको थियो ।

## २.११ राज्यको पुर्नसंरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदन सम्बन्धमा

### २.११.१ प्रतिवेदनमा समावेश गर्न छुट भएका विषयहरू

- समितिका कार्यक्षेत्रभित्रका कुनै पनि विषय छुटेको देखिदैन ।

### २.११.२. अर्को समितिको कार्यक्षेत्रभित्र परेका विषय यस समितिको प्रतिवेदनमा दोहोरिएको

संविधानमा रहने विषयवस्तुको शीर्षकको आधारमा संविधानसभा नियमावली बमोजिम अरू समितिको कार्यक्षेत्रभित्र पर्ने देहायका विषय यस समितिको प्रतिवेदनमा पनि उल्लेख भएको देखिन्छ ।

**संवैधानिक समिति**

- धारा १ को प्रस्तावना । धारा २ को परिभाषा । सङ्क्रमणकालीन व्यवस्था सम्बन्धी भागमा रहने भनी धारा ५ को उपधारा (९) मा राखिएको प्रदेशको राजधानी सम्बन्धी व्यवस्था र धारा ७ (५) को विद्यमान स्थानीयतह कायम रहने सम्बन्धी व्यवस्था

**मौलिक अधिकार तथा राज्यको निर्देशक सिद्धान्त समिति**

- धारा १२ को विभिन्न समूहलाई मौलिक हकको रूपमा प्रदान गर्ने भनिएको आत्मनिर्णयको अधिकार । धारा १४ को महिलाको अधिकार । धारा १५ को दलितको अधिकार । धारा १७ को मधेसीको अधिकार । धारा १८ को लोपोन्मुख जाति/समुदायको अधिकार

**संवैधानिक निकायको संरचना निर्धारण समिति**

- धारा १६ को आयोग सम्बन्धी व्यवस्था

### २.११.३. समितिको प्रतिवेदनमा आएका फरकमतहरू र मतैक्यता हुन नसकेका विषयहरू

**क) प्रारम्भिक मस्यौदातर्फ**

धारा १ प्रस्तावना

- (फरकमत) एकात्मक स्वरूपको अन्त गर्ने र सङ्घीयता भन्ने विषय लेखिएकोमा असहमति, संविधान प्रदत्त आत्मनिर्णयको अधिकार भन्ने वाक्यांश हटाउनुपर्ने, केन्द्रमा निहित शासनशक्तिलाई सङ्घ, प्रदेश, स्थानीयतह र विशेष संरचनासम्म बाँडफाँड गरी भन्ने वाक्यांशप्रति असहमति । (फरकमत) धर्मनिरपेक्ष शब्द हटाई यस विषयमा जनमतसङ्ग्रहबाट टुङ्गो लगाउनुपर्ने । (फरकमत) प्रस्तावनाको पहिलो अनुच्छेदमा रहेको 'नेपाललाई लोकतान्त्रिक समावेशी समानुपातिक सङ्घीय गणतन्त्रात्मक शासनप्रणाली स्थापना गर्ने' भन्ने शब्दहरूको सट्टा 'नेपालको' भन्ने

शब्द थपी भाषा मिलान गर्ने । दोस्रो अनुच्छेदमा रहेको 'विकास गर्न संविधानद्वारा प्रदत्त आत्मनिर्णयको अधिकार सहितको पहिचान र सामर्थ्यमा आधारित स्वायत्त, स्वशासित तथा अधिकारसम्पन्न प्रदेश, स्थानीयतह र विशेष संरचना पनि' भन्ने शब्दहरूको सट्टा 'पूर्ण स्वायत्तता सहितको स्थानीयतह र विशेष संरचना सहितको' भन्ने शब्दहरु राख्नुपर्ने । सोही अनुच्छेदको एघारौं हरफमा 'सबै' भन्ने शब्दपछि 'वर्ग' थप्नुपर्ने । (फरकमत) प्रस्तावनाको दोस्रो हरफको लैङ्गिकपछि मधेसी शब्द थप्ने, १५ औं हरफको धर्मनिरपेक्षपछि बहुराष्ट्रिय र १७औं हरफको लिङ्ग एवं पछि मधेसी शब्द थप गर्ने ।

धारा २ परिभाषा

- खण्ड (क) – सङ्घको परिभाषामा यसलाई 'सबभन्दा माथिल्लो तह' भनिनु हुन्न, प्रादेशिक एकाइहरूको साझा स्वरूप वा समष्टि नै सङ्घ हो भनिनुपर्ने । खण्ड (ग) ' प्रदेश अन्तर्गत' भनिनु हुन्न । खण्ड (ङ) स्वायत्तक्षेत्रको परिभाषा ।

धारा ३ राज्यको पुनर्संरचना र राज्यशक्तिको स्वरूप

- (फरकमत) उपधारा (२) मा रहेको 'तथा बहुलतामा आधारित समाज' भन्ने शब्दहरु हटाउनुपर्ने । सोही उपधाराको आठौं हरफको लोकतान्त्रिकपछि शासन भन्ने शब्द थप गर्ने । उपधारा (२) लोकतान्त्रिक प्रणालीको सट्टा लोकतान्त्रिक शासनप्रणाली राख्नुपर्ने, जनताको लोकतान्त्रिक गणतन्त्रात्मक प्रणाली भन्नुपर्ने । (फरकमत) उपधारा (३) को दोस्रो हरफमा बसोवास गर्ने भन्ने पदावलीपछि 'मधेसी समुदाय र' भन्ने शब्द थप गर्ने । उपधारा (३) – यहाँ लगायत अन्य धारामा उल्लिखित ' आदिवासी, आदिवासी जनजाति' भन्ने शब्दले अस्पष्टता ल्याएकोले यसरी प्रयोग गर्न नहुने, उत्पीडित क्षेत्रका जनता भन्नुपर्ने । धारा ३ मा सङ्घ प्रदेश, स्थानीयतह र विशेष संरचना भनिएको तर धारा ४ मा सङ्घ, प्रदेश, स्थानीय गरी तीन तह भनेको हुँदा अस्पष्टता ल्याएको । स्थानीयतह हुने हो वा स्थानीय सरकार हुने हो स्पष्ट हुनुपर्ने । विशेष संरचनाको प्रशासनिक संरचना कस्तो हुने भन्नेमा स्पष्टता हुनुपर्ने, प्रशासनिक तहमा जिल्ला समेत कायम गर्नुपर्ने ।

धारा ४ सङ्घीय नेपालको तहगत संरचना

- (फरकमत) उपधारा (१) को व्याख्यात्मक टिप्पणीमा 'सबै प्रकारका विभेदका विरूद्धउठेका वर्गीय, जातीय, क्षेत्रीय, भाषिक, लैङ्गिक र मधेस अन्दोलनका आवाजलाई सम्बोधन गर्न' भन्नेपछि थरूहट आन्दोलनलाई पनि उल्लेख गर्नुपर्ने । त्यसैगरी मधेस आन्दोलनलाई तराई आन्दोलन भनी उल्लेख गर्नुपर्ने । (फरकमत) उपधारा (३) को पहिलो हरफको स्थानीयतहपछि लाई थप्ने र ... मा देखि तेस्रो हरफको ... गरी सम्म हटाउने । उपधारा (३) र (५) – 'विधायिकी, कार्यकारी र न्यायिक अधिकार' एकै ठाँउमा राख्न नहुने । (फरकमत) उपधारा (४) को दोस्रो हरफमा रूपमा पछि ... प्रादेशिक कानून ... थप्ने र ... संविधानको देखि तेस्रो हरफको भए ... सम्म हटाउने । उपधारा (४) मा प्रादेशिक कानूनबमोजिम भनिनुपर्ने । (फरकमत) उपधारा (५) को पहिलो हरफमा स्थापना हुने पछि ... विशेष संरचनालाई ... थप्ने र ... स्वायत्तक्षेत्रदेखि तेस्रो हरफको ... गर्ने गरी ... सम्म हटाउने ।

धारा ५ प्रदेशको निर्माण

- (फरकमत) जातीय पहिचानका आधारमा चौध राज्यको संरचनाप्रति असहमति रहेको । (फरकमत) उपधारा (१) मा नेपाललाई भन्ने शब्दपछि १४ र ६ अङ्क

कायम गरी प्रदेश निर्माणका दुबै विकल्प प्रस्तुत गर्ने । सो उपधाराको व्याख्यात्मक टिप्पणीमा तराई र मधेसमा विभक्त भएको छ भन्ने वाक्यांश पछाडि देहायका वाक्यहरु राखी मिलाउने :- 'यस विविधतापूर्ण अवस्थितिलाई ध्यानमा राखी नेपालमा सबैभन्दा पछिल्लो पटक लिएको २०५८ सालको औपचारिक जनगणनामा आधारित भई कूल संख्याको एक प्रतिशतभन्दामाथि रहेको जाति समुदाय र एक प्रतिशतभन्दा बढी जनताले बोल्ने भाषिक संख्याद्वारा निर्मित भौगोलिक क्षेत्रगत निरन्तरतामा रहेका झुण्डहरूलाई आधार बनाई मानव अवस्थितिको क्षेत्रगत रेखाङ्कन तयार भएको प्रारम्भिक मानव अवस्थिति वा क्षेत्र झुण्डहरूमध्ये ज्यादै कम संख्यामा मानव अवस्थितिको वा झुण्डहरूमा मात्र निश्चित जाति, समुदाय वा भाषिक वक्ताको बहुसंख्या देखियो । यस प्रकारको मानव अवस्थितिको क्षेत्रगत रेखाङ्कन वा झुण्डहरूको बसोवासको अवस्थाले गर्दा प्रायः सबै ठाँउ, जाति, समुदाय वा भाषा-भाषिक हिसाबले अत्यधिक मिश्रणमा रहेको पाइयो । तसर्थ एकल पहिचानको प्रदेश निर्माण गर्न एक दुई क्षेत्र अपवादबाहेक प्रायः सबै क्षेत्रमा असमानजस्तै देखियो । प्रदेश निर्माण सम्बन्धी प्रयोगमा ल्याइएका सिद्धान्त एवं पहिचान र सामर्थ्यका स्वीकृत आधारमध्ये जाति, समुदाय वा भाषाबाहेकमा पहिचानका अन्य आधारित र सामर्थ्यका आधारलाई समेत प्रयोग गर्नुपर्ने अवस्था बन्यो । जस अनुसार निर्माण गरिने प्रदेशहरूको स्वायत्त र स्वशासनको अधिकार जिम्मेवारीलाई प्रयोग गर्न सक्ने गरी भौगोलिक तथा सांस्कृतिक निकटता र आर्थिक अन्तरसम्बन्ध र प्रशासनिक सुगमतालाई पनि दृष्टिगत गर्दै नेपालको एकात्मक स्वरूपलाई पुनर्संरचना गरी लोकतान्त्रिक गणतन्त्र नेपाललाई सङ्घीय एकाइमा व्यवस्थित गर्न वैज्ञानिक र व्यावहारिक देखिएको हुँदा संविधानसभामा ६ र १४ दुबै विकल्पका नक्सा प्रस्तुत गर्ने गरी यो व्यवस्था गरिएको छ ।' राज्य पुर्नसंरचना आयोग गठन गरी सो आयोगले प्रस्तुत गर्ने सिफारिशको आधारमा प्रदेशको निर्माण गर्नुपर्ने । उपधारा (१) मा 'चौध स्वायत्तप्रदेश' उल्लेख भएकोमा स्वायत्तप्रदेश वा प्रदेशमात्र उल्लेख गर्ने भन्ने सम्बन्धमा यसैको उपधारा (२) (३) मा प्रदेशमात्र उल्लेख भएको हुँदा अस्पष्टता ल्याएको चौध प्रदेशको पुनर्संरचना सम्बन्धमा यसको संख्या, नामाङ्कन र सीमाङ्कनका सम्बन्धमा फरकमतहरु आएको र सभामा छलफलहुँदा समेत माननीय सदस्यहरूको विचार फरक-फरक रहेको । (फरकमत) उपधारा (२) मा उपधारा (१) को परिवर्तन बमोजिम अनुसूची-१ मिलाउने । (फरकमत) उपधारा (२) को सट्टा निम्नानुसार राख्ने : उपधारा (१) बमोजिम निर्माण गरिने प्रदेशको नाम र क्षेत्रको निर्धारण पहिचान र सामर्थ्यका आधारमा संविधानसभाले गठन गरेको विशेषज्ञ कमिटीले तय गरे वमोजिम हुनेछ । उपधारा (३) - प्रदेशको नाम फेर्न सङ्घीय विधायिकाको समर्थन लिन पर्ने व्यवस्था आवश्यक नपर्ने, यस अनुसार उपधारा ४ मा पनि जनमत संगहबाट अनुमोदन भएमा स्वतः नाम परिवर्तन हुने भन्नु पर्ने, प्रस्तावित व्यवस्था जटिल भएको । उपधारा (५) - प्रदेशहरु एक आपसमा गाभिने सम्बन्धमा सङ्घीय विधायिकाको दुई तिहाई मत जरूरी हुनु हुँदैन । सोही अनुसार उपधारा ६ को व्यवस्थामा पनि जनमतसङ्ग्रहमात्र राखी त्यसबाट अनुमोदन भए स्वतः प्रदेश गाभिने व्यवस्था हुनुपर्ने । (फरकमत) उपधारा (९) मा उपधारा (२) को परिवर्तन बमोजिम मिलाउने । (फरकमत) प्रदेश निर्माणको टिप्पणीमा उल्लिखित 'भूबनोटका हिसाबले हिमाल, पहाड, उपत्यका र तराई-मधेस विभक्त भएको छ ।' भन्ने शब्दप्रति टिप्पणी गर्दै तराईको भूबनोट बुझाउन 'हिमाल, पहाड, तराई, भित्री तराई' भन्न उपयुक्त हुने ।

धारा ६ सङ्घको राजधानी

- (फरकमत) सङ्घको राजधानी दाङ्गमा रहने छ । सङ्घको राजधानी फेर्न सम्भव छैन ।

धारा ७ स्थानीयतहको निर्माण र क्षेत्रनिर्धारण :

- गाउपालिका र नगरपालिकाभन्दामाथि प्रदेशभन्दा तलको बीचमा प्रशासनिक एकाइ आवश्यक हुने, यसवारेमा स्पष्ट हुनुपर्ने, जिल्लासमेत रहनु पर्ने । (फरकमत) उपधारा (१) मा 'रूपमा' शब्दपछि 'जिल्ला' शब्द थप्नुपर्ने । (फरकमत) उपधारा (१) मा अन्तर्गत पछाडि 'स्थानीयतह' को सट्टा 'स्थानीय सरकार' राख्ने र सोही बमोजिम व्याख्यात्मक टिप्पणी मिलाउने । (फरकमत) उपधारा (२) को दोस्रो हरफको सरकारपछि ... लाई ... देखि चौथो हरफको सङ्घीय सरकार ... सम्म हटाउने । उपधारा (२),(३)र(४)- स्थानीयतहको संख्या र क्षेत्र संविधान निर्माणसँगै र प्रदेशको निर्माणसँगै गरिनुपर्ने, स्थानीयतहको संरचना गर्दा अपनाउने मापदण्ड संविधानमै तोकी वैज्ञानिक तवरले गर्न खोजिएको तर सोही मापदण्डलाई प्रदेश निमार्णमा ध्यान नदिइएको । (फरकमत) उपधारा (३) को पहिलो हरफ बमोजिम पछि ... सङ्घीय सरकार ... देखि दोस्रो हरफको सम्बन्धितसम्म हटाउने । (फरकमत) उपधारा (६) मा रहेको 'प्रादेशिक' शब्द हटाउनुपर्ने ।

धारा ८ विशेष संरचना सम्बन्धी व्यवस्था अन्तर्गत आएका देहायका विषयहरू

- (फरकमत) उपधारा (१) मा उल्लिखित वाक्यांशको सट्टामा देहाय बमोजिम लेख्ने :- संविधानको धारा ४ बमोजिमको तहगत संरचनाको अतिरिक्त कुनै प्रदेशभित्र आदिवासी जनजाति वा भाषिक समुदायको बाहुल्य भएको वा सघन उपस्थिति भएको क्षेत्रलाई स्वायत्तक्षेत्र कायम गरिने छ । (फरकमत) उपधारा (१) को चौथो हरफमा क्षेत्रलाई पछि ... विशेष संरचना ... थप्ने र सो स्थानको स्वायत्तक्षेत्र ... हटाउने । उपधारा (१) - स्वायत्तक्षेत्र कायम गर्न सकिने भनी यस उपधारामा उल्लेख भएको भए तापनि सोको विपरीत उपधारामा अनुसूची २ मा उल्लेख भएबमोजिमका स्वायत्तक्षेत्र रहने कुरा उल्लेख गरेको, यो सूची अपूर्ण र अवैज्ञानिक रहेको भन्ने मत आएका, अरू क्षेत्रनिर्माणको लागि आयोग गठन गर्न जरूरी ठानियो तर यी सूचीकृत क्षेत्र के आधारमा निर्माण गरियो ? भन्ने संम्बन्धमा पनि जिज्ञासाहरू आएका । उपधारा (२)र (३) - विशेषक्षेत्र, संरक्षितक्षेत्र निर्वाचित वा मनोनित के हुने भन्ने अस्पष्टता रहेको । (फरकमत) उपधारा (२), (३), (४) र (५) हटाउने । (फरकमत) उपधारा (४) र (५) को सट्टा देहाय बमोजिमको उपधारा (४) राख्ने र सोही बमोजिम गरी व्याख्यात्मक टिप्पणी मिलाउने :- "(४) उपधारा (१), (२) र (३) बमोजिम विशेष संरचना निर्माण गर्दा सङ्घीय सरकारले तोकेको मापदण्डको आधारमा सम्बन्धित प्रदेश सरकारले विषयगत विज्ञहरूको आयोग गठन गर्ने छ । धारा ५ को उपधारा (४) बमोजिम गठित आयोगको सिफारिश बमोजिम प्रादेशिक सरकारद्वारा प्रस्तुत प्रस्तावले प्रादेशिक व्यवस्थापिकाको दुई तिहाई सदस्यहरूको समर्थन प्राप्त गरेपछि विशेष संरचनाको गठन गरिने छ ।" (फरकमत) उपधारा (४) मा रहेको अनुसूची २ भन्ने शब्द हटाउने । (फरकमत) उपधारा (४) - उपधारा (१) बमोजिम प्रदेश अन्तर्गत निर्माण हुने स्वायत्तक्षेत्रहरू अनुसूची-२ मा उल्लेख भएबमोजिम हुने छन् । स्वायत्तक्षेत्रको सीमाङ्कन, नामाकरण प्रादेशिक सरकारले एक वर्षभित्रमा कानून बनाई निर्धारण गर्नेछ । त्यसको लागि प्रादेशिक सरकारले एक अधिकारसम्पन्न आयोग गठन गर्नेछ । आयोगको सिफारिशमा नाम र सीमा निर्धारण हुने छन् । उपधारा (७)- यो व्यवस्था राखिनु हुन्न, यसले

स्वायत्तक्षेत्रलाई कुण्ठित गर्छ । (फरकमत) उपधारा (९) मा भएको वाक्यांशलाई अर्को बुँदामा राखी सो उपधारामा 'स्वायत्तक्षेत्र वा संख्यात्मक अनुपात नपुग्ने आदिवासी जनजातिको हकमा सङ्घ तथा प्रदेशका नीतिनिर्माण तथा कार्यान्वयन गर्ने तहमा कानून बनाई अनिवार्य प्रतिनिधित्वको सुनिश्चित गरिने छ भन्ने वाक्यांश उल्लेख गर्ने । (तर धारा ८ मा उपधारा ७ सम्ममात्र रहेको)

धारा ९ सङ्घ, प्रदेश, स्थानीयतह र विशेष संरचनाको अधिकारको बाँडफाँड :

- उपधारा (५) – स्थानीयतहलाई कानून बनाउने अधिकार दिनु उपयुक्त नहुने, प्रादेशिक कानूनसँग स्थानीयतहले वनाएको कानून बाझिएमा त्यस्ता कानून स्वतः निष्क्रिय हुने भन्ने व्यवस्था राख्नु हुन्न यो व्यवस्थाले अदालतलाई बढी कार्यबोझ हुनगई उसका नियमित कार्यहरू प्रभावित हुनसक्ने । (फरकमत) उपधारा (५), (६), (७), (८), (९) र (१०) हटाउने ।

धारा १० (फरकमत) आवश्यक नपर्ने ।

धारा ११ सङ्घीय एकाइहरू बीच उत्पन्न हुने विवाद समाधान सम्बन्धी व्यवस्था :

- अन्तरप्रादेशिक परिषद्मा विशेषज्ञहरू, स्वतन्त्र व्यक्तिहरू रहनुपर्ने, यो परिषद्मा राजनीतिक प्रकृतिका व्यक्तिमात्र रहने व्यवस्था गरियो, विवादको पक्षसमेत यो परिषद्मा रहने अवस्था आउने हुँदा प्रभावकारी हुन नसक्ने, यसमा कानूनमन्त्री समेत राख्नुपर्ने । (फरकमत) उपधारा (११) को सङ्घ र प्रदेश, प्रदेश र प्रदेश बीच पछि पहिलो हरफमा ... प्रदेश र प्रदेश पछि को प्रदेश र ... देखि ... तेस्रो हरफको क्षेत्रहरू ... सम्म हटाउने ।

उपधारा (११) – अवशिष्ट अधिकार प्रदेशलाई हुनुपर्ने ।

- उपधारा (११) देखि (१६) – संवैधानिक अदालतको व्यवस्था न्यायप्रणाली सम्बन्धी समितिको प्रतिवेदनसँग मेल खाँदैन, यो विषय यसको क्षेत्राधिकार नभएको, यी दुबै समितिका प्रतिवेदनमा भएका व्यवस्था एकैसाथ राखी हेर्नुपर्छ भन्ने विषय ।

धारा १२ आत्मनिर्णयको अधिकार :

- (फरकमत) उपधारा (१) मा 'आदिवासी–जनजाति' शब्दपछि स्थानीयतह र विशेष संरचनामा स्थायी रूपमा बसोवास गर्ने सबै नागरिकलाई भन्ने शब्दहरू थप्ने । आदिवासी, आदिवासी जनजाति भन्ने शब्दले अस्पष्टता ल्याएको, आत्मनिर्णयको अधिकार भन्ने शब्दावलीको विभिन्न अर्थ लगाइने गरेको हुँदा यस व्यवस्थालाई राख्न नहुने । (फरकमत) उपधारा (१) आत्मनिर्णयको अधिकार हटाई क्रम मिलान गर्ने । (फरकमत) आत्मनिर्णयको अधिकारको व्यवस्था हटाई त्यस कामको निर्णय गर्ने जिम्मेवारी व्यवस्थापिका-संसदलाई दिनुपर्छ ।

धारा १३ राजनीतिक अग्राधिकार सम्बन्धी व्यवस्था

- राजनीतिक अग्राधिकार सम्बन्धी व्यवस्था लोकतन्त्रविरोधी भएकोले राख्न नहुने । (फरकमत) राजनीतिक अग्राधिकार सम्बन्धी प्रस्तावित व्यवस्था पूरै हटाउने । (फरकमत) प्रदेश र विशेष संरचनाक्षेत्र अन्तर्गत जाति वा भाषिक बाहुल्यताको आधारमा राजनीतिक अग्राधिकार हुनेछ भन्ने व्यवस्था हटाउनुपर्ने । (फरकमत) उपधारा (१) हटाउने । (फरकमत) धारा १३ मा राजनीतिक अग्राधिकार, प्रदेशको हकमा फरकमत उपधारा (१) हटाउने । उपधारा (१) – दुई कार्यकालको सट्टा १५ वर्ष राख्ने । उपधारा (२) को सट्टा निम्न बमोजिमको वाक्यांश राख्ने :–

सङ्घीय, प्रादेशिक र स्थानीयतहका सबै राजनीतिक संरचनामा दलित समुदायको जनसंख्याको आधारमा समानुपातिक प्रतिनिधित्वमा इतिहासकालदेखिकै उत्पीडित बापत क्षतिपूर्तिका रूपमा थप सात प्रतिशत प्रतिनिधित्वको सुनिश्चित हुने गरी विशेषाधिकारको व्यवस्था हुनेछ । उपधारा (२) - दलितलाई थप सात प्रतिशत क्षतिपूर्ति दिने व्यवस्था हुनुपर्ने भन्ने मत आएको ।स्थानीय निकायमा दलित समुदायको बाहुल्यता भएको स्थानमा दलित नै प्रमुख हुने व्यवस्था गर्नुपर्ने ।

धारा १४ महिलाको अधिकार

- उपधारा (५) - मुस्लिम शब्द थप गर्नुपर्ने ।

धारा १५ दलितको अधिकार

- (फरकमत) राज्यको सम्पूर्ण अङ्गमा /राजनीतिक, प्रशासनिक, आर्थिक, समाजिक, सांस्कृतिक क्षेत्रहरूमा दलितको जनसंख्याको १३ प्रतिशत थप क्षतिपूर्ति ७ प्रतिशत हाल २० प्रतिशत किटानगरी सहभागिता र अधिकारको ग्यारेण्टी हुनुपर्ने । (फरकमत) उपधारा (२) मा गरिएको तीन र पाँच प्रतिशतको थप व्यवस्थाले पार्ने प्रभावका सन्दर्भमा प्रस्तावित मस्यौदामा स्पष्ट गरिनु आवश्यक छ । (फरकमत) उपधारा (४) मा खस पर्वते दलितका ठाउँमा पहाडे दलित राख्ने भनी फरकमत आएको तर खस पर्वते भन्ने शब्द मस्यौदामा नभएको ।

धारा २० - धारा थप गरी मुस्लिम अधिकार उल्लेख गर्नुपर्ने ।

अनुसूची १ (फरकमत) प्रदेशको संख्या, सिमाना र क्षेत्र :

- यो अनुसूचीको सट्टा देहायको अनुसूची १ राख्नुपर्नेः- नेपाललाई भूगोलको आधारमा निम्न बमोजिम १४ वटा प्रान्तमा विभाजन गरिएको छ : १) मेची प्रान्त २) कोशी प्रान्त ३) सगरमाथा प्रान्त ४) जनकपुर प्रान्त ५) नारायणी प्रान्त ६) बागमती प्रान्त ७) लुम्बिनी प्रान्त ८) गण्डकी प्रान्त ९) अन्नपूर्ण प्रान्त १०) राप्ती प्रान्त ११) भेरी प्रान्त १२) कर्णाली प्रान्त १३) सेती प्रान्त १४) महाकाली प्रान्त ।
- यो अनुसूचीको सट्टा देहायको अनुसूची १ राख्नुपर्नेः- प्रदेशहरू बेग्लाबेग्लै भौगोलिक क्षेत्र, जाति, भाषा वा संस्कृतिलाई मिलाएर गठन गरिनुपर्छ र प्रदेशहरू निम्न अनुसार हुने छन् ।

  कोशी प्रदेश - मेची र कोशी अञ्चललाई मिलाएर । सगरमाथा प्रदेश - सगरमाथा र जनकपुर अञ्चललाई मिलाएर । बागमती प्रदेश - बागमती र नारायणी अञ्चललाई मिलाएर । गण्डकी प्रदेश - गण्डकी र धवलागिरी अञ्चललाई मिलाएर । लुम्बिनी प्रदेश - राप्ती र लुम्बिनी अञ्चललाई मिलाएर । कर्णाली प्रदेश - कर्णाली अञ्चल । महाकाली प्रदेश -भेरी, सेती र महाकाली अञ्चललाई मिलाएर ।

अनुसूची-२ (फरकमत) स्वायत्तक्षेत्रको सूची :

- यो अनुसूची पूरै हटाउनुपर्ने ।

अनुसूची-३ (फरकमत) सङ्घको अधिकारको सूची :

- क्रमसंख्या ४, ५, २४, २५, २७ र २९ लाई हटाई अनुसूची-४ मा समावेश गरी क्रम मिलाउने । क्रमसंख्या ३ मा मुद्रा थप्नुपर्ने । क्रमसंख्या ३० पछि देहायको क्रमसंख्या र विषयहरू थप गर्ने :- ३१. भूमिसुधार, ३२. राष्ट्रियस्तरको वन, ३३. तालतलैया, ३४. निकुञ्ज र ३५. नदी र पहाडहरू ।

अनुसूची-४ (फरकमत) प्रदेशको अधिकारको सूची :

- क्रमसंख्या २१ मा रहेको 'भूमिव्यवस्थापन' शब्द हटाउनुपर्ने । भूमिनीतिलाई हटाई सङ्घको अधिकार अन्तर्गतको सूचीमा राख्ने ।

अनुसूची-५ (फरकमत) साझा अधिकारको सूची :

- क्रमसंख्या २, ६, ७, ९, १५, १७, १८, २०, र २३ हटाई अनुसूची-४ मा समावेश गरी क्रम मिलाउने । क्रमसंख्या ११ मा उपभोक्ता हकहित सम्बन्धी विवाद थप्नुपर्ने ।

अनुसूची-६ (फरकमत) स्थानीयतहको अधिकारको सूची :

- क्रमसंख्या ३ मा टेलिभिजन र पत्रपत्रिका, क्रमसंख्या ९ मा उच्चशिक्षा, क्रमसंख्या २० पछि देहायको क्रमसंख्या र विषयहरु क्रमशः थप गर्ने :- २१. उपभोक्ता अदालत र श्रम अदालत, २२. भाषा, संस्कृति र लिपि, २३. प्राकृतिक स्रोतबापत प्राप्त रोयल्टी र २४. विदेशी नागरिकसँग सेवा शुल्क ।

अनुसूची ७ (फरकमत) विशेष संरचना अन्तर्गत स्थापना हुने स्वायत्तक्षेत्रको अधिकारको सूची :

- यस अनुसूचीको विषयवस्तु हटाई त्यसलाई अनुसूचीमा ४ मा समावेश गरी क्रम मिलाउने ।

विविध (फरकमत)

- धारा ४, ५, ६, ८, ९ र १० को व्यवस्था सङ्घीय प्रकृतिको भएकोले सो व्यवस्थाप्रति असहमति रहेको । जिल्लाको आवश्यकता अनुसार संसदद्वारा पुनर्गठन हुनेछ भन्नु पर्ने । स्थानीय स्वायत्त शासनका तीन तह हुने छन् - प्रदेश, जिल्ला र गाउँ वा नगरपालिका भन्नु पर्ने । प्रदेशहरु ५ - ७ भन्दा बढी बनाउन नहुने, सङ्घीय संरचनामा निम्न चार तहहरु रहने छन् भन्नु पर्ने :- (१) सङ्घ (केन्द्र), (२) प्रदेश, (३) जिल्ला र (४) ग्रामपालिका एवं नगरपालिकाहरु । प्रशासनिक दृष्टिकोणले नेपाल राज्य चार तहमा वाँडिनेछ - केन्द्र, प्रदेश, जिल्ला र गाँउ वा नगरपालिका भन्नु पर्ने । स्थानीय स्वायत्त शासन अन्तर्गतका तीन तहको गठन विधि उल्लेख हुनुपर्ने । गाँउ समितिको कार्यक्षेत्र र अधिकार, जिल्ला समितिको कार्यक्षेत्र र अधिकार र प्रादेशिक समितिको कार्यक्षेत्र र अधिकारको विषयमा उल्लेख हुनुपर्ने । जनजाति तथा दलित काउन्सिलको व्यवस्थाबारे उल्लेख हुनुपर्ने । धारा ८ (१) - संविधानको धारा ४ वमोजिमको मूल संरचनाको अतिरिक्त कुनै प्रदेशभित्र एक जाति, समुदाय वा भाषिक समुदायको बाहुल्यता भएको वा सघन उपस्थिति रहेको क्षेत्रलाई स्वायत्तक्षेत्र कायम गर्न सकिनेछ भन्ने उल्लेख भएकोमा एक जाति, समुदाय वा भाषिक समुदायको बाहुल्यता भएको वा सघन उपस्थिति रहेको वाक्यांशको सट्टा अत्यधिक बहुसंख्यामा भएको भन्ने शब्द लेख्नु पर्ने ।

कुनै धारा उल्लेख नभएको (फरकमत)

- प्रदेशको संख्या सीमाङ्कन र नामाङ्कन लगायत समावेशी भौगोलिक तथा जातीय आधारमा प्रदेशको गठन गर्ने र बसोवास भएको बहुमतको आधारमा जातीय स्वायत्त ईकाई गठन गर्न राज्य पुनर्संरचना आयोग गठन गरी त्यसको सुझावको आधारमा गरिनुपर्ने । मधेसी, खस र नेवार जातीय समुदायमा रहेका कथित शूद्र, अछूत वा दलित जातहरूको संविधानको सूचीमा समावेश गर्नुपर्ने । जातीय स्वायत्त ईकाईहरु प्रदेश अन्तर्गत रहने भएकाले त्यसको निम्ति अलग्गै प्रहरी सेवाको आवश्यक नपर्ने । नीतिनिर्माण, शासन प्रशासन लगायत सेना, प्रहरी तथा सरकारी प्रतिष्ठानमा र समितिहरूलाई जातीय एवं क्षेत्रीय आधारमा समावेशी बनाउनुपर्ने, तर समितिको मस्यौदा प्रतिवेदनमा जनसंख्याको

अनुपातमा समावेशी बनाउने प्रस्तावप्रति असहमति रहेको । जनयुद्ध, जनआन्दोलन, मधेसआन्दोलन लगायतका सबै सङ्घर्षहरूमा शहादत प्राप्त गर्नु हुने महान् शहीद, बेपत्ता योद्धा र घाइतेको उच्च मूल्याङ्कन गर्दै सङ्घीय, प्रादेशिक, विशेष संरचना र स्थानीय निकाय लगायतका सबै अङ्गहरूमा उनीहरूका परिवारजनहरु र घाइतेलाई प्रतिनिधित्व गरिने कुरा मस्यौदामा उल्लेख गर्नुपर्ने ।

**ख) अवधारणापत्रतर्फ**

- (फरकमत) सि.नं. ९.१.२, र ९.२ को अवधारणासमेत हटाउने । (फरकमत) परिच्छेद १ को बुँदा नं. १.१ मा माओवादी जनयुद्ध भन्ने शब्दप्रति असहमति रहेको, संविधानसभाको ... परिणत भएको घोषणा गऱ्यो भन्ने वाक्य पछि देहायको वाक्य थप्ने :- 'सो बैठकमा राष्ट्रिय जनमोर्चाका सभासदहरूले गणतन्त्रको समर्थन गर्दै सङ्घीयताको विरोध गरेका थिए यसरी सङ्घीयता बहुमतद्वारा पारित भएको थियो । (फरकमत) परिच्छेद १ को १.६ र परिच्छेद ४ को ४.१.१ मा उल्लिखित भएको सङ्घीय शब्दप्रति असहमति । (फरकमत) परिच्छेद २ को २.३.६ मा उल्लिखित 'एकात्मक राज्यले सम्बोधन गर्न नसकेका विषयलाई सम्बोधन गर्ने चाहना' भन्ने शब्दप्रति असहमति । (फरकमत) परिच्छेद ९ को ९.१.२ मा आदिवासी जनजातिको आत्मनिर्णयको सम्बन्धमा गरिएको व्यवस्थाबारे असहमति भएकोले आदिवासी को हुन् ? सूचीकृत गरिनुपर्छ । आदिवासी जनजातिको आत्मनिर्णयको सम्बन्धमा संविधानमा केही उल्लेख नगरी व्यवस्थापिका-संसदलाई जिम्मा दिनुपर्छ । (फरकमत) परिच्छेद ९ को ९.२ राजनीतिक अग्राधिकार शीर्षक अन्तर्गत विशेष संरचना सम्बन्धी व्यवस्थाको प्रदेशस्तरमा बाहुल्यताका आधारमा कुनै जातिलाई मुख्य नेतृत्व दिनु हुँदैन । (फरकमत) परिच्छेद ९ को ९.३.२ मा दलित समुदायलाई राज्यका रोजगारीका क्षेत्रमा विशेष अधिकारको व्यवस्था हुनुपर्ने । (फरकमत) विस्तृत रूपमा सैद्धान्तिक र अवधारणागत रूपमा प्रतिवेदनको पेज नं. १५८ -१६६ सम्म फरकमत राख्नु भएको । समितिसमक्ष प्रस्तुत नक्साबाट समितिले पारित गरेको आधारहरूको उल्लङ्घन भएको भन्ने शीर्षक अन्तर्गत राज्य पुनर्संरचनाको सन्दर्भमा किटान भएका पहिचानको आधार र सामर्थ्यका आधारभित्र पर्ने बुँदाहरूलाई सविस्तार व्याख्या र विवेचना गर्नु भई समितिसमक्ष प्रस्तुत नक्सामा गम्भीर आपत्तिका विषयहरूलाई खुलाई ती मान्यता र स्वीकारिएको तथ्यहरूको विपरीत प्रस्तावित प्रदेशहरूको संख्या सीमाङ्कन र नामाकरणको अनुसूची अमान्य भएको कुरा खुलाउनु भएको ।

## २.११.४. राज्यको पुर्नसंरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदनमाथि समितिको सर्वसम्मतिबाट परिमार्जन गर्ने निर्णय भएका विषयहरू

- समितिको प्रतिवेदनमा रहेका धारा १ प्रस्तावना, धारा २ परिभाषा, धारा ५(९) र धारा ७(५) को सङ्क्रमणकालीन प्रकृतिको व्यवस्था संवैधानिक समितिको कार्यक्षेत्रमा पर्ने, धारा १२, १४, १५, १७, १८ मा रहेका मौलिक हकहरु मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको कार्यक्षेत्रमा पर्ने देखिएको, धारा १६ मा रहेका महिला आयोग तथा दलित आयोग सम्बन्धी व्यवस्था संवैधानिक निकायको संरचना निर्धारण समितिको कार्यक्षेत्रमा परेको देखिन्छ । राज्यको पुर्नसंरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको मस्यौदामा समितिको दृष्टिले सम्बन्धित भागमा राख्न सिफारिश गरिएका विषयलाई संवैधानिक समितिले महत्वपूर्ण सन्दर्भ सामग्रीको रूपमा ग्रहण गरी सम्बन्धित विषयलाई पूर्णता दिने क्रममा ध्यान दिन सुझाव दिने । समितिबाट उल्लिखित विषयमा सभामा छलफल हुँदा उठेका कुराहरु सम्बन्धित समितिको मस्यौदाबाट निर्णय भई सम्बोधन

हुने भएकोले समितिले यहाँ छलफल र निर्णय गरेको छैन । मतैक्यता हुन नसकेका विषयमध्ये मस्यौदाको धारा ३ को उपधारा (२) उपयुक्त देखिएकोले कुनै थप घट गर्न नपर्ने । धारा ४ को उपधारा (१) को व्याख्यात्मक टिप्पणीमा 'सबै प्रकारका विभेदका विरूद्ध उठेका वर्गीय, जातीय, क्षेत्रीय, भाषिक, लैङ्गिक आन्दोलन' भन्ने शब्दावली राख्दा त्यसमा सबै किसिमका आन्दोलनको भावना समेटिने भएकोले अरू आन्दोलनको नाम लेख्न आवश्यक नपर्ने । धारा ७ को उपधारा (१) मा स्थानीय सरकार भन्ने शब्दावली राख्दा कार्यकारी प्रकृतिको काम गर्ने अङ्ग मात्र बुझिने भएकोले स्थानीयतह भन्ने शब्दावली नै उपयुक्त हुने ।

- धारा ९ को उपधारा (३) लाई देहाय बमोजिम परिमार्जन गरेर राख्ने:- (३) संविधानको अनुसूची ५ मा उल्लिखित साझा सूचीका विषयमा सङ्घीय व्यवस्थापिकाले बनाएको कानूनसँग नबाझिने गरी प्रादेशिक व्यवस्थापिकाले आवश्यक कानून निर्माण गर्न सक्नेछ । उक्त उपधाराको व्याख्यात्मक टिप्पणीलाई पनि सोही बमोजिम मिलाउने । अनुसूची ५ को क्रम संख्या ११ मा उपभोक्ता हकहित सम्बन्धी विवाद पनि थप गर्ने । अनुसूची ५ को क्रम संख्या १८ मा रहेको सवारी साधन अनुमतिपत्र भन्ने विषयलाई त्यहाबाट हटाई अनुसूची ४ मा राख्ने । अनुसूची ६ को स्थानीयतहको अधिकारको सूचीको क्रम संख्या ३ मा टेलिभिजन र पत्रपत्रिका थप गर्ने । अनुसूची ६ को स्थानीयतहको अधिकारको सूचीमा भाषा, संस्कृति र लिपि, प्राकृतिक स्रोत बापत प्राप्त रोयल्टी र सेवाशुल्क पनि थप गर्नुपर्ने सुझाव आएकोमा प्राकृतिक स्रोत आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको प्रतिवेदनमा रहेको स्थानीयतहको सूचीमा ती सबै विषय समावेश भएको देखिएकोले मिलान हुने गरी अधिकारको सूचीलाई अन्तिम रूप प्रदान गर्ने । सङ्घीय संरचना अन्तिम हुँदा विशेष संरचना र सो अन्तर्गत स्वायत्तक्षेत्र रहने भएमा सो सम्बन्धी हालको अनुसूची ७ मा प्रहरी राख्न नपर्ने । सङ्घीय संरचना अन्तिम भएपछिमात्र अधिकारको सूचीलाई अन्तिम रूप दिन सकिने । त्यसो गर्दा प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको प्रतिवेदनमा रहेका सूचीलाई समेत मिलान गरेर सूची निर्माण हुनुपर्ने ।

प्रतिवेदन अध्ययन समितिले सहमतिमा टुङ्गो गरेका उल्लिखित सुझाव ग्रहण गर्दै विवादित विषयमा संवैधानिक समितिले नै सहमति कायम गर्ने गरी उक्त समितिको प्रतिवेदन संविधानसभाले मिति २०६७ ।१२ ।०३ मा संवैधानिक समितिमा पठाएको थियो ।

## ५.३ अवधारणापत्र र प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्ययन समितिले सहमति कायम गर्न नसकी प्रश्नावलीको रूपमा सूचीकृत गरेका विवादको विवरण

राज्यको शासकीय स्वरूप समितितर्फ

१. केन्द्रमा देहायका मध्ये कुन शासनप्रणाली अवलम्बन गर्ने ?

(क) सहमतीय (प्रत्यक्षरूपमा निर्वाचित) राष्ट्रपतिप्रणाली (ख) संवैधानिक राष्ट्रपति सहित व्यवस्थापिकामा बहुमतप्राप्त कार्यकारी प्रधानमन्त्री रहने शासनप्रणाली (ग) व्यवस्थापिकाबाट निर्वाचित राष्ट्रपतीय शासनप्रणाली (घ) आलङ्कारिक राष्ट्रपतीय प्रणाली र जनताबाट प्रत्यक्षरूपमा निर्वाचित कार्यकारी अधिकार सहितको प्रधानमन्त्री

२. सङ्घीय तहको व्यवस्थापिकामा देहायका मध्ये कुन निर्वाचनप्रणाली अवलम्बन गर्ने ? (पेज नं. XLIII)

(क) बहुसदस्यीय प्रत्यक्ष समानुपातिक निर्वाचनप्रणाली (ख) मिश्रित सदस्यीय समानुपातिक निर्वाचनप्रणाली (पहिलो हुने निर्वाचित हुने र मिश्रित सदस्य समानुपातिक (ग) मिश्रित निर्वाचनप्रणाली (पहिलो हुने निर्वाचित हुने र समानुपातिक) (घ) पहिलो हुने निर्वाचित हुने निर्वाचनप्रणाली (ङ) पूर्ण समानुपातिक निर्वाचनप्रणाली ।

*(यो प्रश्न व्यवस्थापिकीय अङ्गको स्वरुप निर्धारण समितिको प्रतिवेदनसँग सम्बन्धित रहेको)*

३. सङ्कटकालीन अवस्था वा केन्द्रीय शासन लागू भएको अवस्थामा प्रदेशको कार्यकारिणी अधिकार प्रदेश प्रमुखलाई दिने वा नदिने ? (पेज नं. XXIII को उपधारा (१) को प्रतिबन्धात्मक वाक्यांश)

४. निर्वाचनक्षेत्र निर्धारण गर्दा जनसंख्या र सदस्य संख्या बीचको अनुपात यथासम्भव समान हुने गरी भन्ने शब्दावलीको सट्टा जनसंख्या र भूगोलको समानुपातमा भन्ने शब्दावली राख्ने वा नराख्ने ? (पेज नं. XXXIX को धारा ५ को उपधारा (६)) *(यो प्रश्न व्यवस्थापिकीय अङ्गको स्वरुप निर्धारण समितिको प्रतिवेदनसँग सम्बन्धित रहेको)*

५. प्रदेशमा मुख्यमन्त्रीविरूद्धको अविश्वासको प्रस्तावसाथ वैकल्पिक मुख्यमन्त्रीको प्रस्ताव पनि आउनु पर्ने वा नपर्ने ?(पेज नं. XXVII को धारा ७ को उपधारा (६) (घ)

६. स्थानीय सरकारमा जिल्ला एकाइ रहने वा नरहने ? (पेज नं. XXIX) *(यो प्रश्न राज्य पुर्नसंरचनासँग पनि सम्बन्धित रहेको)*

७. स्थानीय सरकारको कार्यकारी, विधायिकी र न्यायिक अधिकार प्रयोगको संयन्त्र अलग अलग हुने वा एउटै हुने ? (पेज नं. XXX)*(यो प्रश्न व्यवस्थापिकीय अङ्ग र राज्य पुर्नसंरचनासँग पनि सम्बन्धित रहेको)*

८. प्रदेशमा देहायका मध्ये कुन निर्वाचनप्रणाली अवलम्बन गर्ने ?(पेज नं. XLI) *(यो प्रश्न व्यवस्थापिकीय अङ्गको स्वरुप निर्धारण समितिको प्रतिवेदनसँग सम्बन्धित रहेको)*

क) बहुसदस्यीय प्रत्यक्ष समानुपातिक निर्वाचनप्रणाली (ख) मिश्रित सदस्यीय समानुपातिक निर्वाचनप्रणाली (पहिलो हुने निर्वाचितहुने र मिश्रित सदस्य समानुपातिक (ग) मिश्रित निर्वाचनप्रणाली (पहिलो हुने निर्वाचितहुने र समानुपातिक) (घ) पहिलो हुने निर्वाचित हुने निर्वाचनप्रणाली (ङ) पूर्ण समानुपातिक निर्वाचनप्रणाली ।

९. स्थानीयतहमा व्यवस्थापिका रहने वा नरहने ? सोको निर्वाचनप्रणाली बहुसदस्यीय प्रत्यक्ष समानुपातिक हुने वा अरू कुनै हुने ? (पेज नं. XL) *(माथि प्रश्न नं. ७ सँग अन्तरसम्बन्धित)*

१०. मिश्रित सदस्यीय समानुपातिक निर्वाचनप्रणाली अवलम्बन गर्ने १६ मत प्राप्त मस्यौदा पारित भएमा समानुपातिक निर्वाचनप्रणालीबाट निर्वाचित राजनीतिक दलले खसेको मतको ३ प्रतिशत मत प्राप्त गर्नुपर्ने वा नपर्ने ?

**खुला प्रश्न**

११. मन्त्रिपरिषद्को गठनविधि के हुने ? (शासनप्रणालीसँग सम्बन्धित रहने)

**व्यवस्थापिकीय अङ्गको स्वरूप निर्धारण समिति**

१२. देशको सङ्घीय व्यवस्थापिका एक सदनात्मक हुने वा दुई सदनात्मक हुने ?

१३. सङ्घीय व्यवस्थापिकाको नामाकरण गर्दा संसद भन्ने वा व्यवस्थापिका भन्ने ?

१४. तल्लो सदनको नाम जनप्रतिनिधिसभा वा प्रतिनिधिसभा के राख्ने ?

१५. प्रतिनिधित्वको आधार के हुने ?

क) भूगोल, ख) जनसंख्या ग) भूगोल र जनसंख्या दुबै ।

*(यो प्रश्न शासकीय स्वरूपको निर्धारण समितिसँग सगै राखेर टुङ्गो गर्नुपर्ने)*

१६. निर्वाचनमा कति वर्ष पुगेको व्यक्तिलाई मताधिकार दिने ?

क) १६ वर्ष ख) १८ वर्ष

१७. प्रदेश व्यवस्थापिका एक सदनात्मक हुने वा दुई सदनात्मक हुने ?

१८. प्रदेश व्यवस्थापिकामा प्रतिनिधित्वको आधार के हुने ?

क) भूगोल, ख) जनसंख्या ग) भूगोल र जनसंख्या दुबै ।

*(यो प्रश्न शासकीय स्वरूपको निर्धारण समितिसँग सँगै राखेर टुङ्गो गर्नुपर्ने)*

१९. प्रदेशमा देहायका मध्ये कुन निर्वाचनप्रणाली अवलम्बन गर्ने ? (यो प्रश्न राज्यको शासकीय स्वरूप *निर्धारण समितिको प्रतिवेदनमा पनि रहेको*)

क) बहुसदस्यीय प्रत्यक्ष समानुपातिक निर्वाचनप्रणाली (ख) मिश्रित सदस्यीय समानुपातिक निर्वाचनप्रणाली (पहिलो हुने निर्वाचित हुने र मिश्रित सदस्य समानुपातिक) (ग) मिश्रित निर्वाचनप्रणाली (पहिलो हुने निर्वाचित हुने र समानुपातिक) (घ) पहिलो हुने निर्वाचित हुने निर्वाचनप्रणाली (ङ) पूर्ण समानुपातिक निर्वाचनप्रणाली ।

२०. सङ्घीय व्यवस्थापिकाको तल्लो सदन विघटन भई निर्वाचनको मिति निर्धारण भएकोमा उक्त मितिमा निर्वाचन हुन नसकेमा स्वतः पुनस्थापना हुने वा नहुने ?

**खुला प्रश्न**

२१. प्रत्येक सदनमा सदस्य संख्या कति हुने ?

२२. विधायिकामा महिला लगायतका वर्ग, क्षेत्र र समुदायको प्रतिनिधित्व कसरी गराउने ?

२३. माथिल्लो सदन रहेमा त्यहाँ कति संख्या रहने, के कसरी र कस्ता कस्ता वर्ग, समुदाय, क्षेत्रबाट प्रतिनिधित्व गराउने ?

२४. प्रदेश व्यवस्थापिकाको नाम के रहने ?

२५. प्रदेश व्यवस्थापिकामा सदस्य संख्या कति हुने ?

२६. प्रदेश व्यवस्थापिकामा महिला लगायतका वर्ग, क्षेत्र र समुदायको प्रतिनिधित्व कसरी गराउने ?

२७. प्रदेश व्यवस्थापिकामा माथिल्लो सदनसमेत रहने भएमा त्यहाँ कति संख्या रहने, के कसरी र कस्ता कस्ता वर्ग, समुदाय, क्षेत्रबाट प्रतिनिधित्व गराउने ?

**सङ्घमा एक सदनात्मक व्यवस्थापिका रहने निर्णय भएमा,**

२८. कार्यकारी राष्ट्रपति सहितको एक सदनात्मक व्यवस्थापिका रहने वा नरहने ?

२९. जनप्रतिनिधिसभा/प्रतिनिधिसभामा २४५ जना सदस्य रहने वा नरहने ?

३०. सङ्घीय जनप्रतिनिधिसभा देशको शासन व्यवस्थाको सर्वोच्च र सर्वशक्तिसम्पन्न मूल अङ्ग हुने वा नहुने ?

३१. सङ्घीय जनप्रतिनिधिसभा/प्रतिनिधिसभाले राज्यका अन्य अङ्गहरूको निर्माण, निर्देशन, नियन्त्रण एवं अनुगमन गर्ने व्यवस्था गर्ने वा नगर्ने ?

३२. सङ्घीय जनप्रतिनिधिसभा/प्रतिनिधिसभामा जनसंख्याको अनुपातमा प्रतिनिधित्व गर्न आवश्यक न्यून संख्या नपुग्ने जाति, आदिवासी जनजाति, मधेसी, मुस्लिम आदि समुदायको प्रतिनिधित्वको लागि निश्चित संख्या मनोनयन गर्ने व्यवस्था राख्ने वा नराख्ने ?

३३. महिला, दलित र मुस्लिम समुदायको विशेषाधिकार सहितको प्रतिनिधित्वको व्यवस्था गर्ने वा नगर्ने ?

३४. सङ्घीय जनप्रतिनिधिसभा/प्रतिनिधिसभामा बहुसदस्यीय निर्वाचनक्षेत्र प्रणाली अनुसार सबै समुदायको समानुपातिक समावेशी प्रतिनिधित्व हुने गरी प्रत्यक्ष निर्वाचनप्रणाली हुने वा नहुने ?

३५. सङ्घीय जनप्रतिनिधिसभा/प्रतिनिधिसभामा सभामुख र उपसभामुख ३० वर्ष उमेर पुगेको हुनुपर्ने वा नपर्ने ?

३६. सङ्घीय जनप्रतिनिधिसभा/प्रतिनिधिसभाको बैठक नबसेको अवस्थामा आवश्यक व्यवस्थापिकीय कार्य गर्नको लागि हरेक स्वायत्तप्रदेशबाट कम्तिमा एक जना प्रतिनिधि पर्ने गरी बढीमा २१ जना सदस्य रहेको स्थायी समितिको व्यवस्था गर्ने वा नगर्ने ?

३७. धारा ४ को राष्ट्रियसभा सम्बन्धी व्यवस्था आवश्यक नभएकोले हटाउने वा नहटाउने ?

३८. धारा ७ र ४७ मा कानूनमा व्यवस्था भएबमोजिम सदस्यलाई प्रत्याव्हान गर्न सकिने व्यवस्था राख्ने वा नराख्ने ?

३९. धारा ८ र ४८ मा सङ्घीय जनप्रतिनिधिसभा/प्रतिनिधिसभामा र स्वायत्तप्रदेश जनप्रतिनिधिसभाका सदस्यहरूले जनता र राष्ट्रको नाममा शपथ लिने व्यवस्था गर्ने वा नगर्ने ?

४०. धारा १० आवश्यक नभएकोले हटाउने वा नहटाउने ?

४१. धारा १४ र ५३ को सट्टा नेपालको कुनै अदालतमा विचाराधीन व्यक्तिको सरोकारको मुद्दामा सङ्घीय जनप्रतिनिधिसभाका सदस्यहरूले प्रश्न उठाउन पाउने तर बहसमा लगी निर्णय गर्न नसकिने तर देशको शासन व्यवस्थासँग सम्बन्धित, राजनीतिक अन्तर्वस्तु भएको, सार्वजनिक सरोकारको विषय भएको र संविधानसँग कानून बाझिएको भन्ने प्रश्नका बारेमा औपचारिक प्रस्ताव दर्ता गराई बहसमा लान र निर्णय गर्न सक्ने र एउटा समिति बनाई व्याख्या गर्न लगाई त्यसका आधारमा निर्णय गर्न सकिने व्यवस्था गर्ने वा नगर्ने ?

४२. धारा १८ को सट्टा मन्त्रीले सदनका जुनसुकै समितिमा छलफलमा भाग लिन सक्ने तर मतदान भने आफू सदस्य रहेको समितिमा मात्र गर्न पाउने व्यवस्था गर्ने वा नगर्ने ?

४३. धारा २३ मा संयुक्त समितिको सट्टा बढीमा १५ सदस्य रहने विशेष समितिको व्यवस्था गर्न सकिने वा नसकिने ?

४४. ३३. धारा ३० र ६८ मा अध्यादेश सरकारले जारी गर्न सक्ने, विकास निर्माण, सेवा सहुलियत, राष्ट्रिय सुरक्षा र साम्प्रदायिक सद्भाव कायम राख्ने विषयबाहेक अन्य विषयमा जारी गर्न नसकिने, जारी अध्यादेशको आवश्यकता देखिएमा जनप्रतिनिधिसभाको स्थायी समितिमा पेश गर्नुपर्ने, स्थायी समितिले अनुमति दिएमा मात्र अध्यादेश जारी हुने व्यवस्था राख्ने वा नराख्ने ?

४५. प्रदेश व्यवस्थापिकाको नाम स्वायत्तप्रदेश जनप्रतिनिधिसभा राख्ने वा नराख्ने ?

४६. स्वायत्तप्रदेशलाई आत्मनिर्णयको अधिकारसम्पन्न गराउने वा नगराउने ?

४७. स्वायत्तप्रदेश जनप्रतिनिधिसभामा भूगोल र जनघनत्वको अनुपात हेरी जाति, भाषा र प्राकृतिक स्रोतको उपलब्धताको आधारमा २५ देखि ४५ जनासम्म सदस्य रहने व्यवस्था गर्ने वा नगर्ने ?

४८. स्वायत्तप्रदेश जनप्रतिनिधिसभाको गठन बहुसदस्यीय निर्वाचनक्षेत्र प्रणालीको आधारमा गर्ने वा नगर्ने ?

४९. स्वायत्तप्रदेश जनप्रतिनिधिसभाको सदस्य हुन २१ वर्षको उमेर पुगेको हुनुपर्ने व्यवस्था गर्ने वा नगर्ने ?

**न्यायप्रणाली सम्बन्धी समितितर्फ**

५०. राष्ट्रिय महत्वको पद र अधिकारसँग सम्बन्धित तथा राजनीतिक विषयसँग प्रत्यक्ष सरोकार राख्ने विषय र संविधानसँग कानून बाझिएको विषय हेर्ने अधिकार विधायिकाको विशेष समितिलाई हुने वा न्यायपालिकालाई हुने ?

५१. संविधानको व्याख्या, राष्ट्रिय सरोकारका विषय, मानव अधिकार तथा नागरिक सरोकारका विषय, राजनीतिक विषयहरूसँग सम्बन्धी मुद्दाको व्याख्या र निरूपण गर्ने तथा सङ्घ र प्रदेश तथा प्रदेश-प्रदेश बीचका विवाद हेर्ने अलग्गै संवैधानिक अदालतको व्यवस्था गर्ने वा सर्वोच्च अदालतलाई नै सो अधिकार दिने ? ***(राज्यपुर्नसंरचना समितिमा रहेको प्रश्नसमेत यससँग अन्तरसम्बन्धित हुने)***

५२. सर्वोच्च अदालतका न्यायाधीशको नियुक्ति व्यवस्थापिकाको विशेष न्यायिक समितिबाट गर्ने वा न्यायपरिषद्जस्तै स्वतन्त्र निकायको सिफारिशमा प्रभावकारी ढङ्गले संसदीय सुनुवाइ गरी हुने व्यवस्था गर्ने ?

५३. सर्वोच्च अदालतका न्यायाधीशको बर्खास्तगी र कारवाही व्यवस्थापिकाको विशेष न्यायिक समितिबाट गर्ने वा कानून बनाई प्रभावकारी ढङ्गले गर्ने ?

५४. सर्वोच्च अदालतको प्रधानन्यायाधीशको नियुक्ति यस संविधान बमोजिम प्रधानन्यायाधीश हुन योग्यता पुगेका कुनै पनि व्यक्तिमध्येबाट गर्ने वा सर्वोच्च अदालतको न्यायाधीशहरूमध्येबाट मात्र गर्ने ?

५५. सर्वोच्च अदालतको प्रधानन्यायाधीशको नियुक्ति यस संविधान बमोजिम प्रधानन्यायाधीश हुन योग्यता पुगेका व्यक्तिहरूमध्येबाट निर्वाचन गरी हुने वा नहुने ?

५६. सर्वोच्च अदालतको प्रधानन्यायाधीशको नियुक्ति व्यवस्थापिकाको विशेष न्यायिक समितिबाट गर्ने वा संवैधानिक परिषद्को सिफारिशपश्चात् प्रभावकारी ढङ्गले संसदीय सुनुवाइबाट अनुमोदन भएपछि राष्ट्रप्रमुखबाट गर्ने ?

५७. राज्य/उच्चअदालतका न्यायाधीशहरूको नियुक्ति र बर्खास्तगी प्रादेशिक व्यवस्थापिकाको विशेष न्यायिक समितिबाट हुने वा न्यायपरिषद्जस्तो केन्द्रीय संयन्त्रबाट हुने ?

५८. स्थानीय अदालतका न्यायाधीशहरूको नियुक्ति र बर्खास्तगी स्थानीय व्यवस्थापिकाको विशेष न्यायिक समितिबाट हुने वा अर्को स्वतन्त्र संयन्त्रबाट हुने ?

५९. राज्य/उच्चअदालत र स्थानीय अदालतका न्यायाधीशहरूको सरूवा हुने व्यवस्था संविधानमा गर्ने वा नगर्ने ?

**मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितितर्फ**

**नागरिकता**

६०. सङ्घ र प्रदेशको छुट्टाछुट्टै नागरिकताको पद्धति अवलम्बन गर्ने वा एकल नागरिकता पद्धति अवलम्बन गर्ने ? (पेज नं. १ सि नं. १)

६१. वंशजको नागरिकता प्राप्त गर्न बाबु र आमा दुबै नेपाली नागरिक हुनुपर्ने वा आमा वा बाबु मध्ये कुनै एक नेपाली नागरिक भए हुने ?(पेज नं. ३ सि नं. ३ को (१) (क))

६२. सि.नं ४ मा रहेको अङ्गीकृत नागरिकता सम्बन्धी व्यवस्था संविधानमा राख्ने वा नराख्ने ?

६३. नेपाली नागरिकसँग विवाह गर्ने विदेशी पुरूषलाई वैवाहिक अङ्गीकृत नागरिकता प्रदान गर्ने वा नगर्ने ? (पेज नं. ५ सि नं. ४ को (१)

६४. नेपाली नागरिकसँग विवाह गरेका विदेशी पुरूषलाई वैवाहिक अङ्गीकृत नागरिकता प्रदान गरिने निर्णय भएमा निजले वैवाहिक अङ्गीकृत नागरिकता लिनको लागि १५ वर्षसम्म नेपालमा स्थायी बसोबास गरेको हुनुपर्ने वा नपर्ने ? (पेज नं. ५ सि नं. ४ को (१)

६५. नेपाली नागरिकसँग विवाह गर्ने विदेशी महिलालाई विदेशको नागरिकता परित्याग गर्ने कारवाही चलाएपछि तुरून्त नेपालको अङ्गीकृत नागरिकता प्रदान गर्ने वा निजले वैवाहिक अङ्गीकृत नागरिकता लिनको लागि १५ वर्षसम्म नेपालमा स्थायी बसोबास गरेको हुनुपर्ने ?

६६. सि.नं. ४ को उपधारा (२) मा नेपाली नागरिक आमाबाट नेपालमा जन्म भई नेपालमा नै बसोबास गरेको र बाबुको पहिचान नभएको व्यक्तिलाई अङ्गीकृत नागरिकता प्रदान गर्ने वा वंशजको नागरिकता प्रदान गर्ने ?

६७. उच्चतम् सार्वजनिक पदमा निर्वाचित वा मनोनयन भई नियुक्ति हुन वंशजको नागरिकता हुनुपर्ने व्यवस्था राख्ने वा नराख्ने ? (पेज नं. ११ सि नं. १३ को (१)

६८. मस्यौदाको सि.नं १३ मा रहेको पदाधिकारीको नागरिकता सम्बन्धी व्यवस्था नेपाली नागरिकसँग विवाह गरी वैवाहिक अङ्गीकृत नागरिकता लिने महिला नागरिकको लागि लागू नहुने व्यवस्था गर्ने वा नगर्ने ?

६९. विदेशी मुलुकको नागरिकता प्राप्त गरेका गैरआवासीय नेपालीको लागि गैरआवासीय नेपाली नागरिकताको व्यवस्था गर्ने वा परिचयपत्र सम्बन्धी व्यवस्था संविधानमा राख्ने ? (पेज नं. १२ सि नं. १४)

**मौलिक हक**

७०. राजनीतिक दल दर्तामा प्रतिबन्ध लगाउने आधारमा राष्ट्रघाती काम गर्ने, विदेशी शक्तिको दलाली गर्ने, राष्ट्रविरूद्ध षडयन्त्र गर्ने, प्रतिगमनकारी कार्य गर्ने जस्ता विषय राख्ने वा नराख्ने ? (पेज नं.१७, १८, १९ सि नं २ को खण्ड घ (४)

७१. राजनीतिक दल दर्तामा प्रतिबन्ध लगाउने आधारमा बहुलवादमा आधारित बहुदलीय व्यवस्था नमान्ने, सर्वसत्तावाद, एकदलीय अधीनायकवाद स्थापनाको प्रयत्न गर्ने, सैन्य वा अर्धसैन्य संरचना खडा गर्ने, राज्यविरूद्ध सशस्त्र विद्रोह गर्ने, मानवअधिकारका मूल्य मान्यता प्रतिकूलका कार्य गर्ने जस्ता विषय राख्ने वा नराख्ने ? (पेज नं.१७, १८, १९ सि नं २ को खण्ड घ (४)

७२. न्याय सम्बन्धी हकको उपधारा (४) मा "तर मानवताविरूद्धको अपराध, युद्ध अपराध र जातीय नरसंहार सम्बन्धी अपराधमा भूतप्रभावी कानून बनाएर सजाय गर्न यस उपधाराले बाधा पुऱ्याएको मानिने छैन ।" भन्ने व्यवस्था राख्ने वा नराख्ने ? (पेज नं.२५, सि नं ४ उपधारा (४))

७३. सि नं. १० को सम्पत्ति सम्बन्धी हकको उपधारा (१) मा "तर राज्यले वैज्ञानिक भूमिसुधारको प्रयोजनका लागि बाहेक नागरिकको सम्पत्तिमा सीमा तोक्ने गरी कुनै कानून बनाउने छैन ।" भन्ने प्रतिबन्धात्मक वाक्यांश थप गर्ने वा नगर्ने ?

७४. सोही उपधारामा "तर राज्यले व्यक्तिको आर्जन वा सम्पत्तिमा सीमा तोक्ने गरी कुनै कानून बनाउने छैन ।" भन्ने प्रतिबन्धात्मक वाक्यांश थप गर्ने वा नगर्ने ?

७५. सोही उपधारामा "तर उत्पादनका मुख्य साधन तथा सेवाको राष्ट्रियकरण गरिनेछ र राज्यले व्यक्तिको सम्पत्तिमा सीमा तोक्न सक्नेछ ।" भन्ने प्रतिबन्धात्मक वाक्यांश थप गर्ने वा नगर्ने ?

७६. उपधारा (३) मा रहेका "कुनै अधिकारको सिर्जना गर्ने छैन" भन्ने शब्दहरु पछि "त्यसरी अधिग्रहण, प्राप्त वा त्यस्तो सम्पत्ति उपर अरू कुनै अधिकार सिर्जना गरिएमा कानूनबमोजिम क्षतिपूर्ति प्रदान गरिनेछ" भन्ने वाक्यांश थप गर्ने वा नगर्ने ?

७७. उपधारा (४) मा रहेको "वैज्ञानिक भूमिसुधारको प्रयोजनको लागि भूमिहीन किसान तथा सुकुम्बासीहरूलाई वितरण गर्न जमीन अधिकरण गर्दा वा उपधारा (३) बमोजिम सार्वजनिक हितको लागि राज्यले कुनै व्यक्तिको सम्पत्ति अधिग्रहण वा प्राप्त गर्दा वा त्यस्तो सम्पत्तिउपर कुनै अधिकारको सिर्जना गर्दा कानूनबमोजिम क्षतिपूर्ति दिइनेछ । क्षतिपूर्तिको आधार र कार्यप्रणाली कानूनद्वारा निर्धारण गरिएबमोजिम हुनेछ" भन्ने व्यवस्था राख्ने वा सोको सट्टामा "क्रान्तिकारी भूमिसुधार लागू गरी जमीनको हदबन्दी गरिने र सीमाभन्दा माथिको जमीन सुकुम्बासी, भूमिहीन र गरीब किसानलाई वितरण गरिनेछ र जमीनको उत्पादन र उत्पादकत्व वृद्धि गर्न वैज्ञानिक योजना बनाई लागू गरिने छ ।" भन्ने व्यवस्था राख्ने वा नराख्ने ? *(यो प्रश्न माथिको प्रश्न नं १६र १७ सँग सम्बन्धित रहेको साथै प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको प्रतिवेदनमा पनि मतान्तर रहेको विषयसँग सम्बन्धित)*

७८. सोही उपधारामा "जमीन जोत्नेको हुने गरी क्रान्तिकारी भूमिसुधार गरिनेछ" भन्ने व्यवस्था थप गर्ने वा नगर्ने ?

७९. उपधारा (४) बमोजिम जमीनको अधिग्रहण गर्दा वा प्राप्त गर्दा क्षतिपूर्ति दिनु पर्ने वा नपर्ने ?

८०. उपधारा (५) पछि देहायको उपधारा (६) थप गर्ने वा नगर्ने ? "(६) वैज्ञानिक भूमिसुधार, भूमिव्यवस्थापन, भूमिको उत्पादन र उत्पादकत्व वृद्धि गर्न, कृषिको आधुनिकीकरण र व्यावसायीकरण, वातावरण संरक्षण, व्यवस्थित आवास तथा शहरी विकास गर्न कानून बनाई नियमन र व्यवस्थापन गर्ने अधिकार सङ्घीय एकाइ (प्रदेश) लाई हुनेछ ।" *(यो प्रश्न राज्यको पुर्नसंरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदन टुङ्गो लागेपछि सम्बोधन हुने)*

८१. सि नं. २७ मा सामाजिक न्यायको हक अन्तर्गत उपधारा (५) मा रहेको व्यवस्थाको सट्टा आदिवासी, जनजाति समुदायलाई आत्मनिर्णयको अधिकार सहित स्वशासन र स्वायत्तताको अधिकार तथा स्वतन्त्र, पूर्व र सुसूचित सहमतिको हक हुनेछ भन्ने व्यवस्था राख्ने वा नराख्ने ? (सि.नं. २७ पेज नं. ५२-५६)

८२. सि नं. २७ मा सामाजिक न्यायको हक अन्तर्गत उपधारा (५) मा रहेको व्यवस्थाको सट्टा आदिवासी, जनजाति तथा स्थानीय समुदायलाई पहिचानको हक, प्राकृतिक स्रोतमाथि प्राथमिकताको हक, स्वशासनको हक तथा राष्ट्रिय अखण्डता, समग्र राष्ट्रियहित तथा एकतालाई सुदृढ गर्दै संविधान र प्रचलित कानूनको अधीनमा रही आत्मनिर्णयको अधिकार हुनेछ भन्ने व्यवस्था राख्ने वा नराख्ने ?(सि.नं. २७ पेज नं. ५२-५६) *(यो प्रश्न संवैधानिक समितिमा पनि रहेको )*

८३. सोही उपधाराको प्रावधानमा "मधेसी समुदायको आत्मनिर्णयको अधिकार सहितको स्वायत्त मधेस प्रदेश र त्यहाँको भूमि तथा प्राकृतिक स्रोतमाथि अग्राधिकारको हक हुनेछ ।" भन्ने व्यवस्था थप गर्ने वा नगर्ने ? (यो प्रश्न राज्यको पुर्नसंरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदन टुङ्गो लागेपछि सम्बोधन हुने )

८४. उपधारा (११) को सट्टा "लोकतन्त्र प्राप्तिको लागि भएका सबै आन्दोलन/सङ्घर्षको क्रममा जीवन उत्सर्ग गर्ने शहीदका परिवार, लोकतन्त्रका योद्धा, द्वन्द्वपीडित र विस्थापित, अपाङ्ग, घाइते तथा पीडितलाई राहत तथा न्याय प्रदान गर्ने एवम् उचित सम्मान सहित शिक्षा, स्वास्थ्य, रोजगारी, आवास र सामाजिक सुरक्षामा प्राथमिकताका साथ अवसर प्रदान गरिनेछ ।" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

८५. उपधारा (११) पछि देहायको उपधारा (१२) थप गर्ने वा नगर्ने "(१२) आदिवासी र स्थानीय समुदायलाई भूमि र प्राकृतिक सम्पदामाथि अग्राधिकारको हक हुनेछ ।" *(यो प्रश्न राज्यको पुर्नसंरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदन टुङ्गो लागेपछि सम्बोधन हुने)*

**मौलिक कर्तव्य**

८६. मौलिक कर्तव्य अन्तर्गत अनिवार्य सैनिक तालिम लिनु पर्ने भन्ने विषय राख्ने वा नराख्ने ? (पेज नं. ६०, सि नं १ ) *(यो प्रश्न राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदनमा पनि रहेको)*

**राज्यका निर्देशक सिद्धान्त, नीति तथा दायित्व**

८७. सि.नं. २ को उपधारा (१) मा "आत्मनिर्णय सहितको" भन्ने वाक्यांश राख्ने वा नराख्ने ?

८८. सोही उपधारामा रहेको सर्वोपरि राखी भन्ने शब्दहरु पछि "सबै प्रकारका विदेशी हस्तक्षेपको अन्त गर्दै" भन्ने शब्दहरु राख्ने वा नराख्ने ? *(यो प्रश्नको बारेमा पछि पुनः विचार गर्ने)*

८९. सोही उपधारामा रहेका "सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक व्यवस्था" भन्ने शब्दहरूको सट्टा देहायको मध्ये कुनै शब्दावलीहरु राख्ने वा नराख्ने ?

क) जनताको सङ्घीय गणतन्त्र

ख) समाजवादी गणतन्त्र

ग) बहुलवाद र बहुदलीय प्रतिस्पर्धामा आधारित सङ्घीय लोकतान्त्रिक गणतन्त्र

९०. सि नं ३ को खण्ड (क) मा युवाहरूलाई अनिवार्य सैनिक तालिम दिने भन्ने व्यवस्था राख्ने वा नराख्ने ? *(यो प्रश्न माथि २७ नं. मा मौलिक कर्तव्य र राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदनमा पनि रहेको)*

९१. सि नं ३ को खण्ड (ग) मा मा रहेका "लोकतान्त्रिक संस्कृतिको" भन्ने शब्दहरूको सट्टा "लोकतान्त्रिक संस्कृति र जनसंस्कृतिको" भन्ने शब्दहरु राख्ने वा नराख्ने ?

९२. सि नं ३ को खण्ड (घ) को बुँदा नं. (१) मा रहेको "सार्वजनिक, सहकारी र निजी क्षेत्रको साझेदारी र स्वतन्त्र विकासमार्फत् राष्ट्रिय अर्थतन्त्र सुदृढ गर्ने" भन्ने व्यवस्थाको सट्टा "सार्वजनिक, सहकारीको विकास र विस्तार गर्दै उत्पादनका साधनहरूमा क्रमशः राज्यको स्वामित्व बढाउँदै लाने ।" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

९३. सि नं ३ को खण्ड (घ) को बुँदा नं. (१२) मा रहेका "विपन्न वर्गका नागरिकलाई विशेष प्राथमिकता दिदै" भन्ने शब्दहरूको सट्टा "विपन्न वर्गलाई विशेष अधिकार दिई" भन्ने शब्दहरु राख्ने वा नराख्ने ?

९४. सि नं ३ को खण्ड (ङ) को बुँदा नं. (१) मा रहेको "वैज्ञानिक भूमिसुधार" भन्ने शब्दहरूको सट्टा "जमीन जोत्नेको अधिकार स्थापित गराउने र जमीनको हदबन्दी सहितको क्रान्तिकारी भूमिसुधार" भन्ने शब्दहरु राख्ने वा नराख्ने ? *(प्रश्न नं. १८ सँग सम्बन्धित, मौलिक हकमा पनि दोहोरिएको विषय)*

९५. सि नं ३ को खण्ड (ङ) को बुँदा नं. (१) को सट्टा देहायको बुँदा नं. (१) राख्ने वा नराख्ने ? "(१) जमीन जोत्नेको हुने गरी क्रान्तिकारी भूमिसुधार गर्ने" । *(प्रश्न नं. १९ सँग सम्बन्धित, मौलिक हकमा पनि दोहोरिएको विषय)*

९६. सि नं ३ को खण्ड (ङ) को बुँदा नं. (१) मा देहायको वाक्यांश थप गर्ने वा नगर्ने ? "भौगोलिक बनावट अनुसार कृषि जमीन (भूमि) हुने भएकोले समग्र वा खेतीयोग्य जमीन भूमिव्यवस्थापन सम्बन्धी कार्यको अधिकारक्षेत्र प्रदेशलाई हुनेछ" । *(प्रश्न नं. २१ सँग सम्बन्धित, मौलिक हकमा पनि दोहोरिएको विषय)*

९७. सि नं ३ को खण्ड (छ) को बुँदा नं. (१) मा रहेको "प्राथमिकता" भन्ने शब्दपछि "र अग्राधिकार" भन्ने शब्द थप गर्ने वा नगर्ने ?

**राष्ट्रियहितको संरक्षण समितितर्फ**

९८. मस्यौदाको सि.नं. ५ मा रहेको नागरिकको कर्तव्य शीर्षकको उपधारा (३) मा रहेको "देशको रक्षाको लागि सरकारले आवश्यक परेको समयमा १८ वर्ष उमेर पुगेका नागरिकलाई सैनिक तालिमको लागि आव्हान गर्न सक्नेछ र सो बमोजिम तालिममा भाग लिई राष्ट्रलाई सेवा प्रदान गर्नु प्रत्येक नागरिकको कर्तव्य हुनेछ ।" भन्ने व्यवस्था राख्ने वा नराख्ने रू *(यो विषय मौलिक हक तथा निर्देशक सिद्धान्त समितिमा पनि रहेको)*

९९. मस्यौदाको सि.नं. ११ मा रहेको सन्धि सम्पन्न गर्ने अधिकार शीर्षकको उपधारा (२) मा "प्रदेशलाई असर पर्ने वा प्रदेशको क्षेत्राधिकारभित्रको विषयमा सन्धि वा सम्झौता गर्दा केन्द्रले प्रदेशको सहमति लिनु पर्ने" भन्ने व्यवस्था राख्ने वा नराख्ने ? *(यो विषय पछि थप छलफल गरेर टुङ्गो लगाउने )*

१००. मस्यौदाको सि.नं. ११ मा रहेको सन्धि सम्पन्न गर्ने अधिकार शीर्षकको उपधारा (३) मा विदेशी पक्षसँग आर्थिक तथा औद्योगिक विषयका करारजन्य संझौता केन्द्रको सहमतिमा प्रदेशले गर्न सक्ने वा नसक्ने ? *(यो विषय पछि थप छलफल गरेर टुङ्गो लगाउने)*

१०१. मस्यौदाको सि.नं. २४ मा रहेको नेपाली राष्ट्रिय सेना सम्बन्धी शीर्षकको उपधारा (२) मा रहेको नेपाली सेना र शिविरमा रहेका लडाकु (जनमुक्ति सेना) को पुनःस्थापन, व्यवस्थापन र समायोजन सम्बन्धी व्यवस्था नयाँ संविधानमा राख्न पर्ने वा नपर्ने ?

१०२. मस्यौदाको सि.नं. २४ मा रहेको नेपाली राष्ट्रिय सेना सम्बन्धी शीर्षकको उपधारा (४) मा प्रधानसेनापतिको नियुक्ति सरकारप्रमुख/मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रप्रमुखले गर्ने वा राष्ट्रप्रमुख स्वयंले गर्ने ? *(यो विषय शासकीय स्वरूपको टुङ्गो लागेपछि सम्बोधन हुने)*

१०३. मस्यौदाको सि.नं. २४ मा रहेको नेपाली राष्ट्रिय सेना सम्बन्धी शीर्षकको उपधारा (५) मा प्रधानसेनापतिलाई पदमुक्त सरकारप्रमुख/मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रप्रमुखले गर्ने वा राष्ट्रप्रमुख स्वयंले गर्ने ? *(यो विषय शासकीय स्वरूपको टुङ्गो लागेपछि सम्बोधन हुने)*

१०४. अवधारणापत्र लगायत प्रतिवेदनका विभिन्न स्थानमा 'जनयुद्ध' शब्द उल्लेख गर्ने वा नगर्ने ?

**सांस्कृतिक तथा सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितितर्फ**

१०५. संविधानमा सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्था उल्लेख गर्ने वा नगर्ने ?

१०६. संविधानमा सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्था उल्लेख गर्ने निर्णय भएमा मस्यौदाको धारा १४ मा रहेको देवनागरि लिपिमा नेपाली भाषा केन्द्रीय सरकारको सरकारी कामकाजको भाषा हुने र भाषा आयोगको सिफारिशमा सङ्घीय विधायिकाले अन्य भाषालाई पनि सरकारी कामकाजको भाषाको रूपमा मान्यता दिन सक्ने व्यवस्था गर्ने वा नगर्ने ?

१०७. संविधानमा सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्था उल्लेख गर्ने निर्णय भएमा मस्यौदाको धारा १४ मा रहेको सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्थामा देवनागरि लिपिमा नेपाली भाषाको साथै हिन्दी भाषालाई पनि समावेश गर्ने वा नगर्ने ?

१०८. संविधानमा सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्था उल्लेख गर्ने निर्णय भएमा मस्यौदाको धारा १४ मा रहेको सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्थामा एक प्रतिशतभन्दा बढीले नेपालमा मातृभाषाको रूपमा बोल्ने सबै भाषालाई राख्ने वा नराख्ने ?

१०९. संविधानमा सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्था उल्लेख गर्ने निर्णय भएमा मस्यौदाको धारा १४ मा रहेको सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्थामा नेपालमा मातृभाषाको रूपमा बोलिने सबै भाषालाई राख्ने वा नराख्ने ?

११०. मस्यौदाको धारा १४ (२) मा रहेको प्रान्तको सरकारी कामकाजको भाषा सम्बन्धी व्यवस्था यथावत् राख्ने वा संविधानमा कुनै व्यवस्था नगरी प्रान्तलाई नै निर्धारण गर्न दिने ?

१११. धारा १५ को केन्द्रीय सरकार र प्रान्तीय सरकार तथा प्रान्तीय सरकारहरू बीचको सरकारी कामकाजको भाषा देहायको मध्ये कुन व्यवस्था राख्ने ?

क) केन्द्रीय सरकारको सरकारी कामकाजको भाषा

ख) प्रान्तले निर्धारण गरेको प्रान्तीय सरकारी कामकाजको भाषा

ग) प्रान्तहरूले आपसमा सहमति गरेर निर्धारण गरेको भाषा ।

११२. धारा १६ मा रहेको भाषा आयोग स्थायी हुने वा अस्थायी प्रकृतिको हुने ?

११३. धारा १७ मा केन्द्रीय सरकारको सरकारी कामकाजको भाषा नै अदालती कामकारवाहीको भाषा हुने व्यवस्था राख्ने वा नराख्ने ?

११४. अवधारणापत्रमा 'सशस्त्र द्वन्द्व' शब्दको सट्टामा 'जनयुद्ध' शब्द राख्ने वा नराख्ने ? *(यो विषय राष्ट्रियहितको संरक्षण समितिमा पनि विचाराधीन रहेकाले कुनै एकठाँउबाट टुङ्गो लगाउने)*

**संवैधानिक समितितर्फ**

**सि.नं. १ प्रस्तावनामा**

११५. प्रस्तावनाको अनुच्छेद १ को सट्टामा 'सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक धर्मनिरपेक्ष राज्य नेपालका हामी नेपाली जनता' भन्ने शब्द राख्ने वा नराख्ने ?

११६. प्रस्तावनाको अनुच्छेद २ मा 'राष्ट्रिय एकता, राष्ट्रिय स्वाधीनता एवं स्वाभिमान' पछि 'र नेपाली नागरिकको गरिमा र आत्मसम्मानलाई' अक्षुण्ण राख्दै भन्ने शब्द थप्ने वा नथप्ने ?

११७. प्रस्तावनाको अनुच्छेद ३ मा 'ऐतिहासिक सशस्त्र जनआन्दोलन, शान्तिपूर्ण जनआन्दोलन र मधेस आन्दोलन' भन्ने शब्दहरूको सट्टा 'प्रजातन्त्र प्राप्तिको निम्ति भएका जनआन्दोलनहरू' भन्ने शब्दहरू राख्नुपर्ने वा नपर्ने ?

११८. सोही अनुच्छेदमा 'आदिवासी जनजातिको आन्दोलन, लिम्बुवान आन्दोलन, थरूहट आन्दोलन लगायत दलित, पिछडावर्ग, मुस्लिम समुदायको आन्दोलन' थप्ने वा नथप्ने ? *(प्रश्न नं. ३ सँग अन्तरसम्बन्धित)*

११९. सोही अनुच्छेदमा 'मधेसआन्दोलन' भन्ने शब्द हटाउने वा हटाउन नपर्ने ? *(प्रश्न नं. ३ सँग अन्तरसम्बन्धित)*

१२०. सोही अनुच्छेदमा प्रारम्भमा नै 'राष्ट्रिय स्वाधीनता' भन्ने शब्द राख्नुपर्ने वा नपर्ने ?

१२१. सोही अनुच्छेदमा 'शान्ति र मानवअधिकार' भन्ने शब्द हटाउनुपर्ने वा नपर्ने ?

१२२. सोही अनुच्छेदमा 'सशस्त्र सङ्घषको' सट्टामा 'जनयुद्ध' शब्द राखिनुपर्ने वा नपर्ने ? *(प्रश्न नं. ३ सँग अन्तरसम्बन्धित)*

१२३. सोही अनुच्छेदमा 'अग्रगामी परिवर्तनका लागि गरिएका ... बलिदान' भन्ने शब्दहरूको सट्टा 'नेपाली जनताले हालसम्म पटक-पटक गर्दै आएका ऐतिहासिक सङ्घर्ष, त्याग र बलिदानको गौरवपूर्ण इतिहासलाई स्मरण एवं शहीदहरूलाई सम्मान गर्दै' भन्ने शब्दहरु राख्नुपर्ने वा नपर्ने ? *(प्रश्न नं. ३ सँग अन्तरसम्बन्धित)*

१२४. सोही अनुच्छेदमा सबै आन्दोलनलाई समेट्ने 'शान्तिपूर्ण जनआन्दोलन' भन्ने साझा शब्द राख्नुपर्ने वा नपर्ने ? *(प्रश्न नं. ३ सँग अन्तरसम्बन्धित)*

१२५. प्रस्तावनाको अनुच्छेद ४ मा राज्यव्यवस्थाले सृजनागरेका विभेद शब्दको अगाडि 'सबैप्रकारका एकाधिकार' भन्ने वाक्यांश थप्ने वा नथप्ने ?

१२६. सोही अनुच्छेदमा 'विगतको पितृसत्तात्मक, सामन्ती, निरङ्कुश, केन्द्रीकृत र एकात्मक राज्य व्यवस्थाले सृजना गरेको जातीय विभेद र मनुवादी निरङ्कुश राजतन्त्रात्मक वर्णव्यवस्थाबाट भएको उत्पीडनको पीडालाई स्मरण गर्दै' भन्ने शब्दहरु राख्नुपर्ने वा नपर्ने ?

१२७. सोही अनुच्छेदमा 'एकात्मक' भन्ने शब्द हटाउने वा नहटाउने ?

१२८. सोही अनुच्छेदमा रहेका 'सामन्ती निरकुंश' शब्दहरूको सट्टा 'निरङ्कुश राजतन्त्रात्मक सामन्ती' शब्द थप गर्ने वा नगर्ने ?

१२९. सोही अनुच्छेदमा 'शान्तिपूर्ण आन्दोलन तथा' पछि 'तिनका वीर विराङ्गना' थप्नुपर्ने वा नपर्ने ?

१३०. सोही अनुच्छेदमा रहेको विभेद र उत्पीडनको पीडालाई स्मरण गर्दै भन्ने शब्दहरूको सट्टा 'विभेद र उत्पीडनको पीडालाई अन्त गर्दै' भन्ने शब्दहरु राख्नुपर्ने वा नपर्ने ?

१३१. सोही अनुच्छेदको अन्तमा 'नेपाली जनताको त्याग र शहीदहरूको बलिदानलाई सम्मान गर्दै' भन्ने शब्दहरु राखी परिमार्जन गर्नुपर्ने वा नपर्ने ?

१३२. प्रस्तावनाको पाचौं अनुच्छेदमा रहेका 'बहु' शब्द आवश्यक पर्ने वा नपर्ने ?

१३३. प्रस्तावनाको अनुच्छेद ६ मा 'मानवअधिकार' भन्ने शब्दको अगाडि 'आर्थिक समानता सहितको' भन्ने शब्द थप्नुपर्ने वा नपर्ने ?

१३४. सोही अनुच्छेदमा प्रतिस्पर्धात्मक बहुदलीय लोकतान्त्रिक शासनव्यवस्थाको अगाडि 'पूर्ण समानुपातिक' शब्द थप गर्ने वा नगर्ने ?

१३५. सोही अनुच्छेदमा 'बहुलवाद' शब्द थप गर्नुपर्ने वा नपर्ने ?

१३६. सोही अनुच्छेदमा 'बहुलवादमा आधारित' शब्द थप गर्नुपर्ने वा नपर्ने ?

१३७. सोही अनुच्छेदमा न्यायालयको' अगाडि 'जनउत्तरदायी' भन्ने शब्द थप्ने वा नथप्ने ?

१३८. सोही अनुच्छेदमा रहेको 'जनताको' भन्ने शब्द हटाउने वा नहटाउने ?

१३९. सोही अनुच्छेदमा रहेको 'जनताको समानुपातिक समावेशी' भन्ने शब्दहरूको सट्टा ' बहुलवादमा आधारित' भन्ने शब्दहरु राख्ने वा नराख्ने ?

१४०. सोही अनुच्छेदमा रहेका जनताको प्रतिस्पर्धात्मक बहुदलीय लोकतान्त्रिक समानुपातिक समावेशी शासन व्यवस्था' भन्ने शब्दहरूको सट्टा 'सामाजिक न्यायमा आधारित प्रतिस्पर्धात्मक बहुदलीय लोकतान्त्रिक समाजवादी शासन व्यवस्था' भन्ने शब्दहरु राख्ने वा नराख्ने ?

१४१. सोही अनुच्छेदमा 'मानवअधिकार' भन्ने शब्दको अगाडि 'महिला अधिकार' भन्ने शब्द थप्नुपर्ने वा नपर्ने ?

१४२. सोही अनुच्छेदमा 'समानुपातिक' भन्ने शब्द हटाउनु पर्ने वा नपर्ने ?

१४३. अनुच्छेद ७ मा 'आत्मनिर्णयको अधिकार, स्वायत्तताको' सट्टामा 'आत्मनिर्णयको सिद्धान्त र जातीय, क्षेत्रीय'/'स्थानीय' भन्ने शब्द राख्ने वा नराख्ने ?

१४४. सोही अनुच्छेदमा 'आत्मनिर्णयको अधिकार' भन्ने शब्द हटाउने वा नहटाउने ?

१४५. सोही अनुच्छेदमा 'स्वायत्तता र स्वशासनको अधिकार' को सट्टामा 'प्रजातान्त्रिक विकेन्द्रीयता र स्थानीयस्वायत्त शासन' भन्ने शब्द राख्ने वा नराख्ने ?

१४६. सोही अनुच्छेदलाई 'राष्ट्रिय अखण्डता र आत्मनिर्णयको अधिकारलाई अक्षुण्ण राखी जनताको स्वायत्तता र स्वशासनको अधिकारलाई आत्मसात् गर्दै' भनी परिमार्जन गर्ने वा नगर्ने ?

१४७. प्रस्तावनाको अनुच्छेद ८ मा 'सम्पन्नता र सामाजिक न्याय सुनिश्चित गर्न समानुपातिक' शब्द अगाडि 'जातीय जनसंख्याको आधारमा पूर्ण' भन्ने वाक्यांश थप्ने वा नथप्ने ?

१४८. सोही अनुच्छेदमा 'समानुपातिक' भन्ने शब्दको अगाडि 'कामदार वर्गको सर्वोत्तम हित हुने गरी ' भन्ने शब्दहरु राख्नुपर्ने वा नपर्ने ?

१४९. सोही अनुच्छेदमा समतामूलक समाजको अगाडि 'धर्मनिरपेक्ष र' भन्ने शब्द थप गर्ने वा नगर्ने ?

१५०. सोही अनुच्छेदमा समानुपातिक भन्ने शब्दको अगाडि 'किसान मजदुर लगायत श्रमजीवी जनताको हितसंरक्षण गर्ने गरी भन्ने शब्द थप गर्नुपर्ने वा नपर्ने ?

१५१. प्रस्तावनाको अनुच्छेद ९ मा रहेको 'यो' शब्दपछि 'समाजवादउन्मुख' भन्ने शब्द राख्नुपर्ने वा नपर्ने ?

१५२. सोही अनुच्छेदमा 'सङ्घीय लोकतान्त्रिक गणतन्त्र' को अगाडि 'जनताको' शब्द थप्ने वा नथप्ने ?

१५३. सोही अनुच्छेदमा 'दिगो शान्तिको' अगाडि 'अग्रगमन सहितको' भन्ने शब्दहरु थप्ने वा नथप्ने ?

१५४. सोही अनुच्छेदमा 'सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाको माध्यमद्वारा' भन्ने शब्दको सट्टा 'लोकतान्त्रिक गणतन्त्रात्मक एकात्मक शासन व्यवस्थाको माध्यमद्वारा' भन्ने शब्द राख्ने वा नराख्ने ?

१५५. प्रस्तावनामा स्थानीय स्वायत्तता र स्वशासन, विकेन्द्रीकरण, समाजवादउन्मुख मिश्रित अर्थव्यवस्था, आर्थिक स्वतन्त्रता, सामाजिक अधिकार, उद्यमशीलताको विकासद्वारा आर्थिक समृद्धि, समन्याय र सन्तुलित विकास गर्ने विषय समावेश हुनुपर्ने वा नपर्ने ?

१५६. प्रस्तावनामा सबै प्रकारका हिंसाका अवशेषको अन्त्य गर्ने कुरा लेख्नुपर्ने वा नपर्ने ?

१५७. विगतमा भएका सबै आन्दोलनलाई अनुसूची बनाई राख्नुपर्ने वा व्याख्यात्मक टिप्पणीमा राख्ने ?

१५८. प्रस्तावनामा निम्न अनुच्छेदहरु थप गर्नुपर्ने वा नपर्ने ?

- नेपाली जनताले साम्राज्यवाद र विस्तारवादविरूद्ध गर्दै आएको सङ्घर्षहरूको उच्च मूल्याङ्कन गर्दै सामन्तवाद र वैदेशिक हस्तक्षेपका सबै रूप र अवशेषहरूको अन्त्य गरी समाजवादउन्मुख जनताको सङ्घीय गणतन्त्रको स्थापना गर्दै,,मजदूर, किसान

लगायतका श्रमजीवी जनता नै इतिहासका चालक शक्ति हुन् भन्ने यथार्थतालाई आत्मसात् गरी राज्यका विभिन्न अङ्गहरूमा सम्पूर्ण श्रमजीवी जनताको विशेषाधिकारको व्यवस्था गर्दै, वर्गीय, जातीय, क्षेत्रीय, लैङ्गिक र छुवाछूतजन्य वर्ण व्यवस्थाको उत्पीडनलाई अन्त्य गर्न राज्यको अग्रगामी पुनसंरचना गर्दै ।

१५९. प्रस्तावनामा 'पूर्ण र स्वच्छ अग्रगामी लोकतन्त्र (Headwing Democracy) लाई अङ्गीकार गर्दै' भन्ने शब्द थप गर्ने वा नगर्ने ?

१६०. प्रस्तावनामा 'नेपाल एक घर र सम्पूर्ण नेपाली एउटै परिवार भन्ने भावनालाई आत्मसात् गर्दै' भन्ने शब्दावली थप गर्ने वा नगर्ने ?

१६१. हिन्दुराष्ट्र, राजसंस्था एवं सङ्घीयताजस्ता विषयमा जनमतसङ्ग्रह गरी सोको नतिजा अनुरूप तत् सम्बन्धी व्यवस्था प्रस्तावनामा उल्लेख गर्नुपर्ने वा नपर्ने ?

**सि.नं. ४ राष्ट्र, राज्य र नेपालको क्षेत्रमा :**

१६२. राज्य र राष्ट्रको परिभाषा विरोधाभाषपूर्ण भएकाले राष्ट्रको परिभाषा हटाउनुपर्ने वा नपर्ने ?

१६३. नेपाल राज्यको परिभाषामा रहेको 'बहुराष्ट्रिय' शब्द हटाउने वा नहटाउने ?

१६४. नेपाल राज्यको परिभाषामा रहेको 'सङ्घीय' शब्द हटाउने वा नहटाउने ?

१६५. सोही परिभाषामा 'राज्य धर्मनिरपेक्ष हुने' शब्द हटाई धर्मनिरपेक्षताबारे जनमतसङ्ग्रहबाट टुङ्गो लगाउनु पर्ने वा नपर्ने ?

१६६. 'बहुराष्ट्रिय' भन्ने शब्दको सट्टा 'बहुराष्ट्रिय विशेषतायुक्त' भन्ने शब्द राख्ने वा नराख्ने ? *(माथिको प्रश्न नं. ४९ सँग अन्तरसम्बन्धित)*

१६७. धारा ४ मा रहेको 'बहुराष्ट्रिय' शब्दको सट्टा 'बहुजातीय' शब्द राख्नुपर्ने वा नपर्ने ? *(माथिको प्रश्न नं. ४९ सँग अन्तरसम्बन्धित)*

१६८. राष्ट्रको परिभाषामा बहुभाषिक पछि 'बहुलैङ्गिक' शब्द थप गर्नुपर्ने वा नपर्ने ?

१६९. धारा ४ को उपधारा २ मा रहेको 'सङ्घीय' भन्ने शब्दको सट्टा 'प्रशासकीय' भन्ने शब्द राख्ने वा नराख्ने ?

१७०. 'सङ्घीय लोकतान्त्रिक गणतन्त्र' भन्ने शब्दको अगाडि 'जनताको' भन्ने शब्द थप गर्ने वा नगर्ने ? *(माथि प्रश्न नं. ३८ सँग दोहोरिएको)*

१७१. राज्यको परिभाषामा रहेको 'समाजवादउन्मुख' भन्ने शब्दको सट्टामा देहायका मध्ये कुनै शब्दहरु राख्ने वा नराख्ने ?

क) सङ्घीय लोकतान्त्रिक

ख) लोकतान्त्रिक समाजवादी गणतन्त्रात्मक ।

१७२. 'समाजवादउन्मुख' भन्ने शब्दको अघि 'सङ्घीय लोकतान्त्रिक' भन्ने शब्द थप गर्ने वा नगर्ने ? *(माथिको प्रश्न नं. ५७ सँग अन्तरसम्बन्धित)*

१७३. अनुसूची १ मा लेखिएको नेपाल राज्यभित्र रहने सङ्घीय एकाइहरूको ठाँउमा तलका अंशहरु थप्ने वा नथप्ने ?

प्रशासनिक दृष्टिकोणले नेपाल राज्य तीन तहमा बाँडिने छ - केन्द्र, प्रदेश र जिल्ला । प्रदेशहरु निम्न अनुसार हुने छन् :-

कोशी प्रदेश - मेची र कोशी अञ्चललाई मिलाएर । सगरमाथा प्रदेश - सगरमाथा र जनकपुर अञ्चललाई मिलाएर । बागमती प्रदेश - बागमती र नारायणी अञ्चललाई

मिलाएर । गण्डकी प्रदेश - गण्डकी र धवलागिरी अञ्चललाई मिलाएर । लुम्बिनी प्रदेश - राप्ती र लुम्बिनी अञ्चललाई मिलाएर । कर्णाली प्रदेश - कर्णाली र भेरी अञ्चललाई मिलाएर । महाकाली प्रदेश -महाकाली र सेती अञ्चललाई मिलाएर । जिल्लाको आवश्यकता अनुसार संसदद्वारा पुनर्गठन हुनेछ । स्थानीय स्वायत्त शासनका तिन तह हुने छन् - प्रदेश, जिल्ला र गाउँ वा नगरपालिका ।

१७४. धारा ४ को उपधारा (२) सँग सम्बन्धित अनुसूचीमा स्थानीय सरकारको सूचीसमेत समावेश हुनुपर्ने वा नपर्ने ?

**सि.नं. ५ राष्ट्रिय झण्डा, गान र निशाना छापमा :**

१७५. युगीन राजनीतिक परिवर्तनको भाव झल्कने गरी गणतन्त्र, सङ्घीयता र समावेशीतालाई अभिव्यक्त गर्ने गरी राष्ट्रिय झण्डा परिवर्तन-परिमार्जन गर्ने वा यथावत् राख्ने ?

१७६. राष्ट्रिय झण्डा, गान र प्रतीकहरु नेपालको अन्तरिम संविधान, २०६३ को व्यवस्थालाई यथावत् राख्ने वा नराख्ने ? *(माथिको प्रश्न नं. ६१ सँग अन्तरसम्बन्धित)*

१७७. प्रतीकको व्यवस्था कानूनमा तोकिएबमोजिम हुने व्यवस्था गर्ने वा नगर्ने ? *(माथिको प्रश्न नं. ६१ सँग अन्तरसम्बन्धित)*

१७८. राष्ट्रिय गानको चौथो हरफमा 'वीरहरुका' भन्ने शब्दको सट्टा 'वीर विराङ्गनाहरुका' भन्ने शब्दहरु राख्न मिल्ने वा नमिल्ने ?

**सि.नं. ६ संविधान संशोधनमा**

१७९. संविधानमा अपरिवर्तनीय विषय भनेर राख्ने वा नराख्ने ?

१८०. अपरिवर्तनीय विषय रहने भएमा देहायका विषयलाई अपरिवर्तनीय भनी राख्ने वा नराख्ने ?

क) सार्वभौमसत्ता ख) राष्ट्रिय स्वाधीनता ग) सङ्घीयता घ) बहुलवाद ङ) धर्मनिरपेक्षता च) स्थानीय स्वायत्तता र स्वशासन, छ) समानुपातिक समावेशी

१८१. 'मानवअधिकार' शब्दको अगाडि 'आर्थिक समानता सहितको' भन्ने शब्दहरु थप गर्ने वा नगर्ने ? *(माथिको प्रश्न नं. १९ सँग अन्तरसम्बन्धित)*

१८२. देहायका विषयहरुमा संविधान संशोधन गर्नु परेमा जनमतसङ्ग्रहबाट अनुमोदन हुनुपर्ने व्यवस्था गर्ने वा नगर्ने ?

- प्राकृतिक स्रोत र साधनको बाँडफाँड गर्ने गरी विदेशी राष्ट्रसँग हुने सम्झौता । नेपालको अन्तराष्ट्रिय सीमा सम्बन्धी सम्झौता । सुरक्षा र सामरिक सम्बन्धमा असर पार्ने सम्झौता । राष्ट्रिय सम्पदाको स्वरुपलाई परिवर्तन गर्ने विषय । मानव स्वास्थ्यमा प्रतिकूल असर पर्न सक्ने विषयमा बहुराष्ट्रिय निगमसँग गरिने सम्झौता ।

१८३. आदिवासीको अग्राधिकार र धर्मनिरपेक्षतालाई असंशोधनीय बनाई जातीय व्यवस्था रहेसम्म वा १२० वर्षसम्म संविधान संशोधन गर्न नपाइने व्यवस्था राख्ने वा नराख्ने ?

१८४. धारा ८ को उपधारा (३) को सट्टा "उपधारा (२) बमोजिम पेश भएको विधेयक सङ्घीय वा प्रादेशिक एकाइको अधिकारको विषयसँग सम्बन्धित भएमा मुलुकको ५१ प्रतिशत जनताको प्रतिनिधित्व गर्ने कूल सङ्घीय एकाइहरुको बहुमत विधायकहरुद्वारा अनुमोदन भएमा सङ्घीय विधायिकाको दुई तिहाई मतद्वारा अनुमोदनका लागि पेश गरिने छ । तर सङ्घीय एकाइको पुनः संरचना वा सिमाना परिवर्तन को विषय यस धारा अन्तर्गत संविधान संशोधनको विषय हुँदैंन ।" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

१८५. उपधारा (४) मा रहेको "उक्त विषयमा स्वतः संविधान संशोधन भएको मानिनेछ" भन्ने शब्दहरूको सट्टा "उक्त विषयलाई संशोधनको लागि स्वीकृत भएको मानिनेछ र व्यवस्थापिका-संसदबाट संशोधन गरिने छ" भन्ने उल्लेख हुनुपर्ने वा नपर्ने ?

१८६. उपधारा (६) हटाई सोको सट्टा "सिमाना परिवर्तनका लागि सम्बन्धित सङ्घीय एकाईहरूको विधायिकाको बहुमतको सहमतिपश्चात् सम्बन्धित सङ्घीय एकाइहरूमा जनमतसङ्ग्रहद्वारा र प्रदेश पुनः संरचना आयोगको सिफारिशको आधारमा सङ्घीय विधायिकाको बहुमतबाट पारित गरिने छ ।" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

१८७. उपधारा (७) मा उल्लेख गरिएको विधेयकपछि रहेको "बहुमत सङ्घीय एकाइको विधायिकाको" भन्ने शब्दहरूको सट्टा "५०% भन्दा बढी जनताको प्रतिनिधित्व गर्ने सङ्घीय एकाइको विधायिकाले" भन्ने शब्द थप्ने वा नथप्ने ?

१८८. धारा ८ मा रहेका "सङ्घीय र सङ्घीय एकाइ" भन्ने शब्दहरु हटाउने वा नहटाउने ?

१८९. धारा ८ मा देहायको उपधारा थप गर्ने वा नगर्ने ?

"कानूनले निर्धारण गरेको विधि, प्रक्रिया पूरा गरी तोकिएको संख्याका नागरिकहरूले हस्ताक्षर गरी सङ्घीय व्यवस्थापिकामा संविधान संशोधनको प्रस्ताव पेश गर्न सक्नेछन् ।"

१९०. संविधान संशोधन गर्दा स्थानीय सरकारको सिमाना परिवर्तनसँग सम्बन्धित विषयमा स्थानीय सरकारको सहमति आवश्यक पर्ने वा नपर्ने ?

**खुला प्रश्न**

१९१. धारा ८(२) र (३) मा रहेको संविधान संशोधन सम्बन्धी मस्यौदाको ठाँउठाँउमा रहेका तोकिएवमोजिमको न्यूनतम संख्याका सदस्य नभनी संख्या किटान नै गरेर राख्नुपर्ने वा नपर्ने ?

**सि.नं. ९ विविधमा**

१९२. धारा १५ को सट्टामा 'मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रप्रमुखले नेपाली राजदूत र कुनै खास प्रयोजनको लागि विशेष प्रतिनिधि नियुक्त गर्न सक्नेछ' भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

१९३. नेपाली राजदूत र विशेष प्रतिनिधि नियुक्ति समानुपातिक समावेशी सिद्धान्तको आधारमा गर्ने वा समावेशी सिद्धान्तको आधारमा गर्ने ? *(माथिको प्रश्न नं. ७८ सँग अन्तरसम्बन्धित)*

**सि.नं. १० सङ्क्रमणकालीन व्यवस्थामा**

१९४. राष्ट्रपति र उपराष्ट्रपतिको सट्टामा अध्यक्षमण्डलको व्यवस्था राख्ने वा नराख्ने ?

१९५. राष्ट्रपति र उपराष्ट्रपति सम्बन्धी व्यवस्थाको सट्टामा "यो संविधान प्रारम्भ हुँदाका बखत वहाल रहेका राष्ट्रपति र उपराष्ट्रपति नयाँ संविधान वमोजिम निर्वाचन नभएसम्म कायम रहने र कुनै करणवश पद रिक्त भएमा पदपूर्ति हुने प्रक्रिया अन्तरिम संविधान वमोजिम हुनेछ" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

१९६. कार्यकारिणी सम्बन्धी व्यवस्थाको सट्टामा "यो संविधान प्रारम्भ हुँदाका वखत कायम रहेको मन्त्रिपरिषद् यसै संविधान अन्तर्गत भएको सङ्घीय मन्त्रिपरिषद् मानिनेछ" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

१९७. विधायिकी अधिकार सम्बन्धी व्यवस्थाको सट्टामा "यो संविधान वमोजिम निर्वाचित सङ्घीय संसद/व्यवस्थापिका-संसदबाट सङ्घीय मन्त्रिपरिषद् गठन नभएसम्म साविकको मन्त्रिपरिषद् कायम रहने छ । तर सङ्घीय संसद/व्यवस्थापिका-संसदको प्रथम अधिवेशनपश्चात् ६०

दिनभित्र यस संविधान अन्तर्गतको मन्त्रिपरिषद् गठन हुनेछ ।" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

१९८. धारा २४ को उपधारा (२) मा रहेको 'वहाल रहेका न्यायाधीशहरु' भन्ने शब्दहरु पछि रहेको "यो संविधानमा व्यवस्था भएको नियुक्ति सम्बन्धी व्यवस्था कार्यान्वयन नभएसम्म" भन्ने शब्दहरुको सट्टा "यसै संविधान बमोजिम नियुक्ति भएको मानी आ-आफ्नो पदमा यथावत् कायम रहने छन्" राख्ने वा नराख्ने ?

१९९. धारा २५ को उपधारा (३) मा रहेको 'कार्यरत पदाधिकारीहरु' भन्ने शब्दपछि रहेको "यो संविधानमा व्यवस्था भएको नियुक्ति सम्बन्धी व्यवस्था कार्यान्वयन नभएसम्म" भन्ने शब्दहरुको सट्टा 'यसै संविधान बमोजिम नियुक्ति भएको मानी आ-आफ्नो पदमा यथावत् कायम रहने छन्' भन्ने शब्दहरु राख्ने वा नराख्ने ?

२००. सङ्क्रमणकालीन व्यवस्था अन्तर्गत हालको व्यवस्थाको सट्टा देहायका प्रावधानहरु थप गर्नुपर्ने वा नपर्ने ?

- नयाँ संविधान जारी गएको मितिले बढीमा एक महिनाभित्र राष्ट्रपति तथा मन्त्रिमण्डलको अन्तरिम व्यवस्था व्यवस्थापिका-संसदको रुपमा कायम रहने संविधानसभाले गर्ने । संवैधानिक अङ्गका पदाधिकारीहरु र न्यायाधीशहरुको अन्तरिम व्यवस्था नयाँ संविधान जारी भएको तीन महिना भित्र व्यवस्थापिका-संसदको रुपमा कायम रहने संविधानसभाले गर्ने । स्वायत्त प्रादेशिक राज्यहरुको अन्तरिम व्यवस्था नयाँ संविधान जारी भएको तीन महिना भित्र व्यवस्थापिका-संसदको रुपमा कायम रहने संविधानसभाले गर्ने ।

२०१. बाधा अड्काउ फुकाउने अधिकार सङ्क्रमणकालीन भाग अन्तर्गत राख्ने वा नराख्ने ?

२०२. बाधा अड्काउ फुकाउने अधिकारमा राष्ट्रपतिले मन्त्रिपरिषद्को सिफरिशमा आवश्यक सम्झेमा, यस संविधानको कार्यान्वयनमा त्यस्तो बाधा अडकाऊ फुकाउने, जुन विशिष्टता अन्तरिम संविधान २०६३ को धाराबाट यस संविधानको धारामा सङ्क्रमणको सम्बन्धमा रहेको छ, आदेश जारी गरी निर्देश गर्न सक्ने छ । आदेश उल्लिखित अवधिको दौरान यस संविधानको उपान्तरण (addition), परिवर्तन (modification) वा लोप (omission) को रुपमा अनुकूलन (adaptation) को अधीनमा रही प्रभावी (effective) रहने छ भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

२०३. बाधा अड्काउ फुकाउने आदेश व्यवस्थापिका-संसदबाट एकमहिनाभित्र अनुमोदन गराउनुपर्ने वा नपर्ने ?

**खुला प्रश्न**

२०४. सङ्क्रमणकालीन व्यवस्था अन्तर्गत वर्तमान संविधानसभालाई नै व्यवस्थापिकाको रुपमा निरन्तरता दिने तर न्यायाधीश एवं संवैधानिक निकायका पदाधिकारीहरुको हकमा अन्यथा व्यवस्था राखिनुले दोहोरो मापदण्ड अवलम्बन गरेको देखिने हुँदा एकरुपता कायम गरिनुपर्ने वा नपर्ने ?

**सि.नं. १२ संक्षिप्त नाम, प्रारम्भ र खारेजी**

२०५. नामको पछाडि रहेको सम्वत् राख्ने वा राख्न नपर्ने ?

२०६. समाजवादउन्मुख गणतन्त्र नेपालको संविधान, २०६७ भनी नाम राख्नुपर्ने वा नपर्ने ?

२०७. सङ्घीय गणतन्त्र नेपालको संविधान, २०६७ भनी नाम राख्नुपर्ने वा नपर्ने ?

२०८. जनताको सङ्घीय गणतन्त्र नेपालको संविधान, २०६७ भनी नाम राख्नुपर्ने वा नपर्ने ?

२०९. गणतन्त्र नेपालको संविधान २०६७ भनी नामाकरण गर्नुपर्ने वा नपर्ने ?

२१०. संविधानको नामपछि साल उल्लेख गर्दा नेपाल सम्वत् ११३० उल्लेख गर्नुपर्ने वा नपर्ने ?

**राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितितर्फ** (यो समितिको प्रतिवेदनमा रहेका विवादित विषयको प्रश्नावली बनाउने वा नबनाउने भन्ने विषयमा यो समितिमा नै विवाद भएकोले पछि संविधानसभा सचिवालयले देहायका ७८ वटा प्रश्नावली निर्माण गरेको थियो । उक्त प्रश्नावलीलाई संविधानसभाको मिति २०६७ ।१२ ।०३ को बैठकले सहमति कायम गर्नको लागि संवैधानिक समितिमा पठाएको थियो –सम्पादक)

१. (फरकमत) उपधारा (३) को दोस्रो हरफमा बसोवास गर्ने भन्ने पदावलीपछि 'मधेसी समुदाय र' भन्ने शब्द थप गर्ने वा नगर्ने ?

२. उपधारा (३) – यो उपधारा लगायत अन्य धारामा उल्लिखित 'आदिवासी, आदिवासी जनजाति' भन्ने शब्दले अस्पष्टता ल्याएकोले यसरी प्रयोग गर्न नहुने, यो शब्दावलीको सट्टा उत्पीडित क्षेत्रका जनता भन्नु पर्ने वा नपर्ने ?

३. धारा ३(१) मा सङ्घ प्रदेश, स्थानीयतह र विशेष संरचनाले राज्यशक्तिको प्रयोग गर्ने भनिएको तर धारा ४ मा सङ्घ, प्रदेश, स्थानीय गरी तीन तहलाई मूल संरचना भनेको हुँदा अस्पष्टता ल्याएकोले यसलाई कसरी राख्ने ?

४. विशेष संरचनाको प्रशासनिक संरचना कस्तो हुने ?

**धारा ४ सङ्घीय नेपालको तहगत संरचना शीर्षक अन्तर्गत (पेज III – IV)**

५. उपधारा (३) स्थानीयतहको अधिकार प्रयोग गर्ने निर्वाचित परिषद्मा 'विधायिकी, कार्यकारी र न्यायिक अधिकार' एकै ठाँउमा राख्ने कि नराख्ने ?

६. उपधारा (५) स्वायत्तक्षेत्रको अधिकार प्रयोग गर्ने निर्वाचित परिषद्मा 'विधायिकी, कार्यकारी र न्यायिक अधिकार' एकै ठाँउमा राख्ने कि नराख्ने ? *(संविधानसभाबाट मिति २०६७ ।१० ।१२ मा संवैधानिक समितिलाई राज्यको शासकीय स्वरूप निर्धारण समितिको प्रतिवेदनमाथिको निर्देशनको बुँदा नं. १८ मा देहाय बमोजिम उल्लेख भएको – स्थानीय सरकारको कार्यकारिणी, विधायिकी र कार्यपालिकीय अधिकार प्रयोगको संयन्त्र अलग–अलग हुने व्यवस्था गर्नुपर्ने भएकोले सोही मान्यता अनुरूप स्थानीय कार्यकारिणी सम्बन्धी व्यवस्थामा आवश्यक परिमार्जन गर्ने)*

७. (फरकमत) उपधारा (४) को दोस्रो हरफमा रहेको "संविधानको धारा ८ मा व्यवस्था भएबमोजिम" भन्ने शब्दको सट्टा "प्रादेशिक कानूनमा व्यवस्था भएबमोजिम" भन्ने शब्द राख्ने वा नराख्ने ?

८. (फरकमत) उपधारा (५) मा रहेको "स्थापना हुने" पछि "विशेष संरचनालाई" भन्ने शब्दहरु थप्ने वा नथप्ने

९. (फरकमत) सोही उपधारामा रहेको "स्वायत्तक्षेत्रमा संविधानको अनुसूची ७ मा उल्लिखित अधिकार प्रयोग गर्ने गरी" भन्ने शब्दहरु हटाउने वा नहटाउने ?

**धारा ५ प्रदेशको निर्माण शीर्षक अन्तर्गत (पेज V – VII)**

१०. राज्य पुनर्संरचना आयोग गठन गरी सो आयोगले प्रस्तुत गर्ने सिफारिशलाई समेत मध्यनजर गरी प्रदेशको निर्माण गर्ने वा नगर्ने ?

११. (फरकमत) जातीय पहिचानका आधारमा विभाजित चौध राज्यको संरचनाप्रति असहमति रहेको हुनाले यसमा के गर्ने ?

१२. (फरकमत) उपधारा (१) मा "नेपाललाई" भन्ने शब्दपछि १४ र ६ अङ्क कायम गरी प्रदेश निर्माणका दुबै विकल्प प्रस्तुत गर्ने भनिएकोले के गर्ने ?

१३. सोही उपधाराको व्याख्यात्मक टिप्पणीमा तराई र मधेसमा विभक्त भएको छ भन्ने वाक्यांश पछाडि देहायका वाक्यहरु राखी परिमार्जन गर्ने वा नगर्ने ?

"यस विविधतापूर्ण अवस्थितिलाई ध्यान राखी नेपालमा सबैभन्दा पछिल्लो पटक लिएको २०५८ सालको औपचारिक जनगणनामा आधारित भई कूल संख्याको एक प्रतिशतभन्दामाथि रहेको जाति समुदाय र एक प्रतिशतभन्दा बढी जनताले बोल्ने भाषिक संख्याद्वारा निर्मित भौगोलिक क्षेत्रगत निरन्तरतामा रहेका झुण्डहरूलाई आधार बनाई मानव अवस्थितिको क्षेत्रगत रेखाङ्कन तयार भएको प्रारम्भिक मानव अवस्थिति वा क्षेत्र झुण्डहरूमध्ये ज्यादै कम संख्यामा मानव अवस्थितिको वा झुण्डहरूमा मात्र निश्चित जाति, समुदाय वा भाषिक वक्ताको बहुसंख्यक देखियो । यस प्रकारको मानव अवस्थितिको क्षेत्रगत रेखाङ्कन वा झुण्डहरूको बसोवासको अवस्थाले गर्दा प्रायः सबै ठाँउ, जाति, समुदाय वा भाषा-भाषिक हिसाबले अत्यधिक मिश्रणमा रहेको पाइयो । तसर्थ एकल पहिचानको प्रदेश निर्माण गर्न एक दुई क्षेत्र अपवादबाहेक प्रायः सबै क्षेत्रमा असमानजस्तै देखियो । प्रदेश निर्माण सम्बन्धी प्रयोगमा ल्याइएका सिद्धान्त एवं पहिचान र सामर्थ्यका स्वीकृत आधारमध्ये जाति, समुदाय वा भाषाबाहेकमा पहिचानका अन्य आधारित र सामर्थ्यका आधारलाई समेत प्रयोग गर्न पर्ने अवस्था बन्यो । जस अनुसार निर्माण गरिने प्रदेशहरूको स्वायत्त र स्वशासनको अधिकार जिम्मेवारीलाई प्रयोग गर्न सक्ने गरी भौगोलिक तथा सांस्कृतिक निकटता र आर्थिक अन्तरसम्बन्ध र प्रशासनिक सुगमतालाई पनि दृष्टिगत गर्दै नेपालको एकात्मक स्वरूपलाई पुनर्संरचना गरी लोकतान्त्रिक गणतन्त्र नेपाललाई सङ्घीय एकाइमा व्यवस्थित गर्न वैज्ञानिक र व्यावहारिक देखिएको हुँदा संविधानसभामा ६ र १४ दुबै विकल्पका नक्सा प्रस्तुत गर्ने गरी यो व्यवस्था गरिएको छ ।"

१४. उपधारा (१) मा 'चौध स्वायत्तप्रदेश' उल्लेख भएकोमा स्वायत्तप्रदेश वा प्रदेश मात्र उल्लेख गर्ने भन्ने सम्बन्धमा यसैको उपधारा (२) र (३) मा "प्रदेश" मात्र उल्लेख भएको हुँदा अस्पष्टता ल्याएकोले कसरी उल्लेख गर्ने ?

१५. चौध प्रदेशको पुनर्संरचना सम्बन्धमा यसको संख्या, नामाङ्कन र सीमाङ्कनका सम्बन्धमा फरकमतहरु आएको र सभामा छलफल हुँदासमेत माननीय सदस्यहरूको विचार फरक-फरक रहेको हुँदा के गर्ने ?

१६. (फरकमत) उपधारा (२) मा रहेको व्यवस्थाको सट्टा निम्नानुसार राख्ने वा नराख्ने ?

"उपधारा (१) बमोजिम निर्माण गरिने प्रदेशको नाम र क्षेत्रको निर्धारण पहिचान र सामर्थ्यका आधारमा संविधानसभाले गठन गरेको विशेषज्ञ कमिटीले तय गरे वमोजिम हुनेछ ।"

१७. उपधारा (३) - प्रदेशको नाम हेरफेर गर्ने सम्बन्धमा सङ्घीय विधायिकाको समर्थन लिनु पर्ने व्यवस्था गर्ने वा नगर्ने ?

१८. उपधारा ४ बमोजिम प्रदेशको नाम हेरफेर गर्ने सम्बन्धमा भएको जनमतसङ्ग्रहबाट अनुमोदन भएमा स्वतः नाम परिवर्तन हुने व्यवस्था गर्ने वा नगर्ने ?

१९. प्रदेशको नाम हेरफेर गर्ने सम्बन्धमा प्रस्तावित उपधारा (३) र (४) को व्यवस्था जटिल भएकाले यसलाई परिमार्जन गर्ने वा नगर्ने ?

२०. उपधारा (५) - प्रदेशहरु एक आपसमा गाभिने सम्बन्धमा सङ्घीय विधायिकाको दुई तिहाई मत जरूरी हुनुपर्ने वा नपर्ने ?

२१. प्रदेशहरु एक आपसमा गाभिने सम्बन्धमा रहेको उपधारा (६) को व्यवस्थामा जनमतसङ्ग्रहमात्र राखी त्यसबाट अनुमोदन भए स्वतः प्रदेश गाभिने व्यवस्था हुनुपर्ने वा नपर्ने ?

२२. प्रदेशको निर्माणमा अन्यथा सहमति भएमा सो अनुसार प्रदेशको राजधानी परिवर्तन गरिनुपर्ने वा नपर्ने ?

२३. (फरकमत) प्रदेश निर्माणको व्याख्यात्मक टिप्पणीमा उल्लिखित "भूबनोटका हिसाबले हिमाल, पहाड, उपत्यका र तराई-मधेस विभक्त भएको छ ।" भन्ने शब्दहरूको सट्टा "हिमाल, पहाड, तराई, भित्री तराई" भनी परिमार्जन गर्ने वा नगर्ने ? (पेज V)

२४. समग्र मधेसलाई एउटै प्रदेश कायम गर्ने वा नगर्ने ?

**धारा ६ सङ्घको राजधानी सम्बन्धी विषय**

२५. सङ्घको राजधानी फेर्न सम्भव छ वा छैन ?

२६. (फरकमत) सङ्घको राजधानी दाङ्गमा राख्ने वा नराख्ने ?

**धारा ७ स्थानीयतहको निर्माण र क्षेत्रनिर्धारण अन्तर्गत (पेज VII - VIII)**

२७. गाउँपालिका र नगरपालिकाभन्दामाथि प्रदेशभन्दा तलको बीचमा प्रशासनिक एकाइ आवश्यक हुने वा नहुने ?

२८. (फरकमत) उपधारा (१) को 'रूपमा' शब्दपछि 'जिल्ला तह' शब्द थप्नुपर्ने वा नपर्ने ?

२९. उपधारा (२), (३) र (४) मा रहेको व्यवस्थाको सट्टा स्थानीयतहको संख्या र क्षेत्र संविधान निर्माणसँगै र प्रदेशको निर्माणसँगै गरिनुपर्ने व्यवस्था राख्ने वा नराख्ने ?

३०. स्थानीयतहको संरचना गर्दा अपनाउने मापदण्ड संविधानमै तोकिई वैज्ञानिक तवरले गर्न खोजिएको तर सोही मापदण्डलाई प्रदेश निमार्णमा ध्यान नदिइएको भन्ने प्रश्न उठेकाले यसलाई कसरी सम्बोधन गर्ने ?

३१. (फरकमत) उपधारा (३) को पहिलो हरफमा रहेको "बमोजिम" भन्ने शब्दपछि रहेको "सङ्घीय सरकारले तोकेको मापदण्डको आधारमा सम्बन्धित" शब्दहरु हटाउने वा नहटाउने ?

३२. (फरकमत) उपधारा (६) मा रहेको 'प्रादेशिक' शब्द हटाउनुपर्ने वा नपर्ने ?

**धारा ८ विशेष संरचना सम्बन्धी व्यवस्था अन्तर्गत (पेज IX – X)**

३३. (फरकमत) उपधारा (१) मा उल्लिखित वाक्यांशको सट्टामा देहाय बमोजिम लेख्ने वा नलेख्ने ?

"संविधानको धारा ४ बमोजिमको तहगत संरचनाको अतिरिक्त कुनै प्रदेशभित्र आदिवासी जनजाति वा भाषिक समुदायको बाहुल्य भएको वा सघन उपस्थिति भएको क्षेत्रलाई स्वायत्तक्षेत्र कायम गरिने छ ।"

३४. उपधारा (१) - स्वायत्तक्षेत्र कायम गर्न सकिने भनी यस उपधारा (१) मा उल्लेख भएको भए तापनि सोको विपरीत उपधारा (४) मा अनुसूची २ मा उल्लेख भएबमोजिमका स्वायत्तक्षेत्र रहने कुरा उल्लेख गरिएको उक्त सूची अपूर्ण र अवैज्ञानिक रहेको र यिनको भौगोलिक अवस्थिति कहाँ रहेको भन्ने स्पष्ट नभएको भन्ने विचार आएको, साथै अरू क्षेत्र निर्माणको लागि आयोग गठन गर्न जरूरी ठानियो तर यी सूचीकृत क्षेत्र के आधारमा निर्माण गरियो भन्ने संम्बन्धमा पनि जिज्ञासाहरु आएका हुँदा यसलाई कसरी सम्बोधन गर्ने ?

३५. उपधारा (२) र (३) बमोजिमका विशेष क्षेत्र, संरक्षित क्षेत्र निर्वाचित वा मनोनित के हुने भन्ने अस्पष्टता रहेको भन्ने प्रश्न उठेकोले के गर्ने ?

३६. (फरकमत) उपधारा (२), (३), (४) र (५) रहेको व्यवस्थालाई हटाउने वा नहटाउने ?

३७. (फरकमत) उपधारा (४) र (५) को सट्टा देहायबमोजिमको उपधारा (४) राखी व्याख्यात्मक टिप्पणी समेत परिमार्जन गर्ने वा नगर्ने ?

"(४) उपधारा (१), (२) र (३) बमोजिम विशेष संरचना निर्माण गर्दा सङ्घीय सरकारले तोकेको मापदण्डको आधारमा सम्बन्धित प्रदेश सरकारले विषयगत विज्ञहरूको आयोग गठन गर्ने छ । धारा ५ को उपधारा (४) बमोजिम गठित आयोगको सिफारिश बमोजिम प्रादेशिक सरकारद्वारा प्रस्तुत प्रस्तावले प्रादेशिक व्यवस्थापिकाको दुई तिहाई सदस्यहरूको समर्थन प्राप्त गरेपछि विशेष संरचनाको गठन गरिने छ ।"

३८. (फरकमत) उपधारा (४) मा रहेको "अनुसूची २" भन्ने शब्द हटाउने वा नहटाउने ?

३९. (फरकमत) उपधारा (४) को सट्टा देहायको व्यवस्था राख्ने वा नराख्ने ?

"उपधारा (१) बमोजिम प्रदेश अन्तर्गत निर्माण हुने स्वायत्तक्षेत्रहरु अनुसूची-२ मा उल्लेख भएबमोजिम हुनेछन् । स्वायत्तक्षेत्रको सीमाङ्कन, नामाकरण प्रादेशिक सरकारले एक वर्षभित्रमा कानून बनाई निर्धारण गर्नेछ । त्यसको लागि प्रादेशिक सरकारले एक अधिकारसम्पन्न आयोग गठन गर्नेछ । आयोगको सिफारिशमा नाम र सीमा निर्धारण हुनेछन् ।"

४०. उपधारा (७) मा रहेको विशेष संरचना सम्बन्धी अन्य व्यवस्था प्रादेशिक कानूनबमोजिम हुने व्यवस्था हटाउने वा नहटाउने ?

**धारा ९ सङ्घ, प्रदेश, स्थानीयतह र विशेष संरचनाको अधिकारको बाँडफाँड शीर्षक अन्तर्गत (पेज X – XII)**

४१. उपधारा (५) - स्थानीयतहलाई कानून बनाउने अधिकार दिनु उपयुक्त हुने वा नहुने ?

४२. प्रादेशिक कानूनसँग स्थानीयतहले वनाएको कानून बाझिएमा त्यस्ता कानून स्वतः निस्क्रिय हुने भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

४३. (फरकमत) उपधारा (५), (६), (७), (८), (९) र (१०) को व्यवस्थालाई हटाउने वा नहटाउने ?

४४. उपधारा (११) - अवशिष्ट अधिकार प्रदेशलाई हुनुपर्ने गरी परिमार्जन गर्ने वा नगर्ने ?

**धारा ११ सङ्घीय एकाइहरू बीच उत्पन्न हुने विवाद समाधान सम्बन्धी व्यवस्था**

४५. अन्तरप्रादेशिक परिषद्मा विशेषज्ञहरु, स्वतन्त्र व्यक्तिहरु रहनुपर्ने, यो परिषद्मा राजनीतिक प्रकृतिका व्यक्तिमात्र रहने व्यवस्था गरियो, विवादको पक्षसमेत यो परिषद्मा रहने अवस्था आउने हुँदा प्रभावकारी हुन नसक्ने, यसमा कानूनमन्त्रीसमेत राख्नुपर्ने भन्ने मतहरु आएका हुँदा यसलाई कसरी सम्बोधन गर्ने ?

४६. (फरकमत) उपधारा (११) को सङ्घ र प्रदेश, प्रदेश र प्रदेशपछि रहेको प्रदेश र स्थानीयतह, प्रदेश र विशेष संरचना र स्थानीयतह र विशेष संरचनाका क्षेत्रहरु भन्ने शब्दहरु हटाउने वा नहटाउने ?

४७. उपधारा (११) देखि (१६) सम्म रहेको संवैधानिक अदालतको व्यवस्था न्यायप्रणाली सम्बन्धी समितिको प्रतिवेदनसँग मेल खाँदैन, यो विषय यसको क्षेत्राधिकार नभएको, यी दुबै समितिका प्रतिवेदनमा भएका व्यवस्था एकैसाथ राखी हेर्नुपर्छ भन्ने विचार आएको हुँदा यसलाई कसरी सम्बोधन गर्ने ?

**धारा १२ आत्मनिर्णयको अधिकार अन्तर्गत** (यो विषयमा राष्ट्रिय हितको संरक्षण समिति र संवैधानिक समितिको प्रतिवेदनसमेत सान्दर्भिक रहेको)

४८. (फरकमत) उपधारा (१) मा "आदिवासी-जनजाति" शब्दपछि "स्थानीयतह र विशेष संरचनामा स्थायी रूपमा बसोवास गर्ने सबै नागरिकलाई" भन्ने शब्दहरु थप्ने वा नथप्ने ?

४९. "आदिवासी, आदिवासी जनजाति" भन्ने शब्दले अस्पष्टता ल्याएको, आत्मनिर्णयको अधिकार भन्ने शब्दावलीको विभिन्न अर्थ लगाइने गरेको हुँदा यस व्यवस्थालाई राख्न नहुने भन्ने मत आएकाले यसलाई कसरी सम्बोधन गर्ने ?

५०. (फरकमत) उपधारा (१) आत्मनिर्णयको अधिकारलाई हटाउने वा नहटाउने ?

५१. (फरकमत) आत्मनिर्णयको अधिकारको व्यवस्था हटाई त्यसको निर्णय गर्ने जिम्मेवारी व्यवस्थापिका-संसदलाई दिनुपर्ने वा नपर्ने ?

**धारा १३ राजनीतिक अग्राधिकार सम्बन्धी**

५२. राजनीतिक अग्राधिकार सम्बन्धी व्यवस्था लोकतन्त्रविरोधी भएकोले राख्न नहुने भन्ने विचार आएकाले यसलाई कसरी सम्बोधन गर्ने ?

५३. (फरकमत) राजनीतिक अग्राधिकार सम्बन्धी प्रस्तावित व्यवस्था पूरै हटाउने वा नहटाउने ?

५४. (फरकमत) प्रदेश र विशेष संरचना क्षेत्र अन्तर्गत जाति वा भाषिक बाहुल्यताको आधारमा राजनीतिक अग्राधिकार हुनेछ भन्ने व्यवस्था हटाउनुपर्ने वा नपर्ने ?

५५. (फरकमत) धारा १३ को उपधारा (१) को व्यवस्था हटाउने वा नहटाउने ?

५६. उपधारा (१) मा रहेको "दुई कार्यकाल" को सट्टा "१५ वर्ष" राख्ने वा नराख्ने ?

५७. उपधारा (२) को सट्टा देहायबमोजिमको वाक्यांश राखी परिमार्जन गर्ने वा नगर्ने ?

५८. "सङ्घीय, प्रादेशिक र स्थानीयतहका सबै राजनीतिक संरचनामा दलित समुदायको जनसंख्याको आधारमा समानुपातिक प्रतिनिधित्वमा इतिहासकालदेखिकै उत्पीडन बापत क्षतिपूर्तिका रूपमा थप सात प्रतिशत प्रतिनिधित्वको सुनिश्चित हुने गरी विशेषाधिकारको व्यवस्था हुनेछ ।"

५९. उपधारा (२) मा दलितलाई थप सात प्रतिशत क्षतिपूर्ति दिने व्यवस्था हुनुपर्ने विषय राख्ने वा नराख्ने ?

६०. स्थानीय निकायमा दलित समुदायको बाहुल्यता भएको स्थानमा दलित नै प्रमुख हुने व्यवस्था गर्नुपर्ने वा नपर्ने ?

६१. मस्यौदामा रहेको धारा १४ महिलाको अधिकार, धारा १५ को दलितको अधिकारजस्तै धारा २० मा थप गरी मुस्लिम अधिकार उल्लेख गर्नुपर्ने भन्ने सभापतिको जवाफमा आएकोले के गर्ने ?

**प्रदेशहरूको संख्या, सिमाना र क्षेत्र सम्बन्धी अनुसूची १ अन्तर्गत**

६२. यो अनुसूचीको सट्टा देहायको अनुसूची १ राख्नुपर्ने वा नपर्ने ?

"नेपाललाई भूगोलको आधारमा निम्न बमोजिम १४ वटा प्रान्तमा विभाजन गरिएको छ : १) मेची प्रान्त २) कोशी प्रान्त ३) सगरमाथा प्रान्त ४) जनकपुर प्रान्त ५) नारायणी प्रान्त ६) बागमती प्रान्त ७) लुम्बिनी प्रान्त ८) गण्डकी प्रान्त ९) अन्नपूर्ण प्रान्त १०) राप्ती प्रान्त ११) भेरी प्रान्त १२) कर्णाली प्रान्त १३) सेती प्रान्त १४) महाकाली प्रान्त ।"

६२. यो अनुसूचीको सट्टा देहायको अनुसूची १ राख्नुपर्ने वा नपर्ने ?

"प्रदेशहरु बेग्लाबेग्लै भौगोलिक क्षेत्र, जाति, भाषा वा संस्कृतिलाई मिलाएर गठन गरिनुपर्छ र प्रदेशहरु निम्न अनुसार हुनेछन् :- कोशी प्रदेश - मेची र कोशी अञ्चललाई मिलाएर । सगरमाथा प्रदेश - सगरमाथा र जनकपुर अञ्चललाई मिलाएर । बागमती प्रदेश - बागमती र नारायणी अञ्चललाई मिलाएर । गण्डकी प्रदेश - गण्डकी र धवलागिरी अञ्चललाई मिलाएर । लुम्बिनी प्रदेश - राप्ती र लुम्बिनी अञ्चललाई मिलाएर । कर्णाली प्रदेश - कर्णाली अञ्चललाई मिलाएर । महाकाली प्रदेश -भेरी, सेती र महाकाली अञ्चललाई मिलाएर ।"

**अनुसूची-२ स्वायत्तक्षेत्रको सूची अन्तर्गत**

६३. यो अनुसूची पूरै हटाउनुपर्ने वा नपर्ने ?

**अनुसूची-३ सङ्घको अधिकारको सूची अन्तर्गत**

६४. (फरकमत) देहायका विषयलाई यस अनुसूचीबाट हटाई अनुसूची-४ को प्रदेशको अधिकारको सूचीमा समावेश गर्ने वा नगर्ने ?

- क्रमसंख्या ४ को केन्द्रीय दूरसञ्चार, रेडियो फ्रिक्वेन्सीको बाँडफाँड, टेलिभिजन र हुलाक,
- क्र.सं. ५ को भन्सार, अन्तःशुल्क, मूल्य अभिवृद्धि कर, संस्थागत आयकर, राहदानी, भिसा, हुलाक, पर्यटन दस्तुर, सेवा शुल्क दस्तुर,
- क्र.सं. २४ को हातहतियार, खरखजाना कारखाना तथा उत्पादन सम्बन्धी,
- क्र.सं. २५ को नापतौल, क्र.सं. २७ को वीमा नीति
- क्र.सं. २९ को बौद्धिक सम्पत्ति (पेटेन्ट, डिजाइन, प्रतिलिपि अधिकारसमेत)

६५. क्रमसंख्या ३ मा "मुद्रा" शब्द थप्नुपर्ने वा नपर्ने ?

६६. क्रमसंख्या ३० पछि देहायको क्रमसंख्या र विषयहरु थप गर्ने वा नगर्ने ?

"३१. भूमिसुधार, ३२. राष्ट्रियस्तरको वन, ३३. तालतलैया, ३४. निकुञ्ज र ३५. नदी र पहाडहरु"

**अनुसूची-४ प्रदेशको अधिकारको सूची अन्तर्गत**

६७. क्रमसंख्या २१ मा रहेको 'भूमिव्यवस्थापन' शब्द हटाउनुपर्ने वा नपर्ने ?

**सङ्घीय पद्धतिसँगै असहमति राखि आएका लगायतका अन्य विषयहरू**

६८. धारा ४, ५, ६, ८, ९ र १० को व्यवस्था सङ्घीय व्यवस्थासँग सम्बन्धित भएकोले सो व्यवस्थाप्रति असहमति रहेको भन्ने मत आएकाले के गर्ने ?

६९. जिल्लाको आवश्यकता अनुसार संसदद्वारा पुनर्गठन हुनेछ भन्नु पर्ने वा नपर्ने ?

७०. "स्थानीय स्वायत्त शासनका तीन तह हुनेछन् - प्रदेश, जिल्ला र गाउँ वा नगरपालिका" भन्नु पर्ने वा नपर्ने ?

७१. प्रदेशहरु ५ देखि ७ भन्दा बढी हुने छैनन् भनी लेख्ने वा नलेख्ने ?

७२. सङ्घीय संरचनामा निम्न चारतहहरु रहने छन भन्नु पर्ने वा नपर्ने ? "(१) सङ्घ (केन्द्र), (२) प्रदेश, (३) जिल्ला र (४) ग्रामपालिका एवं नगरपालिकाहरु ।"

७३. "प्रशासनिक दृष्टिकोणले नेपाल राज्य चारतहमा बाँडिनेछ - केन्द्र, प्रदेश, जिल्ला र गाँउ वा नगरपालिका" भन्नु पर्ने वा नपर्ने ?

७४. स्थानीय स्वायत्त शासन अन्तर्गतका तीन तहको गठनविधि उल्लेख हुनुपर्ने, गाँउ समितिको कार्यक्षेत्र र अधिकार, जिल्ला समितिको कार्यक्षेत्र र अधिकार र प्रादेशिक समितिको कार्यक्षेत्र र अधिकारको विषयमा उल्लेख हुनुपर्ने भन्ने मत आएकोले यसलाई कसरी सम्बोधन गर्ने ?

७५. जनजाति तथा दलित काउन्सिलबारे संविधानमा व्यवस्था गर्ने वा नगर्ने ?

७६. धारा ८ (१) मा "संविधानको धारा ४ वमोजिमको मूल संरचनाको अतिरिक्त कुनै प्रदेशभित्र एक जाति, समुदाय वा भाषिक समुदायको बाहुल्यता भएको वा सघन उपस्थिति रहेको क्षेत्रलाई स्वायत्तक्षेत्र कायम गर्न सकिनेछ" भन्ने उल्लेख भएकोमा एक जाति, समुदाय वा भाषिक समुदायको "बाहुल्यता भएको वा सघन उपस्थिति रहेको" वाक्यांशको सट्टा "अत्यधिक बहुसंख्यामा भएको" भन्ने शब्द लेख्नु पर्ने वा नपर्ने ?

७७. मधेसी, खस र नेवार जातीय समुदायमा रहेका कथित शूद्र, अछूत वा दलित जातहरूको संविधानको सूचीमा समावेश गर्नुपर्ने वा नपर्ने ?

७८. जनयुद्ध, जनआन्दोलन, मधेस आन्दोलन लगायतका सबै सङ्घर्षहरूमा शहादत प्राप्त गर्नुहुने महान् शहीद, बेपत्ता योद्धा र घाइतेको उच्च मूल्याङ्कन गर्दै सङ्घीय, प्रादेशिक, विशेष संरचना र स्थानीय निकाय लगायतका सबै अङ्गहरूमा उनीहरूका परिवारजनहरु र घाइतेलाई प्रतिनिधित्व गरिने कुरा मस्यौदामा उल्लेख गर्नुपर्ने वा नपर्ने ?

भाग

६

# संविधानका अन्तर्वस्तुहरूमा रहेका दलीय मतभिन्नताहरूमा सहमति कायम गर्न भएका पहलहरू

## ६.१. संविधानसभाका अध्यक्षद्वारा संविधानसभामा प्रतिनिधित्व गर्ने सबै दलका संसदीय दलका नेताहरुको बैठक आव्हान

विषयगत समितिहरूका प्रतिवेदनमा रहेका विवाद समाधानमा संविधानसभालाई सहयोग गर्न सभाबाट मिति २०६६।२।१३ मा गठित अवधारणापत्र र प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्ययन समितिमा भएको गहन अध्ययन र विश्लेषणबाट सबै विषयगत समितिका प्रतिवेदनमा रहेका विवाद र अपूर्णता पहिचान भई धेरै विषयहरु संविधानसभालाई महत्वपूर्ण सहयोग पुग्न गए तापनि २१० वटा महत्वपूर्ण विषयहरु संविधानसभाले नै समाधान गर्नुपर्ने, यसो गर्ने क्रममा राजनीतिक दलका नेताहरु बसेर अध्ययन विश्लेषण सहित सहमतिमा नपुगेमा संविधान बन्न नसक्ने निष्कर्ष सहितको अन्तिम प्रतिवेदन मिति २०६७।०५।१७ मा संविधानसभाका अध्यक्षसमक्ष प्रस्तुत भएको थियो । वास्तवमा संविधानको धारा ७० मा संविधानको विधेयक पारित गर्ने चरणमा पारित हुन नसकेका विषयमा संसदीय दलका नेताहरूको संयन्त्रले सहमति कायम गर्न प्रयास गर्ने परिकल्पना गरिएको छ । तर शुरूबाट नै यस्तो संयन्त्रलाई उपयोग गरि सहमतियुक्त वातावरणमा संविधानको मस्यौदा बनाउन उपयुक्त हुने ठम्याईएका साथ यो समितिको प्रतिवेदनमा प्राप्त गहन सुझावलाई ध्यानमा राखी संविधानसभाका अध्यक्षबाट राजनीतिक दलका संसदीय दलका नेताहरूको बैठक मिति २०६७।०६।१९ मा बोलाइयो ।

उक्त अनौपचारिक संयन्त्रको बैठक २०६७।६।२५ सम्म बसी विवादित सबै विषयमा एकसरो छलफल भयो तर सहमति निर्माण गर्न यो संयन्त्र आफैँमा ठूलो र बृहत् भएकोले समय धेरै लाग्ने देखिएपछि संविधानसभाका अध्यक्षको प्रस्ताव बमोजिम ठूला तथा साना सबै दलको प्रतिनिधित्व रहेको एक कार्यदल बनाई सहमति तयार गर्ने निर्णय भयो । संविधानसभामा प्रतिनिधित्व गर्ने २७ राजनीतिक दलका संसदीय दलका नेताहरूको मिति २०६७।६।२५ मा बसेको बैठकले अवधारणापत्र र प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्ययन समितिले प्रश्नावलीको रूपमा सूचीकृत सात वटा समितिका प्रतिवेदनमा रहेका मतभिन्नताहरूमाथि छलफल गरी सहमति कायम गर्न कार्यादेश सहित २०६७ साल कार्तिक ७ गतेभित्र २७ राजनीतिक दलका संसदीय दलका नेताहरूको बैठकमा प्रतिवेदन पेश गर्न मा० श्री पुष्पकमल दाहाल प्रचण्ड, मा० श्री रामचन्द्र पौडेल, मा० श्री झलनाथ खनाल, मा० श्री उपेन्द्र यादव, मा० श्री नारायणमान बिजुक्छे, मा० श्री प्रेमबहादुर सिंह र मा० श्री रूक्मिणी चौधरी (थारू) रहेको सात सदस्यीय कार्यदलको गठन भयो । कार्यदलको मिति २०६७।६।२७ गते बसेको पहिलो बैठकले मा० श्री पुष्पकमल दाहाल प्रचण्डलाई सर्वसम्मतिले कार्यदलको संयोजक चयन गरी आफ्नो कार्यप्रारम्भ गरेको

हो । कार्यदलको कार्यलाई थप सहयोग पुगोस् भनी कार्यदलका माननीय सदस्यहरूले एक-एक जना सहयोगीलाई समेत कार्यदलको बैठकमा सहभागी गराउन सक्ने व्यवस्था गरिएको थियो जस अनुसार मा० श्री देवप्रसाद गुरूङ्, मा० श्री रमेश लेखक, श्री भरतमोहन अधिकारी, श्री रत्नेश्वरलाल कायस्थ, मा० श्री सुनील प्रजापति, श्री वासुदेव चौधरी र श्री हिक्मतबहादुर देउवा अनौपचारिक बैठकमा सहभागी हुनु भएको थियो । त्यसैगरी कार्यदलको मिति २०६७।७।१६ को बैठकबाट अवधारणापत्र तथा प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्ययन समितिमा समेत रहनु भएका संयोजक मा० श्री अग्निप्रसाद खरेल, मा० श्री एकराज भण्डारी, मा० श्री राधेश्याम अधिकारी र मा० श्री लक्ष्मणलाल कर्णलाई समेत कार्यदलको बैठकमा आमन्त्रण गर्ने निर्णय गरिएको थियो ।

## ६.२. संविधानसभामा प्रतिनिधित्व गर्ने सबै दलका संसदीय दलका नेताहरुको बैठकले विवादित विषयमा कायम गरेका सहमतिको विवरण

संविधानसभामा प्रतिनिधित्व गर्ने २७ राजनीतिक दलका संसदीय दलका नेताहरूको बैठकले निर्माण गरेको कार्यदलले २०६७।६।२७ देखि २०६७।८।२५ सम्म विवादित विषयमा सहमति जुटाउन लगातार प्रयास गरेको हो । कार्यदलले उक्त अवधिमा सातैवटा समितिका प्रतिवेदनसँग सम्बन्धित प्रश्नावलीहरु उपर विस्तृत छलफल गरी सहमति कायम गर्ने व्यापक प्रयास गरेकोमा कूल २१० प्रश्नावलीमध्ये १३२ वटा विवादमा सहमति जुटाई मिति २०६७।८।२६ मा प्रतिवेदन पेश गरिएको थियो । उक्त प्रतिवेदनमा उल्लेख भएबमोजिम सहमति जुटेका विषयको विवरण देहाय बमोजिम रहेको छ :-

### ६.२.१. राज्यको शासकीय स्वरुप निर्धारण समितिको प्रतिवेदनसँग सम्बन्धित विवादमध्ये सहमति जुटेका विषय

- प्रदेशको मुख्यमन्त्रीविरूद्धको अविश्वासको प्रस्तावका साथ वैकल्पिक मुख्यमन्त्रीको प्रस्ताव आउनु पर्ने व्यवस्था नगर्ने ।
- स्थानीय सरकारमा जिल्ला एकाइ रहने वा नरहनेबारे राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदनका सम्बन्धमा छलफल हुँदा टुङ्गो लगाउने ।
- स्थानीय सरकारको कार्यकारी, विधायिकी र न्यायपालिकीय अधिकार प्रयोगको संयन्त्र अलग-अलग हुने व्यवस्था गर्ने ।
- स्थानीयतहमा व्यवस्थापिका रहने व्यवस्था गर्ने ।

### ६.२.२. व्यवस्थापिकीय अङ्गको स्वरुप निर्धारण समितिको प्रतिवेदनसाग सम्बन्धित विवादमध्ये सहमति जुटेका विषय

- प्रदेश व्यवस्थापिका एक सदनात्मक हुने व्यवस्था गर्ने ।
- व्यवस्थापिकामा प्रतिनिधित्वको आधार भूगोल र जनसंख्या दुबै हुने व्यवस्था गर्ने ।
- प्रदेश व्यवस्थापिका एक सदनात्मक हुने गरिएकोले यस सम्बन्धी अरू प्रश्न औचित्यहीन बनेकाले विवादको सूचीबाट हटाउने ।

## ६.२.३. न्यायप्रणाली सम्बन्धी समितिको प्रतिवेदनसाग सम्बन्धित विवादमध्ये सहमति जुटेका विषय

- न्यायप्रणाली समितिको प्रतिवेदनमा विवादित रहेका सबै प्रश्नहरूमा सामूहिक रूपमा व्यापक र गहन छलफल भई स्वतन्त्र र उत्तरदायी न्यायपालिकाको अवधारणाप्रति सैद्धान्तिक सहमत हुँदै प्रधानन्यायाधीश तथा न्यायाधीशहरूको नियुक्ति गर्न स्वतन्त्र संयन्त्रको व्यवस्था गर्ने साथै प्रधानन्यायाधीश तथा संवैधानिक निकायका पदाधिकारीहरूको नियुक्तिको सिफारिश गर्न हालको संवैधानिक परिषद् जस्तै एउटा स्वतन्त्र संयन्त्र रहने र सोको अध्यक्षता कार्यकारी प्रमुखबाट हुने सहमति भएको ।

## ६.२.४. मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनसँग सम्बन्धित विवादमध्ये सहमति जुटेका विषय

### नागरिकता सम्बन्धी

- कुनै पनि नेपाली नागरिकलाई नागरिकता प्राप्त गर्ने हकबाट वञ्चित गरिने छैन भन्ने स्पष्ट व्यवस्था नागरिकता सम्बन्धी भागको पहिलो धारामा राख्ने ।
- नेपालमा प्रादेशिक पहिचान सहितको एकल सङ्घीय नागरिकताको व्यवस्था गरिएको छ भन्ने व्यवस्था राख्ने ।
- प्रादेशिक पहिचान सहितको एकल सङ्घीय नागरिकताको व्यवस्था सम्बन्धी धाराको व्याख्यात्मक टिप्पणीमा अधिकारको बाँडफाँडसँग सम्बन्धित सूचीमा उल्लिखित जिम्मेवारी अनुरूप कानूनमा व्यवस्था भएबमोजिम नागरिकताको व्यवस्थापन र वितरण गर्ने भन्ने वाक्यांश र सोही टिप्पणीको अन्तमा प्रादेशिक पहिचान उल्लेख गर्दा जातीय, सामुदायिक तथा भौगोलिक विवरण पनि उल्लेख गर्न सकिनेछ भन्ने व्यहोरा थप गर्ने ।
- वंशजको नागरिकता प्राप्त गर्न बाबु र आमा दुबै नेपाली नागरिक हुनुपर्ने व्यवस्था गर्ने ।
- अङ्गीकृत नागरिकता सम्बन्धी व्यवस्था संविधानमा राख्ने । नेपाली नागरिकसँग विवाह गर्ने विदेशी पुरूषलाई वैवाहिक अङ्गीकृत नागरिकता प्रदान गर्ने । नेपाली नागरिकसँग विवाह गर्ने विदेशी पुरूषले वैवाहिक अङ्गीकृत नागरिकता लिन चाहेमा पन्ध्र वर्षसम्म नेपालमा स्थायी बसोवास गरेको हुनुपर्ने व्यवस्था राख्ने ।
- नेपाली नागरिकसँग विवाह गर्ने विदेशी महिलाले नेपालको नागरिकता लिन चाहेमा निजलाई विदेशको नागरिकता परित्याग गर्ने कारवाही चलाएपछि नेपालको अङ्गीकृत नागरिकता प्रदान गर्ने ।
- नेपाली नागरिक आमाबाट नेपालमा जन्म भई नेपालमा नै बसोवास गरेको र बाबुको पहिचान नभएको व्यक्तिलाई वंशजको नागरिकता प्रदान गर्ने तर सो व्यवस्थाको प्रतिबन्धात्मक वाक्याशं "तर बाबु विदेशी नागरिक भएको प्रमाणित भएमा त्यस्तो व्यक्तिको नागरिकता स्वतः अङ्गीकृत नागरिकतामा परिणत हुनेछ" भन्ने व्यवस्था गर्ने ।
- नेपालको राष्ट्रप्रमुख, उपराष्ट्रप्रमुख, प्रधानमन्त्री, सङ्घीय व्यवस्थापिका र सङ्घीय न्यायपालिकाका प्रमुख, सुरक्षानिकायका प्रमुख, प्रदेशका प्रमुख र उपप्रमुखको पदमा निर्वाचित वा मनोनित भई नियुक्ति हुन अङ्गीकृत बाहेकका नागरिकता प्राप्त गरेको नेपाली नागरिक हुनुपर्नेछ भन्ने व्यवस्था राखी मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनमा रहेको मस्यौदालाई परिमार्जन गर्ने ।

- मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको मस्यौदाको सि.नं. १३ को उपधारा (२) मा रहेको "नेपालको संवैधानिक पदमा" भन्ने शब्दको सट्टा "उपधारा (१) मा उल्लिखित पदबाहेक नेपालका अन्य संवैधानिक पदमा भन्ने" शब्दहरु राख्ने, सोही उपधारामा रहेको "वा जन्मका आधारमा" भन्ने शब्दहरु हटाउने र उक्त उपधारामा देहाय बमोजिको प्रतिबन्धात्मक वाक्यांश थप गर्ने ।

  "तर यस उपधाराको व्यवस्था वैवाहिक आधारमा अङ्गीकृत नागरिकता प्राप्त गरेको महिला नागरिकको हकमा लागू हुने छैन ।

- नेपालको नागरिकता त्याग गरी विदेशको नागरिकता प्राप्त गरेका दक्षिण एसियाली क्षेत्रीय सहयोग सङ्गठन (सार्क) क्षेत्रभन्दा बाहिरका देशमा बसोवास गरेका नेपाली मूलका व्यक्तिलाई प्रचलित कानूनबमोजिम आर्थिक, सामाजिक र सांस्कृतिक अधिकार उपभोग गर्न पाउने गरी गैर आवासीय नेपाली नागरिकता प्रदान गर्न सकिनेछ भन्ने व्यवस्था राख्ने ।

## मौलिक हक, कर्तव्य र निर्देशक सिद्धान्त सम्बन्धी

- मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनमा आएका फरक मतमा राष्ट्रघाती, प्रतिगमनकारी काम गर्ने र विदेशी शक्तिको दलाली गर्ने दलहरूलाई प्रतिबन्ध लगाउने भन्ने एउटा समूह र बहुलबाद नमान्ने दलहरूलाई प्रतिबन्ध लगाउने भन्ने अर्को समूह भई परस्पर विरोधी विचार आएको तर उक्त दुबै विषय संविधानमा राख्नुपर्ने आवश्यकता नभएकोले उक्त विवाद हटाउने ।
- उक्त समितिको प्रतिवेदनमा रहेका सम्पत्ति सम्बन्धी हकसँग सम्बन्धित सबै ७ वटा विवादमा छलफल भई सम्पत्तिको हकसँग सम्बन्धित जग्गाको हदबन्दी गर्ने वा नगर्ने, हदबन्दी गरिने भएमा हदबन्दीभन्दा माथिको जग्गाको राज्यले क्षतिपूर्ति दिने वा नदिने तथा समग्र सम्पत्तिमा सीमा तोक्ने वा नतोक्ने भन्ने विषयहरूमा अझ छलफलको आवश्यकता रहेकोले ती ३ वटा विवाद बाँकी राखी अन्य विषयहरूमा समितिको प्रतिवेदनमा रहेको सम्पत्ति सम्बन्धी हकमा रहेका उपधाराहरु यथावत् राख्ने ।
- वैज्ञानिक भूमिसुधार, वातावरण संरक्षण, कृषिको औद्योगिकरणजस्ता विषय प्रान्तको अधिकारमा रहनु पर्ने भन्ने विवाद राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदनमा अधिकारको सूचीमा छलफल गरी अन्तिम रूप प्रदान गर्दा स्वतः समाधान हुने भएकोले उक्त विवादलाई सूचीबाट हटाउने ।
- आत्मनिर्णयको अधिकार, प्राकृतिक स्रोतमाथि विभिन्न समुदायको अग्राधिकार हुने वा नहुने विषय राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदनसँग पनि सम्बन्धित रहेकोले पछि सँगै छलफल गरी टुङ्गो लगाउने ।
- निर्देशक सिद्धान्त सम्बन्धी धारामा "सबै प्रकारका विदेशी हस्तक्षेपको अन्त गर्दै" भन्ने वाक्यांशलाई नराखी सम्बन्धित उपधारामा रहेको व्यवस्थाको व्याख्यात्मक टिप्पणीमा राख्न उपयुक्त हुने ।
- मौलिक हक तथा निर्देशक सिद्धान्त समितिले प्रस्ताव गरेको राज्यका निर्देशक सिद्धान्त नीति तथा दायित्व अन्तर्गतको सि.नं. ३ को खण्ड (ग) को उपखण्ड (२) को मस्यौदालाई देहाय बमोजिम परिमार्जन गर्ने :

  "२. स्वस्थ र सुमधुर संस्कृतिको विकास गरी सामाजिक सुसम्बन्धमा आधारित सभ्य समाजको निर्माण गर्ने,"

- मौलिक हक तथा निर्देशक सिद्धान्त समितिले प्रस्ताव गरेको राज्यका निर्देशक सिद्धान्त, नीति तथा दायित्व सम्बन्धी भागको सि.नं. ३ को खण्ड (घ) को उपखण्ड (१) लाई देहाय बमोजिम पुनर्लेखन गर्ने ।

  "राज्यले सार्वजनिक, सहकारी र निजी क्षेत्रको सहभागिता र स्वतन्त्र विकास मार्फत् राष्ट्रिय अर्थतन्त्र सुदृढ गर्ने ।"
- मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनको मस्यौदा खण्डको राज्यका निर्देशक सिद्धान्त, नीति तथा दायित्व सम्बन्धी भागको सि.नं. २ को उपधारा (३) मा रहेको "साझेदारी" शब्दको सट्टा "सहभागिता" शब्द राख्ने ।
- खेतीयोग्य जमीन र भूमिको व्यवस्थापन प्रदेशलाई हुनुपर्ने भन्ने फरकमत राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदनमा अधिकारको सूचीमा छलफल गरी अन्तिम रूप प्रदान गर्दा स्वतः समाधान हुने भएकोले उक्त विवाद सूचीबाट हटाउने ।
- प्रश्न नं. ३८ मा रहेको मस्यौदाको सि नं. ३ को खण्ड (६) को बुँदा नं. १ मा रहेको "प्राथमिकता" भन्ने शब्दपछि "र अग्राधिकार" भन्ने शब्द थप गर्ने ।
- मौलिक हक र निर्देशक सिद्धान्तमा एउटै विषय र व्यहोरा उल्लेख भएको देखिएकोले कुनै पनि विषय संविधानको विभिन्न धारा उपधारामा दोहोरो पर्ने गरी नराख्ने । यो निर्णयअनुसार मौलिक हकमा व्यवस्था गर्ने भनी मस्यौदामा उल्लेख भएका विषयलाई निर्देशक सिद्धान्तमा नराख्ने ।

## ६.२.५. राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदनसँग सम्बन्धित विवादमध्ये सहमति जुटेका विषय

- "प्रदेशको सूचीकृत क्षेत्राधिकारको विषयमा सन्धि वा सम्झौता गर्दा केन्द्रले प्रदेशको सहमति लिनुपर्ने" भन्ने व्यवस्था राख्ने ।
- विदेशी पक्षसँग आर्थिक तथा औद्योगिक विषयका करारजन्य संझौता केन्द्रको सहमतिमा प्रदेशले गर्न सक्ने विषय राख्ने सहमति भएको तर यो प्रावधान अन्तर्राष्ट्रिय सन्धिको भागमा नराखी अन्य उपयुक्त स्थानमा राख्न संवैधानिक समितिलाई अनुरोध गर्ने ।
- प्रधानसेनापतिको नियुक्ति र पदमुक्ति मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रप्रमुखले गर्ने व्यवस्था राख्ने ।

## ६.२.६. सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको प्रतिवेदनसँग सम्बन्धित विवादमध्ये सहमति जुटेका विषय

- राज्यमा सरकारी कामकाजको भाषा बहुभाषिक नीति अनुरूप हुने ।
- उल्लिखित मान्यताको आधारमा केन्द्रीय सरकारको सरकारी कामकाजको भाषा देवनागरि लिपिमा नेपाली भाषा हुने र संविधानमा व्यवस्था भएवमोजिमको भाषा आयोगले सूचीकृत गरेका अन्य भाषाहरूले पनि सरकारी कामकाजको भाषाको रूपमा मान्यता पाउने । भाषा आयोग स्थायी हुने ।
- प्रान्तको सरकारी कामकाजको भाषा र केन्द्रीय सरकार तथा प्रान्तीय सरकार र प्रान्तीय सरकारहरू बीचको सम्पर्क भाषाको सम्बन्धमा बहुभाषिक नीतिको भावना वमोजिम सांस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको प्रतिवेदनमा रहेको प्रावधानलाई परिमार्जन गर्ने ।
- अदालती कामकारवाहीको भाषा केन्द्रीय सरकारको सरकारी कामकाजको भाषा हुने ।

## ६.२.७. संवैधानिक समितिको प्रतिवेदनसँग सम्बन्धित विवादमध्ये सहमति जुटेका विषय

- संवैधानिक समितिको प्रतिवेदनमा प्रस्तावित प्रस्तावनाको पहिलो र दोस्रो अनुच्छेदमा क्रमशः धर्मनिरपेक्षता र नेपाली नागरिकको गरिमा र आत्मसम्मान भन्ने शब्दहरु थप गर्नुपर्ने भनी राखिएको विषय प्रस्तावनाका अन्य अनुच्छेदबाट सम्बोधन भई रहेकोले परिमार्जन गर्न नपर्ने ।
- मस्यौदा प्रस्तावनाको अनुच्छेद ३ सँग सम्बन्धित सबै ८ वटा विवादमा छलफल भई सो अनुच्छेदलाई "राष्ट्रहित, लोकतन्त्र र अग्रगामी परिवर्तनका लागि नेपाली जनताले हालसम्म पटक-पटक गर्दै आएका ऐतिहासिक सङ्घर्ष, त्याग र बलिदानको गौरवपूर्ण इतिहासलाई स्मरण एवं शहीदहरु तथा बेपत्ता र पीडित नागरिकहरूलाई सम्मान गर्दै" भनी परिमार्जन गर्ने निर्णय भएको । तर "माओवादी जनयुद्ध" लगायतका विगतका सबै ऐतिहासिक सङ्घर्ष र आन्दोलनहरूको नाम मस्यौदामा नै राख्ने वा व्याख्यात्मक टिप्पणीमा राख्ने भन्ने प्रश्नमा अझै छलफलको आवश्यकता देखिएकोले उक्त एउटा विवाद कायम राखी अरू विवाद सूचीबाट हटाउने ।
- मस्यौदा प्रस्तावनाको अनुच्छेद ४ सँग सम्बन्धित ७ वटा विवादमा सहमतिको लागि छलफल हुँदा उक्त अनुच्छेदको अन्तमा रहेको "स्मरण गर्दै" भन्ने शब्दावलीको सट्टा "अनुभूति गर्दै" भन्ने शब्द राख्ने, अरू परिमार्जन गर्न आवश्यक नरहेकोले कुनै पनि विवाद कायम राख्न नपर्ने ।
- मस्यौदा प्रस्तावनाको अनुच्छेद ५ मा बहुलैङ्गिक भन्ने शब्द राख्दा त्यसको अर्थ भिन्नै लाग्ने भएकोले परिमार्जन नगरी उक्त विवाद हटाउने ।
- मस्यौदा प्रस्तावनाको अनुच्छेद ६ मा आर्थिक समानता भन्ने शब्द पनि राख्नुपर्ने वा नपर्ने भन्ने विवादको सन्दर्भमा छलफल गर्दा सो विषयको मर्म र भावना मस्यौदा प्रस्तावनाको अनुच्छेद ८ मा समावेश रहेकोले उक्त विवाद कायम राख्न नपर्ने ।
- मस्यौदा प्रस्तावनाको अनुच्छेद ६ मा पूर्ण समानुपातिक भन्ने शब्द थप गरी परिमार्जन गर्न नपर्ने हुँदा उक्त प्रश्न हटाउने ।
- बहुलवाद शब्द छैठौ अनुच्छेदमा राख्ने वा नराख्ने भन्ने विषयसँग सम्बन्धित ३ वटा विवाद रहेकोले त्यसलाई एउटा विवाद बनाई यसबारे पछि छलफल गरी टुङ्गो लगाउने ।
- छैटौ अनुच्छेदमा रहेको "सक्षम, निष्पक्ष र स्वतन्त्र न्यायपालिका" भन्ने शब्दहरूको सट्टा "स्वतन्त्र र उत्तरदायी न्यायपालिका" भन्ने शब्दावली राख्ने ।
- मस्यौदा प्रस्तावनाको अनुच्छेद ६ मा रहेको जनताको भन्ने शब्दसँग ४ वटा विवाद जोडिएकोले उक्त शब्द नहटाउने । यस सम्बन्धी ४ वटा विवाद कायम राख्न नपर्ने ।
- आत्मनिर्णयको अधिकार सम्बन्धमा चारवटा विवाद रहेकोले यसलाई एउटै विवाद बनाई आत्मनिर्णयको अधिकारको स्पष्ट परिभाषा, सोको प्रयोगको विधि र यस अन्तर्गत गर्न पाइने र नपाइने कुराहरु स्पष्ट गरेर आत्मनिर्णयको अधिकार प्रस्तावनामा सुनिश्चित गर्ने कुरामा अझै छलफल गर्ने ।
- मस्यौदा प्रस्तावनाको अनुच्छेद ८ सँग सम्बन्धित ३ वटा विवादमा सहमति कायम गर्ने सम्बन्धमा छलफल भई उक्त अनुच्छेदमा रहेको "सबै प्रकारका विभेद" भन्ने शब्दपछि "र उत्पीडनको" भन्ने शब्दहरु थप गर्ने र उक्त अनुच्छेदको व्याख्यात्मक टिप्पणीमा मजदुर, किसान, कामदारवर्गको विशेष अधिकार सुनिश्चित हुने गरी सबै समुदाय र वर्गलाई न्याय प्रदान गर्ने र समतामूलक समाजको स्थापना गर्ने लक्ष्यलाई स्पष्ट पार्न यो अनुच्छेद राखिएको भन्ने व्यहोरा राख्ने । यो सहमतिबाट अब उक्त तीनवटा विवादको समाधान भएको ।
- मस्यौदा प्रस्तावनाको अनुच्छेद ९ को व्याख्यात्मक टिप्पणीमा "नेपाली जनताले सामन्तवाद, साम्राज्यवाद, विस्तारवाद र सबै प्रकारका विदेशी हस्तक्षेप विरूद्धमा विगतमा गर्दै आएका सङ्घर्ष

र आन्दोलनहरूलाई सम्मान गर्दै अब उप्रान्त ..... सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाको माध्यमबाट नेपाली राष्ट्रियता, स्वाधीनता, सार्वभौमसत्ता र राष्ट्रिय अखण्डतालाई मजबुत बनाउने तथा अग्रगमन सहितको दिगो शान्ति, समृद्धि र विकासको माध्यमद्वारा नेपाली जनताको जीवनस्तर अभिवृद्धि गर्दै लोकतन्त्रको लाभहरु उपयोग गर्न सक्ने स्थितिको सृजना गर्ने प्रतिबद्धता सहित यो संविधान जारी भएको व्यहोरा उल्लेख गरिएको हो ।" भन्ने व्यहोरा राख्ने । यो सहमतिबाट अब ११ वटा विवादको समाधान भएको ।

- संवैधानिक समितिको मस्यौदामा रहेको राष्ट्रको परिभाषा यथावत् राख्ने । नेपाल राज्यको परिभाषाको मस्यौदामा "समावेशी" शब्दपछि "लोकतन्त्रात्मक" शब्द थपेर "समावेशी लोकतन्त्रात्मक" बनाई व्याख्यात्मक टिप्पणीमा जनताको समावेशी लोकतन्त्रात्मक राज्य हुने कुरा थप्ने । नेपाल राज्यको परिभाषामा रहेको "बहुराष्ट्रिय" शब्दको सट्टा "बहुजातीय" शब्द राख्ने र व्याख्यात्मक टिप्पणीमा नेपाल बहुराष्ट्रिय ९ःगतिष्लबतष्यलबि विशेषतायुक्त समेत हुने भनेर थप्ने । यसरी मस्यौदा र व्याख्यात्मक टिप्पणी परिमार्जन गरिंदा ११ वटा विवादको समाधान भएको ।
- नेपाललाई प्रशासनिक रूपमा ७ प्रदेशमा विभाजन गर्ने र स्थानीय सरकारको सूची पनि संविधानमा राख्नुपर्ने भन्ने २ वटा विवाद राज्य पुनर्संरचना पछि सम्बोधन हुने भएकोले हाल यसलाई विवादको रूपमा राख्न नपर्ने ।
- झण्डा परिवर्तनको विषयसँग सम्बन्धित विवादमा अझै छलफल गरी पछि निष्कर्षमा पुग्ने ।
- राष्ट्रिय गानमा रहेको "वीरहरु" शब्दले "वीराङ्गना" समेतलाई समेट्ने तथा अन्य भाषा उपयुक्त भएकोले राष्ट्रिय गान र प्रतीकसँग सम्बन्धित सबै ३ वटा विवाद कायम राख्न नपर्ने ।
- संविधानमा गणतन्त्रात्मक व्यवस्था, जनतामा निहित सार्वभौमसत्ता तथा विधिको शासन जस्ता केही विषय असंशोधनीय रहने भएकाले कुन-कुन विषय त्यसमा समावेश गर्ने भन्ने सम्बन्धमा अझै छलफल गरी निर्णयमा पुग्ने । यस सम्बन्धी अरू विवाद कायम नराख्ने ।
- जनमतसङ्ग्रहसँग सम्बन्धित विषयमा देहाय बमोजिमको व्यवस्था गर्ने सहमति भएको :-

  १) यस संविधानमा अन्यत्र व्यवस्था भएकोमा बाहेक राष्ट्रिय महत्वको कुनै विषयमा जनमतसङ्ग्रहबाट निर्णय गर्न आवश्यक छ भनी सङ्घीय व्यवस्थापिकाले तत्काल कायम रहेका सम्पूर्ण सदस्यहरूको दुईतिहाई सदस्यको बहुमतबाट निर्णय गरेमा त्यस्तो विषयमा जनमतसङ्ग्रहबाट निर्णय लिन सकिने छ ।

  २) जनमतसङ्ग्रह सम्बन्धी अन्य व्यवस्था कानूनद्वारा निर्धारण भएबमोजिम हुनेछ ।
- संवैधानिक समितिको मस्यौदाको संविधान संशोधन शीर्षक अन्तर्गत रहेको स्वतः संविधान संशोधन हुने व्यवस्था हटाउने ।
- संवैधानिक समितिको मस्यौदाको संविधान संशोधन शीर्षक अन्तर्गत रहेको संविधान संशोधन विधेयक पेश गर्ने सम्बन्धी धारामा रहेको "तोकिए वमोजिमको न्यूनतम संख्याका सदस्यहरु" को सट्टा "सङ्घीय व्यवस्थापिकाको सदस्य" राखी मस्यौदा परिमार्जन गर्ने र त्यसको व्याख्यात्मक टिप्पणीमा "यस व्यवस्थाले सर्वसाधारण जनताहरूले संविधान संशोधनका सम्बन्धमा विभिन्न किसिमले सुझाव दिन सक्ने र विधायिकाका सदस्यहरूले त्यस्ता सुझावहरु अध्ययन गरी संविधान संशोधन प्रस्ताव गर्न उपयुक्त सम्झेमा एकजना सदस्यले समेत संशोधन प्रस्ताव राख्न सक्ने गरी संविधान संशोधनको प्रस्ताव पेश गर्ने सम्बन्धमा लचिलो व्यवस्था गरिएको" भन्ने वाक्यांश थप गर्ने । अरू व्यवस्था उपयुक्त रहेकोले केही गर्न नपर्ने ।
- राजदूतको नियुक्ति, सङ्क्रमणकालमा मन्त्रिपरिषद्को व्यवस्था र बाधा अड्काउ सम्बन्धी व्यवस्था उपयुक्त नै रहेकाले यस सम्बन्धमा रहेका विवादहरु राख्न नपर्ने ।
- संवैधानिक समितिको प्रतिवेदनसँग सम्बन्धित बाँकी रहेका विवादहरूमा पछि छलफल गरी निष्कर्षमा पुग्ने ।

## ६.३. सहमति हुन बाँकी विषयमा राजनीतिक सहमति कायम गर्ने जिम्मेवारी संवैधानिक समितिलाई सुम्पने निर्णय

संविधानसभामा प्रतिनिधित्व गर्ने सबै दलका नेताको संयन्त्रबाट गरिएको करिब २ महिनाको प्रयासबाट २१० वटामध्ये १३२ वटा विवादहरूमा सहमति कायम हुने आधार तयार भयो भने ६ वटा विषयगत समितिसँग सम्बन्धित ७८ वटा आधारभूत विषयका विवाद अनुत्तरित नै रहे । यस स्थितिमा संविधानसभाले सबै समितिका प्रतिवेदन पारित गरी संवैधानिक समितिमा पठाउनु पर्ने भन्ने संविधानसभा नियमावली, २०६५ को नियम ८२ मा साविकमा रहेको व्यवस्थालाई मिति २०६७।१०।१० मा संशोधनमार्फत् परिवर्तन गरेर संविधानसभाले समाधान हुन नसकेको विवादित विषयको स्पष्ट किटान गरी संवैधानिक समितिले नै थप छलफल गरी टुङ्गो लगाउने भनी विवादित प्रतिवेदन पारित नगरी संवैधानिक समितिमा पठाउने र संवैधानिक समितिमा पनि कुनै विषय सहमतिमा टुङ्गो लाग्न नसकेमा निर्णयार्थ संविधानसभामा पेश गर्नुपर्ने विधि अवलम्बन गर्न पुगेको अवस्था हो ।

यस परिप्रेक्ष्यमा संविधानसभाले मिति २०६७।१०।१२ मा ७८ वटा विवाद सहित ७ वटा समितिका प्रतिवेदन र मिति २०६७।१२।३ मा ७८ वटा विवाद सहित राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदन संवैधानिक समितिमा पठाएको थियो । यस स्थितिमा संवैधानिक समितिले सर्वप्रथम विवादहरूलाई सहमतिमा टुङ्गो लगाउने कार्यसम्पन्न गरेरमात्र पहिलो मस्यौदा तयार गर्ने कार्य अघि बढाउन सम्भव थियो । सोही अनुरूप समितिले पहिला सबै विवादहरूमा संवैधानिक समितिमा नै छलफल गरी सहमति कायम गर्ने र समितिमा सहमति हुन नसकेका विषयलाई सहमतिमा पुर्‍याउन समिति अन्तर्गत गठित प्रमुख राजनीतिक शक्तिहरूका शीर्ष नेता सहितको सहभागिता रहेको विवाद समाधान उपसमितिमा पठाउने पद्धति अवलम्बन गरेको थियो ।

## ६.४. संवैधानिक समिति अन्तर्गत विवाद समाधान उपसमितिको गठन र त्यसले कायम गरेका सहमतिहरु

संविधानसभाले मिति २०६७।१०।१२ मा ७८ वटा विवाद सहित ७ वटा समितिका प्रतिवेदन र मिति २०६७।१२।३ मा ७८ वटा विवाद सहित राज्यको पुनर्संरचना र राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदन संवैधानिक समितिमा पठाएपछि संवैधानिक समिति मस्यौदा एकीकरणको कार्यमा मात्र सीमित भएर पुगेन । सहमति कायम हुन नसकेका महत्वपूर्ण विवादलाई सहमतिमा टुङ्गो लगाउनु पर्ने आवश्यकता पनि उत्पन्न भयो । संवैधानिक समितिमा सबै दलको प्रतिनिधित्व पनि रहेको र ६३ जना सदस्य रहेको एउटा ठूलो संयन्त्र पनि भएकोले सबै विषय समितिमा नै बृहत् छलफल गरेर सहमति कायम गर्न समय अभाव थियो । संवैधानिक समितिको मिति २०६७।११।१३ मा बसेको बैठकले २०६७ साल फागुन मसान्तभित्र टुङ्गो लाग्न बाँकी विषयहरूलाई सहमतिमा टुङ्गो लगाई सोको प्रतिवेदन अनुमोदनको लागि समितिको बैठकमा पेश गर्ने कार्यादेश सहित मा० श्री पुष्पकमल दाहाल "प्रचण्ड", मा० श्री रामचन्द्र पौडेल, मा० श्री माधवकुमार नेपाल, मा० श्री लक्ष्मणलाल कर्ण र मा० श्री कल्पना राणा रहेको पाँच सदस्यीय विवाद समाधान उपसमिति गठन भएकोमा निर्धारित समयभित्र कार्यसम्पन्न हुन नसकेको हुनाले संवैधानिक समितिबाट पहिलो पटक मिति २०६७।१२।१ मा चैत्र १५ गतेसम्मको, दोस्रो पटक मिति २०६७।१२।१६ मा २०६८ वैशाख १ गतेसम्मको, तेस्रो पटक २०६८।२।१ मा वैशाख २ गतेदेखि नै लागू हुने गरी ज्येष्ठ १३ गतेसम्मको र चौथो पटक मिति २०६८।२।१८ मा कार्यसम्पन्न नभएसम्मको लागि उपसमितिको कार्यावधि थप गरेको थियो । विवाद समाधान उपसमितिले २०६७।११।१३ देखि २०६८।९।१५ सम्म करिब १० महिनाको अवधिमा राज्यको पुनर्संरचना

सम्बन्धी कुनै पनि विवादमा सहमति जुटाउन सकेन भने अन्य ७८ वटा मध्ये ४८ वटा विवादमा सहमति कायम गरी संवैधानिक समितिमा मिति २०६८।९।१५ मा अन्तिम प्रतिवेदन पेश गरेको थियो । विवाद समाधान उपसमितिको बैठकमा प्रधानमन्त्री, संविधानसभाका अध्यक्ष, उपाध्यक्ष, संवैधानिक समितिका सभापति र संवैधानिक समितिका अन्य केही सदस्यहरूलाई स्थायी आमन्त्रितको रूपमा आमन्त्रण गर्ने गरिएको थियो । उक्त उपसमितिको प्रतिवेदनमा उल्लेख भए अनुसार विवाद समाधान उपसमितिले सहमति कायम गरेका विषय देहाय बमोजिम रहेका छन् :-

## ६.४.१. व्यवस्थापिकीय अङ्गको स्वरुप निर्धारण समितिको प्रतिवेदनसँग सम्बन्धित टुङ्गो लाग्न बाँकी विषयमा विवाद समाधान उपसमितिको छलफलबाट भएका सहमति

- सङ्घीय व्यवस्थापिकामा प्रतिनिधिसभा र राष्ट्रियसभा दुईवटा सदन रहने ।
- सङ्घीय व्यवस्थापिकाको नामाकरण "व्यवस्थापिका-संसद" गर्ने ।
- सङ्घीय व्यवस्थापिकाको तल्लो सदन विघटन भई निर्वाचनको मिति निर्धारण भएकोमा उक्त मितिमा निर्वाचन हुन नसकेमा स्वतः पुनःस्थापना हुने व्यवस्था नगर्ने ।
- प्रदेश व्यवस्थापिकाको नाम सम्बन्धमा समितिको प्रतिवेदनमा रहेको "प्रदेशसभा" नै उपयुक्त भएकोले अन्यथा गर्न नपर्ने ।
- महिला, दलित, आदिवासी जनजाति, मधेसी र मुस्लिम लगायतका समुदायको प्रतिनिधित्व र विशेषाधिकारको विषयलाई निर्वाचनप्रणालीसँग आबद्ध गर्ने र पछि टुङ्गो लगाउने ।
- प्रत्याव्हान सम्बन्धी विषयलाई पनि निर्वाचनप्रणालीसँग आबद्ध गर्ने र पछि टुङ्गो लगाउने ।

## ६.४.२. न्यायप्रणाली सम्बन्धी समितिको प्रतिवेदनसँग सम्बन्धित टुङ्गो लाग्न बाँकी विषयमा विवाद समाधान उपसमितिको छलफलबाट भएका सहमति

- राष्ट्रिय महत्वको पद र अधिकारसँग सम्बन्धित तथा राजनीतिक विषयसँग प्रत्यक्ष सरोकार राख्ने विषय र संविधानसँग कानून बाझिएको विषय लगायतका विषय हेर्न अलग्गै संवैधानिक अदालतको स्थापना गर्ने ।
- सर्वोच्च अदालतका प्रधानन्यायाधीश नै संवैधानिक अदालतको पदेन अध्यक्ष हुने ।
- न्यायप्रणाली सम्बन्धी समितिको प्रतिवेदनमा टुङ्गोलाग्न बाँकी अरू सबै विषयको समेत सम्बोधन हुने गरी संवैधानिक अदालतको क्षेत्राधिकार, सर्वोच्च अदालतको क्षेत्राधिकार, दुबै अदालतमा रहने न्यायाधीशहरूको संख्या, योग्यता, नियुक्ति र पदमुक्तिको सिफारिश गर्ने संयन्त्रको संरचना र संख्या, न्यायाधीशहरूलाई भ्रष्टाचार र अधिकारको दुरूपयोगको कारवाही गर्ने संयन्त्र र प्रक्रिया लगायतको विषयमा अन्तर्राष्ट्रिय अनुभव समेतको अध्ययन गरी विस्तृत गृहकार्य गरेर उपसमितिमा पेश गर्न सचिवालयको सहयोगमा मा० श्री लक्ष्मणलाल कर्ण, मा० श्री राधेश्याम अधिकारी, मा० श्री अग्निप्रसाद खरेल मा० श्री खिमलाल देवकोटा र मा० श्री सपना प्रधान मल्ल रहेको कार्यदललाई जिम्मेवारी दिइएकोमा कार्यदलले मिति २०६७।१२।१५ मा उपसमितिसमक्ष आफ्नो प्रतिवेदन पेश गरेको थियो ।

## ६.४.३. संवैधानिक समितिको प्रतिवेदनसँग सम्बन्धित टुङ्गो लाग्न बाँकी विषयमा विवाद समाधान उपसमितिको छलफलबाट भएका सहमति

- संवैधानिक समितिको प्रतिवेदनमा रहेको प्रस्तावनाको अनुच्छेद ३ लाई निम्नानुसार पुनर्लेखन गर्नेः

  "राष्ट्रहित, लोकतन्त्र र अग्रगामी परिवर्तनका लागि नेपाली जनताले हालसम्म पटक–पटक गर्दै आएका ऐतिहासिक जनआन्दोलन र सशस्त्र सङ्घर्ष, त्याग र बलिदानको गौरवपूर्ण इतिहासलाई स्मरण एवं शहीदहरु तथा बेपत्ता र पीडित नागरिकहरूलाई सम्मान गर्दै"

- उक्त अनुच्छेदको व्याख्यात्मक टिप्पणीमा देहायको व्यहोरा समावेश गर्ने :–

  "यो अनुच्छेदमा रहेको "ऐतिहासिक जनआन्दोलन र सशस्त्र सङ्घर्ष" भन्नाले वि.सं. १९९७ साल, २००७ साल, २०१८ साल, २०२८ साल, २०३५।०३६ साल, २०४२ साल, २०४६ सालमा भएका सङ्घर्ष एवं आन्दोलनहरु र वि.सं. २०६२।६३ सालमा भएको ऐतिहासिक जनआन्दोलन, माओवादी जनयुद्ध, मधेस आन्दोलन, जनजाति आन्दोलन, थरूहट आन्दोलन, महिला, दलित, मजदुर किसान, युवा, विद्यार्थी, मुस्लिम समुदाय लगायत समाजका विभिन्न तह र तप्काका जनताले गरेका सम्पूर्ण ऐतिहासिक आन्दोलन र सशस्त्र सङ्घर्षलाई जनाउँछ ।"

- प्रस्तावनाको अनुच्छेद ६ मा "बहुलवाद" शब्द थप गर्ने वा नगर्ने भन्ने विषय संविधान संशोधन सम्बन्धी धारामा पनि विवादित रहेकोले त्यसलाई त्यही स्थानमा छलफल गरी टुङ्गो लगाउन सकिने भएकोले प्रस्तावनामा यो विवाद कायम नराख्ने ।

- संवैधानिक समितिको प्रतिवेदनमा रहेको सङ्क्रमणकालीन व्यवस्था अन्तर्गत रहेको राष्ट्रपति र उपराष्ट्रपति सम्बन्धी सङ्क्रमणकालीन व्यवस्थामा देहायबमोजिमको व्यवस्था थप गर्ने :–

  "(२) उपधारा (१) बमोजिम कायम रहेका राष्ट्रपति र उपराष्ट्रपतिको पद कुनै कारणले रिक्त हुन आएमा तत्काल कायम रहेको व्यवस्थापिका–संसदबाट निर्वाचन गरी पदपूर्ति गरिनेछ ।"

- संवैधानिक समितिको प्रतिवेदनमा रहेको सङ्क्रमणकालीन व्यवस्था अन्तर्गत सङ्क्रमणकालीन कार्यपालिका, व्यवस्थापिका, न्यायपालिका र संवैधानिक निकाय सम्बन्धमा प्रस्तावित रहेको व्यवस्था उपयुक्त रहेकोले यथावत् कायम राख्ने । यस सम्बन्धी कुनै पनि विवाद कायम राख्न नपर्ने ।

- संविधानको नाम सम्बन्धमा संवैधानिक समितिको प्रतिवेदनमा टुङ्गो लाग्न बाँकी रहेको विषयमा भावी संविधानको संक्षिप्त नाम "नेपालको संविधान" राख्ने । यस विषयसँग सम्बन्धित विवादको सूचीमा रहेका ६ वटा प्रश्नलाई अब विवादको सूचीबाट हटाउने ।

## ६.४.४. राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदनसँग सम्बन्धित टुङ्गो लाग्न बाँकी विषयमा विवाद समाधान उपसमितिको छलफलबाट भएका सहमति

- शिविरमा रहेका (जनमुक्ति सेनाका) लडाकुहरूको पुनःस्थापन, व्यवस्थापन र समायोजन लगायतका विषयमा छलफल हुँदा शान्तिप्रक्रिया टुङ्गो लागेपछिमात्र नयाँ संविधान जारी हुने भएकोले सो सम्बन्धी विषय नयाँ संविधानमा राख्न नपर्ने हुँदा राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदनमा रहेको यस सम्बन्धी टुङ्गो लाग्न बाँकी विषयलाई विवादको सूचीबाट हटाउने ।

- राष्ट्रियहितको संरक्षण समितिको प्रतिवेदनमा टुङ्गो लाग्न बाँकी रहेको १८ वर्ष उमेर पुगेका नागरिकलाई सरकारले सैनिक तालिमको लागि आव्हान गर्न सक्ने, त्यसरी आव्हान भएकोमा तालिम लिई सेवा गर्नुपर्ने व्यवस्था राख्ने वा नराख्ने भन्ने विषयमा छलफल हुँदा मौलिक हक तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनमाथि संविधानसभाले संवैधानिक समितिलाई मिति

२०६७।१०।१२ को बैठकद्वारा दिएको निर्देशनमा "राष्ट्रले चाहेका बखत अनिवार्य सेवा गर्नु नागरिकको कर्तव्य हुने" व्यवस्था समेत संलग्न रहेकोले उक्त व्यवस्था अन्तर्गत राज्यले कानून बनाई सैनिक सेवा लगायत कुनै पनि सेवाको लागि आव्हान गर्न सक्ने नै हुँदा १८ वर्ष उमेर पुगेका नागरिकलाई सरकारले सैनिक तालिमको लागि आव्हान गर्न सक्ने, त्यसरी आव्हान भएकोमा तालिम लिई सेवा गर्नुपर्ने विषय सो कर्तव्यमा समेटिने नै हुँदा अलग्गै बुँदामा राख्न आवश्यक नरहेकोले उक्त विषयलाई विवादको सूचीबाट हटाउने ।

## ६.४.५. मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनसँग सम्बन्धित टुङ्गो लाग्न बाँकी विषयमा विवाद समाधान उपसमितिको छलफलबाट भएका सहमति

- मौलिक हकको रूपमा प्रत्याभूत गरिएका उही कुरालाई राज्यका निर्देशक सिद्धान्त तथा नीतिमा नदोहोऱ्याउन मिति २०६८।८।२८ गते संवैधानिक समितिमा भएको छलफललाई समेत आधार लिई भाषा र भाव दुबै रूपमा दोहोरिएका विषयहरूलाई एकिन गरी सुझाव पेश गर्न उपसमितिमा प्राप्त भएकोमा सो विषयमा उपसमितिअन्तर्गत निर्माण गरिएको कार्यदलले पेश गरेको प्रतिवेदनमाथि छलफल भई उक्त विषयलाई अन्तिम रूपप्रदान गरिएकोले संवैधानिक समितिमा पेश गर्ने ।
- मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनमा रहेको न्याय सम्बन्धी हकको उपधारा (४) मा देहायको प्रतिबन्धात्मक वाक्यांश थप गर्ने :-

  "तर यो संविधान जारी भएपछि घटित मानवता विरूद्धको अपराध, युद्धअपराध र आमनरसंहार सम्बन्धी अपराधमा भूतप्रभावी कानून बनाएर सजाय गर्न यस उपधाराले बाधा पुऱ्याएको मानिने छैन ।"
- सोही उपधाराको व्याख्यात्मक टिप्पणीमा देहायको व्यहोरा राख्ने :-

  "नेपालले प्रतिबद्धता जनाएका अन्तर्राष्ट्रिय मानव अधिकार कानून तथा अन्तर्राष्ट्रिय मानवीय कानूनको कार्यान्वयनको संवैधानिक प्रत्याभूति दिनको लागि यो व्यवस्था गरिएको छ । प्रतिबन्धात्मक वाक्यांशमा उल्लेख भएको "आमनरसंहार" भन्ने शब्दावलीभित्र जातीय, भाषिक, धार्मिक, सांस्कृतिक लगायत कुनै पनि आधारमा गरिने नरसंहारसमेत समेट्ने उद्देश्य राखिएको छ ।"
- मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समितिको प्रतिवेदनमा रहेको सम्पत्ति सम्बन्धी हकको समग्र व्यवस्था उपयुक्त र पर्याप्त रहेकोले उक्त व्यवस्थामाथि परेका फरक मतसँग सम्बन्धित जग्गाको हदबन्दी, क्षतिपूर्ति र समग्र सम्पत्तिको सीमा सम्बन्धी तीनवटा टुङ्गो लाग्न बाँकी विषयहरु अब विवादको सूचीमा राख्न नपर्ने भएकोले हटाउने ।"

भाग ७

# राज्य पुनर्संरचना सुझाव उच्चस्तरीय आयोग र सोको प्रतिवेदन

## ७.१. राज्यको पुर्नसंरचना सुझाव उच्चस्तरीय आयोग गठनको पृष्ठभूमि

नेपालको अन्तरिम संविधान, २०६३ को धारा १३८ को उपधारा (२) मा राज्यको पुनर्संरचना गर्नको लागि सुझाव दिन एक उच्चस्तरीय आयोगको गठन गरिने व्यवस्था रहेको छ । नेपालको अन्तरिम संविधान जारी भएको समय अर्थात् २०६३ साल माघ महिनामा नै राखिएको उक्त संवैधानिक व्यवस्था समयमा नै कार्यान्वयन गर्न कसैको पनि ध्यान गएन । संविधानसभाको गठन भई संविधानसभाभित्र राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको गठन भएपछि पनि धेरै पटक यो आयोग गठन गरी यसले दिएको सुझाव उक्त समितिले लिएर काम गर्न उपयुक्त हुने कुरा उठी रहेको थियो । २०६५ साल चैत्र महिनामा श्री पुष्पकमल दाहाल प्रचण्ड प्रधानमन्त्री रहेका बखत प्रा. डा. गणेशमान गुरुङ्गको अध्यक्षतामा राज्य पुनर्संरचना उच्चस्तरीय आयोग गठन गर्ने निर्णय भएको थियो तर अन्य दलहरू सहमत नभएका र आयोगमा रहने सदस्यको नाम नदिएको कारण आयोगले पूर्णता पाएन र शपथ पनि लिएन । त्यसपछि दलहरूले आयोगको कुरा नै गर्न छाडे । यति महत्वपूर्ण र संवेदनशील विषयलाई त्यसै बेवास्ता गरियो । संविधानसभाको राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिका सदस्य सभापति र संविधानसभाका अध्यक्षले समेत आयोगको सम्बन्धमा सरकारको स्पष्ट धारणा के हो भनी पटक-पटक जिज्ञाशा राखेका पनि थिए । यही अन्यौलको बीचमा संविधानसभाको राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिले १४ प्रदेश रहने बहुमत र ६ प्रदेश रहने अल्पमत तथा धेरै फरक मत रहेको प्रतिवेदन २०६६ माघ महिनामा तयार पारी संविधानसभामा पेश गरेको थियो । त्यसपछि उक्त प्रतिवेदनमा गम्भीर राजनीतिक विवाद उत्पन्न भएकोले दलहरूले संविधानमा व्यवस्था भएबमोजिमको उच्चस्तरीय आयोग गठन गर्नुपर्ने कुरा उठाउन थाले । राजनीतिक सहमतिको अभावमा तीन पटकसम्म संविधानसभाको अवधि थप हुँदासम्म पनि यो विषयमा सहमति जुटेन ।

तेस्रो पटक संविधानसभाको म्याद थपिए पश्चात् २०६८ साल कार्तिक १८ गते संवैधानिक समिति अन्तर्गतको विवाद समाधान उपसमितिमा छलफल हुँदा अब संविधानको धारा १३८ बमोजिम राज्यको पुनर्संरचना गर्नको लागि सुझाव दिन उच्चस्तरीय आयोगको गठन नगर्ने, उक्त व्यवस्था संशोधन गरी संविधानसभाबाट नै एक विशेषज्ञ समिति बनाई त्यसको सुझावमा यो विषयको छिनोफानो गर्ने राजनीतिक सहमति भयो । यही सहमतिबमोजिम त्यसै दिन सरकारले अन्तरिम संविधानको ११ औं संशोधन विधेयक व्यवस्थापिका-संसद सचिवालयमा दर्ता गर्‍यो । उक्त विषयमा पुनः राजनीतिक विवाद प्रारम्भ भयो । सबै पार्टीका जनजाति सदस्यहरूले विरोध गरेको कारण मंसिर २ गते सरकारले उक्त संविधान संशोधन

विधेयक सदनबाट फिर्ता लिई संविधानको धारा १३८ बमोजिम उच्चस्तरीय आयोग नै गठन गर्ने तयारी गऱ्यो । यसरी यस्तो गम्भीर विषयमा शीर्ष नेताहरूबाट भएको निर्णय तथा सरकारबाट भएको निर्णयको समेत अवज्ञा भयो ।

सरकारबाट २०६८ साल मंसिर ६ गते दुई महिनाको कार्यावधि दिएर ८ सदस्य रहेको राज्य पुनर्संरचना सुझाव उच्चस्तरीय आयोगको गठन भयो । आयोगमा श्री स्टेला तामाङ्, श्री मल्ल के.सुन्दर, श्री रमेश ढुंगेल, श्री सावित्रा गुरूङ्, श्री सर्वराज खड्का, श्री भोगेन्द्र झा, श्री कृष्ण हाछेथु र श्री सुरेन्द्र महतो सदस्य रहेका थिए भने सहमति नभएर अध्यक्ष नियुक्ति गरिएको थिएन । २०६८ मंसिर २० गतेमात्र सरकारले श्री मदन परियारलाई उक्त आयोगको अध्यक्षमा नियुक्ति गऱ्यो ।

## ७.२. राज्यको पुर्नसंरचना सुझाव उच्चस्तरीय आयोगको प्रतिवेदन संविधानसभामा पेश गर्ने प्रक्रिया निर्धारण

राज्य पुनर्संरचना सुझाव उच्चस्तरीय आयोगको प्रतिवेदन प्रधानमन्त्रीसमक्ष आयोगका अध्यक्षले २०६८ माघ १७ गते पेश गरेपछि प्रधानमन्त्रीले उक्त प्रतिवेदन संविधानसभाका अध्यक्षसमक्ष माघ १९ गते बुझाउनु भयो । आयोगको प्रतिवेदन पनि बहुमत र अल्पमत भई आएको, संविधानसभाको समितिले सहमतिमा टुङ्गो लगाइएका कतिपय विषयमा आयोगले विवाद खडा गरेको लगायतका कारणले आयोगको प्रतिवेदन पनि निकै विवादको चपेटामा परेको थियो । उक्त प्रतिवेदनलाई संविधानसभामा सिधै लैजाने कि संविधानसभाको राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिमा लैजाने भन्ने विवादले करिब २ महिना जति प्रतिवेदन अलपत्र परेको थियो । प्रक्रिया निर्धारण गर्नको लागि संविधानसभाबाट गठित नियमावली संशोधन मस्यौदा समितिमा पनि निकै विवाद भयो । अन्त्यमा नियमावली नै संशोधन नगरी संविधानसभाको राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिका सदस्यहरूसँग यो विषयमा संविधानसभाका अध्यक्षले अलग्गै परामर्श गर्ने र आयोगको प्रतिवेदनमाथि चैत्र १३ गतेदेखि संविधानसभामा छलफल गर्ने र छलफलपछि उक्त प्रतिवेदन संवैधानिक समितिमा पठाउने गरी कार्यव्यवस्था परामर्श समितिमा राजनीतिक सहमति भएको थियो । राज्यको पुर्नसंरचना सुझाव उच्चस्तरीय आयोगको प्रतिवेदन २०६८ का सम्बन्धमा संविधानसभाका अध्यक्षबाट २०६८ चैत्र १० गते राज्यको पुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिका सदस्यहरूसँग परामर्श गर्नुभएको थियो ।

## ७.३. राज्यको पुर्नसंरचना सुझाव उच्चस्तरीय आयोगको प्रतिवेदन २०६८ माथि संविधानसभामा छलफल र उक्त छलफलमा उठेका मुख्य विषयहरु

राज्य पुनर्संरचना सुझाव उच्चस्तरीय आयोगको प्रतिवेदन सम्माननीय प्रधानमन्त्रीसमक्ष आयोगका अध्यक्षले २०६८ माघ १७ गते पेश गर्नु भएकोमा सदनमा सोमाथिको छलफल २०६८ चैत्र १३, १४, १५, १६ र १७ गते भएको थियो । उक्त प्रतिवेदनमाथिको छलफलमा जम्मा २७५ जना सदस्यले भाग लिनु भएको थियो । यस छलफलमा जम्मा ३५ घण्टा ४० मिनेटको समय खर्च भएको थियो । आयोगको उक्त प्रतिवेदनमाथि संविधानसभामा भएको छलफलको क्रममा उठेका मुख्य विषयको साराशं यस प्रकार रहेको छ :-

- राज्यको पुनर्संरचना सम्बन्धमा समिति र आयोगको प्रतिवेदनमार्फत् फरक दृष्टिकोण प्रस्तुत भएका छन् । समितिको प्रतिवेदनमा उल्लेख भएका कतिपय विषयमा फरक रायसमेत दिएकोले

द्विविधा ल्याएको छ । आयोगको प्रतिवेदनले समस्या थप्ने काम गरेको छ । आयोगले विवादित विषयमा उपयुक्त सुझाव दिन सकेन । नयाँ–नयाँ विवाद ल्याउने काम भएको छ । आयोगले केन्द्रलाई मजबुत र प्रदेशलाई कमजोर पार्ने खालको प्रतिवेदन ल्याएको छ । आयोगको प्रतिवेदनमा स्थानीय निकायलाई प्रदेश अन्तर्गत राखिएको छ । आयोगको प्रतिवेदन जिल्लामा छलफल गराउँदा कसैले पनि राम्रो भनेनन् । आयोगबाट सहमति नभई दुई वटा प्रतिवेदन आउनु दुर्भाग्यपूर्ण छ । आयोगको बहुमतको प्रतिवेदनमा गरिएको प्रदेश बाँडफाँड असान्दर्भिक छ । आयोगका दुईवटा प्रतिवेदनमध्ये बहुमत प्रतिवेदनको सुझावमा मात्र छलफल गर्नु पर्दछ । आयोगको प्रतिवेदन संविधानलेखनमा सहयोगी बन्दैन । संविधानसभाको समितिको प्रतिवेदन नै अग्रगामी छ ।

- प्रतिवेदनमा सैद्धान्तिक हिसाबले केही राम्रा पक्ष छन् । आयोगको प्रतिवेदन समितिको भन्दा सैद्धान्तिक रूपमा फरक छैन । आयोगको बहुमतको प्रतिवेदनलाई आत्मसात् गर्नु पर्दछ । आयोगले ल्याएको प्रतिवेदन सामान्य हेरफेर गरी पास गरिदिए हुन्छ । राज्य पुनर्संरचना गर्दा भौगोलिक, आर्थिक स्रोत–साधनमा ध्यान दिइनुपर्छ । आयोगले विकल्पहरू दिनु पर्दथ्यो । आयोगको प्रतिवेदनले समितिको प्रतिवेदनको मूल भावना पक्रेको छ । आयोगको अल्पमतको प्रतिवेदन अलि व्यावहारिक रहेको छ । आयोगको प्रतिवेदन कतिपय विषयमा अव्यावहारिक र सतही जस्तो देखिन्छ । आयोगको प्रतिवेदन पहिचान र सामर्थ्यको जगमा उभिएर आएको हुँदा यो ठीक छ । यो प्रतिवेदनले आशा राखेको जस्तो सुझाव दिन सकेको छैन । आयोग सङ्कुचित सोचबाट माथि उठ्न सकेन । प्रतिवेदनको सकारात्मक पक्ष ग्रहण गर्नुपर्दछ । आयोगले दिएको प्रतिवेदनले समाधान दिन नसक्ने भएकोले बोलिरहनु परेन । आयोगको प्रतिवेदन समितिमार्फत् ल्याइनु पर्दथ्यो । समितिलाई बाइपास गरेर आएको छ । प्रतिवेदनमा केही सकारात्मक र केही नकारात्मक पक्ष पनि छन् । आयोगले सहमति दिन सकेन । सहमतिको विकल्प छैन । आयोगबाट निष्पक्ष सुझाव आएन, पार्टीगत सुझाव आयो । आयोगले अवैज्ञानिक, अव्यावहारिक सुझाव दियो । प्रतिवेदन ग्रहण योग्य पाइदैन । समितिको प्रतिवेदनमा केही बाहेक धेरै कुरामा समर्थन गरेको देखिन्छ । आयोगले केही आवश्यक सुझाव पेश गरेको छ ।
- आयोगको प्रतिवेदन मनोमानी रूपमा आएको छ । यसले समितिले व्यवस्था गरेको १४ प्रदेशबाट १० वटामा झारेको छ र गैरभौगोलिक प्रदेश बनाएको छ । आयोगको बहुमतको प्रतिवेदनका केही कुरा ठीक छन् । आयोगले गहिराइमा नपुगी विवादित मत दिएको छ । केही उपयोगी र वैज्ञानिक कुरा छोडेर अरू अनुपयुक्त छन् । आयोगको प्रतिवेदन दलनिरपेक्ष हुन सकेन । स्वाभाविकै रूपमा यो सुझाव प्रतिवेदन हो । आयोग पहिले नै बनेको भए सुल्टो हुने थियो । आयोगको सुझाव कति ग्रहण गर्ने, हामीलाई उपयुक्त लागेको सुझाव ग्रहण गर्न सक्छौं । समितिमा विवाद भएको कुरामा मात्र आयोगले राय दिएको भए हुन्थ्यो ।
- जातीयता मुख्य कुरा हो । सामर्थ्य पछि विकास गर्ने कुरा हो । हाम्रो एकता र अखण्डता नै पहिचान हो । सामर्थ्य पछि सिर्जना हुने कुरो हो । समितिले अगाडि बढाएको पहिचान र सामर्थ्यको विषयलाई आयोगले आधार लिएको छ । प्रत्येक प्रान्तमा दलितहरूलाई अधिकार दिएर माथि उठाउनु पर्छ । दलितको लागि गैरभौगोलिक प्रदेश ठीक छैन । दलितलाई केही समयका लागि आरक्षण गर्नुपर्छ । गैरभौगोलिक राज्यको सट्टा दलितलाई विशेष अधिकार दिन सकिन्छ । आयोगले दलितको सम्बन्धमा प्रस्ताव गरेको गैरभौगोलिक प्रदेशको सिफारिशबाहेक अधिकारहरूको सम्बन्धमा प्रस्ताव गरेका विषय ठीक छन् । दलितको अधिकारको कार्यान्वयन हुनु पर्‍यो । दलितलाई समावेशी समानुपातिक अधिकार दिनुपर्दछ । दलितहरूको विशेष अधिकार होस् । गैरभौगोलिक प्रदेशले दलितहरूको अधिकार प्राप्त हुँदैन । दलितका अधिकारको बारेमा प्रतिवेदन सकारात्मक रहेको छ । दलितको सम्बन्धमा छुवाछूत र भेदभावको मुद्दा महत्वपूर्ण

हो । उत्पीडित जातिहरूलाई अधिकार प्रदान गर्दै जानुपर्दछ । छुवाछूतलाई मानवताविरोधी अपराध बनाउनु पर्छ । हामीले खोजेको पहिचान हो, जातीयता होइन । दलितलाई राजनीतिक विशेषाधिकार दिएर उनीहरु माथिको विभेद अन्त्य गर्नुपर्छ । दलितलाई केन्द्र र प्रदेशमा विशेष अधिकार दिई संरक्षणको व्यवस्था दिनुपर्छ । दलित आयोगलाई संवैधानिक आयोग बनाउनु पर्छ । दलितलाई अधिकार विहीन बनाउन गैरभौगोलिक राज्य ल्याइएको हो । दलित र आदिवासी जनजातिहरूलाई सदैव विभेद गरेको शतप्रतिशत सत्य रहेको छ ।

- राज्यका ३ वटा तहको सरकारको व्यवस्था गरेकोले प्रत्येक तहको सरकारका लागि निश्चित अधिकार तोकिएका छन् । तोकिएका अधिकारको सीमाका बारेमा भने भिन्दाभिन्दै दृष्टिकोण अभिव्यक्त भएका छन् । सङ्घलाई बलियो अधिकारसम्पन्न बनाउनु पर्छ भन्ने, प्रदेशलाई अधिकारसम्पन्न शक्तिशाली बनाउनु पर्छ भन्ने र स्थानीयतहलाई अधिकारसम्पन्न बनाउनु पर्छ भन्ने फरक दृष्टिकोण आएका छन् । प्रादेशिक सरकार विघटन गर्ने अधिकार सङ्घीय सरकारलाई दिनु हुन्न । स्थानीयतहको अधिकार हनन् गरेर प्रदेशमा राखिएको छ । यसलाई स्वीकार गर्न सकिँदैन । सङ्घ, प्रदेश र स्थानीय सरकार नै उपयुक्त स्वरूप हुन्छ । स्थानीयतहलाई अधिकारको सुनिश्चतता हुनुपर्छ । केन्द्रीय, प्रान्तीय र स्थानीयतहको व्यवस्था संविधानमा नै हुनुपर्छ । प्रदेश अन्तर्गत स्थानीय निकाय हुनु हुँदैन ।
- स्वायत्तप्रदेशलाई अधिकार दिनुपर्छ । आयोगको अल्पमतको प्रतिवेदनले स्थानीयतहलाई अधिकारसम्पन्न गरेको कुरालाई सकारात्मक रूपमा लिन सकिन्छ । अधिकारको सूचीको बारेमा आयोगले दिएको सुझाव ठीकै छ । आयोगले समितिको प्रतिवेदनमा रहेका विवादलाई समाधान गर्न ध्यान दिएन । देशबाट छुट्टिने अधिकार दिइनु हुँदैन । आयोगको प्रतिवेदनले पीडितको लागि अधिकार प्रदान गरेन । बहुमतले प्रदेशलाई र अल्पमतले केन्द्र र प्रदेशलाई बलियो बनाउने गरी अधिकारको सूची बनाएको छ । सीमित खालको अधिकार प्रदेशलाई दिइनुपर्छ । जनतालाई अधिकार नदिएमा विद्रोह हुन सक्छ । नागरिकलाई अधिकार दियो भने सबैलाई देशको माया हुन्छ । सबैलाई समान अधिकार दिइनुपर्छ । देशको अवस्थासँग मेल नखाने भएकोले स्वीकार्य छैन । जनतालाई सेवाबाट विमुख बनाउने प्रकृतिको छ । शक्तिको नियन्त्रण र सन्तुलनको लागि केन्द्रमा अधिकार हुनुपर्छ । स्वायत्तक्षेत्रको प्रस्ताव अलिकति वैज्ञानिक छ । पश्चिममा थरूहट रहनुपर्छ, केन्द्रमा सीमित अधिकार, स्थानीयतहमा बढी अधिकार र मध्यम रूपमा प्रदेशमा अधिकार हुनु पर्दछ ।
- अवशिष्ट अधिकार सङ्घमा रहनुपर्ने, प्रदेशमा रहनुपर्ने र सङ्घ तथा प्रदेश दुबैमा रहनुपर्ने भन्ने अभिव्यक्तिहरु आएका छन् । अवशिष्ट अधिकार सङ्घमा हुनुपर्छ भनेर समितिको प्रतिवेदनमा छ । आयोगले अवशिष्ट अधिकार सङ्घ र प्रदेशमा रहने गरी गरेको सिफारिश सकारात्मक छ । अवशिष्ट अधिकार विभाजन गर्ने विषय होइन । समितिको प्रतिवेदनमा अवशिष्ट अधिकारको बारेमा सहमति भईसकेकोमा पनि आयोगले विवादास्पद सुझाव दिएको छ । आयोगको प्रतिवेदनमा अवशिष्ट अधिकारको बाँडफाँड व्यवस्था राम्रो छ । अवशिष्ट अधिकार प्रदेशमा हुनुपर्छ भन्ने मान्यता रहेको भन्ने भनाइहरु आएको छ । अराजक रूपमा चल्ने प्रदेशलाई नियन्त्रण गर्न सङ्घमा अवशिष्ट अधिकार रहनु पर्दछ भन्ने अर्को पक्षको सुझाव पनि आएको छ । अवशिष्ट अधिकार प्रायः प्रदेशमा हुनुपर्छ ।
- राजनीतिक अग्राधिकार हुनु पर्दछ र हुनु हुँदैन भन्ने दुबै अभिव्यक्तिहरु समितिमा आएका थिए । प्रदेश निर्माण गर्दा राजनीतिमा जातीय अग्राधिकार रहेमा द्वन्द्व सिर्जना हुन सक्छ । आयोगले अग्राधिकारको विषयमा केही सकारात्मक सुझाव दिएको छ । कतिपय ठाउँमा गा.वि.स. र नगरपालिकाका वडालाई टुक्राउने आधारमा एकरूपता भएन । केन्द्र, प्रदेश र स्थानीय गरी तीन तह हुनुपर्छ । समितिले अग्राधिकार दुई कार्यकालका लागि प्रस्ताव गरेकोमा

आयोगले एक कार्यकाल बनाई अधिकार कटौती गरिएको देखियो । राजनीतिक अग्राधिकार चाहिन्छ । अग्राधिकार र आरक्षण लक्षित समूहलाई समान अवस्थामा ल्याउनको लागि हो । निश्चित कार्यकालको राजनीतिक अग्राधिकार हुनुपर्छ भन्ने धारणा अभिव्यक्त भएका छन् भने राजनीतिक अग्राधिकार १/२ वर्ष होइन बढी अवधिका लागि दिइनु पर्दछ भन्ने सुझाव पनि अर्को पक्षबाट आएको छ । राजनीतिक अग्राधिकार दिन उपयुक्त छैन । विशेषाधिकार ठीक छ । अल्पमतले अग्राधिकारलाई हटायो बहुमतले राखेको छ । अग्राधिकार राजनीतिक रूपमा प्रतिस्पर्धा गर्न नसकेसम्म हुनुपर्छ । राजनीतिक अग्राधिकार राखेको भए ठीक हुने थियो । चुनाव अवधिभर राजनीतिक अग्राधिकार आवश्यक छ । राजनीतिक अग्राधिकार तीन कार्यकालसम्मका लागि राख्नु पर्दछ भन्ने सुझाव आएको छ भने उत्पीडनमा परेकालाई एक कार्यकाल राजनीतिक अग्राधिकार दिनु पर्दछ भन्ने सुझाव पनि आएको अवस्था छ ।

- भूमिविनाको राज्यको कल्पना गर्नु हुँदैन । पाँच प्रदेशमा सहमति जुटाउन सके राम्रो हुने थियो । प्रदेश निर्माण मात्र होइन त्यसलाई चलाउने र टिकाउनेतर्फ पनि सोच्नु पर्दछ । समितिमा चौध प्रदेश सिफारिश गर्ने पक्षले नै प्रदेशको संख्या घटाउन सुझाव दिनुलाई सकारात्मक रूपमा लिन सकिन्छ । थोरै प्रदेश बनाएर पनि संविधान जारी गर्न सक्दछौं । प्रदेश बनाउँदा सामान्य बहुमतले पारित गर्ने व्यवस्था होस् । आयोगले गरेको प्रदेशको सीमाङ्कन विवादित छ । एउटै मापदण्डको आधारमा सीमाङ्कन गरिनु पर्दछ । सीमाङ्कनको आधारमा पुनर्विचार गर्नुपर्छ । नेपालमा ६ वटा प्रदेश बनाउन उपयुक्त हुन्छ । भूगोलको आधारमा १४ प्रदेश निर्माण गर्नुपर्छ । सामर्थ्य र पहिचानको आधारमा प्रदेश बनाउनु पर्छ । जनताको मतलाई ध्यान राखेर प्रदेश बनाउँदा हुन्छ । सगरमाथा, गौतमबुद्ध आदिजस्ता नामबाट प्रदेशको नामाकरण हुनुपर्छ । जाति, भाषा, भूगोल आदि कुनै पनि पहिचानबाट प्रदेशको नामाङ्कन गर्न सकिन्छ । एक मधेस एक प्रदेश बन्नुपर्नेमा त्यसो भएन । आयोगले प्रस्तुत गरेको प्रतिवेदनमा मधेस एक प्रदेश अङ्गीकार गर्नुपर्छ । मधेसले एक प्रदेश मागेकोमा दुईवटा बनाइयो । जातीय र पहिचानको आधारमा प्रदेश हुनु हुँदैन । आयोगले समग्रमधेस एकप्रदेश बनाउन सकेन । जातीय र क्षेत्रीय आधारमा असमानता उत्पन्न गर्ने खालको प्रदेशको विभाजन भएकोले यो प्रजातान्त्रिक मूल्य र मान्यताविपरीत छ । आजको मानवतावादी तथा लोकतान्त्रिक युगमा जातीय राज्य भनेको विषको विरूवा रोप्नु सरह हो । जातीय राज्यले सामाजिक सद्भाव बिग्रन सक्छ । जातीय राज्य होइन जातीय पहिचान सहितको प्रदेश बन्नु पर्दछ । केवल जातीय आधारमा सीमाङ्कन गर्ने प्रयास गरेको छ । प्रदेश निर्माण जातीयतालाई आधार लिएर गरिएको छ । जातीय आधारमा जान खोजियो भने मुलुकमा गृहयुद्ध हुन सक्छ । प्रदेशविभाजन गर्दा जातीय आधारमा होइन भने जैविक आधारलाई मानौं । सबै विषयहरु छलफल गरेर टुंग्याउनु पर्छ । मधेस एक वा बहु हुनपर्ने सोच अतिवादी हो । धेरै प्रान्तहरु आउनु आर्थिक कारणले सम्भव छैन । थोरै प्रान्त राखियो भने आर्थिक दृष्टिकोणले धान्न सकिन्छ । सीमित प्रान्त हुनुपर्छ । सिफारिश गरिएका कतिपय प्रदेश सामर्थ्यको आधारमा चल्न सक्ने अवस्था छैन ।
- प्रदेशको संख्याका बारेमा मा० सदस्यहरूको आ-आफ्ना भनाइहरु रहेको पाइन्थ्यो । कम्तीमा ३ प्रदेशदेखि बढीमा १४ प्रदेशसम्मका प्रदेशहरु प्रस्ताव गरिएका छन् । जलप्रवाहको आधारमा कोशी, गण्डकी र कर्णाली, भौगोलिक आधारमा हिमाल, पहाड, तराई प्रदेश हुनुपर्छ भन्ने दृष्टिकोण पनि आएका छन् । समितिको प्रतिवेदनमा उल्लेख गरिएका संख्या आयोगले प्रस्ताव गरेका संख्यामा मा० सदस्यहरूले समर्थन, विरोध र आफ्नै नयाँ संख्या समेत प्रस्ताव गरेको देखिन्छ । प्रदेश विभाजन गर्दा ७ प्रदेशमा विभाजन गर्नुपर्छ । हिमाल, पहाड र तराई जोडिएको प्रदेश बन्नुपर्छ । समितिले प्रस्ताव गरेको १४ प्रदेश नै ठीक छ । ५ देखि ६ वटा

मात्रै प्रदेश हुनुपर्दछ । मधेसलाई एक प्रदेश बनाउन ठीक छैन । समितिले वनाएको १४ प्रदेशबाट आयोगले चारवटा हटाएको ठीक छैन । ७ वटा भन्दा बढी प्रदेश सम्भव छैन । प्रदेश बनाउँदा उत्तर र दक्षिण समेट्ने गरी बनाउनु पर्छ । गैरभौगोलिक प्रदेश सिफारिश गर्नु भनेको पृथ्वीको समस्या नक्षत्रमा गएर समाधान खोज्नु सरह हो । भूगोलविनाको गैरभौगोलिक प्रदेश ठीक छैन । प्रदेशविभाजन गर्दा भौगोलिकता र जनसंख्याको आधार लिएको देखिंदैन । प्रदेश मनोगत रूपमा होइन आवश्यकताले बनाउने हो । मधेसलाई दुई प्रदेशमा बाँडिएको छ, त्यो ठीक छ । प्रदेशमा स्वायत्तताको अभ्यास गरिनुपर्छ । समितिले तय गरेको प्रदेश ठीक छ तर तराईको प्रदेशलाई केही विचार गरौं । प्रदेशको संख्या कम गरिनुपर्ने । प्रदेश जातीय होइन, सर्वस्वीकार्य हुनुपर्दछ । जातीयता र क्षेत्रीयतामा सहमत छैन । जातीयतन्त्र होइन लोकतन्त्रतिर लागौ । थारूप्रदेश एक स्वायत्तप्रदेश हुनुपर्छ । सुशासन र स्वशासन हुनुपर्छ । कर्णालीका सबै जिल्ला एउटै प्रदेशमा पर्नु उपयुक्त छ । पहिचान र सामर्थ्य एक अर्काका परिपूरक हुन् । पहिचानको कुरा आउँदा भावनाको विषयको रूपमा पनि रहन्छ । आफ्नो क्षेत्र र प्रदेशको अपनत्व बढेपछि उत्पादन त्यही अनुरूप बढ्दै जान्छ । प्रदेशनिर्माणमा पहिचान र सामर्थ्यलाई आधार बनाएर आयोगको प्रतिवेदन आएको भनिएको छ । प्रदेशहरु सक्षम र जनताको लागि सुगम हुनु पर्दछ । प्रदेश बनाउँदा काठमाडौं उपत्यकालाई पनि समावेश गरेर ६ देखि ७ वटा प्रदेशमा विभाजन गर्दा हुन्छ । मधेस प्रदेशलाई केही लिम्बुवान, केही नारायणी र केही खप्तडमा समेटिएको छ । विभिन्न जातजाति भएकोले समग्र मधेस प्रदेश एक प्रदेश हो । मधेसलाई विखण्डन गरिएकोमा आपत्ति छ । मधेसमा दुई प्रदेश गरिनु मधेसलाई मान्य छैन । नामाङ्कनको बारेमा सहमति नभएमा प्रदेशहरूले आफ्नो नाम आफैँ राखुन् । चितवनलाई ४ टुक्रा पारी प्रदेशविभाजन गरिएको कुरालाई स्वीकार्न सकिंदैन । चितवनमात्र अखण्ड हुने वा अरू जिल्ला पनि अखण्ड हुने हो ? अखण्ड नेपाललाई बनाउने हो अरूलाई पुनर्संरचना गर्ने हो । अखण्ड जिल्ला वा क्षेत्र होइन, अखण्ड नेपाल बन्नुपर्छ । अखण्ड शब्दको दुरूपयोग भएको छ । अखण्ड सुदूरपश्चिम त्यहाँका जनताले माग गरेका हुन् ।

- आयोगले दलितको लागि गैरभौगोलिक प्रदेशको सिफारिश गरेको त्रुटिपूर्ण छ । आयोगले मधेसका दलितहरूलाई संरक्षणको व्यवस्था गर्न सकेन । दलितपनलाई स्थायित्व दिनुहुँदैन । यसलाई नै हटाउनतर्फ लाग्नु पर्दछ । गैरभौगोलिक प्रदेशले दलितलाई वहिष्कृत र उत्पीडनमा पारिराख्नेछ । पहिचानप्रति आपत्ति नहोस् । गैरभौगोलिक प्रदेशले दलितहरूको विशेषाधिकार ओझेलमा पारेको छ । गैरभौगोलिक प्रदेश दलितको माग होइन ।
- अधिकार निक्षेपण, सामुदायिक उत्थान र विकास, अन्तर्राष्ट्रिय सीमा, भौगोलिक परिवेश, प्राकृतिक सम्पदा आदिलाई ध्यान दिएर सातवटा प्रदेश बनाइनु उपयुक्त हुन्छ । अल्पमतको प्रतिवेदनले सबैको राज्य खोजेको छ । बहुमत पक्षको केही सुझाव ग्राह्य छन् । तराईलाई बहु-प्रदेश बनाउनु राम्रो हुन्छ । शेर्पा, जडान प्रदेश हटाउनु घोर आपत्तिजनक छ । सबै जातजाति मिलेर बस्ने खालको प्रदेश बनोस् । खोसिएको पहिचानलाई प्राथमिकता दिइनु पर्छ । सिङ्गो पूर्वाञ्चललाई मान्यता दिनुपर्छ । स्वायत्तप्रदेशको बारेमा बहुमतको प्रतिवेदन ठीक छ । पूर्वमा १६ जिल्लाको एउटै प्रदेश बनोस् नभए १४ वटाको चाहिं होस् । यसमा सामर्थ्य देखिन्छ । समग्र मधेस एक स्वायत्तप्रदेश हुनुपऱ्यो । अरूले अखण्ड चितवन, सुदूरपश्चिम माग्न हुने ? एक मधेस एक प्रदेश माग्दा विखण्डनवादी भइन्छ र ? सबै प्रदेश बहुजातीय हुने गरी बनाइनुपर्छ । प्रस्तावित प्रदेशहरूको विभाजन अवैज्ञानिक र अवस्तुवादी रहेको छ । नेपालमा तराई, पहाड र हिमाल गरी तीन प्रदेश पनि हुन सक्ने सम्भावना थियो । प्रदेशनिर्माणको सन्दर्भमा पार्टीहरु बीच सहमति हुनैपर्छ । आग्रह, पूर्वाग्रह र एजेण्डा छोडेर सहमति गर्नुपर्छ । प्रदेशको नामाङ्कन गर्दा सबैलाई मान्य हुने नाम विचार गर्न सक्छौं । मिथिला प्रदेशको नाम

परिवर्तन गरी उपयुक्त नाम राख्नु पर्दछ । झापा, मोरङ्ग र सुनसरीलाई मिथिला प्रदेशमा राख्नु उपयुक्त हुँदैन । मगर स्वायत्तप्रदेशको अवधारणा ल्याउनु पर्दछ । प्रदेशको नाममा रहेको कोच शब्द हटाइएको छ । प्रदेशको नामाकरण गर्दा समस्त इलाकालाई प्रतिनिधित्व हुने सुनिश्चित भए सबैलाई स्वीकार्य हुनेछ । प्रदेशको सीमाङ्कनमा केही समस्या छ । राष्ट्र स्वाधीन हुने नीतिनिर्माण गर्न जातीय पहिचानलाई छोड्नु हुँदैन । कर्णाली प्रदेश हुनु पर्दछ । सानो आकारको प्रदेश अर्थात् पाँच प्रदेश हुनु उपयुक्त हुन्छ । शेर्पा प्रदेश हुनु पर्दछ । कर्णाली प्रदेशको सम्मान हुने गरी प्रदेश निर्माण होस् । जातिको आधारमा प्रदेश बनेपछि किराँत प्रदेश भने छुट्याउनु हुंदैन । जातीयताको आधारमा प्रदेश वनाउंदा अल्पसंख्यक जातिलाई आकाशको फल हुने र द्वन्द्व निम्त्याउँछ ।

- अल्पमतको प्रदेशमा टेकेर राज्य पुनर्संरचना गर्नु राम्रो हुन्छ । शेर्पा जडान प्रदेश काट्नु हुंदैनथ्यो । जातीय ध्रुवीकरण भएको देखिन्छ । सरोकारवाला व्यक्तिसँग बसेर प्रदेश बनाउनु राम्रो हुन्छ । मधेसलाई तीनवटा सम्म प्रदेश बनाए हुन्छ । नेपालमा प्रदेशनिर्माण भएमा राम्ररी चल्न सक्दछन् । उत्पीडनबाट मुक्त हुन पहिचानको आधारमा प्रदेशको नामाकरण आवश्यक हुन जान्छ । २४० वर्षसम्मको एकात्मक राज्यले अवसर नदिएको सन्दर्भमा हाल नामाङ्कन भएका प्रदेशहरु ठीक छन् । हिमालदेखि तराईसम्मको प्रदेश ठीक हुंदैन । बढी प्रदेश भएमा प्रशासनिक खर्च बढ्छ । १२ वटा राज्य कायम गरिनुपर्छ । आधार, औचित्य र विवरण नभएको बहुमतको गैरभौगोलिक प्रदेश ठीक छैन । २ देखि ३ प्रदेश नमिलेको जस्तो छ । प्रदेशको राजधानी सबै जनतालाई पायक पर्ने ठाउँमा राख्नुपर्छ । बराम जातिलाई २ प्रदेशमा राखिएकोमा एकै क्षेत्रमा पार्ने गरी सीमाङ्कन गर्नुपर्छ । सेती महाकाली छुट्टै पहिचान बोकेको क्षेत्र भएकाले नौ जिल्लाको प्रदेश हुनु उपयुक्त हुन्छ । आयोगले प्रदेशको सीमाङ्कन र नामाङ्कन अव्यावहारिक रूपमा गरेको छ । कैलाली र कञ्चनपुर थरूहट प्रदेशमा राखिनु पर्छ । जातीय र लैङ्गिक जनसंख्याको आधारमा जनताको सहभागिताको सुनिश्चित गरिनुपर्छ । थारूवान प्रदेशमात्र राखिनुपर्छ । मधेस हटाउनु पर्छ । मधेसको पहिचान केन्द्रित हुने गरी प्रदेश निमार्ण होस् । ५ वटा विकासक्षेत्रलाई ५ प्रदेश बनाउँ । प्रदेशको सीमाङ्कन र नामाङ्कन त्रुटिपूर्ण देखिन्छ । नेवाः प्रदेशबाट फोहोर फाल्न र पानीको लागि ताम्सालिङ्गमा जानुपर्छ । किराँत प्रदेश बनाइनु पर्दछ । प्रदेशको नाम र संख्यामा विवाद नगरौं । पछि फेरिन पनि सक्छ । जातीयताभन्दा अन्य पहिचानबाट प्रदेशको नामाङ्कन हुनु राम्रो हुन्छ । यसबारेमा विश्वको उदाहरण पनि रहेको छ । नारायणी पूर्व र पश्चिम गरी मधेसलाई दुई प्रदेश बनाउनु पर्छ । ताम्सालीङ, किराँत आदि प्रदेश बनाउन सकिन्छ । शोषित पीडितको प्रदेश हुनुपर्छ । बहुमत र बाहुल्य भएको प्रदेश निर्माण गर्न सक्नु पर्छ । १० प्रदेश बनाउनु उपयुक्त हुन्छ । आत्मनिर्णय सहितको स्वायत्तप्रदेशको लागि अगाडि बढौ । केही प्रदेश हटाएकोमा विमति छ । भविष्यमा सङ्घीय प्रदेशहरु आत्मनिर्भर हुन सकुन् भनेर विचार गरिनुपर्छ । प्रदेशहरूको नामाकरण ऐतिहासिक आधारमा गर्नु पर्दछ । धेरै प्रदेश बनाउनुको सट्टा दिगोपनातिर ध्यान पुऱ्याउनु पर्दछ । एकीकृत चितवनप्रदेश हुनु पर्दछ । अखण्ड तामसालिङ्गको नाममा शेर्पा प्रदेश मेट्ने कार्य भयो । अखण्ड सुदूरपश्चिमलाई मान्न सकिदैन । चितवन, नवलपरासी र कास्की ३ चिरा भएको छ । सुनकोशीको ठाउँमा वल्लो किराँत प्रदेश कायम गरियोस् । नारायणीमा हुनुपर्ने चितवनलाई मधेस मिथिलामा राखिएको छ । चितवन, धादिङ आदिको विभाजन ठीक छैन । शेर्पाजस्ता अल्पसंख्यक जातिलाई पनि स्थापित गर्नुपर्छ ।
- संवैधानिक अदालतलाई समितिले आवश्यक ठानी सिफारिश गरिएकोमा आयोगले सर्वोच्च अदालत भनिदियो । संवैधानिक अदालत पूर्ण रूपमा समावेशी हुनुपर्छ । संवैधानिक अदालत चाहिंदैन भन्नेमा विमति छ । न्यायालयलाई पनि पुनर्संरचना गरिनु पर्दछ । संवैधानिक अदालतको व्यवस्था गरिनुपर्छ ।

- सङ्घीयता अधिकारको विकेन्द्रीकरण हो । मधेसले नै सङ्घीयताको लागि मूल मुद्दा उठाएको हो । गैरभौगोलिक सङ्घीयताको सुझाव आएको थियो । सङ्घीयता पहिचान र सामर्थ्यमा आधारित भएर हुनुपर्छ भन्ने विषयमा सहमति छ । सामर्थ्य सहायक कुरा हो । सङ्घीयताविनाको संविधान हाम्रो देशका जनताले स्वीकार गर्ने छैनन् । सङ्घीयताविनाको संविधान जारी भएमा दुर्भाग्यपूर्ण हुनेछ । पहिचान र सामर्थ्यमा आधारित भएर सङ्घीयता हुनुपर्छ । सङ्घीयतामा जाने विषयमा विवाद छैन । सङ्घीयतातिर उन्मुख भएका छौं । संकीर्णताबाट माथि उठेमा संविधान बन्छ । सङ्घीयता जनमत सङ्ग्रहबाट टुंग्याउनुपर्छ । जातीय, भाषिक, सांस्कृतिक, क्षेत्रीय, धार्मिक आधारमा सङ्घीयता हुन सक्छ । पहिचान पक्षलाई एकांकी रूपमा लिइएको छ । जतिवटा प्रान्त बनाए पनि बहुजातीय, बहुभाषिक प्रान्त बन्ने हो । शासन र राज्य जातीय हुन सक्दैन । पहिचान प्राथमिकतामा पर्दछ र सामर्थ्य आर्जन हुने कुरा हो । पहिचानलाई प्रमुख र सामर्थ्यलाई गौण रूपमा हेर्नु पर्दछ । सामर्थ्य भनेको अस्थायी हो । आज नभए भोलि हुन्छ, आज भए भोलि नहुन सक्छ ।

# भाग ८

# संविधानसभाको कार्यकालभर सहमति भएका र हुन नसकेका संविधानका अन्तर्वस्तुहरूको यथार्थ अवस्था

## ८.१. संवैधानिक समितिबाट संविधानको प्रारम्भिक खाका निर्माण

सबै विषयगत समितिहरूले आ-आफ्ना कार्यक्षेत्रभित्र रही तयार पारेका प्रारम्भिक प्रतिवेदनहरूमाथि संविधानसभामा छलफल समाप्त भएपछि त्यस्ता समितिहरूबाट प्राप्त प्रतिवेदन, सोमाथि सभामा छलफल भई सभाले दिएको सुझाव र निर्देशन समेतका आधारमा संविधानको मस्यौदा तयार पारी संविधानसभामा पेश गर्नु संवैधानिक समितिको प्रमुख कर्तव्य हुने व्यवस्था संविधानसभा नियमावलीले गरेको परिवेशमा मिति २०६६।१०।२१ देखि संवैधानिक समिति आफ्नो महत्वपूर्ण जिम्मेवारी सम्पन्न गर्ने दोस्रो चरणमा प्रवेश गरेको थियो । समितिको मिति २०६६।१०।२५ गतेको बैठकले समग्र संविधानको प्रारम्भिक खाका तयार गर्न एघार सदस्यीय उपसमितिको गठन गरेको थियो । उक्त उपसमितिले मिति २०६६।११।२ को समितिको बैठकमा प्रारम्भिक खाका प्रस्तुत गरी छलफल गऱ्यो । समितिले उक्त खाकालाई पछि परिमार्जन हुन सक्ने गरी स्वीकृत गरेको थियो । प्रारम्भिक खाकामा प्रस्तावना, प्रारम्भिक, नागरिकता, मौलिक हक र कर्तव्य, राज्यका निर्देशक सिद्धान्त, नीति तथा दायित्व, सङ्घीय कार्यपालिका, प्रादेशिक कार्यपालिका, स्थानीय कार्यपालिका, सङ्घीय व्यवस्थापिका, प्रादेशिक व्यवस्थापिका, स्थानीय व्यवस्थापिका, विशेष संरचना, न्यायपालिका, व्यवस्थापन विधि, आर्थिक कार्यप्रणाली, सङ्घ, प्रदेश, विशेष संरचना र स्थानीय एकाइ बीचको अन्तरसम्बन्ध, संवैधानिक अङ्गहरू, महान्यायाधिवक्ता, महाअभियोजनकर्ता, राष्ट्रिय सुरक्षा, अन्तर्राष्ट्रिय सम्बन्ध, राजनीतिक दल, सङ्कटकालीन अधिकार, संविधान संशोधन, सङ्क्रमणकालीन व्यवस्था, विविध, परिभाषा र व्याख्या, संक्षिप्त नाम, प्रारम्भ र खारेजी समेत गरी २७ भाग र अनुसूचीहरू रहने उल्लेख गरिएको थियो ।

## ८.२. विषयगत समितिको प्रतिवेदनमा निर्विवाद रहेका र संविधानसभाको प्रक्रियाबाट सहमति कायम गरिएका विषयलाई संविधानको प्रारम्भिक खाकामा समावेश गर्ने कार्यको शुरूवात

संवैधानिक समितिले दोस्रो चरणको काम प्रारम्भ गरेको मिति २०६६।१०।२२ देखि २०६९ वैशाख मसान्तसम्मको करिब २ वर्ष ३ महिनाभन्दा बढी समयावधिमा समितिका ९३ वटा बैठक सम्पन्न भएका थिए । सबै विषयगत समितिका प्रतिवेदनहरू एकै पटक पारित गरेर मस्यौदा एकीकरणको लागि

संवैधानिक समितिमा पठाउने भन्ने संविधानसभा नियमावली, २०६५ को नियम ८२ मा साविकमा रहेको व्यवस्थालाई मिति २०६६।१०।२१ मा संशोधनमार्फत् परिवर्तन गरेर संविधानसभाले एउटा प्रतिवेदन पठाउने पद्धति आत्मसात् गरेको कारण मस्यौदा एकीकरणको कार्यले गति लिन सकेन । यसबाट संविधानमा रहने सबै अन्तर्वस्तुहरु निर्विवाद रूपमा संविधानसभाबाट संवैधानिक समितिले एकैपटक प्राप्त गर्ने र सिङ्गो संविधानका विषयवस्तुहरूलाई एकीकृत दृष्टिकोणबाट मिलान गरी संविधानको पहिलो मस्यौदा तयार गर्ने उपयुक्त पद्धति परिवर्तित भई संविधानका विषयवस्तुहरूलाई खण्ड-खण्ड गरी मस्यौदा तयार गर्नुपर्ने असहज पद्धति अवलम्बन गर्नुपर्ने अवस्था सृजना भयो ।

समितिले संविधानसभाबाट प्राकृतिक स्रोत, आर्थिक अधिकार तथा राजस्व बाँडफाँड समितिको प्रतिवेदन मिति २०६६।१०।२१ मा संवैधानिक निकायको संरचना निर्धारण समितिको प्रतिवेदन २०६६।११।२० र अल्पसंख्यक तथा सीमान्तकृत समुदायको हक अधिकार संरक्षण समितिको प्रतिवेदन २०६६।१२।२० मा प्राप्त गरेको थियो भने अन्य ८ वटा समितिको प्रतिवेदन प्राप्त गर्न एक वर्षभन्दा बढी समय प्रतीक्षा गर्नु परेको थियो । त्यो पनि विवादित अवस्थामा नै । यस्तो कठिनाइको बाबजुद संवैधानिक समितिले मिति २०६६।११।०४ को बैठकबाट भावी संविधानको प्रारम्भिक खाका तयार गरी मिति २०६६।११।९ देखि उक्त खाकामा संविधानसभाबाट प्राप्त विषयगत समितिका प्रतिवेदनहरूमा रहेका विवाद रहित विषयवस्तुहरूलाई समावेश गरी पहिलो मस्यौदाको तयारी गर्ने कार्य औपचारिक रूपमा नै प्रारम्भ गरेको थियो ।

सहमति हुँदै गएका विषयहरूलाई सचिवालयले मस्यौदा गरी क्रमशः खाकामा समावेश गर्ने काम भइरहेको थियो । संवैधानिक समिति विवादमा नै अल्झी राखेकोले विकसित भई रहेको संविधानको मस्यौदा संविधानसभाको कार्यकालको अन्तिम समयसम्म पनि औपचारिक रूपमा समितिको बैठकमा राख्ने अवसर मिलेको थिएन । मिति २०६९ साल ज्येष्ठ २ गते तीन दलका शीर्ष नेताहरूले सबै विवादित विषयमा सहमति कायम गरेका र ज्येष्ठ १४ भित्र नै नयाँ संविधान जारी गर्ने भनी प्रतिबद्धता व्यक्त गरेको कारण सचिवालयले तयार गरेको मस्यौदा संवैधानिक समितिका सभापति श्री नीलाम्बर आचार्यसमक्ष आवश्यक पुनरावलोकनको लागि पेश गरिएको थियो । २०६९ ज्येष्ठ ६ गते एमालेका वरिष्ठ नेता मा० श्री माधवकुमार नेपालको अग्रसरतामा संविधानसभाका अध्यक्ष, संवैधानिक समितिका सभापति, एकीकृत ने.क.पा. माओवादीका अध्यक्ष श्री पुष्पकमल दाहाल प्रचण्ड, ने.का. संसदीय दलका नेता श्री रामचन्द्र पौडेल र ने.क.पा. एमालेका अध्यक्ष श्री झलनाथ खनाल सम्मिलित शीर्ष बैठकले संवैधानिक समितिका सचिव श्री टेकप्रसाद ढुङ्गानालाई भई रहेको मस्यौदा तर्जुमाकारहरूसँग बसी तर्जुमाको दृष्टिकोणबाट अन्तिम रूप दिन निर्देशन भएपछि मिति २०६९ साल ज्येष्ठ ६, ७ र ९ मा श्री नीलाम्बर आचार्च, श्री तीर्थमान शाक्य, श्री माधव पौडेल र श्री भेषराज शर्मा र संवैधानिक समितिका सचिव श्री टेकप्रसाद ढुङ्गाना समेतद्वारा मस्यौदाको दृष्टिकोणले पुनरावलोकन गरिएको थियो । उक्त मस्यौदा संविधानसभाको कार्यकालको अन्तिम दिन मिति २०६९ साल ज्येष्ठ १४ गते शीर्ष नेताहरूको निर्देशन बमोजिम मा० श्री अग्निप्रसाद खरेल, मा० श्री खिमलाल देवकोटा, मा० श्री रमेश लेखक र मा० श्री लक्ष्मणलाल कर्णले अध्ययन गर्नुभएको थियो । यो मस्यौदा नै संविधानसभाले गरेको कामको अन्तिम यथार्थ रहेकोले भावी पुस्ताको जानकारीको लागि र अब संविधान निर्माण गर्ने निकायको लागि पनि महत्वपूर्ण सामग्री हुने सक्नेभएकोले अनुसूची-६ मा जस्ताको तस्तै राखिएको छ ।

## ८.३. संविधानसभाको अन्तिम अवस्थासम्म पनि सहमति कायम हुन नसकेका ११७ विवादहरुको विवरण

नेपालको अन्तरिम संविधान, २०६३ जारी हुँदा सोको धारा ६४ ले निर्धारण गरेको संविधानसभाको दुई वर्षको कार्यकाल समाप्त हुन करिब ४ महिना बाँकी नै रहँदा अर्थात् २०६६ माघ २१ गतेभित्रै संविधानसभाका सबै एघारवटा समितिहरूले आ–आफ्नो कार्यक्षेत्रभित्र परेका विषयको अवधारणापत्र सहितको प्रारम्भिक मस्यौदा तयार पारेर संविधानसभामा पेश गरिसकेका र संविधानसभामा छलफल पनि सम्पन्न भई सकेको थियो । अधिकांश समितिका प्रतिवेदनहरु समितिको सामान्य बहुमतबाट पारित भएका थिए भने राज्यको शासकीय स्वरूप निर्धारण समितिका प्रतिवेदन सामान्य बहुमतले पनि पारित हुन सकेका थिएनन् । समितिको तहबाट नै फरक मत आएका र संविधानसभामा भएको छलफलको क्रममा विवाद उठाइएका विषयहरूको गहिरो अध्ययन गरी सबै विषयमा सहमति कायम गर्न गठित अवधारणापत्र तथा प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्ययन समितिले धेरै मतभिन्नताहरु आफैँले समाधान गरी करिब २१० वटा विवादलाई प्रश्नावली बनाई तथा सङ्घीयतासँग सम्बन्धित ७८ वटा विषयलाई प्रश्नावली नबनाई शीर्ष नेताको तहमा पेश गरी सहमति कायम गर्ने सुझाव संविधानसभाका अध्यक्षलाई दिएको थियो । विवादित विषयमध्ये १३२ वटा विवाद संविधानसभामा प्रतिनिधित्व गर्ने २७ दलका नेताको अनौपचारिक बैठकबाट र ४८ वटा विवाद संवैधानिक समिति अन्तर्गतको विवाद समाधान उपसमितिबाट सहमति कायम भएको थियो ।

२०६८ साल चैत्र २८ गते माओवादी सेनाका लडाकुहरूको समायोजन र पुनःस्थापनाको विषयसँग सम्बन्धित महत्वपूर्ण पक्षमा राजनीतिक सहमति भएपछि प्रमुख राजनीतिक शक्तिका शीर्ष नेताहरु संविधानसँग सम्बन्धित आधारभूत विषयमा कायम भएको विवादको टुङ्गो लगाउन केन्द्रित भएर क्रियाशील हुने अपेक्षा गरिएकोले दलका शीर्ष नेताहरूलाई सबै विषय छिचोलेर साङ्गोपाङ्गो सहमति कायम गर्न सरल होस् भनी संवैधानिक समितिको सचिवालयले टुङ्गो लाग्न बाँकी ११७ वटा विवादित विषयको सूची २०६९ साल वैशाख ५ गतेको संवैधानिक समितिको बैठकमा प्रस्तुत गरेको थियो । वास्तवमा संविधानसभाले औपचारिक रूपले सहमति कायम गर्न नसकेका विवादका विषय यिनै ११७ वटा थिए । विवादका विषयको सूची अनुसूची-७ मा समावेश गरिएको छ ।

## ८.४. विवादित आधारभूत सबै विषयमा अनौपचारिक राजनीतिक सहमति

२०६९ साल वैशाख २४ गतेदेखि ज्येष्ठ २ गतेको बीचमा भएका राजनीतिक वार्ताको श्रृङ्खलाबाट प्रमुख राजनीतिक शक्तिहरु ज्येष्ठ २ गते प्रधानमन्त्री निवास वालुबाटारमा संविधानसँग सम्बन्धित सबै आधारभूत विषयमा सहमतिमा पुग्न सफल भएका थिए । विवादित अवस्थामा रहेका ११७ वटा विवाद सबैलाई सहमतिमा नसमेटिएको भए पनि सङ्घीयता, व्यवस्थापिका–संसद, शासनप्रणाली, न्यायप्रणाली सम्बन्धी सबै आधारभूत विषयमा सहमति कायम गरिएको थियो ।

पाँचवटा मूल शीर्षक र २२ वटा बुँदामा विस्तारित उक्त सहमतिमा राज्य पुनर्संरचनाको सम्बन्धमा प्रदेशहरु एघारवटा हुने, हाल नामाङ्कन प्रस्ताव नगर्ने, प्रदेशहरूको सीमाङ्कन, नामाङ्कन, प्रदेशहरु जोडिने वा प्रदेशबाटै अर्को प्रदेश बन्ने वा प्रदेशको कुनै भाग अर्को प्रदेशमा जाने आदि विषयको समाधान गर्न केन्द्रीय सङ्घीय आयोगको गठन गर्ने, आयोगले गरेको सिफारिशको आधारमा अन्तिम निर्णय संसदले लिने, नामाङ्कनका सन्दर्भमा प्रदेशसभाले गरेको निर्णय अन्तिम हुने, नेपालका सबै प्रदेशहरु बहुजातीय हुने, प्रदेशहरूमा सबै जाति जनजाति, धर्म, भाषा, संस्कृतिका सबै नागरिकको राजनीतिक, आर्थिक, सामाजिक,

सांस्कृतिक अधिकार समान रहने तथा प्रत्येक नागरिकका मौलिक एवं मानव अधिकारको सम्मान तथा रक्षा गर्नु केन्द्र, प्रदेश तथा स्थानीय सरकारको दायित्व हुनेछ भन्ने व्यहोरा उल्लेख रहेको थियो ।

त्यसैगरी शासकीय स्वरूपको सम्बन्धमा "शासकीय प्रणाली मिश्रित हुने, राष्ट्रपतिको निर्वाचन कानूनमा व्यवस्था भएबमोजिम प्रत्यक्ष प्रणालीबाट हुने, प्रधानमन्त्री संसदबाट निर्वाचित हुने, प्रधानमन्त्रीले मन्त्रिपरिषद् गठन गर्ने, मन्त्रिपरिषद् तथा यसका सदस्यहरु सामूहिक तथा व्यक्तिगतरूपमा संसदप्रति उत्तरदायी हुने, शासनप्रणालीमा नियन्त्रण र सन्तुलनको व्यवस्था गरिने सहमति भएको थियो । निर्वाचनप्रणालीको बारेमा भएको सहमतिको बुंदामा संसदको निर्वाचन मिश्रित निर्वाचनप्रणालीबाट गरिने, प्रतिनिधिसभामा प्रत्यक्षबाट १७१ र समानुपातिकबाट १४० सदस्य रहने, राष्ट्रियसभामा प्रत्येक प्रदेशबाट ५/५ जनाका दरले सदस्यहरु निर्वाचित हुने, मन्त्रिपरिषद्को सिफारिशमा विभिन्न क्षेत्रका ख्यातिप्राप्त विशिष्ट व्यक्तिहरूमध्येबाट १० जना राष्ट्रपतिले मनोनित गर्ने तथा प्रदेशसभामा एक केन्द्रीय संसदीय निर्वाचनक्षेत्रलाई दुई क्षेत्रमा विभाजन गरी प्रदेशसभाका सदस्यको निर्वाचन गरिनेछ भन्ने कुरा उल्लेख थियो ।

न्यायपालिका सम्बद्ध सबै विवाद टुङ्गो लगाउदै उक्त सहमतिमा प्रधानन्यायाधीशको अध्यक्षतामा संवैधानिक अदालत गठन हुने, संवैधानिक अदालतमा दुईजना सर्वोच्च अदालतका वरिष्ठतम न्यायाधीश र दुईजना कानूनविद्हरूमध्ये सर्वोच्च अदालतको न्यायाधीश हुन योग्यता पुगेका व्यक्तिमध्येबाट सहमतिका आधारमा मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रपतिले नियुक्त गर्ने, संवैधानिक अदालतले प्रदेश-प्रदेश बीचको विवाद, प्रदेश र केन्द्र बीचको विवाद, प्रदेश र स्थानीय सरकारका बीचको विवाद हेर्ने छ । यो अदालत पाँचवर्षसम्म कायम रहनेछ । न्यायाधीश नियुक्तिको सिफारिश गर्न ५ सदस्यीय न्यायपरिषद् रहने, हाल कायम न्यायाधीशहरूले पुनर्नियुक्ति लिन नपर्ने, बाँकी कार्यकाल जति रहे पनि प्रधानन्यायाधीश हुन सक्ने कुरा समेटिएको थियो ।

## ८.५. विवाद समाधान उपसमितिले निर्माण गरेको कार्यदलले सहमति हुन बाँकी सबै ११७ विवादलाई सम्बोधन गर्ने सम्बन्धमा तयार गरेको प्रतिवेदन

सम्वत् २०६९ साल ज्येष्ठ २ गते दिउँसो प्रधानमन्त्री निवास वालुबाटारमा विवादित सबै आधारभूत विषयमा सहमति भएपछि सोही दिन साँझ संवैधानिक समिति अन्तर्गतको विवाद समाधान उपसमितिको बैठक बस्यो । उक्त बैठकमा शीर्ष नेताहरूले भएका सहमतिको संक्षिप्त विवरण मौखिक रूपमा राख्दै उहाँहरूले यो सहमतिमा उभिएर ११७ वटा सबै विवादलाई कसरी सम्बोधन गर्न सकिन्छ सोको विस्तृत प्रतिवेदन तयार गर्न र पहिलो मस्यौदा तयारीको काम थाल्न संवैधानिक समितिका सदस्यहरु रहेको सात सदस्यीय एक कार्यदल निर्माण गर्ने निर्णय भयो । उक्त निर्णयको व्यहोरा अनुसूची-८ मा राखिएको छ ।

राजनीतिक सहमतिमा उभिएर उक्त कार्यदलले ज्येष्ठ ३ गते करिब १२ घण्टाको अनवरत गृहकार्य पश्चात् सबै ११७ वटा विवादमा गरिने सहमतिको विस्तृत प्रस्ताव साँझ ७.३० बजे विवाद समाधान उपसमितिको बैठकमा प्रस्तुत गर्‍यो । राष्ट्रपति र मन्त्रिपरिषद् बीच बाँडफाँड गर्नुपर्ने कार्यकारी अधिकारको सूची, आत्मनिर्णयको अधिकार र राजनीतिक अग्राधिकार सम्बन्धी विषयलाई सम्बोधन गर्ने कुरा र संवैधानिक आयोगहरूको संख्याको बारेमा राजनीतिक तहमा केही टुङ्गो लगाउनु पर्ने विषय रहेकोले ज्येष्ठ ४ गते बस्ने उपसमितिको बैठकमा सबै विषयमा सहमति कायम गर्ने गरी उक्त दिनको बैठक राती ९ बजे सम्पन्न भएको थियो । तर उक्त सहमतिलाई औपचारिक रूपमा उपसमिति तथा संवैधानिक समितिबाट अनुमोदन गराउने सम्बन्धमा त्यसपछि कुनै पहल र निर्णय हुन सकेन । विवाद समाधान उपसमितिले निर्माण गरेको कार्यदलले सहमति हुन बाँकी सबै ११७ विवादलाई सम्बोधन गर्ने सम्बन्धमा तयार गरेको उक्त प्रस्ताव जस्ताको तस्तै अनुसूची-९ मा समावेश गरिएको छ ।

भाग

१

# निष्कर्ष

लोकतन्त्र, विधिको शासन, संविधानवाद र जनताको सहभागितालाई शासन सञ्चालनको मूल आधारको रूपमा स्वीकार गर्ने आधुनिक सभ्य राष्ट्रको लागि संविधान एउटा अपरिहार्य पूर्वशर्त नै हो । नेपालले यो अपरिहार्यतालाई स्वीकार गरिसकेको छ । प्रभावकारी र वैध संविधानको खोजीमा यो मुलुकले वि.सं २००४ सालदेखि अहिलेसम्म ६ वटा संविधान परिवर्तन गरिसकेको छ । राज्य सञ्चालनको मूल कानूनको रूपमा रहने संविधानको प्रभावकारिता र अस्तित्वको लागि जनताको स्वामित्व कायम भई रहनु र अन्तर्राष्ट्रिय मापदण्ड अनुकूल हुन अत्यन्त जरूरी पर्दछ । लोकतान्त्रिक मान्यता, संविधानवाद, विधिको शासन, मौलिक हक, स्वतन्त्र न्यायपालिका, शक्तिपृथकीकरण, राज्यशक्तिको विभाजन, संविधानको सर्वोच्चता र समावेशीताजस्ता सैद्धान्तिक आधारले संविधानलाई अन्तर्राष्ट्रिय रूपमा मान्यता प्रदान गर्न सघाउ पुऱ्याउँछन् भने जनतालाई सहभागी बनाई पारदर्शी र छलफलको विधिबाट संविधान निर्माण गर्ने प्रक्रिया अपनाइएको खण्डमा उक्त प्रक्रियाले संविधानमा जनताको स्वामित्व स्थापित भई वैधता सुनिश्चित गर्न सहयोग पुग्दछ । संविधानको दिगोपना र गतिशीलताको लागि यी दुबै सैद्धान्तिक आधार र प्रक्रियागत आधार अनिवार्य छन् ।

सैद्धान्तिक र प्रक्रियागत दुबै दृष्टिकोणले मजबुत संविधान निर्माण गर्न नै २०६४ सालमा नेपालमा संविधानसभाको निर्वाचन भएको अपेक्षा आमनागरिकले गर्नु अस्वाभाविक होइन । निकै ठूलो विश्वास र उत्साहकासाथ संविधानसभाको गठन भई यसले संविधान निर्माणको कार्यप्रारम्भ गरेको पनि थियो । यसले निर्माण गरेको जनताको सहभागिता केन्द्रित कार्यविधि र समयसीमा सहितको कार्यतालिकालाई सबैले सकारात्मक रूपमा ग्रहण गरेको अवस्था हो । संविधानसभाका विषयगत समितिहरूबाट संविधानको अवधारणा लेख्ने पहिलो ऐतिहासिक कामसम्पन्न भएकै हो । चारवर्ष लामो प्रयासको बाबजुद संविधान विना संविधानसभा नै विघटन हुन पुग्नुलाई नेपालको संवैधानिक इतिहासको एउटा दुर्भाग्यपूर्ण घटनाको रूपमा लिंदा अत्युक्ति हुनेछैन । लोकतन्त्रको सफलताको लागि लोकतान्त्रिक संस्कृति आवश्यक परेजस्तै संविधानको सफलताको लागि असल संवैधानिक संस्कृतिको जरूरत पर्दछ । कुनै देशमा लोकतन्त्रको सस्थागत विकास हुन सकेन भन्दैमा लोकतन्त्र असान्दर्भिक हुन सक्दैन । नेपालमा संविधानसभा एकपटक असफल भयो भनेर जनसहभागितामा आधारित संविधान निर्माण गर्ने विधिको औचित्य नै सकिएको निष्कर्षमा पुग्नु आवश्यक छैन । नेपालजस्तै संसारका धेरै मुलुकमा पटक-पटक लोकतन्त्र, संविधान र संविधानसभा सङ्कटमा परेका छन्, असफल भएका छन् । यसलाई पद्धति र प्रक्रियाको खराबी मान्नु औचित्यपूर्ण हुँदैन । त्यसको यथार्थ कारण पहिचान गरी सफलताको आधार तयार गर्नु नै बुद्धिमानी हुने कुरामा विवाद छैन । त्यसैले विगतको असफलताबाट पाठ सिकी संविधान निर्माणको लागि भविष्यको मार्ग कोर्नु पर्ने आवश्यकताप्रति राजनीतिक दलहरूको सजगता र सचेतता अत्यावश्यक देखिएको छ ।

संविधानविना नै संविधानसभा विघटन भएपछि राजनीतिक दलहरूले अधुरो रहेको संविधान निर्माणको प्रक्रियालाई कुन विधिबाट सम्पन्न गर्न सकिन्छ भनेर छलफलमा जुटेको त देखिन्छ तर यसको सर्वमान्य निकास अझै निस्कन सकेको छैन । २०६२ साल मार्गमा भएको बाह्रबुँदे सहमतिदेखि अन्तरिम संविधान २०६३ जारी गर्दा सम्मको सहमतिलाई आधार मान्ने हो भने संविधानसभाको विधिबाटै संविधान बनाउनु पर्ने स्थितिलाई इन्कार गर्न सकिदैन । यही यथार्थतालाई सबै राजनीतिक शक्तिले आत्मसात् गरी संविधानसभाको विधिप्रति नै प्रतिबद्धता जनाइरहेको अवस्था छ । जनसहभागितामा आधारित संविधानसभाको विधिको तुलनामा संविधान निर्माण गर्ने अरू बाटोमा धेरै प्रक्रियागत कमजोरी रहन्छन् ।

निर्णायक राजनीतिक शक्ति बीच विद्यमान गहिरो अविश्वास, अधुरो शान्तिप्रक्रिया, व्यवस्थापन गर्न चुनौतीपूर्ण ठूलो संरचनाजस्ता चुनौतीहरूको बीचमा पनि तत्कालीन संविधानसभाले महत्वपूर्ण कामहरु गरेको विद्यमान अभिलेखले प्रमाणित गरेको छ । दलीय मतभिन्नता पहिचान गरी सहमतिको निरन्तर प्रयासमा संविधानसभा नजुटेको पनि होइन । निरन्तर थपिएको कार्यकालको कारण जनताबाट गरिएको तीब्र आलोचना खेप्दै, तीन-तीन महिनामा दोहोरिने अस्तित्वको सङ्कटसँग पौठेजोरी खेल्दै विवादको दायरालाई साँघुरो पार्न संविधानसभा सक्षम बनिरहेकै थियो । संविधान निर्माण नगरी संविधानसभा विघटन हुन सक्दैन भन्ने राजनीतिक दृष्टिकोण नरहेको पनि होइन । तर अन्तिम समयसम्मको नागरिक आशा र राजनीतिक प्रतिबद्धता प्रतिकूल संविधान निर्माणको अभिभारा सम्पन्न नगरी तथा अन्य सुरक्षित विकल्पको प्रबन्ध पनि नगरी २०६९ साल ज्येष्ठ १४ गते संविधानसभा विघटन हुन पुग्यो । संविधानसभा स्वतः विघटन हुने निश्चित भएपछि नेपाल सरकार मन्त्रिपरिषद्ले २०६९ मंसिर ७ गते अर्को संविधानसभाको निर्वाचन गर्ने मिति तय गरी २०६९।२।१४ गते राती ११.३० बजे सो को वोधार्थ पत्र व्यवस्थापिका संसद सचिवालयमा पठाएको थियो भने व्यवस्थापिका संसद सचिवालयमा नेपाल सर कार मन्त्रिरिषद्बाट २०६९।२।९ गते दर्ता भएको नेपालको अन्तरिम संविधान, २०६३ तेह्रौं संशोधन २०६९ (जसले संविधानसभाको कार्यविधि थप ३ महिना बढाउन प्रस्ताव गरेको थियो) फिर्ता लिएको सम्बन्धीपत्र माननीय अर्थमन्त्री श्री वर्षमान पुनले सोही दिन राती व्यवस्थापिका संसदका महासचिवलाई लेख्नुभएको थियो उक्त दुबै पत्रका प्रतिलिपिहरू क्रमशः अनुसूची १५ र १६ मा राखिएको छ । अहिले संविधान निर्माण कसरी हुने हो, द्वन्द्व व्यवस्थापनको प्रक्रियाको भविष्य के हुने र जनप्रतिनिधि विहीन अवस्थामा विधिको शासन र उत्तरदायित्वपूर्ण राज्यसञ्चालनलाई कसरी निरन्तरता दिने भन्ने चुनौती राष्ट्रको सामु खडा भएको छ ।

संविधानसभाले अन्तिम समयसम्म गरेका कामहरूको स्वामित्व दलहरूले ग्रहण गर्ने वा नगर्ने ?, औपचारिक प्रक्रियाबाट निस्केका निष्कर्षहरूको संरक्षण र उपयोग गर्नु आवश्यक हो वा होइन ? संविधान निर्माणको बाँकी काम कसरी सम्पन्न गर्ने भन्ने सम्बन्धमा हालसम्म कुनै पनि टुङ्गो लागि सकेको छैन । यी सबै प्रश्नमा राजनीतिक दलहरु सकारात्मक सोचका साथ जनप्रतिनिधि एवं राजनीतिक दलहरूको मेहनत, राज्यको लगानी र जनहितमा भइसकेका सहमतिप्रति स्वामित्व ग्रहण गरेर उपयोग गर्ने निर्क्यौलमा पुगेको अवस्थामा निकै उपयोगी हुन सक्छ भन्ने उद्देश्यले नै यो प्रकाशनको कार्य अघि बढाइएको अवस्था यहाँनिर स्मरणीय छ ।

विघटित संविधानसभाको अभ्यासले भविष्यको लागि पक्कै पनि केही पाठहरु छोडेको छ । नेपालको संविधान निर्माण प्रक्रिया शान्तिप्रक्रियाकै निरन्तरताको एउटा कडीको रूपमा रहेको छ । शान्तिप्रक्रिया सार्थक निष्कर्षमा नपुगी संविधान निर्माण हुन सक्ने अवस्था होइन । राजनीतिक मुद्दाहरूको छिनोफानो भएर त्यसलाई संस्थागत गर्न संविधान निर्माण हुने हो । संविधान निर्माणपछि राजनीतिक मुद्दाको छलफल हुनु स्वाभाविक र उपयुक्त प्रक्रिया हुन सक्दैन । जनताको साझा दस्तावेजको रूपमा निर्माण गर्नुपर्ने संविधानको लागि विश्वासिलो राजनीतिक वातावरण र सबैले अपनत्व स्वीकार गर्ने सर्वपक्षीय सरकार

पनि अत्यावश्यक हुने रहेछ । नयाँ निर्माण हुन लागेको सङ्घीय संरचनाप्रति सबैको विश्वास र व्यापक राष्ट्रिय बहसको खाँचो पनि संविधानसभामा निरन्तर औंल्याइएको विषय हो । विगतमा संविधान निर्माणको लागि आवश्यक वातावरण तयार नभई कार्यप्रारम्भ भएको, कार्यविधि निर्माण लगायतको तयारी गर्दा–गर्दै छ महिनाको समय व्यतीत भएको, संविधानसभामा प्रतिनिधित्व रहेका दलका शीर्ष तहका नेताहरूले संविधानसभाका विषयगत समितिको नेतृत्व गर्ने र समिति तहको छलफलमा पर्याप्त समय दिन नसक्नु भएको भनी नागरिकहरूले देखाएको चासो सार्वजनिक रूपमा प्रकट भएको छ ।

शान्तिप्रक्रियाले र संविधान निर्माणले वास्तविक रूपमा कति समय लिन सक्छ भन्ने एकिन नै नहुँदै नेपालको अन्तरिम संविधानमा संविधान निर्माण गर्न २ वर्षको अवधि निश्चित हुनु दूरदर्शितापूर्ण कार्य थिएन भन्ने धारणाहरु पनि व्यक्त भएका छन् । नागरिक आक्रोश र नैराश्यताको बीचमा चारपटकसम्म संविधानसभाको अवधि थप गर्ने कार्य भएको तर संविधान निर्माणको कार्यमा अपेक्षा गरे अनुरूपको प्रगति नहुँदा संविधानसभाप्रतिको सम्मान, आस्था र विश्वास घटेको सन्देश पनि आइरहेका थिए । संविधानसभाको विधिबाट निर्माण हुने संविधानको वैधता र प्रभावकारिताको लागि नै अवलम्बन गरिएको यथार्थतालाई आत्मसात् गर्न र संविधानसभाको मर्यादा कमजोर हुन नदिनेतर्फ पर्याप्त रूपले सचेत हुन नसकेको स्थिति पनि रह्यो ।

विगतमा संविधानसभाबाट भएका उपलब्धिहरूप्रति स्वामित्व ग्रहण गर्दै रक्षा गर्ने र संविधानसभाको अभ्यासबाट सिकेका पाठहरूलाई मनन् गर्दै वर्तमान संवैधानिक र राजनीतिक गतिरोधको लोकतान्त्रिक निकास निकाल्न राजनीतिक दलहरु सक्षम भएमा अधुरो रहेको संविधान निर्माणको कार्य पूरा हुने आधार सुनिश्चित हुने विश्वास गर्न सकिन्छ । त्यस अवस्थामा यो प्रकाशन पनि सार्थक र औचित्यपूर्ण सावित हुन सक्नेछ ।

# संविधानसभाका सदस्यहरूको शपथ ग्रहणको ढाँचा

**संविधानसभा सदस्य निर्वाचन (संशोधन सहित) ऐन, २०६४**

## संविधानसभा सदस्यले लिने पद तथा गोपनीयताको शपथ

म .................................................. मुलुक र जनताप्रति पूर्ण वफादार रही सत्यनिष्ठापूर्वक प्रतिज्ञा गर्छु/ईश्वरको नाममा शपथ लिन्छु कि नेपालको राजकीयसत्ता र सार्वभौमसत्ता नेपाली जनतामा रहेको नेपालको अन्तरिम संविधान, २०६३ प्रति पूर्ण वफादार रहँदै संविधानसभाको सदस्य पदको कामकाज प्रचलित कानूनको अधीनमा रही, मुलुक र जनताको सोझो चिताई, कसैको डर नमानी, पक्षपात नगरी, पूर्वाग्रह वा खराब भावना नलिई पदीय गोपनीयता कायम राखी इमान्दारीका साथ गर्नेछु ।

मितिः ..............................          नाम, थरः ........................................

सहिः ........................................

# गणतन्त्र कार्यान्वयनको पारित प्रस्ताव

## "नेपालको अन्तरिम संविधान, २०६३ को धारा १५९ (२) बमोजिम गणतन्त्र कार्यान्वयनसम्बन्धी प्रस्ताव"

"नेपाली जनताले २००७ साल पहिलेदेखि पटक-पटक गर्दै आएका ऐतिहासिक सङ्घर्ष, क्रान्ति र जन-आन्दोलनमार्फत अभिव्यक्त जनादेशको सम्मान गर्दै, प्राप्त उपलब्धिहरूलाई संस्थागत गर्न, राजनीतिक दलहरूका बीच भएको सहमति तथा नेपालको अन्तरिम संविधान, २०६३ को धारा १५९ (२) अनुरूप इतिहासले सुम्पेको अभिभारालाई आत्मसात् गर्दै नेपाल सरकार, मन्त्रिपरिषद् गणतन्त्रको कार्यान्वयनका लागि संविधानसभाको पहिलो बैठकमा निम्न बमोजिमको प्रस्ताव प्रस्तुत गर्दछ :-

- सार्वभौमसत्ता र राजकीयसत्ता नेपाली जनतामा निहित रही स्वतन्त्र, अविभाज्य, सार्वभौमसत्ता सम्पन्न, धर्मनिरपेक्ष, समावेशी नेपाल आजैका मितिदेखि एक सङ्घीय लोकतान्त्रिक गणतन्त्रमा विधिवत् परिणत भएको संविधानसभाको यो पहिलो बैठक घोषणा गर्दछ ।
- मुलुकमा विधिवत् लोकतान्त्रिक गणतन्त्र कार्यान्वयन भएकोले यससँग बाझिने सबै संवैधानिक प्रावधान, कानून र प्रशासनिक व्यवस्था आजैका मितिदेखि बाझिएको हदसम्म खारेज भएको मानिने छ । यो घोषणा पारित हुनुभन्दा तत्काल अघि प्रचलित कानून, परम्परा, रीति, सामाजिक तथा सांस्कृतिक व्यवहार एवं अभ्यासमा रहेका तत्कालीन राजा र निजका परिवारका सदस्यलाई आम नेपाली नागरिकलाई भन्दा भिन्न रूपमा प्राप्त सम्पूर्ण अधिकार, सुविधा, हैसियत तथा उपाधि स्वतः अन्त्य हुने छ ।
- नेपाल सङ्घीय लोकतान्त्रिक गणतन्त्रमा विधिवत घोषित भएको अवस्थामा राष्ट्रपतिको व्यवस्था लगायतका अत्यावश्यक प्रावधानलाई संवैधानिक रूपमा संस्थागत गर्न नेपालको अन्तरिम संविधान, २०६३ मा आवश्यक संशोधन विधेयक पेश गरिएको छ । राष्ट्रपतिको निर्वाचन प्रणाली लगायत अन्य आवश्यक विषयमा संविधान संशोधन सम्बन्धी अर्को विधेयक पेश गरिने छ ।
- नेपाल सङ्घीय लोकतान्त्रिक गणतन्त्रमा विधिवत प्रवेश गरी नयां युग आरम्भ भएको ऐतिहासिक अवसरमा यो बैठक सम्पूर्ण ज्ञात-अज्ञात शहीदहरूप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछ । यस अवसरमा सम्पूर्ण नेपाली जनतालाई हार्दिक बधाई ज्ञापन गर्दै आज र अब उप्रान्त प्रत्येक सालको जेठ १५ गते गणतन्त्र दिवसलाई हर्षोल्लासपूर्ण वातावरणमा व्यापक रूपमा विविध कार्यक्रमहरूका साथ मनाउन देशभित्र र बाहिर रहनुभएका सम्पूर्ण नेपालीहरूमा यो बैठक हार्दिक आव्हान गर्दछ ।
- नेपालमा लोकतान्त्रिक गणतन्त्र कार्यान्वयन भइसकेको सन्दर्भमा नारायणहिटी दरबार परिसर तथा यस भित्र रहेका सम्पूर्ण सम्पदालाई ऐतिहासिक संग्रहालय लगायत राष्ट्रिय हितमा उपयोग गर्न नेपाल सरकारले आवश्यक व्यवस्था मिलाउने छ ।"

मिति २०६५।०२।१५

*उक्त प्रस्तावको पक्षमा जम्मा ५६० (पाँचसय साठी) मत र विपक्षमा जम्मा ४ (चार) मत परेको थियो ।*

# संविधानसभा बैठकको अन्तरिम कार्यविधि, २०६५

नेपालको अन्तरिम संविधान, २०६३ को धारा ७८ बमोजिम संविधानसभाको कार्यसञ्चालन गर्न, बैठकको सुव्यवस्था कायम राख्न र अन्य कुरा नियमित गर्नको लागि नियमावली निर्माण नभएसम्मको अवधिको लागि संविधानसभाले पहिलो बैठकबाट यो अन्तरिम कार्यविधि बनाएको छ ।

१. **संक्षिप्त नाम र प्रारम्भः** (१) यो कार्यविधिको नाम "संविधानसभा बैठकको अन्तरिम कार्यविधि, २०६५" रहेकोछ ।

(२) यो कार्यविधि तुरून्त प्रारम्भ हुनेछ ।

२. **परिभाषाः** विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस कार्यविधिमा,-

(क) "अध्यक्ष" भन्नाले संविधानसभाको अध्यक्ष सम्झनु पर्छ र सो शब्दले अध्यक्षको निर्वाचन नभएसम्मको लागि संविधानसभाको बैठकको अध्यक्षता गर्ने संविधानसभाको ज्येष्ठ सदस्य समेतलाई जनाउँछ ।

(ख) "बैठक" भन्नाले संविधानसभाको बैठक सम्झनु पर्छ ।

(ग) "महासचिव" भन्नाले संविधानसभाको महासचिवको रूपमा कार्य गर्ने व्यवस्थापिका-संसदको महासचिव सम्झनुपर्छ र सो शब्दले महासचिव अनुपस्थित रहेको अवस्थामा महासचिवको रूपमा काम गर्न अध्यक्षले तोकेको व्यक्ति समेतलाई जनाउँछ ।

(घ) "संविधान" भन्नाले नेपालको अन्तरिम संविधान, २०६३ सम्झनु पर्छ ।

(ङ) "सदस्य" भन्नाले संविधानसभाको सदस्य सम्झनु पर्छ ।

(च) "हाता" भन्नाले सविधानसभाको बैठककक्ष, उपकक्ष, दीर्घासहित भवनको कम्पाउण्ड लगायत सम्पूर्ण भाग सम्झनु पर्छ र सो शब्दले बैठक सञ्चालन गरिने भवनसँग जोडिएको चोक र समय-समयमा अध्यक्षद्वारा तोकिएको ठाउँसमेतलाई जनाउँछ ।

३. **संविधानसभाको बैठकः** संविधानसभाका आगामी बैठकहरू आवश्यकता अनुसार संविधानसभाका अध्यक्षले तोकेका मिति, समय र स्थानमा बस्नेछन् । सो को जानकारी अध्यक्षद्धारा प्रत्येक बैठकको अन्तमा सदस्यहरूलाई दिइनेछ ।

४. **सदस्यहरूको उपस्थिति र बस्ने क्रमः** (१) बैठकमा आसनग्रहण गर्नुअघि प्रत्येक सदस्यले बैठककक्ष बाहिर राखिएको पुस्तिकामा उपस्थिति जनाउनु पर्नेछ ।

(२) प्रत्येक सदस्यले अध्यक्षद्वारा निर्धारित क्रम र स्थानमा आ-आफ्नो आसनग्रहण गर्नु पर्नेछ ।

(३) अपाङ्ग सदस्यको हकमा अध्यक्षले निश्चित स्थान र क्रम तोकी निजको साथमा एकजना सहयोगी व्यक्तिसमेतलाई बस्ने अनुमति दिन सक्नेछ ।

(४) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि संविधानसभाका सदस्य नरहेका मन्त्रिपरिषद्का सदस्यहरूलाई अध्यक्षले निर्धारित क्रम र स्थानमा बस्ने अनुमति दिन सक्नेछ ।

५. **बैठकको अध्यक्षताः** (१) संविधानको धारा ७१ बमोजिम संविधानसभाका अध्यक्ष र उपाध्यक्षको निर्वाचन सम्पन्न नभएसम्म बैठकको अध्यक्षता ज्येष्ठ सदस्यले गर्नेछ ।

(२) अध्यक्षको अनुपस्थितिमा बैठकको अध्यक्षता गर्ने अध्यक्षले पहिलो बैठकबाट एघारजना सदस्यहरूलाई मनोनित गर्न सक्नेछ ।

(३) उपदफा (२) बमोजिम अध्यक्षता गरिरहेको सदस्यले त्यसरी अध्यक्षता गरिरहेको बैठकमा अध्यक्षले प्रयोग गर्न पाउने सबै अधिकार प्रयोग गर्न सक्नेछ ।

६. **अध्यक्षको निर्वाचनः** (१) संविधानसभाको अध्यक्षको निर्वाचन तोकिएको दिन हुनेछ र त्यसको सूचना महासचिवले प्रकाशित गर्नेछ ।

(२) अध्यक्षको निर्वाचनको लागि तोकिएको दिनको निर्धारित समयभित्र कुनै सदस्यले कुनै अर्को सदस्यलाई अध्यक्ष पदमा निर्वाचित गरियोस् भन्ने प्रस्तावमा एकजना सदस्यको समर्थन सहित सो को सूचना महासचिवलाई दिन सक्नेछ । त्यस्तो सूचनाको साथमा "निर्वाचित भएमा अध्यक्षको कार्य गर्न राजी छु" भन्ने प्रस्तावित सदस्यको मञ्जुरी पनि पेश गर्नु पर्नेछ ।

(३) उपदफा (२) बमोजिमको प्रस्तावको सूचना प्रस्तावक सदस्यले बैठकमा प्रस्तुत गरेपछि समर्थक सदस्यले समर्थन गर्नेछ । त्यस्तो प्रस्तावको सूचना एउटा मात्र प्राप्त भएमा समर्थक सदस्यले बोलिसकेपछि अध्यक्षता गर्ने व्यक्तिले प्रस्तावित सदस्य अध्यक्ष पदमा निर्विरोध निर्वाचित भएको घोषणा गर्नेछ ।

(४) उपदफा (२) बमोजिमको समयमा एकभन्दा बढी प्रस्तावको सूचना प्राप्त भएकोमा दर्ता क्रमानुसार प्रस्तावक सदस्यहरूले प्रस्ताव प्रस्तुत गर्ने र समर्थक सदस्यहरूले समर्थन गर्ने क्रम क्रमशः सकिएपछि सबै प्रस्तावहरूमाथि संक्षिप्त छलफल हुनेछ र त्यसपछि अध्यक्षता गर्ने व्यक्तिले प्रस्तावहरूलाई क्रमशः निर्णयार्थ प्रस्तुत गर्नेछ ।

(५) एकभन्दा बढी प्रस्तावको सूचना प्राप्त भई उपदफा (४) बमोजिम निर्णयार्थ प्रस्तुत भएकोमा जुन प्रस्ताव संविधानसभाको सम्पूर्ण सदस्यहरूको बहुमतबाट पारित हुन्छ, सो प्रस्तावमा प्रस्तावित सदस्य अध्यक्ष पदमा निर्वाचित भएको मानिनेछ ।

(६) एकभन्दा बढी प्रस्तावको सूचना प्राप्त भई निर्णयार्थ प्रस्तुत गर्दा मतदानको विधिद्वारा एकै पटक निर्णयार्थ प्रस्तुत नगरी क्रमशः प्रस्तुत गरिएकोमा कुनै प्रस्ताव संविधानसभाको सम्पूर्ण सदस्यहरूको बहुमतबाट पारित भएमा सो प्रस्तावमा प्रस्तावित सदस्य अध्यक्ष पदमा निर्वाचित भएको मानिनेछ र बाँकी प्रस्तावलाई निर्णयार्थ प्रस्तुत गर्नुपर्ने छैन ।

(७) पहिलो बैठकको अध्यक्षता गर्ने सदस्य अध्यक्ष पदमा प्रस्तावित भएमा अध्यक्ष पदमा प्रस्तावित नभएको त्यस पछिको ज्येष्ठ सदस्यले सो दिनको बैठकको अध्यक्षता गर्नेछ ।

(८) अध्यक्षको पद कुनै कारणले रिक्त भएमा यही दफाको कार्यविधि अनुरूप निर्वाचन गरी पूर्ति गरिनेछ ।

(९) अध्यक्ष पदमा निर्वाचित सदस्यले बैठक समक्ष अनुसूची-१ बमोजिम आफ्नो पदको शपथ ग्रहण गरिसके पछि अध्यक्षको आसनग्रहण गर्नेछ ।

७. **उपाध्यक्षको निर्वाचनः** (१) उपाध्यक्षको निर्वाचन अध्यक्षले तोकेको दिन हुनेछ र त्यसको सूचना महासचिवले प्रकाशित गर्नेछ ।

(२) उपाध्यक्षको निर्वाचनमा पनि दफा ६ मा उल्लिखित अध्यक्षको निर्वाचनको लागि निर्धारित प्रक्रिया अपनाइनेछ ।

(३) उपाध्यक्षको पद कुनै कारणले रिक्त भएमा यही दफाको कार्यविधि अनुरूप निर्वाचन गरी पूर्ति गरिनेछ ।

(४) उपाध्यक्ष पदमा निर्वाचित सदस्यले अध्यक्षसमक्ष अनुसूची-२ बमोजिम आफ्नो पदको शपथ ग्रहण गर्नुपर्नेछ ।

८. **बैठकमा सदस्यले पालना गर्नुपर्ने कुराहरूः** बैठकमा सदस्यहरूले देहायका कुराहरू पालना गर्नु पर्नेछ :-

(क) अध्यक्ष बैठककक्षमा प्रवेश गर्दा सबैले सम्मान प्रकट गर्न उठ्नु पर्नेछ ।

(ख) अध्यक्षले बैठक समक्ष सम्मान प्रकट गरी आफ्नो आशन ग्रहण गर्नुपर्नेछ ।

(ग) बैठकमा बोल्न चाहने सदस्यले अध्यक्षको अनुमति लिएरमात्र बोल्नु पर्नेछ ।

(घ) बैठकमा भाग लिने सदस्यले बोल्दा अध्यक्षलाई सम्बोधन गरेर बोल्नु पर्नेछ र अध्यक्षले अन्यथा आदेश दिएमा बाहेक उभिएर बोल्नु पर्नेछ ।

(ङ) कुनै सदस्यले बोलिरहेको समयमा अशान्ति गर्न वा बैठकको मर्यादा भङ्ग हुने वा अव्यवस्था उत्पन्न हुने कुनै काम गर्नु हुँदैन ।

९. **छलफलमा भाग लिने सदस्यले पालना गर्नुपर्ने कुराहरूः** बैठकमा हुने छलफलमा भाग लिने सदस्यले देहायका कुराहरू पालना गर्नु पर्नेछ :-

(क) अध्यक्षको ध्यानाकर्षण गर्नको निमित्त उठ्नु पर्नेछ र अध्यक्षले निजको नाम बोलाएपछि वा इशारा गरेपछि मात्र बोल्नु पर्नेछ ।

(ख) अध्यक्षको आचरण वा निर्णयको आलोचना गर्नु हुँदैन ।

(ग) संविधानको धारा ६० बमोजिम बहसमा बन्देज लगाएका विषयमा बोल्नु हुँदैन ।

(घ) व्यक्तिगत आक्षेप लगाउनु हुँदैन ।

(ङ) अशिष्ट, अश्लिल, अपमानजनक वा कुनै आपत्तिजनक शब्द बोल्नु हुँदैन ।

(च) बोल्न पाउने अधिकारलाई बैठकको कार्यमा बाधा पार्ने मनसायले दुरूपयोग गर्नु हुँदैन ।

१०. **बैठकमा सुव्यवस्था कायम राख्ने अध्यक्षको विशेष अधिकारः** (१) बैठकमा अभद्र व्यवहार गर्ने वा दफा ८ र ९ मा उल्लिखित कुराहरू उल्लङ्घन गर्ने सदस्यलाई आफ्नो व्यवहार नियन्त्रण गर्न अध्यक्षले चेतावनी दिन सक्नेछ । अध्यक्षबाट त्यस्तो चेतावनी पाएपछि सम्बन्धित सदस्यले आफ्नो व्यवहार नियन्त्रण गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम दिएको आदेश पालना नगर्ने सदस्यलाई अध्यक्षले बैठककक्षबाट बाहिर जान आदेश दिन सक्नेछ । यस्तो आदेश पाएपछि उक्त सदस्य तुरून्त बैठककक्ष बाहिर जानु पर्नेछ र सो दिनको बाँकी अवधिसम्म बैठकमा उपस्थित हुन पाउने छैन ।

(३) उपदफा (१) बमोजिम दिएको आदेश पालना नगरी बैठककक्षबाट तुरून्त बाहिर नगएमा अध्यक्षले निजलाई मर्यादापालकको मद्दत लिई बैठककक्ष बाहिर निकाल्न सक्नेछ । त्यसरी निष्काशित सदस्यले त्यसपछिको तीनवटा बैठकमा भाग लिन पाउने छैन

(४) संविधानसभाको बैठकस्थल र सोको हातामा सुव्यवस्था कायम राख्ने तथा प्रवेश नियमित गर्ने अधिकार अध्यक्षलाई हुनेछ । यस प्रयोजनको लागि अध्यक्षले दिएको आदेश पालना गर्नु सम्बन्धित सबैको कर्तव्य हुनेछ ।

११. **प्रस्ताव प्रस्तुत गर्न सकिनेः** (१) संविधानसभाको बैठकमा अध्यक्षको अनुमति लिएर गणतन्त्रको कार्यान्वयन वा संविधानसभाको जिम्मेवारी भित्रको कुनै पनि विषयसँग सम्बन्धित प्रस्ताव प्रस्तुत गर्न सकिनेछ ।

(२) प्रस्ताव पेश गर्न चाहने सदस्यले सो कुराको लिखित सूचना बैठक शुरू हुनुभन्दा कम्तिमा दुईघण्टा अगावै महासचिवलाई दिनुपर्ने छ ।

(३) उपदफा (२) बमोजिम पेश भएको प्रस्ताव बैठकमा छलफल गर्नुपर्ने प्रकृतिको देखिएमा अध्यक्षले संविधानसभामा प्रतिनिधित्व भएका राजनीतिक दलका संसदीय दलका सम्बन्धित पदाधिकारीसँग परामर्श गरी उक्त प्रस्तावलाई स्वीकृति दिनेछ ।

तर सरकारको तर्फबाट प्रस्तुत हुने प्रस्तावका हकमा यो उपदफा बमोजिमको प्रक्रिया अपनाउनु अनिवार्य हुने छैन ।

(४) उपदफा (३) बमोजिम स्वीकृत भएको प्रस्तावमा दलीय आधारमा छलफल गर्ने गरी अध्यक्षले समय निर्धारण गर्न सक्नेछ ।

(५) छलफलको प्रारम्भमा अध्यक्षले प्रस्तावक सदस्यको नाम लिएपछि प्रस्तावक सदस्यले संक्षिप्त मन्तव्य दिनेछ । त्यसपछि अध्यक्षले छलफलमा भाग लिने अन्य सदस्यहरूलाई समय दिनेछ ।

(६) छलफल समाप्त भएपछि अध्यक्षले उक्त प्रस्तावलाई निर्णयार्थ बैठक समक्ष प्रस्तुत गर्नुपर्नेछ ।

१२. **छलफल र निर्णय गर्ने तरिकाः** (१) प्रस्ताव विना बैठकमा कुनै कुरा माथि छलफल गर्न सकिने छैन ।

(२) बैठकमा पेश हुने प्रस्तावमा अध्यक्षको स्वीकृति प्राप्त भएको हुनु पर्नेछ । प्रस्तावको मूल भावनामा असर नपर्ने गरी अध्यक्षले प्रस्तावमा आवश्यक संशोधन गर्न सक्नेछ ।

(३) बैठकमा विचाराधीन रहेको प्रस्तावलाई अध्यक्षले निर्णयार्थ प्रस्तुत गर्दा प्रश्नको रूपमा पेश गर्नु पर्नेछ ।

(४) प्रस्तावको प्रकृति र गम्भीरतालाई दृष्टिगत गरी प्रस्तावउपर निर्णय गर्दा अध्यक्षले आवश्यकता अनुसार ध्वनि मत वा मतविभाजनमध्ये कुनै विधि अपनाउन सक्नेछ ।

१३. **नियमापत्तिः** (१) बैठकमा तत्काल विचाराधीन रहेको कुनै कुरामा कुनै सदस्यलाई यस कार्यविधिको कुनै नियमको उल्लङ्घन भएको छ भन्ने लागेमा जुन नियम उल्लङ्घन भएको हो सो खुलाई नियमापत्ति उठाउन सक्नेछ । नियमापत्ति उठाउने सदस्यले अध्यक्षबाट स्वीकृतिसूचक अभिव्यक्ति वा इशारा पाएपछि बोलिरहेको सदस्यले बोल्न बन्द गर्नु पर्नेछ र नियमापत्ति उठाउने सदस्यले आफ्नो कुरा र आधार स्पष्ट गरी नियमापत्तिसम्बन्धी कुरामात्र बोल्न पाउनेछ । नियमापत्ति उठाइसकेपछि निजले आफ्नो स्थानग्रहण गर्नु पर्नेछ ।

(२) बैठकमा उठाइएको नियमापत्तिको निर्णय अध्यक्षले गर्नेछ र निजको निर्णय अन्तिम हुनेछ ।

१४. संविधानसभाले व्यवस्थापिका-संसदको हैसियतमा काम गर्ने : (१) संविधानसभाले संविधान बमोजिम व्यवस्थापिका-संसदले गर्ने भनी तोकिएका प्रधानमन्त्रीको नियुक्ति, नेपाल सरकारको नीति तथा कार्यक्रम पारित गर्ने, राजस्व र व्ययको अनुमान पारित गर्ने, विधेयक पारित गर्ने लगायतका सम्पूर्ण कार्यसम्पादन गर्नेछ ।

(२) उपदफा (१) बमोजिम संविधानसभाले व्यवस्थापिका-संसदको हैसियतमा काम गर्नु परेको अवस्थामा सो प्रयोजनको लागि बैठक बस्ने मिति, स्थान र समय सहितको पूर्वसूचना अध्यक्षले सबै सदस्यहरूलाई दिनुपर्नेछ ।

(३) संविधानसभाको कार्यविधि नियमावली पारित नभएसम्म उपदफा (१) बमोजिम संविधानसभाले व्यवस्थापिका–संसदको हैसियतमा कार्यसम्पादन गर्दा व्यवस्थापिका–संसद नियमावली, २०६३ मा निर्धारित कार्यविधि अवलम्बन गर्नेछ ।

१५. **कार्यव्यवस्था परामर्श समितिको गठनः** (१) संविधानसभाको बैठकमा पेश हुने विषयहरूको प्राथमिकता तथा समयावधिको निर्धारण लगायत बैठकलाई सुव्यवस्थित ढङ्गले सञ्चालन गर्ने सम्बन्धमा र अध्यक्षले आवश्यक ठहऱ्याएको अन्य विषयमा परामर्श दिन संविधानसभाका अध्यक्षको अध्यक्षतामा संविधानसभामा प्रतिनिधित्व गर्ने सम्पूर्ण राजनीतिक दलका सदस्यहरू समावेश हुने गरी बढीमा उनान्चासजना सदस्य रहेको एक कार्यव्यवस्था परामर्श समिति गठन गर्न सकिनेछ ।

(२) संविधानसभाका उपाध्यक्ष र कानून, न्याय तथा संसदीय व्यवस्थामन्त्री समितिका क्रमशः पदेन उपाध्यक्ष र सदस्य हुनेछन ।

(३) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि अध्यक्षलाई उपयुक्त लागेको संविधानसभाको कुनै सदस्यलाई कार्यव्यवस्था परामर्श समितिको बैठकमा आमन्त्रित सदस्यको रूपमा आमन्त्रण गर्न सक्नेछ ।

१६. **संविधानसभाको सचिवालयः** (१) संविधानको धारा ६१ बमोजिम स्थापित व्यवस्थापिका–संसद सचिवालयले नै संविधानसभा सचिवालयको रूपमा काम गर्नेछ ।

(२) व्यवस्थापिका–संसद सचिवालयमा कार्यरत पदाधिकारी र कर्मचारीहरू संविधानसभा सचिवालयका पदाधिकारी र कर्मचारी मानिनेछन् ।

(३) संविधानसभा सचिवालयको कामलाई प्रभावकारी र व्यवस्थित रूपमा सम्पादन गर्न आवश्यक थप कर्मचारी नेपाल सरकारले काजमा उपलब्ध गराउनेछ ।

(४) संविधानसभा सचिवालयले कार्यव्यवस्था परामर्श समितिको निर्णयानुसार प्रचलित कानूनबमोजिम आवश्यक विशेषज्ञहरूको सहयोग प्राप्त गर्न सक्नेछ ।

(५) सचिवालयको सञ्चालनसम्बन्धी अन्य व्यवस्था प्रचलित कानूनबमोजिम हुनेछ ।

१७. **संविधानसभा दलको कार्यालयः** (१) संविधानसभामा प्रतिनिधित्व भएका सबै राजनीतिक दलको संविधानसभा दलको कार्यालय सिंहदरबारस्थित संविधानसभा सचिवालय परिसरमा रहनेछ ।

(२) व्यवस्थापिका–संसदमा प्रतिनिधित्व भई व्यवस्थापिका–संसद दलको कार्यालय रहेका राजनीतिक दलहरूको हकमा सोही कार्यालयलाई सम्बन्धित दलले आफ्नो संविधानसभा दलको कार्यालयको रूपमा सञ्चालन गर्न सक्नेछ ।

(३) यस कार्यविधि बमोजिम सदस्यहरूलाई उपलब्ध गराउनुपर्ने कागजपत्र एवं विवरणहरू प्रत्येक सदस्यसँग सम्बन्धित संविधानसभा दलको कार्यालयमा राखिएको निजको नाम उल्लेख भएको पिजनहोलमा अध्यक्षद्वारा निर्देशित तरिकाले राख्ने व्यवस्था सचिवालयले मिलाउनुपर्नेछ । यसरी राखिएकोमा उल्लिखित कागजपत्र एवं विवरणहरू सम्बन्धित सदस्यले प्राप्त गरेको मानिनेछ ।

तर स्वतन्त्र सदस्यहरूको पिजनहोल अध्यक्षद्वारा निर्धारित सचिवालयको परिसर भित्रको स्थानमा रहनेछ । सो को जानकारी सम्बन्धित सदस्यलाई गराइनेछ ।

१८. **बैठकको कार्यसूची र कारवाहीको विवरणः** (१) संविधानसभाको प्रत्येक बैठकमा प्रस्तुत हुने विषयहरू समावेश भएको कार्यसूची बैठक बस्नुभन्दा अगावै महासचिवले तयार गरी त्यसको एक प्रति प्रत्येक सदस्यलाई उपलब्ध गराउनु पर्नेछ ।

(२) सचिवालयले संविधानसभाको प्रत्येक बैठकमा भएको सम्पूर्ण कारवाहीको विवरण रेकर्ड गर्ने प्रबन्ध मिलाई सो को संक्षिप्त विवरण तयार गरी एक प्रति प्रत्येक सदस्यलाई वितरण गर्नुपर्नेछ ।

(३) उपदफा (१) र (२) बमोजिम तयार भएको बैठकको कार्यसूची र कारवाहीको संक्षिप्त विवरण सचिवालयको सञ्चारकक्षमार्फत नियमित रूपमा आमसञ्चारका माध्यमहरूलाई समेत जानकारी गराउनु पर्नेछ ।

१९. **बाधा अड्काउ फुकाउने:** यो कार्यविधि बमोजिम कार्यसञ्चालन गर्दा कुनै बाधा अड्काउ परेमा अध्यक्षले कार्यव्यवस्था परामर्श समितिको परामर्शमा आवश्यक र उपयुक्त व्यवस्था गरी त्यस्तो बाधा अड्काउ फुकाउन सक्नेछ ।

अनुसूची-३(१)

(नियम ६ सँग सम्बन्धित)

## संविधानसभाको अध्यक्ष पदको शपथ

म..................................मुलुक र जनताप्रति पूर्ण वफादार रही सत्यनिष्ठापूर्वक प्रतिज्ञा गर्छु/ईश्वरको नाममा शपथ लिन्छु कि नेपालको राजकीयसत्ता र सार्वभौमसत्ता नेपाली जनतामा रहेको नेपालको अन्तरिम संविधान, २०६३ प्रति पूर्ण वफादार रहँदै संविधानसभाको अध्यक्ष पदको कामकाज प्रचलित कानूनको अधीनमा रही, मुलुक र जनताको सोझो चिताई, कसैको डर नमानी, पक्षपात नगरी, पूर्वाग्रह वा खराब भावना नलिई पदीय गोपनीयता कायम राखी इमान्दारीका साथ गर्नेछु ।

मितिः ..........................................        नाम, थरः ...........................................................

सहिः ...........................................................

(नियम ७ सँग सम्बन्धित)

## संविधानसभाको उपाध्यक्ष पदको शपथ

म..............................मुलुक र जनताप्रति पूर्ण वफादार रही सत्यनिष्ठापूर्वक प्रतिज्ञा गर्छु/ईश्वरको नाममा शपथ लिन्छु कि नेपालको राजकीयसत्ता र सार्वभौमसत्ता नेपाली जनतामा रहेको नेपालको अन्तरिम संविधान, २०६३ प्रति पूर्ण वफादार रहँदै संविधानसभाको उपाध्यक्ष पदको कामकाज प्रचलित कानूनको अधीनमा रही, मुलुक र जनताको सोझो चिताई, कसैको डर नमानी, पक्षपात नगरी, पूर्वाग्रह वा खराब भावना नलिई पदीय गोपनीयता कायम राखी इमान्दारीका साथ गर्नेछु ।

मितिः .................................... नाम, थरः ..................................................

सहिः ..................................................

# विषयगत समितिहरुबाट जनताको रायसुझाव सङ्कलनको लागि आव्हान गरिएको सूचनाको नमूना

## संविधानसभा
## संवैधानिक निकायको संरचना निर्धारण समितिको अनुरोध

आफ्ना लागि आफैले संविधान निर्माण गर्ने नेपाली जनताको चाहना पूरा गर्ने क्रममा संविधानसभा कार्यरत रहेको सर्वविदितै छ । संविधानसभा नियमावली, २०६५ को नियम ६६ बमोजिम गठित यस संवैधानिक निकायको संरचना निर्धारण समितिको मिति २०६५/९/२४ गते बसेको बैठकले भावी संविधानमा रहने देहायका विषयहरूमा आफूले अवधारणा पत्र तयार गर्नुपर्ने ठहर गरेको परिप्रेक्ष्यमा ती विषयहरूमा समेटिनु पर्ने अवधारणा र विषयवस्तुको बारेमा आफूलाई लागेको सुझाव वा सल्लाह यस समितिलाई उपलब्ध गराई संविधान निर्माण प्रक्रियामा सहभागि भईदिनु हुन संवैधानिक निकायको संरचना निर्धारण समिति स्वदेश तथा विदेशमा रहेका समस्त नेपाली नागरिक, राजनीतिक दल, नागरिक समाज एवं विभिन्न सङ्घ संस्थाहरूसँग हार्दिक अनुरोध गर्दछ । साथै यस सम्बन्धी कुनै सामाग्री, अन्तरक्रिया वा गोष्ठीबाट निस्केका निष्कर्षहरू वा कुनै प्रकाशन भए सो समेत समितिलाई उपलब्ध गराई समितिको कार्यमा सहयोग गरिदिन सादर अनुरोध गरिन्छ ।

संवैधानिक निकायको संरचना निर्धारण समितिले अवधारणापत्र तयार गर्ने विषयहरू

- शासन सञ्चालनमा आवश्यक पर्ने सवैधानिक अङ्गको पहिचान र तीनको स्वरूप निर्धारण
- संवैधानिक अङ्गहरूको गठन, काम, कर्तव्य तथा अधिकार
- संवैधानिक अङ्गहरूको विभिन्न तहका सरकारहरूसँगको सम्बन्ध
- समितिको कार्यक्षेत्रसँग सम्बन्धित अन्य आवश्यक कुराहरू

सुझाव पठाउने ठेगाना
**संवैधानिक निकायको संरचना निर्धारण समितिको सचिवालय**
संसदभवन, सिंहदरबार ।
फोन नं.: ०१-४२११८१२, ०१-४१०४०१४
टोल फ्रि नं.: १०६०-०१-२२३४४
फ्याक्सः ४२००१४१
ईमेलः cbody_committee@yahoo.com,
cbody_committee@can.gov.np

**पुनश्चः** संविधानसभाको कार्यतालिका अनुसार मिति २०६५/११/१५ सम्ममा अवधारणापत्र तयार गरी सक्नुपर्ने भएकोले सो समयावधिलाई मध्यनजर गरी सुझाव कुनै पनि माध्यमबाट सिधै समितिको सचिवालयमा वा सम्बन्धित जिल्ला प्रशासन कार्यालय वा स्थानिय गा.वि.स. वा नगरपालिका मार्फत पठाउन सकिने व्यहोरा समेत अनुरोध छ ।

# जनताको रायसुझाव सङ्कलन कार्यसम्बन्धी तथ्याङ्कगत विवरण

| टोली नं | जिल्ला | जि.कार्यक्रम संख्या | सदस्य संख्या | कर्मचारी संख्या | | जम्मा कर्मचारी संख्या | जम्मा कार्यक्रम संख्या |
|---|---|---|---|---|---|---|---|
| | | | | केन्द्र | स्थानीय | | |
| १ | झापा | ५५ | | | | ० | |
| | इलाम | ५५ | २१ | ४ | | ४ | ११० |
| २ | ताप्लेजुङ | २३ | | | | ० | |
| | पाँचथर | २७ | १३ | ३ | | ३ | ५० |
| ३ | मोरङ | ५० | | | | ० | |
| | भोजपुर | २२ | १३ | ३ | २८ | ३१ | ७२ |
| ४ | सुनसरी | ७ | | | | ० | |
| | धनकुटा | १३ | १६ | ५ | ३० | ३५ | २० |
| ५ | संखुवासभा | २२ | | | | ० | |
| | तेह्रथुम | १२ | १४ | ४ | | ४ | ३४ |
| ६ | ओखलढुङ्गा | १६ | ५ | ४ | ८ | १२ | १६ |
| ७ | सोलुखुम्बु | २८ | ८ | ३ | १० | १३ | २८ |
| ८ | सप्तरी | २४ | | | | ० | |
| | खोटाङ् | २२ | १६ | ४ | ११ | १५ | ४६ |
| ९ | सिराहा | ३५ | | | | ० | |
| | उदयपुर | १५ | २२ | ३ | ११ | १४ | ५० |
| १० | दोलखा | २० | | | | ० | |
| | रामेछाप | ३४ | १० | ४ | १६ | २० | ५४ |
| ११ | धनुषा | १०८ | | | | ० | |
| | महोत्तरी | ७८ | २५ | ५ | १२ | १७ | १८६ |
| १२ | बारा | ८ | | | | ० | |
| | पर्सा | ७ | | | | ० | |
| | रौतहट | ७ | २२ | ४ | १२ | १६ | २२ |
| १३ | सर्लाही | ० | | | | ० | |
| | सिन्धुली | ५४ | १९ | ४ | ३३ | ३७ | ५४ |

| टोली नं | जिल्ला | जि.कार्यक्रम संख्या | सदस्य संख्या | कर्मचारी संख्या | | जम्मा कर्मचारी संख्या | जम्मा कार्यक्रम संख्या |
|---|---|---|---|---|---|---|---|
| | | | | केन्द्र | स्थानीय | | |
| १४ | चितवन | १९ | | | | ० | |
| | मकवानपुर | २४ | १४ | ५ | २४ | २९ | ४३ |
| १५ | काठमाडौं | ५९ | १६ | २५ | १७ | ४२ | |
| | भक्तपुर | १९ | ७ | ९ | | ९ | |
| | ललितपुर | २२ | १० | ७ | ५ | १२ | १०० |
| १६ | नुवाकोट | १६ | | | | ० | |
| | रसुवा | १० | ८ | १३ | ८ | २१ | २६ |
| १७ | सिन्धुपाल्चोक | १२ | | | | ० | |
| | काभ्रेपलाञ्चोक | ११ | १४ | ४ | ११ | १५ | २३ |
| १८ | कास्की | ४३ | | | | ० | |
| | स्याङ्जा | २८ | १५ | ५ | १० | १५ | ७१ |
| १९ | लमजुङ्ग | १५ | | | | ० | |
| | मनाङ्ग | ५ | ११ | ३ | १९ | २२ | २० |
| २० | धादिङ्ग | १७ | | | | ० | |
| | गोरखा | ४३ | १२ | ४ | १२ | १६ | ६० |
| २१ | तनहुँ | ४९ | | | | ० | |
| | नवलपरासी | ७६ | १३ | २४ | ३५ | ५९ | १२५ |
| २२ | रूपन्देही | १९ | | | | ० | |
| | कपिलवस्तु | ३१ | | | | ० | |
| | अर्घाखाँची | १४ | २७ | ४ | ५२ | ५६ | ६४ |
| २३ | पाल्पा | १७ | | | | ० | |
| | गुल्मी | १६ | १३ | ३ | १० | १३ | ३३ |
| २४ | पर्वत | २४ | | | | ० | |
| | बाग्लुङ्ग | ३३ | १० | ६ | १० | १६ | ५७ |
| २५ | म्याग्दी | ० | | | | ० | |
| | मुस्ताङ | ३९ | १५ | ४ | ० | ४ | ३९ |
| २६ | दाङ | ० | | | | ० | |
| | सल्यान | ३७ | १४ | ४ | ० | ४ | ३७ |

| टोली नं | जिल्ला | जि.कार्यक्रम संख्या | सदस्य संख्या | कर्मचारी संख्या | |
|---|---|---|---|---|---|
| | | | | केन्द्र | स्थानीय |
| २७ | प्युठान | १६ | | | |
| | रोल्पा | १६ | १३ | ४ | १० |
| २८ | रूकुम | २७ | | | |
| | जाजरकोट | २२ | १२ | ४ | ५ |
| २९ | सुर्खेत | ११ | | | |
| | बर्दिया | १८ | १६ | ४ | १६ |
| ३० | दैलेख | २९ | | | ५ |
| | बाँके | २५ | १४ | ४ | ४ |
| ३१ | जुम्ला | ३० | १२ | ३ | २५ |
| ३२ | कालीकोट | ३० | ८ | ३ | १४ |
| ३३ | डोल्पा | ४० | ११ | ४ | २८ |
| ३४ | मुगु | २२ | ७ | ४ | १५ |
| ३५ | हुम्ला | १८ | ६ | ४ | ५ |
| ३६ | कञ्चनपुर | ८ | | | |
| | कैलाली | २२ | | | |
| | डडेल्धुरा | ११ | २० | ५ | २२ |
| ३७ | बझाङ | ४७ | ९ | ३ | ९ |
| ३८ | डोटी | १३ | | | |
| | अछाम | १३ | ७ | ४ | ९ |
| ३९ | बैतडी | २६ | | | |
| | दार्चुला | १५ | १२ | ५ | १५ |
| ४० | बाजुरा | ७ | ९ | ४ | २२ |
| | जम्मा | १९०६ | ५५९ | २२५ | ५८८ |

